ॐ नमो भगवते वासुदेवाय

# श्रीमद्‌भागवतमहापुराणम्

## प्रथमः स्कन्धः

## अथ प्रथमोऽध्यायः

### सूतजीसँग शौनक आदि ऋषिहरूको प्रश्न

**जन्माद्यस्य यतोऽन्वयादितरतश्चार्थेष्वभिज्ञः स्वराट्**
**तेने ब्रह्म हृदा य आदिकवये मुह्यन्ति यत्सूरयः।**
**तेजोवारिमृदां यथा विनिमयो यत्र त्रिसर्गोऽमृषा**
**धाम्ना स्वेन सदा निरस्तकुहकं सत्यं परं धीमहि ॥ १ ॥**

**पदार्थ–**

**यतः** = जसबाट
**अस्य** = यस संसारको
**जन्मादि** = उत्पत्ति, स्थिति र प्रलय
**अर्थेषु** = आकाशादि कार्यरूप पदार्थहरूमा
**अन्वयात्** = परमात्माको सद्रूपले अन्वय हुनाले
**इतरतः च** = अन्य असत् पदार्थ वन्ध्यापुत्र आदि (जुन ब्रह्मका कार्य होइनन्)मा ब्रह्मसत्ताको अभाव हुनाले त्यसबाट पनि
**यः** = जो
**अभिज्ञः** = चेतनरूप
**स्वराट्** = स्वयं प्रकाश परमात्माले
**आदिकवये** = ब्रह्माजीलाई
**हृदा** = सङ्कल्पद्वारा
**ब्रह्म** = वेद
**तेने** = प्रदान गर्नुभएको थियो
**यत्** = जुन वेदका सम्बन्धमा
**सूरयः** = विद्वान्‌हरू पनि
**मुह्यन्ति** = मोहमा पर्दछन्
**यथा** = जसरी
**तेजोवारिमृदां** = तेज, जल र स्थलको एक-अर्कामा
**विनिमयः** = भ्रम हुन्छ
**यत्र** = जुन परमात्मामा
**त्रिसर्गः** = जाग्रत्, स्वप्न र सुषुप्तिरूप तीन प्रकारका सृष्टि
**अमृषा** = सत्यझैँ प्रतीत भएको छ
**सदा** = सधैँ
**स्वेन** = आफ्नो
**धाम्ना** = तेजले
**निरस्तकुहकं** = मायाको प्रभाव जसबाट हटेको छ त्यस्तो
**परं** = परम शाश्वत
**सत्यं** = सत्यलाई
**धीमहि** = ध्यान गर्दछौँ

**वाक्यार्थ–** जसबाट यस संसारको उत्पत्ति, स्थिति र प्रलय हुन्छ, जुन तत्त्व सम्पूर्ण सद्रूप पदार्थमा अनुगत छ, जुन तत्त्व असत् पदार्थदेखि भिन्न छ, जुन तत्त्व जड नभएर चेतन छ, जो

परतन्त्र नभएर स्वतन्त्र र स्वयंप्रकाश छ, त्यस्तो स्वयंप्रकाश परमात्माले ब्रह्माजीलाई आफ्ना सङ्कल्पद्वारा वेद प्रदान गर्नुभयो जुन वेदका सम्बन्धमा ठुला-ठुला विद्वान्हरू पनि मोहमा पर्दछन्; जुन परमात्मामा प्रकाशमा जलको, जलमा स्थलको र स्थलमा जलको भ्रम भए जस्तै जाग्रत्, स्वप्न र सुषुप्तिरूप तीन प्रकारका सृष्टि मिथ्या भए तापनि सत्यझैं प्रतीत भइरहेका छन् र जुन परमात्माले आफ्ना प्रकाशद्वारा माया र मायाको कार्यलाई हटाएको छ त्यस परम सत्यको हामी ध्यान गर्दछौं।

**विवरण–** श्रीमद्भागवतका रचयिता महर्षि वेदव्यासले यस श्लोकमा मङ्गलाचरण गर्नुभएको छ। निर्विघ्नतापूर्वक ग्रन्थसमाप्तिका लागि ग्रन्थको आरम्भमा मङ्गलाचरण गर्ने शिष्टपरम्परा रहेको छ। नमस्कारात्मक, आशीर्वादात्मक र वस्तुनिर्देशात्मकका भेदले मङ्गलाचरण तीन प्रकारका हुन्छन्। जुन मङ्गलाचरणमा आफ्ना गुरु अथवा इष्टदेवलाई नमस्कार गरिएको हुन्छ त्यस्तो मङ्गलाचरणलाई नमस्कारात्मक मङ्गलाचरण भनिन्छ। जुन मङ्गलाचरणमा ग्रन्थकारले आफ्नो अभीष्ट वस्तुको प्रार्थना गरेको हुन्छ त्यस्तो मङ्गलाचरणलाई आशीर्वादात्मक मङ्गलाचरण भनिन्छ। जुन मङ्गलाचरणमा ग्रन्थकारले ग्रन्थमा प्रतिपाद्य वस्तुको निर्देश गरेको हुन्छ त्यस्तो मङ्गलाचरणलाई वस्तुनिर्देशात्मक मङ्गलाचरण भनिन्छ।

श्रीमद्भागवत महापुराणको यो पहिलो मङ्गलाचरण श्लोकको अन्तिम पाउमा रहेको **सत्यं परं धीमहि** यो अन्तिम पद्यांशको अर्थ हो– हामी सबै मिली परम सत्यको ध्यान गर्दछौं। यसरी श्रीमद्भागवतको मुख्य प्रतिपाद्य विषय परब्रह्म परमात्माको निर्देश गरिएको हुनाले यो मङ्गलाचरण वस्तुनिर्देशात्मक मङ्गलाचरण हो। यसै गरी **नमः** शब्दको अर्थ त्याग हो। परमसत्यको ध्यान गर्दा अहङ्कारको त्याग हुने हुँदा यसलाई नमस्कारात्मक मङ्गलाचरण पनि भन्न सकिन्छ। यसै गरी यस मङ्गलाचरणलाई आशीर्वादात्मक मङ्गलाचरण पनि भन्न सकिन्छ। **अभीष्टवस्तुनः प्रार्थना आशीः** अर्थात् आफ्नो अभीष्ट वस्तुको प्रार्थनालाई आशीः भनिन्छ। सम्पूर्ण प्राणीहरूले खोजेको वस्तु आनन्द हो र परमात्मा परमानन्दस्वरूप हुनुहुन्छ, त्यस्तो परमानन्दस्वरूप परमात्माको ध्यान यस श्लोकमा गरिएको हुनाले यो मङ्गलाचरण श्लोकलाई आशीर्वादात्मक मङ्गलाचरण पनि भन्न सकिन्छ। यसप्रकार तीनै प्रकारका मङ्गलाचरणहरूको संमिश्रण यस श्लोकमा देखिन्छ।

**जन्माद्यस्य यतः** यो ब्रह्मसूत्रको दोस्रो सूत्रबाट श्रीमद्भागवतको प्रारम्भ भएको छ। यो श्रीमद्भागवतमहापुराण ब्रह्मसूत्रको तात्पर्यार्थ हो। गरुडपुराणमा यो भागवत ग्रन्थ ब्रह्मसूत्रहरूको अर्थ हो भनिएको पनि छ। **जन्माद्यस्य यतः** यो पद्यांशमा ब्रह्मको तटस्थ लक्षण गरिएको छ। यसको मुख्य स्रोत तैत्तिरीयोपनिषद् हो। तैत्तिरीयोपनिषद् (१।३।१)मा ब्रह्मको लक्षण यसरी बताइएको छ—जसबाट संसारको उत्पत्ति हुन्छ, जसमा यो संसार स्थित छ अनि प्रलय कालमा जहाँ गएर यो संसार विलीन हुन्छ त्यही नै ब्रह्म हो।[1] यस वाक्यद्वारा ब्रह्मको जुन लक्षण गरिएको छ त्यो तटस्थ लक्षण हो।

कुनै पनि वस्तुको असाधारण वा विशिष्ट धर्मलाई लक्षण भनिन्छ। लक्ष्यदेखि इतर वस्तुमा

१. यतो वा इमानि भूतानि जायन्ते, येन जातानि जीवन्ति, यत् प्रयान्त्यभिसंविशन्ति तद् विजिज्ञासस्व तद् ब्रह्मेति।

नबसीकन सम्पूर्ण लक्ष्यमा रहेर जसले लक्ष्यलाई अरूदेखि भिन्न रूपमा बोध गराउँछ त्यही नै लक्षण हो। लक्षण दुई प्रकारका हुन्छन्— तटस्थ लक्षण र स्वरूप लक्षण। तटस्थ लक्षण भनेको त्यस्तो लक्षण हो जो लक्ष्यमा सधैँ स्थायी रूपले नबसीकन लक्ष्यलाई अरूदेखि भिन्न रूपमा बोध गराउँछ।[२] उदाहरणका लागि देवदत्तको घर कुन हो भनेर चिनाउने क्रममा कसैलाई 'सुगा बसेको घर देवदत्तको घर हो' भनेर चिनाउन सकिन्छ। यहाँ सुगा हुनु देवदत्तको घरको तटस्थ लक्षण हो। देवदत्तको घरमा बसेको सुगा एकैछिनपछि उडेर जान्छ तर त्यो सुगाले देवदत्तको घरलाई अन्य घरबाट अलग गराउँछ। त्यसै गरी 'जसबाट संसारको उत्पत्ति, स्थिति र प्रलय हुन्छ त्यो ब्रह्म हो' भन्दा उत्पत्तिकर्तृकत्व, स्थितिकर्तृकत्व र लयकर्तृकत्व ब्रह्ममा सधैँ बस्दैनन्। किनभने जुन समयमा ब्रह्ममा संसारको उत्पत्तिकर्तृकत्व रहन्छ त्यस समयमा स्थितिकर्तृकत्व रहँदैन, जुन समयमा स्थितिकर्तृकत्व रहन्छ, त्यस समयमा प्रलयकर्तृकत्व रहँदैन, परन्तु यी लक्षणहरूले ब्रह्मलाई अन्य पदार्थहरूबाट भिन्न रूपले बोध गराउँछन्। त्यसकारण जगत्को उत्पत्तिकर्तृकत्व, स्थितिकर्तृकत्व र लयकर्तृकत्व यी ब्रह्मका तटस्थ लक्षण हुन्।

स्वरूप लक्षण त्यस्तो किसिमको लक्षण हो जुन लक्षण लक्ष्यमा सधैँ रहेर लक्ष्यलाई अरूदेखि भिन्न रूपले बोध गराउँछ।[३] जस्तै, 'सिङ र लुर्कन (माल) भएको प्राणी गाई हो' यस उदाहरणमा सिङ र लुर्कनले गाईलाई अन्य जनावरदेखि भिन्न रूपले बोध गराउँछन् र सिङ र लुर्कन गाईमा सधैँ नै रहन्छन्। तैत्तिरीयोपनिषद्को ब्रह्मानन्दवल्लीको पहिलो अनुवाक्को पहिलो मन्त्र **सत्यं ज्ञानमनन्तं ब्रह्म**ले ब्रह्मको स्वरूप लक्षण बताएको छ। ब्रह्ममा रहेका तीन लक्षण सत्य, ज्ञान र अनन्त ब्रह्ममा सधैँ नै रहिरहने भएकाले तैत्तिरीयोपनिषद्मा आएको **सत्यं ज्ञानमनन्तम्** यो अंश ब्रह्मको स्वरूप लक्षण हो। यस मङ्गलाचरण श्लोकको अन्तिम पद्यांशमा सत्य पद ब्रह्मको स्वरूप लक्षणका लागि आएको हो। यसै गरी **अभिज्ञ** र **स्वराट्** शब्द पनि ब्रह्मकै स्वरूप लक्षणका लागि आएका हुन्।

**अन्वयात्** शब्दको अर्थ श्रीधर स्वामीले यसप्रकार गर्नुभएको छ— **अर्थेषु आकाशादिकार्येषु परमेश्वरस्य सद्रूपेणान्वयात्**। अर्थात्, आकाश आदि कार्यहरूमा परमेश्वरको सद् रूपले अन्वय भएको हुनाले। जुन वस्तुको व्यावहारिक अस्तित्व स्विकारिन्छ त्यस वस्तुमा परमेश्वरको अस्तित्व नै आरोपित भएको हुन्छ। यहाँ अर्थ भनेर माया र मायाको कार्य भन्ने बुझ्नुपर्छ। उपादानकारणदेखि अतिरिक्त कार्यको सत्ता हुँदैन। उदाहरणका लागि घडा कार्य हो र त्यसको उपादान कारण माटो हो। घडा माटादेखि भिन्न हुँदैन। जसरी घडा माटोमा कल्पित हुनाले घडालाई माटाको कार्य भनिन्छ, त्यसै गरी सम्पूर्ण सांसारिक पदार्थहरू ब्रह्ममा कल्पित हुनाले ती सम्पूर्ण आकाशादि पदार्थहरूलाई ब्रह्मको कार्य भनिएको हो। जसरी घडाको प्रत्येक कणमा माटो अनुगत हुन्छ त्यसै गरी संसारका सम्पूर्ण पदार्थहरूमा ब्रह्मको सत्ता अनुगत छ। माया र मायाका कार्यरूप सम्पूर्ण पदार्थहरू ब्रह्ममा कल्पित हुनाले ती मिथ्या हुन्। जुन पदार्थ मिथ्या हुन्छ त्यसको

२. यावल्लक्ष्यकालमनवस्थितत्वेन स्वरूपान्तर्गतं सत् लक्ष्ये इतरव्यावृत्तिं बोधयति तत्तटस्थलक्षणम्।

३. यत्स्वरूपानन्तर्गतं सद् इतरव्यावृत्ततया लक्ष्यं बोधयति, तत्स्वरूपलक्षणम्।

आफ्नो सत्ता हुँदैन। अधिष्ठानको सत्ताद्वारा मात्र त्यो सत्तावान् हुन्छ। डोरीमा भ्रमको कारणले देखापरेको सर्पको आफ्नो सत्ता हुँदैन, डोरीको सत्ताद्वारा मात्र त्यो सत्तावान् हुन्छ। त्यसै गरी संसारका सम्पूर्ण पदार्थहरू ब्रह्ममा कल्पित हुनाले ब्रह्मदेखि अतिरिक्त कुनै पनि पदार्थको आफ्नो सत्ता छैन। सम्पूर्ण पदार्थहरूको अधिष्ठान ब्रह्म हुनाले त्यही ब्रह्मरूप अधिष्ठानको सत्ताद्वारा नै ती पदार्थहरू सत्तावान् देखिन्छन्। घडा, कपडा आदिमा ब्रह्मको सत्ता भएको हुनाले घडा छ, कपडा छ, यसप्रकार 'छ'को प्रतीति हुन्छ।

**इतरतः** शब्दको अर्थ श्रीधर स्वामीले यसप्रकार गर्नुभएको छ— **खपुष्पादिभ्य-स्तद्व्यतिरेकात्**। अर्थात्, कार्यदेखि भिन्न खपुष्प(आकाशको फूल) आदिमा ब्रह्मसत्ताको व्यतिरेक भएको हुनाले। वन्ध्यापुत्र, खपुष्प आदि पदार्थहरूमा ब्रह्मको सत्ताको प्रतीति नहुनाले वन्ध्यापुत्र छ, आकाशकुसुम छ भनिँदैन। अतः ती पदार्थहरूलाई असत् पदार्थ भनिन्छ।

**विनिमय** शब्दको सामान्य अर्थ लेनदेन हो तर यहाँ यस शब्दको अर्थ व्यत्यय वा अध्यास हो। मङ्गलश्लोकमा आएको विनिमयः शब्दको अर्थ गर्दै श्रीधर स्वामी लेख्नुहुन्छ— **विनिमयो व्यत्ययः अन्यस्मिन् अन्यावभासः**। विनिमयको अर्थ हो— एक वस्तुमा अर्को वस्तुको प्रतीति हुनु। व्यत्ययलाई अध्यास पनि भनिन्छ।

शङ्कराचार्यले ब्रह्मसूत्रको अध्यासभाष्यमा अध्यासको लक्षण यसप्रकार गर्नुभएको छ— **अतस्मिन् तद्बुद्धिरध्यासः**। अर्थात् जुन वस्तु जस्तो छ त्यस वस्तुलाई त्यस रूपमा नजानीकन त्यसदेखि भिन्नरूपले जान्नु अध्यास हो। उदाहरणका लागि डोरीलाई डोरीका रूपमा नजानीकन सर्परूपले जान्नु अध्यास हो। ब्रह्मसूत्रशाङ्करभाष्यको अध्यासभाष्यमा अध्यासका छओटा विशेषताहरू दिइएका छन्— १) अनादि २) अनन्त ३) नैसर्गिक ४) मिथ्याप्रत्ययरूप ५) कर्तृत्वभोक्तृत्वप्रवर्तक र ६) सर्वलोकप्रत्यक्ष। अध्यास अनादि छ अथवा यो कहिले सुरु भयो भनेर भन्न सकिन्न। अनन्तको अर्थ हो अविनाशी। ब्रह्मज्ञानद्वारा मात्र नष्ट हुने अन्यथा कुनै हालतमा पनि नष्ट नहुने हुनाले यसलाई अनन्त भनिएको हो। संसारका सम्पूर्ण प्राणीहरूलाई जन्मका साथसाथै अध्यास पनि प्राप्त हुन्छ त्यसैले अध्यास नैसर्गिक हो। यो मिथ्याप्रत्यय अर्थात् झुटो ज्ञान हो। यो अध्यास रहेसम्म म प्रमाता हुँ, कर्ता हुँ, भोक्ता हुँ भन्ने भाव सधैँ रहिरहने हुनाले यसलाई कर्तृत्वभोक्तृत्वप्रवर्तक भनिएको हो। अध्यासलाई संसारका सम्पूर्ण प्राणीहरूले सधैँ अनुभव गरेको हुनाले यसलाई सर्वलोकप्रत्यक्ष भनिएको हो। मङ्गल श्लोकमा विनिमय वा अध्यासको उदाहरणका रूपमा **तेजोवारिमृदाम्** पद आएको छ। कहिलेकाहीँ तेजमा जलको भ्रम पर्दछ र जलमा तेजको भ्रम पर्दछ। त्यस्तै कहिलेकाहीँ मरुभूमिमा जल नभए पनि जल भएको भ्रम पर्दछ। त्यस्तै कहिलेकाहीँ पानीमा पनि जमिनको भ्रम पर्दछ।

**त्रिसर्ग** शब्दको शाब्दिक अर्थ हो तीन प्रकारको सृष्टि। **सृज विसर्गे** यस धातुबाट सर्ग शब्द बन्दछ। सर्गको अर्थ हुन्छ सृष्टि। यहाँ सृष्टि भनेर जाग्रत्, स्वप्न र सुषुप्तिरूप यी तीन प्रकारका सृष्टिलाई बुझाउन खोजिएको हो। वेदान्तसिद्धान्तअनुसार जाग्रत्, स्वप्न र सुषुप्ति यी तीन प्रकारका सृष्टिहरू मनका वृत्तिरूप हुन्। अन्तःकरण या मनको परिणामलाई वृत्ति भन्दछन्। अन्तःकरणको सात्त्विक वृत्ति जाग्रत् हो, राजस वृत्ति स्वप्न हो र तामस वृत्ति सुषुप्ति हो। जाग्रत्

भनेको त्यो अवस्था हो जुन अवस्थामा विषय र विषयको ज्ञान दुवै रहन्छन्। स्वप्न त्यो अवस्था हो जुन अवस्थामा विषयको ज्ञानमात्र रहन्छ विषय रहँदैन। सुषुप्ति त्यो अवस्था हो जुन अवस्थामा विषय पनि रहँदैन र विषयको ज्ञान पनि रहँदैन। यहाँ त्रिसर्ग भनेर सत्त्व, रज र तम यी तीन गुणले युक्त भूत (पञ्च महाभूत), इन्द्रिय र देवता ( इन्द्रियका अधिष्ठाता देवता) रूप तीन प्रकारका सृष्टिलाई पनि लिन सकिन्छ। श्रीधर स्वामीले टीकामा लेख्नुभएको छ— **यत्र यस्मिन् ब्रह्मणि त्रयाणां मायागुणानां तमोरजःसत्त्वानां सर्गो भूतेन्द्रियदेवतारूपः**। सत्त्व, रज र तमका भेदले मायामा तीन गुणहरू रहेका छन्। मायाको तमोगुणबाट पञ्चमहाभूत, रजोगुणबाट दश इन्द्रिय र सत्त्वगुणबाट इन्द्रियहरूका अधिष्ठातृ देवताहरू उत्पन्न भएका छन्।

**निरस्तकुहकम्** यो समस्त पद हो। **निरस्तं कुहकं यस्मिन् तम्** यो विग्रहमा बहुव्रीहि समास भएर यो पद बनेको छ। यस पदको अर्थ हो मायाको प्रभाव जसबाट हटेको छ त्यो परमात्मा। कुहक शब्दको अर्थ अन्धकार हो। जसरी सूर्योदय भएपछि रात्रिको अन्धकार हट्दछ त्यसै गरी ज्ञानरूपी प्रकाशद्वारा अज्ञानरूपी अन्धकार हट्दछ। जसले आफ्नो प्रकाशद्वारा अज्ञानरूपी अन्धकारलाई नष्ट गरेको छ त्यस्ता परमात्मालाई भन्ने यस शब्दको अर्थ हो।

मृषाको अर्थ मिथ्या हो भने **अमृषा**को अर्थ हो सत्य। अमृषा यस पदको प्रासङ्गिक अर्थ हो— मिथ्या भएर पनि सत्यझैं प्रतीत भएको। अमृषा यो समस्त पद हो, 'न मृषा' यस विग्रहमा तत्पुरुष समास भई अमृषा शब्द बनेको छ। मिथ्या भनेको त्यो पदार्थ हो जसको न सत्‌रूपले, न त असत्‌रूपले नै निरूपण गर्न सकिन्छ। जुन वस्तु देखिन्छ तर वास्तवमा छैन भने त्यो मिथ्या हो। जस्तै डोरीमा सर्प देखिन्छ तर त्यहाँ त्यो सर्प वास्तवमा छैन। अतः सर्प मिथ्या हो।

पदार्थहरू तीन किसिमका छन्— सत्, असत् र मिथ्या। जुन वस्तुको आफ्नो अस्तित्व छ, सधैं रहिरहन्छ त्यो सत् हो, जस्तै— आत्मा। जुन वस्तु छैन र कहिल्यै, कतै देखिँदैन त्यो वस्तु असत् हो, जस्तै— बन्ध्यापुत्र, आकाशकुसुम आदि। मिथ्या वस्तु अनिर्वचनीय हुन्छ। डोरीमा भ्रमको कारणले देखिएको सर्पलाई हामी न सत् भन्न सक्दछौं, न त असत् नै भन्न सक्दछौं। डोरीमा देखिएको सर्प असत् भएको भए डोरीमा त्यसको प्रतीति हुनु नपर्ने, तर त्यो सर्प डोरीमा नै देखिन्छ। डोरीमा देखिएको सर्प सत् भएको भए डोरीको यथार्थ ज्ञान भएपछि पनि सर्प रहिरहनुपर्ने तर सर्प कतै पनि रहँदैन। डोरीमा देखिएको सर्प बाँझीको छोरोजस्तो असत् पनि होइन किनभने त्यो देखिन्छ। डोरीमा देखिएको सर्प सत् पनि होइन, सत् भएको भए ज्ञान भएपछि पनि आत्माजस्तो रहिरहनुपर्ने। डोरीमा सर्प न पहिले थियो, न सर्प देखिएको समयमा त्यहाँ वास्तवमा सर्प हुन्छ, न त डोरीको ज्ञान भएपछि नै त्यहाँ सर्प रहन्छ। केवल भ्रमले गर्दा डोरीमा सर्प देखापरेको मात्र हो। जसरी डोरीमा मिथ्या सर्प डोरीको सत्ताको कारणले सत्यझैं प्रतीत हुन्छ त्यसै गरी जाग्रत्, स्वप्न र सुषुप्ति तीन प्रकारका सृष्टि तथा भूत, इन्द्रिय र देवतारूप तीन प्रकारका सृष्टि पनि मिथ्या भए तापनि परमात्मामा देखिएका छन्। परमात्मा उक्त तीन प्रकारका सृष्टिहरूको अधिष्ठान हो, अधिष्ठान परमात्मा सत्य हुनाले त्यही अधिष्ठानको सत्ताको कारणले मिथ्या सृष्टि पनि सत्यझैं प्रतीत भइरहेको छ।

सांख्यमतावलम्बीहरू भन्दछन्— यस मङ्गल श्लोकमा **सत्यं परं धीमहि** भनेर सांख्यशास्त्रले

बताएको जगत्को कारणरूप प्रकृतिलाई हामी ध्यान गर्दछौँ भनिएको हो, ब्रह्मको ध्यान गर्दछौँ भनिएको होइन। सांख्य सिद्धान्तअनुसार जगत्को कारण चेतन ब्रह्म होइन, जड प्रकृति हो। सांख्यमतावलम्बीहरूको भनाइ यसप्रकार छ— संसारका सम्पूर्ण पदार्थहरू त्रिगुणात्मक छन्, त्यसकारण संसारको कारण पनि त्रिगुणात्मक नै हुनु पर्दछ। कारणमा रहेका गुणहरू नै कार्यमा आउने हुन्। वेदान्तसिद्धान्तअनुसार बताइएको निर्गुण ब्रह्मलाई जगत्को कारण मान्दा निर्गुण ब्रह्मबाट उत्पन्न भएको जगत् पनि निर्गुण नै हुनु पर्ने तर संसारका सम्पूर्ण पदार्थहरू त्रिगुणात्मक छन्। अतः निर्गुण ब्रह्मलाई जगत्को कारण मान्न मिल्दैन, त्रिगुणात्मक प्रकृतिलाई नै जगत्को कारण मान्नुपर्छ।

यस पक्षको खण्डनमा भनिन्छ— यस मङ्गल श्लोकमा अभिज्ञ शब्दको प्रयोग नगरिएको भए यहाँ प्रकृतिको ध्यान गर्दछौँ भनेको पनि मान्न सकिन्थ्यो तर यहाँ अभिज्ञ शब्दको प्रयोग गरिएकाले जड प्रकृतिको ध्यान गर्दछौँ भनिएको होइन भन्ने कुरा स्पष्ट हुन्छ। अभिज्ञः शब्दको अर्थ हो ज्ञानरूप। **अभितः जानातीति अभिज्ञः** अर्थात् जसले सबैथोक जान्दछ त्यो अभिज्ञ हो। जगत्को कारण सत्य भएर मात्र पुग्दैन, त्यो अभिज्ञ पनि हुनुपर्दछ अर्थात् जान्नेवाला पनि हुनुपर्दछ। त्यसकारण यहाँ जड प्रकृतिको ध्यान गरिएको नभएर चेतन ब्रह्मको ध्यान गरिएको हो।

यहाँ वेदव्यासले हामी त्यस्तो परम सत्यको ध्यान गर्दछौँ जो जगत्को उत्पत्ति, स्थिति र प्रलयको कारण छ भन्नुभएको छ। यहाँ एउटा प्रश्न उठाउन सकिन्छ— त्यसो हो भने जीवलाई जगत्को कारण मानौँ न त। किनभने जीवात्मा पनि वस्तुतः परमात्मादेखि अभिन्न हुनाले परम सत्य हुँदै हो। ऊ चेतन भएकाले अभिज्ञ पनि हुँदै हो। यसको उत्तरमा भनिन्छ— जगत्को कारण स्वयं ज्ञानस्वरूप हुनुपर्छ। त्यसैले मङ्गल श्लोकमा स्वराट् शब्दको प्रयोग गरिएको हो। **स्वयमेव राजते** यो व्युत्पत्तिअनुसार स्वतःसिद्ध ज्ञानलाई स्वराट् भनिन्छ। जीवात्माको ज्ञान इन्द्रियसापेक्ष भएकाले ऊ स्वतःसिद्ध ज्ञानवान् बन्न सक्दैन। अतः ऊ जगत्को कारण बन्न सक्दैन।

हामी परम सत्यको ध्यान गर्दछौँ भनेर यस श्लोकमा वेदव्यासले ब्रह्माजीको ध्यान गर्दछौँ भन्नुभएको हो कि भन्ने शङ्का पनि उचित छैन किनभने यसै श्लोकमा भनिएको छ— **तेने ब्रह्म हृदा य आदिकवये**। अर्थात् जुन परमात्माले ब्रह्माजीलाई पनि आफ्नो सङ्कल्पद्वारा वेदको ज्ञान प्रदान गर्नुभएको थियो। त्यसकारण ब्रह्माजीको ज्ञान पनि स्वतःसिद्ध ज्ञान नभएर परमात्माबाट प्राप्त ज्ञान हो। यस श्लोकमा हामी त्यस्तो परम सत्यको ध्यान गर्दछौँ जो स्वतःसिद्ध ज्ञानरूप छ भनिएको छ, स्वतःसिद्ध ज्ञानस्वरूप परमात्मा नै हुनुहुन्छ। त्यसकारण के सिद्ध हुन्छ भने मङ्गल श्लोकमा प्रकृति, जीव वा ब्रह्माजीको ध्यान गर्दछौँ भनिएको होइन, जगत्को कारणरूप परमात्माको ध्यान गर्दछौँ भनिएको हो।

यो मङ्गल श्लोकले गायत्रीमन्त्रको सम्पूर्ण अर्थलाई आफूमा अन्तर्भूत गराएको छ। **जन्माद्यस्य यतः** यो पदले **सवितुः**को अर्थलाई बताएको छ। **परम्** यो पदले गायत्री मन्त्रमा रहेको **वरेण्यम्** यो पदको अर्थलाई बताएको छ। **धाम्ना स्वेन** पदले **भर्ग**को अर्थलाई बताएको छ। **स्वराट्** पदले **देवस्य** पदको अर्थलाई बताएको छ। **तेने ब्रह्म हृदा** यस पदले **धियो यो नः प्रचोदयात्**को अर्थलाई बताएको छ। यसरी गायत्री मन्त्रको अर्थ यस श्लोकभित्र रहेको छ।

गायत्री मन्त्रले प्रतिपादन गरेको ब्रह्मलाई नै भागवतले पनि प्रतिपादन गरेको छ। गरुडपुराणमा **गायत्रीभाष्यरूपोऽसौ** अर्थात् श्रीमद्भागवत गायत्री मन्त्रको भाष्य हो भनेर उल्लेख गरिएको छ।

यसप्रकार यो मङ्गलाचरण श्लोकमा सत्यस्वरूप, ज्ञानस्वरूप, सृष्टिकर्ता परम ब्रह्म परमात्माको ध्यान गर्दछौँ भनी परमात्माको स्वरूप प्रतिपादनमा नै यो भागवत ग्रन्थ केन्द्रित रहने कुराको सङ्केत गरिएको छ।

**धर्मः प्रोज्झितकैतवोऽत्र परमो निर्मत्सराणां सतां**
**वेद्यं वास्तवमत्र वस्तु शिवदं तापत्रयोन्मूलनम्।**
**श्रीमद्भागवते महामुनिकृते किं वा परैरीश्वरः**
**सद्यो हृद्यवरुध्यतेऽत्र कृतिभिः शुश्रूषुभिस्तत्क्षणात्॥ २॥**

**पदार्थ–**

**महामुनिकृते** = महर्षि वेदव्यासले रचना गर्नुभएको
**अत्र** = यहाँ
**श्रीमद्भागवते** = श्रीमद्भागवतमा
**प्रोज्झितकैतवः** = कपटले रहित
**परमः** = परम
**धर्मः** = धर्मको निरूपण गरिएको छ
**निर्मत्सराणां** = शुद्ध अन्तःकरण भएका
**सतां** = सज्जनहरूको
**वेद्यं** = जान्न योग्य
**शिवदं** = कल्याण दिने
**तापत्रयोन्मूलनम्** = तीनै किसिमका तापलाई नष्ट गर्ने
**वास्तवम्** = वास्तविक
**वस्तु** = वस्तु परमात्मा
**परैः** = अरू साधनहरूको
**किं** = के आवश्यकता
**कृतिभिः** = पुण्यात्माहरूले
**शुश्रूषुभिः** = सुन्न चाहनेहरूद्वारा
**ईश्वरः** = परमात्मा
**तत्क्षणात्** = तत्काल नै
**सद्यः** = तुरुन्त
**हृदि** = हृदयमा
**अवरुध्यते** = प्रकट हुनुहुन्छ

**वाक्यार्थ–** महर्षि वेदव्यासले रचना गर्नुभएको यस श्रीमद्भागवतमा कपटरहित परम धर्मको निरूपण गरिएको छ। यस्तै यसमा शुद्ध अन्तःकरण भएका सज्जनद्वारा जान्न योग्य वास्तविक वस्तु परमात्माको निरूपण गरिएको छ। यो धर्म परम कल्याणकारक छ र यसले तीन प्रकारका तापलाई नष्ट गरिदिन्छ। अब अरू कुनै साधन वा शास्त्रको प्रयोजन छैन। जुन समयमा पुण्यात्मा पुरुषहरू भागवतको श्रवण गर्दछन् त्यसै समयमा उनीहरूका हृदयमा भगवान् तुरुन्त प्रकट हुनुहुन्छ।

**विवरण–** सम्बन्ध, अधिकारी, विषय र प्रयोजन यी अनुबन्धचतुष्टय मङ्गलाचरणका आवश्यक तत्त्व हुन्। लेखन लागिएको ग्रन्थको प्रतिपाद्य विषय के हो ? ग्रन्थ पढ्ने अधिकारी को हो ? ग्रन्थ र ग्रन्थको प्रतिपाद्य विषयबीच के सम्बन्ध छ र ग्रन्थाध्ययनको प्रयोजन के हो ? यी चार विषयवस्तुहरूलाई अनुबन्धचतुष्टय भनिन्छ। मङ्गलाचरणश्लोकबाट यी चार विषय राम्रोसँग बुझेपछि पाठकहरू ग्रन्थाध्ययनमा प्रवृत्त हुन्छन्।

श्रीमद्भागवतको प्रतिपाद्य विषय हो– धर्म। यस श्लोकमा धर्मका लागि दुइटा विशेषण

**परम** र **प्रोज्झितकैतव** आएका छन्। कैतव शब्दको अर्थ हो कपट। यो श्रीमद्भागवत महापुराणमा कपटले रहित भएको धर्मको निरूपण गरिएको छ। यहाँ कपटरहित धर्म भनिएको छ। यहाँ शङ्का उठ्न सक्छ— के कुनै धर्म कपटयुक्त पनि हुन्छ र ? कुनै मानिस, देवता वा अन्य प्राणीहरू कपटी हुन सक्छन्, कुनै धर्म कसरी कपटी हुन सक्छ ? धर्म शब्दले बुझाउने जुन अर्थ हो त्यसभित्र कपटजस्ता तुच्छ वस्तु अट्नै सक्दैनन्। यस शङ्काको समाधान हो— मनमा कुनै सांसारिक वस्तुको कामना राखेर गरिएको कर्मलाई यहाँ कपटयुक्त धर्म भनिएको हो। फलप्राप्तिको इच्छारूप कपटलाई पूर्ण रूपमा त्यागेको धर्म नै प्रोज्झितकैतव धर्म हो। मुमुक्षुको मनमा कुनै पनि इच्छा रहेसम्म मोक्ष असम्भव हुने हुनाले उज्झितकैतव यो समस्तपदमा 'प्र' उपसर्ग जोडेर मोक्ष प्राप्त गर्ने इच्छालाई पनि त्याग गरिएको ईश्वरको आराधनाद्वारा प्राप्त हुने ब्रह्मसाक्षात्काररूप परम धर्म भन्ने बुझाउन खोजिएको हो।

श्रीमद्भागवतमा दुई प्रकारका सम्बन्ध उपस्थापित छन्— ज्ञातृज्ञेयभावसम्बन्ध र प्रतिपाद्यप्रतिपादकभाव सम्बन्ध। मुमुक्षुले सधैँ आफ्नो असली स्वरूप परमात्मालाई जान्न खोजिरहेको हुन्छ। त्यसकारण जीव ज्ञाता हो भने परमात्मा ज्ञेय हो। अतः परमात्मा र जीवका बीच ज्ञातृज्ञेयभावसम्बन्ध छ।

श्रीमद्भागवतमहापुराणमा सुरुदेखि अन्त्यसम्म परमात्माको वर्णन गरिएको हुनाले यो महापुराण प्रतिपादक हो र यस पुराणको प्रतिपाद्य विषय परमात्मा हो। त्यसकारण यो पुराण र परमात्मामा प्रतिपाद्यप्रतिपादकभाव सम्बन्ध रहेको छ। अनेक जन्ममा गरिएका शुभ कर्महरूको प्रभावले जसको अन्तःकरण शुद्ध भएको छ त्यस्तो व्यक्ति भागवतको अध्ययन वा श्रवण गर्ने अधिकारी हो। यस ग्रन्थको प्रयोजन दुःखको आत्यन्तिक निवृत्तिपूर्वक परमानन्दको प्राप्ति हो।

श्रीधर स्वामीले टीकामा **वास्तवं वस्तु वेद्यम्**को अर्थ स्पष्ट गर्दै लेख्नुभएको छ— **वास्तवं परमार्थभूतं वस्तु वेद्यं न तु वैशेषिकाणामिव द्रव्यगुणादिरूपम्**। जुन वस्तु ज्ञानको विषय हुन्छ त्यसलाई वेद्य भन्दछन्।

वैशेषिक दर्शनअनुसार वेद्यत्व त्यस्तो धर्म हो जुन द्रव्य, गुण, कर्म, सामान्य, विशेष, समवाय र अभाव यी सातै पदार्थमा रहन्छ। वैशेषिक सिद्धान्तअनुसार लेख्न लागिएको पृथिवी, जल, तेज, वायु, आकाश, काल, दिशा, आत्मा र मन यी नौ द्रव्यहरू हुन्। अतः आत्मा उक्त नौओटा द्रव्यहरूमध्ये एउटा द्रव्य हो। वैशेषिकहरूका अनुसार जसमा गुण या क्रिया रहन्छ त्यसैलाई द्रव्य भनिन्छ। यस सिद्धान्तअनुसार आत्मामा ज्ञान आदि गुण रहने हुनाले आत्मा द्रव्य हो। तर वेदान्त सिद्धान्तअनुसार आत्मा निर्गुण र निष्क्रिय छ। आत्मामा कुनै पनि गुण रहँदैन। अतः वेदान्त सिद्धान्तअनुसार आत्मा द्रव्य होइन। वेदान्त सिद्धान्तअनुसार आत्मा द्रव्य नभए पनि यो ब्रह्माकारवृत्तिको विषय हुन सक्ने भएकाले वेद्य हो। उक्त सिद्धान्तअनुसार आत्माबाहेक संसारका अन्य सम्पूर्ण पदार्थहरू मिथ्या हुन्। ती मिथ्या पदार्थहरू वेद्य भए तापनि परमार्थतः वेद्य होइनन्। परमार्थतः वेद्य वस्तु आत्मा वा परमात्मा नै हो। अतः यस श्लोकमा आएको **वास्तवं वस्तु वेद्यम्**को अर्थ हो— वास्तविक रूपमा जान्नुपर्ने वस्तु परमात्मा।

श्रीधर स्वामीले वास्तव शब्दको अर्थ अर्को प्रकारले पनि गर्नुभएको छ— **यद् वा**

**वास्तवशब्देन वस्तुनः अंशः जीवः, वस्तुनः शक्तिर्माया, वस्तुनः कार्यं जगच्च वस्त्वेव न ततः पृथगिति वेद्यम्।** वस्तु शब्दको अर्थ हो परमात्मा। अविद्या कालमा जीव परमात्माको अंश हो। **वस्तुनः अंशः** यस्तो व्युत्पत्ति गर्दा वास्तव शब्द बन्दछ, यसको अर्थ हो जीव। **वस्तुनः शक्तिः** यस्तो व्युत्पत्ति गर्दा वास्तवी शब्द बन्दछ जसको अर्थ हो माया। किनभने मायालाई परमात्माको शक्ति भनिन्छ। माया अत्यन्त स्वच्छ हुनाले यसमा परमात्माको प्रतिबिम्ब पर्दछ, मायामा परेको परमात्माको प्रतिबिम्बलाई ईश्वर भनिन्छ। त्यसै गरी **वस्तुनः कार्यम्** यस्तो व्युत्पत्ति गर्दा वास्तवम् यो शब्द बन्दछ। यो सम्पूर्ण जगत् परमात्माको कार्य हुनाले वास्तवम् यस शब्दको अर्थ जगत् हुन्छ। यसप्रकार श्लोकमा आएको वास्तवम् यस शब्दबाट जीव, माया र जगत् भन्ने यी तीन अर्थ पनि निस्कन सक्छन्। यसप्रकार वास्तवम् शब्दका यी तीन अर्थ संभव भए पनि यहाँ पहिलो अर्थ परमात्मा नै बढी ग्राह्य छ।

यस श्लोकमा आएको **शिवद** पद परमात्माको विशेषण हो। परमात्माले जीवलाई परम कल्याण प्रदान गर्नुहुन्छ। परमात्माले नै जीवको शुद्ध अन्तःकरणमा ज्ञानरूपले प्रकट भएर उसको अज्ञानलाई नष्ट गरी मोक्ष प्रदान गर्ने हुनाले परमात्मालाई शिवद वा कल्याणदायक भनिएको हो।

भगवान्को अनुग्रह नभईकन ज्ञान हुँदैन, ज्ञान नभईकन आध्यात्मिक, आधिभौतिक र आधिदैविक यी तीन तापहरूबाट छुटकारा प्राप्त हुँदैन, त्यसैले नहुने हुनाले त्यो वास्तविक वस्तु परमात्मालाई **तापत्रयोन्मूलनम्** भनिएको हो। किनभने उहाँको ज्ञान नभईकन जीव उक्त तीन प्रकारका तापहरूबाट मुक्त हुन सक्दैन। ताप या दुःख तीन प्रकारका हुन्छन्— आध्यात्मिक, आधिभौतिक र आधिदैविक। आध्यात्मिक ताप दुई प्रकारका छन्— मानसिक र शारीरिक। प्रिय वस्तुको वियोग र अप्रिय वस्तुको संयोग हुँदा हुने प्रतिकूल अनुभवलाई मानसिक दुःख भनिन्छ। शरीर अस्वस्थ हुनाले हुने कष्टलाई शारीरिक दुःख भनिन्छ। विभिन्न प्राणी चोर, डाँकु, बाँदर, बाघ, सर्प इत्यादिबाट हुने कष्टलाई आधिभौतिक दुःख भनिन्छ। दैव वा भाग्य प्रतिकूल हुनाले टार्न नसकिने गरी आइलाग्ने दुःखलाई आधिदैविक दुःख भनिन्छ। बाढी, भूकम्प, अतिवृष्टि, अनावृष्टि आदिका कारणबाट हुने दुःखलाई आधिदैविक दुःख भनिन्छ। यी तीनै किसिमका ताप वा दुःखबाट सदाका लागि छुटकारा दिलाउन सक्षम वस्तु परमात्माको वर्णन यस श्रीमद्भागवत महापुराणमा गरिएको छ।

श्रीधर स्वामीले किं वा **परैरीश्वरः**को अर्थ स्पष्ट गर्दै लेख्नुभएको छ— **परैः शास्त्रैस्तदुक्तसाधनैर्वा ईश्वरो हृदि किं वा सद्य एव अवरुध्यते स्थिरीक्रियते। वाशब्दः कटाक्षे किन्तु विलम्बेन कथञ्चिदेव अत्र तु शुश्रूषुभिः श्रोतुमिच्छद्भिरेव तत्क्षणादेव अवरुध्यते।** अर्थात् धेरै शास्त्रहरू पढ्ने र ती शास्त्रहरूमा बताइएका साधनहरूको अनुष्ठान गर्ने कुनै आवश्यकता छैन, केवल श्रीमद्भागवतको श्रवण एवं अध्ययनद्वारा भगवान् हृदयमा तुरुन्त प्रकट हुनुहुन्छ। अरू शास्त्रहरूको श्रवण एवं अध्ययनद्वारा पनि भगवान्को साक्षात्कार नहुने त होइन तर अन्य शास्त्रहरूको श्रवण एवं अध्ययनबाट विलम्बले मात्र परमात्मा हृदयमा प्रकट हुनुहुन्छ तर श्रीमद्भागवतको विशेषता के छ भने यसको श्रवणद्वारा मुमुक्षुहरूको हृदयमा भगवान् तुरुन्त प्रकट हुनुहुन्छ। यदि भागवत श्रवण गरेर नै मुक्त भइन्छ भने सम्पूर्ण मनुष्यहरू भागवत श्रवणमा नै किन

प्रवृत्त हुँदैनन् त ? यसको उत्तर हो, भागवत श्रवण गरेर नै मुक्त भइन्छ भन्ने कुरामा कुनै सन्देह छैन, तर पुण्य नभईकन भागवत श्रवण गर्ने इच्छा नै उत्पन्न हुँदैन। श्रीधर स्वामीले भन्नुभएको छ– **श्रवणेच्छा तु पुण्यैर्विना नोत्पद्यते।** अर्थात् 'श्रीमद्‌भागवत श्रवण गर्ने इच्छा त पुण्य नभईकन उत्पन्न नै हुँदैन।' पूर्वजन्म र यस जन्ममा गरेको पुण्यको प्रभावले मात्र भागवत श्रवण गर्ने इच्छा उत्पन्न हुन्छ।

श्रीमद्‌भागवतमहापुराणले वेदमा प्रतिपादित कर्मकाण्ड, उपासनाकाण्ड र ज्ञानकाण्ड यी तीनै काण्डको प्रतिनिधित्व गरेको छ। यस श्लोकमा धर्म पद प्रयुक्त भएकाले वेदमा प्रतिपादित कर्मकाण्डको प्रतिनिधित्व श्रीमद्‌भागवतले गरेको छ भन्ने कुराको सङ्केत मिल्दछ। त्यस्तै यहाँ निर्मत्सराणाम् पद प्रयुक्त भएकाले श्रीमद्‌भागवतले उपासना काण्डको प्रतिनिधित्व गरेको छ भन्ने कुराको सङ्केत मिल्दछ। त्यसै गरी यहाँ वेद्यम् यस पदको प्रयोग भएको हुनाले यसले वेदको ज्ञानकाण्डको प्रतिनिधित्व गरेको छ भन्ने कुराको सङ्केत मिल्दछ। यसप्रकार वेदमा प्रतिपादित कर्म, उपासना र ज्ञान यी तीनै काण्डको प्रतिनिधित्व श्रीमद्‌भागवत महापुराणमा भएको छ भन्ने कुराको सङ्केत यस श्लोकमा आएका धर्म, निर्मत्सराणाम् र वेद्यम् यी तीन पदहरूबाट मिल्दछ।

**निगमकल्पतरोर्गलितं फलं**
**शुकमुखादमृतद्रवसंयुतम्।**
**पिबत भागवतं रसमालयं**
**मुहुरहो रसिका भुवि भावुकाः॥ ३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **भावुकाः** = भावुक | **शुकमुखाद्** = शुकदेवजीको मुखबाट | **भागवतं** = भागवतरूपी |
| **रसिकाः** = हे रसिकजन हो | **अमृतद्रवसंयुतम्** = अमृतको रसले युक्त | **रसम्** = रस |
| **निगमकल्पतरोः** = वेदरूपी कल्पवृक्षको | **अहो** = आश्चर्य | **आलयं** = मोक्ष प्राप्तिसम्म |
| **गलितं** = पाकेको | **भुवि** = पृथ्वीमा | **मुहुः** = बारम्बार |
| **फलं** = फल | | **पिबत** = पान गर |

**वाक्यार्थ–** हे रसका मर्मज्ञ भक्तजन हो ! यो श्रीमद्‌भागवत वेदरूपी कल्पवृक्षको पाकेको फल हो। त्यसमाथि पनि श्रीशुकदेवजीरूपी मुखको सम्बन्ध भएकाले अरु यो परमानन्दरूपी अमृतले परिपूर्ण छ। अतः मोक्ष प्राप्तिपछि पनि तपाईंहरूले यसलाई बारम्बार पान गरिरहनुहोस्।

**विवरण–** नि उपसर्गपूर्वक गम् धातुबाट निगम यो शब्द बन्दछ। **निःशेषेण गमयति धर्मार्थकाममोक्षाख्यान् चतुरः पुरुषार्थान् इति निगमो वेदः** अर्थात् निगम भनेको भगवान्‌को त्यो वाणी हो जसले धर्म, अर्थ, काम र मोक्ष यी चारै पुरुषार्थको ज्ञान गराउँछ। जसरी स्वर्गको कल्पवृक्षले मनमा चिताएको वस्तु प्रदान गर्दछ, त्यस्तै वेदले पनि धर्म, अर्थ, काम र मोक्ष या

चारै पुरुषार्थ प्रदान गर्ने भएकाले वेदलाई कल्पवृक्ष भनिएको हो। यसप्रकार वेद कल्पवृक्ष हो भने यो श्रीमद्भागवत त्यो वेदरूपी कल्पवृक्षको बोटैमा पाकेको फल हो। बोटैमा पाकेको फल त्यसै पनि अत्यन्त स्वादिलो हुन्छ, त्यसमा पनि यस श्रीमद्भागवतरूपी फललाई शुकदेवरूपी सुगाले ठुँगेको हुनाले यो अरू मिठो छ। सुगाले बोटमा पाकेका फलहरूमध्ये पनि जुनचाहिँ फल सबैभन्दा मिठो छ त्यसलाई छानेर ठुँग्दछ। फल वृक्षको सार हो। मनुष्यहरू फल प्राप्त गर्ने उद्देश्यले नै बगैँचामा रूख लगाउँछन्। रूखको जरा, पात, हाँगा इत्यादिको अभावमा फल फल्दैन, तापनि मनुष्यहरूको अभीष्ट वस्तु रूख नभएर फल नै हो। त्यसै गरी वेद र उपनिषद्हरूको अभावमा श्रीमद्भागवतको अस्तित्व संभव छैन। वेद र उपनिषद्हरूको अध्ययनद्वारा विलम्बले प्राप्त हुने फल श्रीमद्भागवतको अध्ययनद्वारा शीघ्र नै प्राप्त हुने हुनाले यसलाई वेद र उपनिषद्रूपी वृक्षको पाकेको फल भनिएको हो। भगवान् शुकदेवले गङ्गाको किनारमा राजा परीक्षित्लाई श्रीमद्भागवत सुनाउनुभएको थियो त्यसैले यस श्रीमद्भागवतलाई शुकदेवको मुखको स्पर्श प्राप्त भएको छ। त्यसै कारणले श्लोकमा **शुकमुखादमृतद्रवसंयुतम्** भनिएको हो। यहाँ **शुक** शब्दको अर्थ हो शुकदेव मुनि। श्लोकमा आएको **अमृत** पदद्वारा परमानन्दलाई बुझाउन खोजिएको छ। त्यही परमानन्द नै **द्रव** अर्थात् रस हो, तैत्तिरीयोपनिषद् (२।७)मा भनिएको छ– **रसो वै सः रसं ह्येवायं लब्ध्वा आनन्दीभवति**, अर्थात् त्यो परमात्मा रसरूप छ, त्यही रसरूप परमात्मालाई प्राप्त गरेर जीव परमानन्द वा ब्रह्मतत्त्वलाई प्राप्त गर्दछ।

श्लोकमा **भावुक** र **रसिक** यी दुई शब्द आएका छन्। श्रीधरस्वामीले टीकामा यी दुवै शब्दको अर्थ यसप्रकार गर्नुभएको छ– **रसिका रसज्ञास्तत्राऽपि भावुका हे रसविशेषभावनाचतुराः** अर्थात् 'हे रसज्ञ व्यक्तिहरू जो रसको ग्रहण गर्न चतुर छौ'। जो व्यक्ति विषयमा आसक्त छ उसले ब्रह्मरसको आस्वादन गर्न सक्दैन। अतः यहाँ रसिक भनेर अन्तर्मुख अर्थात् विरक्त व्यक्ति भन्ने बुझ्नुपर्छ। योगी एवं तत्त्वचिन्तकहरू अन्तर्मुख हुन्छन् तर भावुक नहुन पनि सक्दछन्। भगवान्को कथा श्रवण गर्दा जसको हृदय पग्लन्छ, आँखाबाट हर्षाश्रु बग्दछ अनि शरीरमा रोमाञ्च हुन थाल्दछ, त्यस्ता व्यक्तिलाई भावुक व्यक्ति भनिन्छ। यहाँ रसिक शब्दको अर्थ अन्तर्मुख हो भने भावुक शब्दको अर्थ भगवान्को कथा श्रवण गर्दा हृदय द्रवीभूत हुने व्यक्ति हो।

यहाँ **गलितं फलं** भनी भागवतलाई एकातर्फ फल भनिएको छ भने अर्कातर्फ **पिबत** वा पिउनुहोस् यो क्रियापद राखिएको छ। यदि भागवत फल हो भने फल पिउन संभव छैन फल खाइन्छ, पिइँदैन। अतः यस दोषबाट बच्नका लागि **रसम्** यस शब्दको प्रयोग गरिएको हो। अर्थात् भागवतरूपी रस पिउनुहोस् भनिएको हो।

**आलयम्** शब्दमा **लयम् अभिव्याप्य** यस्तो विग्रहमा अव्ययीभाव समास भएको छ। आङ् यो उपसर्ग हो। यहाँ यसका दुईओटा अर्थ हुन्छन्– मर्यादा र अभिविधि। आलयम् यस शब्दमा आएको आङ् उपसर्गको अर्थ हो– अभिविधि। मर्यादा र अभिविधि यी दुई शब्दको अर्थ उदाहरणद्वारा स्पष्ट गरौँ। कसैले आफ्नो साथीलाई भन्यो– 'म तपाईंलाई पुलसम्म पुऱ्याइदिन्छु' (अहं भवन्तं आसेतुं नयामि)। यहाँ प्रयुक्त 'सम्म (आङ्)'को दुईओटा अर्थ हुन्छन्– मर्यादा र अभिविधि। मर्यादा अर्थ लिने हो भने जहाँबाट पुल सुरु हुन्छ त्यस ठाउँसम्म पुऱ्याइदिन्छु भन्ने

अर्थ निस्कन्छ। यदि 'सम्म' यो पदको अभिविधि अर्थ लिने हो भने म तपाईंलाई पुलपारि पुऱ्याइदिन्छु भन्ने अर्थ निस्कन्छ। 'सम्म (आङ्)'को प्रयोग मर्यादा अर्थमा गरिएको हो वा अभिविधि अर्थमा गरिएको हो भन्ने कुरा वक्ताको इच्छामा भर पर्ने कुरा हो। यहाँ भगवान् वेदव्यासले श्लोकमा **आलयम्** यस पदमा अभिविधि अर्थ बुझाउने इच्छा राखेर आङ् यो उपसर्गको प्रयोग गर्नुभएको हो भन्ने कुरा प्रासङ्गिक देखिन्छ। अतः यहाँ भावुक रसिकहरूलाई ज्ञानोत्तरकाल वा जीवन्मुक्तिको अवस्थामा समेत श्रीमद्‌भागवतको अध्ययन अथवा श्रवण गरिरहनुहोस् भनेर वेदव्यासले भन्नुभएको हो।

यसरी यो तेस्रो मङ्गलाचरण श्लोकमा वेद र उपनिषद्‌हरूको सारतत्त्वका रूपमा रहेको यो श्रीमद्‌भागवतमहापुराण मुमुक्षु एवं मुक्त व्यक्तिका लागि समेत अहर्निश ग्रहणीय छ भन्ने कुरा स्पष्ट पारिएको छ।

यसप्रकार पहिलो मङ्गलाचरण श्लोकमा इष्ट देवतालाई नमस्कार गरिएको छ, दोस्रो मङ्गलाचरण श्लोकमा अनुबन्ध चतुष्टयको निर्देशन गरिएको छ भने तेस्रो मङ्गलाचरण श्लोकमा श्रीमद्‌भागवतमहापुराणको महत्त्वको प्रतिपादन गरिएको छ।

**नैमिषेऽनिमिषक्षेत्रे ऋषयः शौनकादयः।**

**सत्रं स्वर्गायलोकाय सहस्रसममासत॥ ४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अनिमिषक्षेत्रे** = देवताहरूको क्षेत्र | **स्वर्गायलोकाय** = भगवत्प्राप्तिका इच्छाले | **सत्रं** = यज्ञ |
| **नैमिषे** = नैमिषारण्यमा | **सहस्रसमम्** = एक हजार वर्षमा पूरा हुने | **आसत** = सुरु गर्नुभयो |
| **शौनकादयः** = शौनक आदि | | |
| **ऋषयः** = ऋषिहरूले | | |

**वाक्यार्थ–** एक पटक परम पुण्यमय एवं देवताहरूको क्षेत्र नैमिषारण्यमा शौनक आदि ऋषिहरूले भगवत्प्राप्तिका इच्छाले एक हजार वर्षमा पूरा हुने महान् यज्ञ सुरु गर्नुभयो।

**विवरण–** निमिष शब्दको अर्थ हो आँखाको परेला, जसको आँखाको परेला झिम्किँदैन, उसलाई अनिमिष भन्दछन्। देवताहरूको आँखाको परेला नझिम्किने हुनाले देवताहरूलाई **अनिमिष** भन्दछन्। जसको ज्ञानदृष्टि कहिल्यै पनि लोप हुँदैन उसलाई पनि अनिमिष भन्दछन्। भगवान् नारायण नित्य ज्ञानस्वरूप भएको हुनाले उहाँलाई अनिमिष भनिएको हो। यसर्थ यहाँ प्रयुक्त **अनिमिष** शब्दले मुख्यरूपमा भगवान् र देवताहरूलाई पनि बुझाएको छ। देवताहरूको अथवा भगवान् नारायणको क्षेत्र वा स्थानलाई नै **अनिमिषक्षेत्र** भनिन्छ।

शौनक आदि ऋषिहरूले ब्रह्माजीसँग प्रार्थना गरे– 'निकट भविष्यमा हामी एक हजार वर्षसम्म एउटा ठूलो यज्ञको आयोजना गरेर बस्न चाहन्छौँ। अतः हामीहरूलाई त्यस्तो एउटा पवित्र ठाउँ बताइदिनुहोस्, जहाँ बसेर हामीहरू यज्ञको अनुष्ठान र तपस्या आदि कार्यहरू विघ्नरहित भएर गर्न सकौँ।' ऋषिहरूको प्रार्थना सुनेर ब्रह्माजीले भगवान् शङ्करलाई नमस्कार गरेर

एउटा मनोमय चक्र सृष्टि गरी छोडिदिनुभयो रभन्नुभयो। त्यो चक्रको पाङ्ग्रो जहाँ गएर धसिन्छ, त्यही नै यज्ञ एवं तपस्या गर्नका लागि पवित्र ठाउँ हो भनेर जान्नू। ऋषिहरू त्यो चक्रको पछिलागेर गए। संस्कृतमा नेमिशब्दको अर्थ पाङ्ग्रो हुन्छ। यसैले पाङ्ग्रो धसिएको हुनाले त्यो ठाउँलाई नैमिष भनिएको हो। त्यस ठाउँमा बसेर ऋषिहरूले यज्ञको आयोजना गरे।

अब यस श्लोकमा आएको **स्वर्गायलोकाय** यो शब्दलाई लिएर केही चर्चा गरौँ। स्वर्ग शब्दको सामान्यार्थ देवलोक भन्ने हुन्छ। तर यहाँ स्वर्ग भनेर स्वर्गलोकलाई बुझाउन खोजिएको होइन। लोक भनेर भूर्लोक एवं भुवर्लोकलाई लिन खोजिएको होइन। स्वर्गाय रूप स्वर्ग शब्दको चतुर्थी विभक्तिमा पनि बन्छ। यहाँ प्रयुक्त स्वर्गाय शब्द चतुर्थी विभक्तिको रूप हो कि भन्ने भ्रम पर्न सक्दछ। तर यहाँ प्रयुक्त स्वर्गाय रूप प्रथमान्त हो। स्वर्गाय यो शब्दको व्युत्पत्ति यसप्रकार गरिन्छ– **स्वः स्वर्गे गीयते इति स्वर्गाय**। अर्थात् स्वर्गलोकमा पनि जसको कीर्ति गाइन्छ त्यही नै स्वर्गाय हो। स्वर्गलोकमा भगवान् नारायणको कीर्ति गाइन्छ। यसर्थ भगवान् नारायण नै स्वर्गाय हुनुहुन्छ। स्वर्गाय लोकाय यी दुईटा भिन्न-भिन्न पद नभएर **स्वर्गायलोकाय** यो एउटै समस्त पद हो। **स्वर्गायः हरिरेव लोकः** यस्तो विग्रहमा कर्मधारय समास भएको छ। **कर्मधारयसमासे समस्यमानपदयोः अभेदेन अर्थलाभः** अर्थात् कर्मधारय समासमा समस्यमान दुई पदहरूको एउटै अर्थ हुन्छ भन्ने यस्तो नियम भएकाले स्वर्गाय शब्द र लोकशब्दको एउटै अर्थ हो। स्वर्गाय अर्थात् हरि नै लोक अर्थात् भक्तहरूको निवासस्थान भन्ने यस शब्दको अर्थ निक्लन्छ। यसप्रकार स्वर्गायलोकाय यो समस्तपदको अर्थ भगवान् नारायणलाई प्राप्त गर्ने उद्देश्यका लागि भन्ने हुन्छ।

अब यस श्लोकमा प्रयुक्त **ऋषि** शब्दलाई लिएर चर्चा गरौँ। ऋष गतौ यो धातुबाट इन् प्रत्यय भएर ऋषि शब्द बनेको हो। यस शब्दको व्युत्पत्ति यसप्रकार छ– **ऋषति गच्छति ज्ञानेन संसारपारमिति ऋषिः** अर्थात् ऋषि भनेको त्यो व्यक्ति हो जो ज्ञानद्वारा संसारबाट पार हुन चाहन्छ।

अब यस श्लोकमा प्रयुक्त **शौनकादि** शब्दको बारेमा चर्चा गरौँ। यहाँ **शौनक आदिर्येषां ते** यस्तो विग्रहमा बहुव्रीहि समास भएर शौनकादि शब्द बनेको छ। विवेकयुक्त व्यक्तिलाई शौन भनिन्छ। शौन एव शौनक अर्थात् जो शौन हो उही नै शौनक हो भन्ने अर्थमा शौन यो शब्ददेखि स्वार्थमा कन् प्रत्यय गरेर शौनक यो शब्द बनेको छ।

अब **सहस्रसमम्** यो शब्दलाई लिएर केही चर्चा गरौँ। **सहस्रं समाः संवत्सराः अनुष्ठानकालो यस्य तत्** यस्तो विग्रहमा बहुव्रीहि समास भई सहस्रसमम् यो शब्द बनेको छ। सहस्रसमम् यो समस्त पद सत्रम् यो विशेष्य पदको विशेषण हो। यसकारण सहस्रसमम् सत्रम् यसको अर्थ एकहजार वर्षमा समाप्त हुने यज्ञ हो।

**त एकदा तु मुनयः प्रातर्हुतहुताग्नयः।**
**सत्कृतं सूतमासीनं पप्रच्छुरिदमादरात्॥ ५॥**

**पदार्थ–**

**एकदा** = एक दिन
**प्रातर्हुतहुताग्नयः** = सायंकालमा हवन गरिएकै अग्निमा प्रातःकालको हवन गरिसकेका
**ते** = ती
**मुनयः** = मुनिहरूले
**तु** = त
**सत्कृतं** = सत्कार, पूजा गरिएका
**आसीनं** = बसेका
**सूतम्** = सूतजीलाई
**आदरात्** = आदरपूर्वक
**इदम्** = यो
**पप्रच्छुः** = सोध्नुभयो

**वाक्यार्थ–** एक दिन ती ऋषिहरूले प्रातःकालको अग्निहोत्र आदि नित्य क्रियाबाट निवृत्त भएर, सूतजीलाई विधिपूर्वक पूजा गरेर उहाँलाई उच्च आसनमा राखेर अत्यन्त आदरपूर्वक यो प्रश्न सोध्नुभयो।

**विवरण–** यस श्लोकमा हुत यो शब्द दुईपटक आएको छ। **प्रातः** हुतः **प्रातर्हुतः, प्रातर्हुतेषु** हुतः **प्रातर्हुतहुतः, प्रातर्हुतहुताः अग्नयो यैस्ते प्रातर्हुतहुताग्नयः** यस्तो विग्रहमा तत्पुरुष र बहुब्रीहि समास भएर प्रातर्हुतहुताग्नयः यो शब्द बनेको छ। सायङ्कालमा हवन गरिएको अग्निमा प्रातःकालको हवन गरेका भन्ने यस शब्दको अर्थ हो। यो शब्द मुनयः शब्दको विशेषण हो। यसबाट मुनिहरूले साँझ र बिहान दुवै समयमा नित्य कर्मको रूपमा हवन गर्दथे भन्ने कुरा स्पष्ट हुन्छ।

**ऋषय ऊचुः (ऋषिहरूले भन्नुभयो)**

**त्वया खलु पुराणानि सेतिहासानि चानघ।**
**आख्यातान्यप्यधीतानि धर्मशास्त्राणि यान्युत॥ ६॥**

**पदार्थ–**

**अनघ** = पापले रहित भएका हे सूतजी
**त्वया** = तपाईंले
**खलु** = निश्चय नै
**सेतिहासानि** = इतिहासहरूले युक्त भएका
**पुराणानि** = पुराणहरू
**धर्मशास्त्राणि** = धर्मशास्त्रहरू
**अपि** = पनि
**अधीतानि** = पढ्नुभएको छ
**यानि** = जुन कुरा
**उत** = त्यसै गरी
**आख्यातानि च** = ती आफूले पढेका कुराहरूको व्याख्या पनि गर्नुभएको छ

**वाक्यार्थ–** हे पापले रहित भएका सूतजी ! तपाईंले इतिहासले सहित भएका पुराणहरू र धर्मशास्त्रहरू पनि पढ्नुभएको छ अनि आफूले पढेका ती शास्त्रहरूको व्याख्या पनि गर्नुभएको छ।

**यानि वेदविदां श्रेष्ठो भगवान् बादरायणः।**
**अन्ये च मुनयः सूत परावरविदो विदुः॥ ७॥**

**वेत्थ त्वं सौम्य तत् सर्वं तत्त्वतस्तदनुग्रहात् ।**
**ब्रूयुः स्निग्धस्य शिष्यस्य गुरवो गुह्यमप्युत ॥ ८ ॥**

**पदार्थ–**

**सूत** = हे सूतजी !
**यानि** = जुन विषयहरूलाई
**वेदविदां** = वेद जान्नेहरूमध्ये
**श्रेष्ठः** = श्रेष्ठ
**भगवान्** = भगवान्
**बादरायणः** = वेदव्यास
**अन्ये** = अरू
**च** = पनि
**परावरविदः** = भगवान्‌को सगुण र निर्गुण दुबै रूपलाई जान्ने
**मुनयः** = मुनिहरू
**विदुः** = जान्दछन्
**सौम्य** = हे शुद्ध र सरल हृदय भएका सूतजी !
**तदनुग्रहात्** = ती ऋषि र मुनिहरूको अनुग्रहले
**त्वं** = तपाईं
**तत्सर्वं** = ती सम्पूर्ण कुराहरू
**तत्त्वतः** = राम्रोसँग
**वेत्थ** = जान्नुहुन्छ
**गुरवः** = गुरुहरू
**स्निग्धस्य** = प्रिय
**शिष्यस्य** = शिष्यलाई
**गुह्यम्** = गोप्य कुरा
**अपि उत** = पनि
**ब्रूयुः** = बताउनुहुन्छ

**वाक्यार्थ–** हे शुद्ध र सरल हृदय भएका सूतजी ! वेदज्ञहरूमा श्रेष्ठ भगवान् वेदव्यास र भगवान्‌को सगुण र निर्गुण दुबै रूपलाई जान्ने अरू मुनिहरू जुन कुरा जान्दछन् ती सम्पूर्ण कुराहरू उहाँहरूका कृपाले तपाईं जान्नुहुन्छ। गुरुहरू आफ्ना प्रिय शिष्यलाई गोप्य कुराहरू पनि बताउनुहुन्छ।

**तत्र तत्राञ्जसाऽऽयुष्मन् भवता यद् विनिश्चितम् ।**
**पुंसामेकान्ततः श्रेयस्तन्नः शंसितुमर्हसि ॥ ९ ॥**

**पदार्थ–**

**आयुष्मन्** = हे आयुष्मन्
**तत्र तत्र** = ती-ती शास्त्र, पुराण र गुरुजनहरूको उपदेशमा
**पुंसाम्** = मानिसहरूका लागि
**एकान्ततः श्रेयः** = परम कल्याणको साधनका विषयमा
**भवता** = तपाईंले
**यत्** = जुन
**अञ्जसा** = सजिलैसँग
**विनिश्चितम्** = निश्चय गर्नुभएको छ
**तत्** = त्यो
**नः** = हामीहरूलाई
**शंसितुम्** = उपदेश गर्न
**अर्हसि** = सक्नुहुन्छ

**वाक्यार्थ–** हे आयुष्मन् ! ती शास्त्र, पुराण र गुरुजनहरूको उपदेशमा कलियुगका प्राणीहरूका लागि परम कल्याणको साधनका रूपमा तपाईंले जुन कुराको निश्चय गर्नुभएको छ, त्यो कुरा हामीहरूलाई बताउनुहोस्।

**प्रायेणाल्पायुषः सभ्य कलावस्मिन् युगे जनाः ।**
**मन्दाः सुमन्दमतयो मन्दभाग्या ह्युपद्रुताः ॥ १० ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सभ्य** = सन्त समाजका भूषण हुनुभएका हे सूतजी | **जनाः** = मानिसहरू | भएका |
| **अस्मिन्** = यो | **प्रायेण** = धेरैजसो | **मन्दभाग्याः** = मन्द भाग्य भएका |
| **कलौ** = कलि | **अल्पायुषः** = थोरै आयु भएका | **हि उपद्रुताः** = विघ्नबाधाहरूले घेरिएका हुन्छन् |
| **युगे** = युगमा | **मन्दाः** = मन्द | |
| | **सुमन्दमतयः** = मन्द बुद्धि | |

**वाक्यार्थ–** सन्त समाजका भूषण भएका हे सूतजी ! यस कलियुगमा धेरैजसो मनुष्यहरू थोरै आयु भएका, मन्द बुद्धि भएका, मन्द भाग्य भएका र विभिन्न विघ्नबाधाहरूले घेरिएका हुन्छन्।

**भूरीणि भूरिकर्माणि श्रोतव्यानि विभागशः।**
**अतः साधोऽत्र यत् सारं समुद्धृत्य मनीषया॥**
**ब्रूहि नः श्रद्दधानानां येनात्मा सुप्रसीदति॥ ११॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भूरिकर्माणि** = जहाँ धेरै प्रकारका कर्महरूको वर्णन गरिएको छ त्यस्ता | **अत्र** = ती शास्त्रहरूमा | **नः** = हामीहरूलाई |
| **भूरीणि** = धेरै शास्त्रहरू | **यत्** = जुन | **ब्रूहि** = भन्नुहोस् |
| **श्रोतव्यानि** = श्रवण गर्नुपर्ने छन् | **सारं** = सार कुरा छ | **येन** = जुन कुरा सुनेर |
| **अतः** = त्यसकारण | **मनीषया** = आफ्नो बुद्धिले | **आत्मा** = आत्मा |
| **साधो** = हे परोपकारी सूतजी | **समुद्धृत्य** = निकालेर | **सुप्रसीदति** = प्रसन्न हुन्छ |
| | **विभागशः** = स्पष्ट गरेर | |
| | **श्रद्दधानानां** = श्रद्धालु | |

**वाक्यार्थ–** शास्त्रहरू धेरै छन्, ती शास्त्रहरूमा कुनै एक निश्चित साधनको उल्लेख भएको पनि देखिँदैन। ती शास्त्रहरूमा अनेक प्रकारका कर्महरूको वर्णन गरिएको पाइन्छ। ती शास्त्रहरू यति विस्तृत छन् कि तिनीहरूको कुनै एक अंश सुन्न पनि कठिन छ। तपाईं परोपकारी हुनुहुन्छ, आफ्नो बुद्धिले ती शास्त्रहरूको सार निकालेर प्राणीहरूको कल्याणका लागि श्रद्धालु हामीहरूलाई सुनाउनुहोस्, जसबाट हाम्रो अन्तःकरण शुद्ध होस्।

**सूत जानासि भद्रं ते भगवान् सात्वतां पतिः॥**
**देवक्यां वसुदेवस्य जातो यस्य चिकीर्षया॥ १२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सूत** = हे सूतजी | **पतिः** = रक्षक | **चिकीर्षया** = इच्छाले |
| **ते भद्रं** = तपाईंको कल्याण होस् | **भगवान्** = भगवान् श्रीकृष्ण | **वसुदेवस्य** = वसुदेवकी पत्नी |
| **सात्वतां** = यदुवंशीहरूका | **यस्य** = जुन काम गर्ने | **देवक्यां** = देवकीबाट |

**जातः** = उत्पन्न हुनुभयो

**जानासि** = तपाईंलाई यो कुरा

थाहा छ

**वाक्यार्थ–** हे सूतजी ! तपाईंको कल्याण होस्, यदुवंशीका रक्षक भक्तवत्सल भगवान् श्रीकृष्णले वसुदेवकी धर्मपत्नी देवकीको गर्भबाट के गर्ने इच्छाले अवतार लिनुभएको थियो त्यो कुरा तपाईंलाई थाहा छ।

**तन्नः शुश्रूषमाणानामर्हस्यङ्गानुवर्णितुम्।**

**यस्यावतारो भूतानां क्षेमाय च भवाय च ॥ १३ ॥**

**पदार्थ–**

**अङ्ग** = हे प्रिय
**तत्** = त्यो कुरा
**शुश्रूषमाणानाम्** = श्रवण गर्न चाहने
**नः** = हामीहरूलाई
**अनुवर्णितुम्** = वर्णन गर्न
**अर्हसि** = सक्नुहुन्छ
**यस्य** = जसको
**अवतारः** = अवतार
**भूतानां** = प्राणीहरूको
**क्षेमाय** = परम कल्याणको लागि
**च** = र
**भवाय** = समृद्धिका लागि
**च** = पनि (हुन्छ)

**वाक्यार्थ–** तपाईं कृपापूर्वक त्यो कुराको वर्णन हामीलाई गर्नुहोस् किनभने भगवान्‌को अवतार जीवको परम कल्याण र समृद्धिका लागि हुन्छ।

**आपन्नः संसृतिं घोरां यन्नाम विवशो गृणन्।**

**ततः सद्यो विमुच्येत यद् बिभेति स्वयं भयम् ॥ १४ ॥**

**पदार्थ–**

**घोरां** = अत्यन्त डर लाग्दो
**संसृतिं** = जन्म र मृत्युको चक्रमा
**आपन्नः** = परेको जीवले
**यन्नाम** = जुन भगवान्‌को नाम
**विवशः** = विवश भएर पनि
**गृणन्** = लियो भने
**ततः** = त्यो जन्म र मृत्युको आपत्तिबाट
**सद्यः** = तुरुन्त
**विमुच्येत** = मुक्त हुन्छ
**स्वयं** = स्वयं
**भयम्** = डर पनि
**यत्** = जुन भगवान्‌को नामबाट
**बिभेति** = सधैं डराइरहन्छ

**वाक्यार्थ–** यो जीव जन्म र मृत्युको डरलाग्दो चक्रमा परेको छ। यस परिस्थितिमा ऊ विवश भएर पनि भगवान्‌को मङ्गलमय नामको उच्चारण गर्दछ भने त्यो त्यसै समयमा भयबाट मुक्त हुन्छ किनभने स्वयं भय पनि भगवान्‌को नामदेखि डराउँछ।

**यत्पादसंश्रयाः सूत मुनयः प्रशमायनाः।**

**सद्यः पुनन्त्युपस्पृष्टाः स्वर्धुन्यापोऽनुसेवया ॥ १५ ॥**

**पदार्थ–**

**सूत** = हे सूतजी
**यत्पादसंश्रयाः** = भगवान्‌को चरणको आश्रयमा रहेका हुनाले
**प्रशमायनाः** = शान्तिको मार्गमा लागेका
**उपस्पृष्टाः** = सन्निधिमात्रले सेवा

गरिएका
**मुनयः** = मुनिहरूले
**सद्यः** = तुरुन्त
**पुनन्ति** = पवित्र गर्दछन्
**स्वर्धुन्याः** = गङ्गाको
**आपः** = जलले त
**अनुसेवया** = धेरै दिनसम्म सेवा गरेपछि मात्र पवित्र गर्दछ

**वाक्यार्थ–** सूतजी ! परम विरक्त र परम शान्त मुनिहरू पनि भगवान्को शरणमा रहन्छन्। अतः त्यस्ता मुनिहरूको स्पर्शमात्रले पनि संसारका जीवहरू तुरुन्त पवित्र हुन्छन्। गङ्गाजीको जलको धेरै दिनसम्म सेवन गरेपछि मात्र पवित्रताको प्राप्ति हुन्छ।

**विवरण–** यस श्लोकमा आएका **स्वधुर्न्यापः** यस शब्दको बारेमा चर्चा गरौँ। स्वधुर्न्यापः यो समस्त पद हो। **स्वधुर्न्या आपः** यस्तो विग्रहमा षष्ठी तत्पुरुष समास भएको छ। **स्वर्धुनी** यो शब्दको अर्थ हो गङ्गा। भगवान्को चरणको स्पर्शमात्रले संसारी जीवहरू तुरुन्त पवित्र हुन्छन् भने गङ्गाजीमा बारम्बार स्नान गर्नाले पनि केहीमात्र पवित्र हुन्छन् भन्ने यस श्लोकको तात्पर्य हो।

**को वा भगवतस्तस्य पुण्यश्लोकेड्यकर्मणः।**
**शुद्धिकामो न शृणुयाद् यशः कलिमलापहम्॥ १६॥**

**पदार्थ–**

**पुण्यश्लोकेड्यकर्मणः** = पुण्यात्मा भक्तहरूद्वारा कीर्ति गाइएका
**तस्य** = ती
**भगवतः** = भगवान्को
**कलिमलापहम्** = कलियुगका दोषहरूलाई नष्ट गरिदिने
**यशः** = कीर्तिलाई
**कः वा** = कुन चाहिँ
**शुद्धिकामः** = अन्तःकरण शुद्ध गर्न चाहने मनुष्यले
**न शृणुयात्** = श्रवण नगर्ला

**वाक्यार्थ–** पुण्यात्मा भक्तहरू जसको लीलाको निरन्तर गान गरिरहन्छन् त्यस्ता भगवान्को कलियुगका दोषहरूलाई नष्ट गर्ने पवित्र कीर्तिलाई आफ्नो चित्तलाई शुद्ध गर्न चाहने त्यस्तो कुन मनुष्य होला, जसले श्रवण गर्न नचाहला।

**विवरण–** यस श्लोकमा आएको **पुण्यश्लोकेड्यकर्मणः** यो पदलाई लिएर केही विचार गरौँ। **पुण्याश्च ते श्लोकाः पुण्यश्लोकाः तैः इड्यानि कर्माणि यस्य सः पुण्यश्लोकेड्यकर्मा तस्य पुण्यश्लोकेड्यकर्मणः** यस विग्रहमा कर्मधारय र बहुव्रीहि समास भई पुण्यश्लोकेड्यकर्मणः यो शब्द बनेको हो। यहाँ पुण्यश्लोक यस पदले भगवान्का भक्तलाई बुझाएको छ। पुण्यश्लोक वा भगवान्का भक्तद्वारा कीर्ति गाइएका भगवान्लाई नै पुण्यश्लोकेड्यकर्मा यस पदले बुझाएको छ।

**तस्य कर्माण्युदाराणि परिगीतानि सूरिभिः।**
**ब्रूहि नः श्रद्दधानानां लीलया दधतः कलाः॥ १७॥**

**पदार्थ–**

**लीलया** = लीलाद्वारा
**कलाः** = विभिन्न अवतारहरू
**दधतः** = धारण गर्ने भएका
**तस्य** = ती भगवान् नारायणको
**सूरिभिः** = नारद आदि ऋषिहरूद्वारा
**परिगीतानि** = गाइएका
**उदाराणि** = उदार
**कर्माणि** = कर्महरू
**श्रद्दधानानां** = श्रद्धा गर्ने
**नः** = हामीहरूलाई
**ब्रूहि** = बताउनुहोस्

**वाक्यार्थ–** जो भगवान् लीलाद्वारा विभिन्न अवतारहरू धारण गर्नुहुन्छ, जुन भगवान्को उदार कर्महरूको गान नारद आदि ऋषिहरूले गर्दछन्, हामी श्रद्धालुलाई ती कर्महरूको वर्णन गर्नुहोस्।

**अथाख्याहि हरेर्धीमन्नवतारकथाः शुभाः।**

**लीला विदधतः स्वैरमीश्वरस्यात्ममायया ॥ १८ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **धीमन्** = हे बुद्धिमान् सूतजी ! | **लीलाः** = लीलाहरू | **अवतारकथाः** = अवतारका |
| **आत्ममायया** = आफ्नो | **विदधतः** = गर्ने भएका | कथाहरू |
| मायाद्वारा | **ईश्वरस्य हरेः** = ईश्वर हरिका | **अथ** = अब |
| **स्वैरम्** = इच्छानुसार | **शुभाः** = शुभ | **आख्याहि** = भन्नुहोस् |

**वाक्यार्थ–** हे बुद्धिमान् सूतजी ! सर्वसमर्थ प्रभु आफ्नी योगमायाद्वारा स्वच्छन्द लीला गर्नुहुन्छ, त्यस्ता श्रीहरिका मङ्गलमय लीलाहरूको तपाईं वर्णन गर्नुहोस्।

**वयं तु न वितृप्याम उत्तमश्लोकविक्रमे।**

**यच्छृण्वतां रसज्ञानां स्वादु स्वादु पदे पदे ॥ १९ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **वयं** = हामीहरू | श्रवणमा | **शृण्वतां** = श्रोताहरूका लागि |
| **तु** = त | **न वितृप्यामः** = तृप्त हुँदैनौं | **पदे पदे** = पदपदमा |
| **उत्तमश्लोकविक्रमे** = पुण्य कीर्ति | **यत्** = जुन लीलाको श्रवणमा | **स्वादु स्वादु** = नयाँ-नयाँ रसको |
| भएका भगवान्को लीला | **रसज्ञानां** = रसज्ञ | अनुभव हुन्छ |

**वाक्यार्थ–** पुण्यकीर्ति भगवान्को लीलाहरूको श्रवण गरेर हामी कहिल्यै पनि तृप्त हुँदैनौं। किनभने रसज्ञ श्रोताहरूलाई पदपदमा भगवान्को लीलामा नयाँ-नयाँ रसहरूको अनुभव हुन्छ।

**विवरण–** यस श्लोकमा शौनक आदि ऋषिहरूले भनेका छन्– भगवान्को कथाश्रवणमा हामीलाई कहिल्यै पनि तृप्ति हुँदैन। योग र यागादिको अनुष्ठानद्वारा हृदयरूपी गुफामा रहेको अज्ञानरूपी अन्धकार तत्काल भाग्न सक्दैन परन्तु भगवान्को कथाश्रवण गर्नेबित्तिकै अन्तःकरणको अज्ञानरूपी अन्धकार भाग्दछ। भगवान्को कथाश्रवण गर्दा प्रत्येक पदमा नयाँ-नयाँ रसको अनुभूति हुन्छ। यसैले ऋषिहरूले हामीलाई भगवान्को कथाश्रवणमा तृप्तिको अनुभूति हुँदैन भनेका हुन्।

अन्य पदार्थबाट हुने तृप्ति र भगवान्को कथाश्रवणबाट हुने तृप्ति फरक छन्। तृप्ति तीन प्रकारका हुन्छन्। पेट भरिएर (खान पुगेर), रसको अज्ञानको कारणले र विशेष कुनै स्वाद नहुनाले। परन्तु भगवान्को कथाश्रवणमा उक्त तीनओटा कारणले तृप्ति सम्भव छैन।

कुनै पदार्थ खाँदा त्यो पदार्थले पेट भरिएपछि उक्त पदार्थ थपेर खान मन लाग्दैन। तर सुनेका कुराहरू रहने मस्तिष्कको भाग कहिल्यै पनि भरिँदैन।

यस्तै एउटै वस्तुको सेवन लगातार गरिरहँदा पनि तृप्ति हुन्छ। उखुमा एउटै किसिमको रस

हुन्छ। त्यसकारण उखुको रस धेरै पान गरिसकेपछि फेरि उखुको रस पिउने इच्छा हुँदैन। परन्तु भगवान्को कथाश्रवण गर्दा एउटै रसको आस्वादन नभएर क्षणक्षणमा भिन्न-भिन्न रसको आस्वादन हुन्छ। त्यसै कारण यस श्लोकमा स्वादु **स्वादु पदे पदे** भनिएको हो। यसको अर्थ प्रत्येक पदमा भिन्न-भिन्न किसिमको स्वाद रहेको छ।

यसप्रकार तृप्तिका तीन कारणमध्ये एउटा पनि कारण भगवान्को कथाश्रवणमा नभएकाले भगवान्को श्रवण गरेर हामीलाई तृप्ति वा अलंबुद्धि हुँदैन भनी ऋषिहरूले भनेका हुन्।

**कृतवान् किल कर्माणि सह रामेण केशवः।**

**अतिमर्त्यानि भगवान् गूढः कपटमानुषः॥ २०॥**

**पदार्थ—**

**भगवान्** = भगवान्ले
**गूढः** = आफूलाई
छिपाउनुभएको छ
**कपटमानुषः** = मनुष्यले जस्तो
लीला गर्नुहुन्छ
**केशवः** = भगवान् श्रीकृष्णले
**रामेण सह** = बलरामका साथ
**किल** = निश्चय नै
**अतिमर्त्यानि** = मनुष्यहरूले गर्न
नसक्ने किसिमका
**कर्माणि** = कामहरू
**कृतवान्** = गर्नुभयो

**वाक्यार्थ—** भगवान्ले आफ्नो स्वरूपलाई लुकाउनुभएको थियो, मनुष्यहरूका अगाडि आफू पनि मनुष्य भएको नाटक गर्नुहुन्थ्यो, परन्तु उहाँले आफ्ना दाजु बलरामजीका साथ जुन लीलाहरू गरेर देखाउनुभयो, ती लीला अथवा पराक्रमहरू मनुष्यहरूले गर्न सक्ने खालका थिएनन्।

**कलिमागतमाज्ञाय क्षेत्रेऽस्मिन् वैष्णवे वयम्।**

**आसीना दीर्घसत्रेण कथायां सक्षणा हरेः॥ २१॥**

**पदार्थ—**

**कलिम्** = कलि युग
**आगतम्** = आएको कुरा
**आज्ञाय** = राम्रोसँग जानेर
**वयम्** = हामीहरू
**अस्मिन्** = यस
**वैष्णवे** = वैष्णव
**क्षेत्रे** = क्षेत्रमा
**दीर्घसत्रेण** = दीर्घकालिक
यज्ञको सङ्कल्प गरेर
**आसीनाः** = बसेका छौं
**हरेः** = भगवान् हरिको
**कथायां** = कथा श्रवणका लागि
**सक्षणाः** = हामीहरूलाई समय
प्राप्त छ

**वाक्यार्थ—** पुण्यकीर्ति भगवान्को लीलाहरूको श्रवण गरेर हामी कहिल्यै पनि तृप्त हुँदैनौं। किनभने रसज्ञ श्रोताहरूलाई पदपदमा भगवान्को लीलामा नयाँ-नयाँ रसहरूको अनुभव हुन्छ।

**त्वं नः सन्दर्शितो धात्रा दुस्तरं निस्तितीर्षताम्।**

**कलिं सत्त्वहरं पुंसां कर्णधार इवार्णवम्॥ २२॥**

**पदार्थ—**

**सत्त्वहरं** = अन्तःकरणको
पवित्रता र शक्तिको नाश गर्ने
**कलिं** = कलियुगलाई
**निस्तितीर्षताम्** = पूरै पार गर्न
चाहने हामीहरूलाई
**दुस्तरं** = दुःखले मात्र तर्न

सकिने
**अर्णवम्** = समुद्र तर्न चाहने
**पुंसां** = मानिसहरूका लागि
**कर्णधारः** = नाविक
**इव** = झैं
**धात्रा** = परमात्माद्वारा
**त्वं** = तपाईं
**नः** = हामीहरूका लागि
**सन्दर्शितः** = प्राप्त हुनुभएको हो

**वाक्यार्थ–** अन्तःकरणको पवित्रता र शक्तिको नाश गर्ने कलियुग आएको जानेर हामीहरू यस वैष्णव क्षेत्रमा दीर्घकालीन यज्ञको सङ्कल्प गरेर बसेका छौं। हामीहरूलाई भगवान्का कथाश्रवण गर्ने अवसर प्राप्त छ। समुद्र पार गर्न चाहने मनुष्यलाई जहाज खियाउने मान्छे मिलेझैं अन्तःकरणको शुद्धि र शक्तिलाई नाश गर्ने कलिको दोषबाट अथवा संसारबाट पार हुन चाहने हामीहरूलाई परमात्माले तपाईंलाई यहाँ पठाउनुभएको हो।

**ब्रूहि योगेश्वरे कृष्णे ब्रह्मण्ये धर्मवर्मणि।**

**स्वां काष्ठामधुनोपेते धर्मः कं शरणं गतः॥ २३॥**

**पदार्थ–**

**धर्मवर्मणि** = धर्मरक्षक
**ब्रह्मण्ये** = ब्राह्मणभक्त
**योगेश्वरे** = योगेश्वर
**कृष्णे** = कृष्ण
**स्वां** = आफ्नो
**काष्ठाम्** = धाममा
**उपेते** = जानुभएपछि
**अधुना** = अहिले
**धर्मः** = धर्म
**कं** = कसको
**शरणं** = शरणमा
**गतः** = गयो
**ब्रूहि** = त्यो कुरा भन्नुहोस्

**वाक्यार्थ–** धर्मरक्षक, ब्राह्मणभक्त, योगेश्वर भगवान् श्रीकृष्ण आफ्नो धाममा जानुभएपछि अहिले धर्म कसको शरणमा गयो, यो कुरा हामीलाई बताउनुहोस्।

श्रीमद्भागवतको पहिलो स्कन्धको पहिलो अध्यायमा शौनक आदि ऋषिहरूले सूतजीसँग ६ ओटा प्रश्न गरेका छन्। ती ६ ओटा प्रश्नहरू यसप्रकार छन्।

पहिलो– **पुंसामेकान्ततः श्रेयः** जीवहरूको वस्तुतः कल्याण कसरी हुन्छ ?

दोस्रो– **अवतारप्रयोजनम्** अर्थात् भगवान् अवतार किन लिनुहुन्छ ?

तेस्रो– **तस्य कर्माणि अपि** अर्थात् भगवान्द्वारा गरिएका कर्महरू के–के हुन्।

चौथो– **अवतार कथा अपि** अर्थात् भगवान्का अवतारका कथाहरू के–के हुन्।

पाचौँ– **कृष्णावतारचरितम्** अर्थात् कृष्णावतारमा भगवान्ले के–के काम गर्नुभयो।

छैटौं– **धर्मः कं शरणं गतः** अर्थात् भगवान्ले पृथिवीको भार हरण गरेर आफ्नो धामतिर फर्केपछि धर्म कसको शरणमा गयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां प्रथमस्कन्धे**

**नैमिषीयोपाख्याने प्रथमोऽध्यायः॥ १**

# अथ द्वितीयोऽध्यायः

## भगवत्कथा र भगवद्भक्तिको माहात्म्य

**व्यास उवाच** (व्यासजीले भन्नुभयो)

**इति सम्प्रश्नसंहृष्टो विप्राणां रौमहर्षणिः ।**

**प्रतिपूज्य वचस्तेषां प्रवक्तुमुपचक्रमे ॥ १ ॥**

**पदार्थ–**

**इति** = यसप्रकार
**विप्राणां** = शौनक आदि ऋषिहरूको
**सम्प्रश्नसंहृष्टः** = प्रश्नहरूबाट प्रसन्न हुनुभएका
**रौमहर्षणिः** = रोमहर्षका पुत्र उग्रश्रवा वा सूतजीले
**तेषां** = ती ऋषिहरूको
**वचः** = प्रश्नलाई
**प्रतिपूज्य** = प्रशंसा गर्दै
**प्रवक्तुम्** = भन्न
**उपचक्रमे** = प्रारम्भ गर्नुभयो

**वाक्यार्थ–** ब्रह्मवादी शौनक आदि ऋषिहरूको प्रश्न सुनेर रोमहर्षका पुत्र उग्रश्रवा (सूत)लाई ठुलो आनन्द भयो। उहाँले ऋषिहरूको मङ्गलमय प्रश्नहरूलाई प्रशंसा गर्दै यसप्रकार भन्न लाग्नुभयो।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**यं प्रव्रजन्तमनुपेतमपेतकृत्यं**
**द्वैपायनो विरहकातर आजुहाव ।**
**पुत्रेति तन्मयतया तरवोऽभिनेदुस्**
**तं सर्वभूतहृदयं मुनिमानतोऽस्मि ॥ २ ॥**

**पदार्थ–**

**प्रव्रजन्तम्** = सम्पूर्ण कुरा त्यागेर जान लागेका
**अनुपेतम्** = उपनयन संस्कार गरिदिनुहोस् भनी आचार्यसमक्ष नपुगेका
**अपेतकृत्यं** = कर्ममार्गमा प्रवृत्त नभएका
**यं** = जसलाई
**विरहकातरः** = विरहले डराएका
**द्वैपायनः** = वेदव्यासले
**पुत्र** = ए छोरा
**इति** = यस्तो
**आजुहाव** = बोलाए
**तरवः** = वृक्षहरूले
**तन्मयतया** = तन्मयताका कारणले गर्दा
**अभिनेदुः** = उत्तर दिए
**सर्वभूतहृदयं** = सम्पूर्ण प्राणीहरूका हृदयस्वरूप
**तं** = त्यस्ता
**मुनिम्** = मुनि शुकदेवजीलाई
**आनतः अस्मि** = नमस्कार गर्दछु

**वाक्यार्थ–** जुन समयमा श्रीशुकदेवजीको व्रतबन्ध संस्कार भएको थिएन, लौकिक र वैदिक

कर्मको अनुष्ठानको अवसर पनि प्राप्त भएको थिएन, त्यस समयमा उनलाई घरबाट सदाका लागि संन्यास लिएर जान लागेको देखेर उनका बाबु व्यासजी विरहले व्याकुल भएर उच्च स्वरले ए बाबु ! ए बाबु ! तिमी मलाई छोडेर अन्यत्र नजाऊ भनी कराउन थाले। त्यस वेला तन्मय भएका कारणले शुकदेवजीका तर्फबाट जङ्गलका वृक्षहरूले उत्तर दिए। यस्ता सम्पूर्ण प्राणीहरूका हृदयरूप मुनि श्रीशुकदेवजीलाई म नमस्कार गर्दछु।

**विवरण—** संन्यास लिने दुई किसिमका विधान छन्। **यदहरेव विरजेत् तदहरेव प्रव्रजेत्** अर्थात् मनुष्यलाई जुन दिन उत्कृष्ट वैराग्य आउँछ त्यसैदिन संन्यास लिनू। यस्तो एउटा विधान छ भने अर्को विधान छ **आश्रमात् आश्रमान्तरं गच्छेत्** अर्थात् एउटा आश्रम पार गरेर अर्को आश्रममा प्रवेश गरोस्।

एउटा आश्रम पार गरेपछि अर्को आश्रममा जानुपर्दछ भन्ने विधान अविरक्त व्यक्तिका लागि हो। जुन दिन वैराग्य आउँछ, त्यही दिन संन्यास लिएर हिँडोस् भन्ने यो वचन अत्यन्त वैराग्य भएका व्यक्तिका लागि हो। वेदहरूको अध्ययन नगरीकन, यज्ञहरूद्वारा देवताहरूलाई प्रसन्न नगरीकन जो व्यक्ति मोक्षमार्गमा प्रवेश गर्दछ उसको पतन हुन्छ भनी मनुस्मृतिमा भनिएको छ। वेदाध्ययनद्वारा मनुष्य ऋषिऋणबाट मुक्त हुन्छ, योग्य सन्तान उत्पन्न गरेपछि मानिस पितृऋणबाट मुक्त हुन्छ भने यज्ञहरूको अनुष्ठानद्वारा देवताहरूलाई प्रसन्न गराएपछि देवऋणबाट मुक्त हुन्छ। त्यसकारण वेदाध्ययन, योग्य सन्ततिको उत्पादन र यज्ञहरूको अनुष्ठान गरेपछिमात्र संन्यासमार्गमा प्रवेश गर्नू भन्ने मनुको आज्ञा छ। परन्तु शुकदेवले न वेदको अध्ययन गरेका थिए, न योग्य सन्ततिलाई उत्पन्न गरेका थिए, न त उनले कुनै यज्ञको अनुष्ठान नै गरेका थिए। फेरि उनले कसरी संन्यास लिए भन्ने प्रश्न उठ्न सक्दछ। यसको उत्तर हो— विषयवस्तुमा आकर्षित हुने सामान्य रागी व्यक्तिहरूका लागि आश्रमात् आश्रमान्तरं गच्छेत् यस्तो विधान गरिएको हो। शुकदेव अत्यन्त विरक्त हुनाले उहाँ निवृत्तिमार्गका अनुयायी हुनुहुन्थ्यो। उहाँ निवृत्तिमार्गका अनुयायी हुनाले उहाँलाई उक्त तीनै प्रकारका ऋणहरूमध्ये कुनै पनि ऋणले स्पर्श गर्दैनथ्यो। त्यसकारण त्यस्ता व्यक्तिहरूका लागि **यदहरेव विरजेत् तदहरेव प्रव्रजेत्** यो विधान गरिएको हो।

**यः स्वानुभावमखिलश्रुतिसारमेक-**

**मध्यात्मदीपमतितितीर्षतां तमोऽन्धम्।**

**संसारिणां करुणयाह पुराणगुह्यं**

**तं व्याससूनुमुपयामि गुरुं मुनीनाम्॥ ३॥**

**पदार्थ—**

**तमोऽअन्धम्** = संसाररूपी गाढा अन्धकारलाई
**अतितितीर्षतां** = पार गर्न चाहनेहरूका लागि
**स्वानुभावम्** = भगवान्को वास्तविक स्वरूपको अनुभव गराउने
**अखिलश्रुतिसारम्** = सम्पूर्ण वेदको सार भएको

**एकम्** = एउटै
**अध्यात्मदीपम्** = आध्यात्मिक तत्त्वलाई प्रकाशित गर्नका लागि दीप बनेको यो
**पुराणगुह्यं** = यो रहस्यात्मक पुराण भागवत
**यः** = जसले
**संसारिणां** = संसारी मनुष्यहरूमाथि
**करुणया** = कृपा गरेर
**आह** = बताउनुभयो
**तं** = ती
**मुनीनाम्** = मुनिहरूका पनि
**गुरुं** = गुरु
**व्याससूनुम्** = व्यासका पुत्र शुकदेवजीको
**उपयामि** = शरणमा जान्छु

**वाक्यार्थ–** यो श्रीमद्भागवत अत्यन्त रहस्यात्मक पुराण हो। यसले भगवान्को वास्तविक स्वरूपको अनुभव गराउँछ। अनि यो पुराण समस्त वेदहरूको सार हो। जो मनुष्य अज्ञानरूपी अन्धकारमा फसेका छन् अनि त्यस अन्धकारबाट पार हुन चाहन्छन् उनीहरूका लागि आध्यात्मिक तत्त्वलाई प्रकाशित गर्ने एक अद्वितीय दीपक हो यो। उनीहरूमाथि नै करुणा गरेर ठुला–ठुला मुनिहरूका पनि आचार्य शुकदेवजीले यसको वर्णन गर्नुभएको हो। त्यस्ता शुकदेवजीको शरणमा म पर्दछु।

**विवरण–** यस श्लोकमा अज्ञानलाई अन्धकारसँग तुलना गरिएको छ। जसरी अन्धकारको कारणले भएको वस्तु पनि देखिँदैन त्यसै गरी अज्ञानको कारणले गर्दा भएको आत्मा पनि नभएको जस्तो भान भइरहेको छ। **तमोऽन्धम् अतितितीर्षताम्** अर्थात् संसाररूपी गाढा अन्धकारबाट पार हुन चाहने मनुष्यहरूका लागि यो श्रीमद्भागवत उत्कृष्ट माध्यम हो। यो श्रीमद्भागवतको विशेषता बताउनका लागि यस श्लोकमा चारओटा विशेषण आएका छन्। **स्वानुभावम्, अखिलश्रुतिसारम्, एकम्, अध्यात्मदीम्।**

**स्वानुभवम्** यस शब्दको व्युत्पत्तिप्रक्रिया यसप्रकार छ– **स्व अनुभावो यस्य तत् स्वानुभवम्।** यहाँ प्रयुक्त स्वको अर्थ असाधारण हो। अनुभावको अर्थ प्रभाव हो। यसकारण असाधारण प्रभाव भएको भन्ने अर्थ यस समस्त पदबाट आउँछ। भागवत अज्ञानको निराकरण र भगवत्प्राप्तिका लागि असाधारण माध्यम भएकाले भागवतको विशेषणका रूपमा स्वानुभवम् यो पद आएको हो।

**अखिलश्रुतिसारम्** यस पदको चर्चा गरौँ। **अखिलश्रुतीनां सारम् यस विग्रहबाट तत्पुरुष समास भई अखिलश्रुतिसारम्** यो शब्द बनेको छ। यस पदको सामान्यार्थ सम्पूर्ण वेदहरूको सार भन्ने हुन्छ। सम्पूर्ण वेदहरूको अध्ययन गर्दा हुने ब्रह्मतत्त्वसाक्षात्कार केवल श्रीमद्भागवतको अध्ययनद्वारा हुने भएकाले यो श्रीमद्भागवतलाई अखिलश्रुतिसारम् अर्थात् सम्पूर्ण वेदहरूको सार भनिएको हो।

यहाँ श्रीमद्भागवतका लागि आएको तेस्रो विशेषण हो– **एकम्।** एकम्को अर्थ हो अद्वितीय, अनुपम अर्थात् कसैसँग दाँज्न नमिल्ने।

चौथो विशेषण हो– **अध्यात्मदीपम्।** आत्मनि इति अध्यात्मम्, तस्य दीपम् अध्यात्मदीपम्। शरीरभित्र अन्तःकरणको साक्षीरूपले बसेको आत्मालाई अध्यात्म भनिन्छ। दीप शब्दको अर्थ साक्षात्प्रकाशक हो। त्यस्तो आत्माको ज्ञान श्रीमद्भागवतको अध्ययनद्वारा हुने हुनाले यो श्रीमद्भागवतलाई अध्यात्मदीप भनिएको हो।

संसारीहरूमाथि दया गरेर उक्त चार विशेषणहरूले युक्त भएको रहस्यात्मक पुराणको उपदेश गर्ने मुनिहरूका पनि गुरु भएका व्यासका पुत्र श्रीशुकदेवको म शरणमा पर्दछु भनेर यहाँ सूतजीले शुकदेवप्रति आफ्नो अगाध श्रद्धा व्यक्त गर्नुभएको छ।

**नारायणं नमस्कृत्य नरं चैव नरोत्तमम्।**
**देवीं सरस्वतीं व्यासं ततो जयमुदीरयेत्॥ ४॥**

पदार्थ–

**नरोत्तमम्** = मनुष्यहरूमा श्रेष्ठ
**नारायणं** = नारायणलाई र
**नरं** = नररूप ऋषिहरूलाई
**च एव** = पनि
**देवीं** = देवी
**सरस्वतीं** = सरस्वतीलाई
**व्यासं** = वेदव्यासलाई
**नमस्कृत्य** = नमस्कार गरेर
**ततः** = त्यसपछि
**जयम्** = संसार र अन्तःकरणका सम्पूर्ण विकारहरूमाथि विजय प्राप्त गराउने श्रीमद्भागवत महापुराणको
**उदीरयेत्** = पाठ गर्नुपर्छ

**वाक्यार्थ–** मनुष्यहरूमा श्रेष्ठ भगवान्का अवतार नारायण र नररूप ऋषिहरूलाई, सरस्वती देवीलाई, त्यसपछि भगवान् वेदव्यासलाई नमस्कार गरेर संसार र अन्तःकरणका विकारहरूमाथि विजय प्राप्त गराउने श्रीमद्भागवतमहापुराणको पाठ गर्नुपर्छ।

**मुनयः साधु पृष्टोऽहं भवद्भिर्लोकमङ्गलम्।**
**यत् कृतः कृष्णसम्प्रश्नो येनात्मा सुप्रसीदति॥ ५॥**

पदार्थ–

**मुनयः** = हे ऋषिहरू हो
**भवद्भिः** = तपाईंहरूले
**लोकमङ्गलम्** = सम्पूर्ण विश्वको कल्याणका लागि
**अहं** = मसँग
**साधु** = राम्रोसँग
**पृष्टः** = प्रश्न गर्नुभयो
**यत्** = किनभने
**कृष्णसम्प्रश्नः** = कृष्णसम्बन्धी राम्रो प्रश्न
**कृतः** = गर्नुभएको छ
**येन** = जसबाट
**आत्मा** = अन्तःकरण
**सुप्रसीदति** = प्रसन्न हुन्छ

**वाक्यार्थ–** हे ऋषिहरू हो ! तपाईंहरूले सम्पूर्ण विश्वको कल्याण गर्ने कृष्णसम्बन्धी प्रश्न मसँग गर्नुभएको छ। यस प्रश्नले अन्तःकरणको शुद्धि हुन्छ।

**स वै पुंसां परो धर्मो यतो भक्तिरधोक्षजे।**
**अहैतुक्यप्रतिहता ययाऽऽत्मा सुप्रसीदति॥ ६॥**

पदार्थ–

**वै** = निश्चय नै
**पुंसां** = मनुष्यहरूका लागि
**सः** = त्यही नै
**परः** = ठुलो
**धर्मः** = धर्म हो
**यतः** = जसबाट
**अधोक्षजे** = भगवान् नारायणमा
**अहैतुकी** = कामनाले रहित
**अप्रतिहता** = विघ्नले रहित

**भक्तिः** = भक्तिको उदय हुन्छ
**यया** = जुन भक्तिद्वारा
**आत्मा** = अन्तःकरण
**सुप्रसीदति** = प्रसन्न हुन्छ

**वाक्यार्थ–** मनुष्यहरूका लागि सबैभन्दा ठुलो धर्म त्यही हो जुन धर्मको अनुष्ठान गर्नाले अन्तःकरणमा कुनै पनि कामना र विघ्नले रहित भएको भगवान् नारायणप्रतिको भक्तिको आविर्भाव हुन्छ। जुन भक्तिद्वारा अन्तःकरण प्रसन्न हुन्छ।

**वासुदेवे भगवति भक्तियोगः प्रयोजितः।**

**जनयत्याशु वैराग्यं ज्ञानं च यदहैतुकम्॥ ७॥**

पदार्थ–

**यत्** = किनभने
**भगवति** = भगवान्
**वासुदेवे** = वासुदेवमा
**प्रयोजितः** = गरिएको
**भक्तियोगः** = भक्तियोगले
**आशु** = चाँडै नै
**वैराग्यं** = वैराग्य र
**अहैतुकम्** = निष्काम
**ज्ञानं** = ज्ञान
**च** = पनि
**जनयति** = उत्पन्न गराउँछ

**वाक्यार्थ–** भगवान् श्रीकृष्णमा गरिएको भक्तिले चाँडै नै निष्काम ज्ञान र वैराग्यलाई उत्पन्न गर्दछ।

**धर्मः स्वनुष्ठितः पुंसां विष्वक्सेनकथासु यः।**

**नोत्पादयेद् यदि रतिं श्रम एव हि केवलम्॥ ८॥**

पदार्थ–

**यः** = जुन
**स्वनुष्ठितः** = राम्रोसँग गरिएको
**धर्मः** = धर्मले
**पुंसां** = मानिसहरूमा
**विष्वक्सेनकथासु** = भगवान्को
कथामा
**रतिं** = प्रेम
**यदि** = यदि
**न उत्पादयेत्** = उत्पन्न गर्दैन भने
**हि** = निश्चय नै
**केवलम्** = केवल
**श्रमः** = परिश्रम
**एव** = मात्र हो

**वाक्यार्थ–** राम्रोसँग अनुष्ठान गरिएको धर्मले भगवान् नारायणको कथामा प्रेम उत्पन्न गर्दैन भने त्यो केवल परिश्रममात्र हुन्छ।

**धर्मस्य ह्यापवर्ग्यस्य नार्थोऽर्थायोपकल्पते।**

**नार्थस्य धर्मैकान्तस्य कामो लाभाय हि स्मृतः॥ ९॥**

पदार्थ–

**आपवर्ग्यस्य** = मोक्षरूप
फललाई उत्पन्न गर्ने
**धर्मस्य** = धर्मको
**अर्थः** = प्रयोजन
**अर्थाय** = धन प्राप्तिका लागि
**न हि उपकल्पते** = निश्चय नै
योग्य हुँदैन
**धर्मैकान्तस्य** = धर्मानुष्ठानमात्र
फल भएको

**अर्थस्य** = धनको
**कामः** = विषयको उपभोग
**हि** = निश्चय नै
**लाभाय** = लाभका लागि
**न स्मृतः** = प्रयोजन वा फल मान्न सकिन्न

**वाक्यार्थ–** मोक्षरूप फललाई उत्पन्न गर्ने धर्मको प्रयोजन धनलाई प्राप्त गर्नु होइन, धर्मानुष्ठानमात्र फल भएको धर्मको प्रयोजन विषयको उपभोग गर्नु होइन।

**विवरण–** सामान्यतः लोकप्रसिद्ध नियम के छ भने पहिले मनुष्यले धर्मको अनुष्ठान गर्दछ। धर्मको अनुष्ठानद्वारा मनुष्यलाई धन प्राप्त हुन्छ। धनद्वारा उसले विषयको उपभोग गर्दछ। विषयको उपभोगद्वारा उसलाई इन्द्रियतृप्ति हुन्छ।

यो श्रीमद्भागवत मोक्षशास्त्र भएकाले यस ग्रन्थको परमप्रयोजन हो कैवल्य (मोक्ष)लाई प्राप्त गराउनु। **कैवल्यैकप्रयोजनम्** अर्थात् श्रीमद्भागवतको प्रयोजन हो जीवलाई एउटै मात्र वस्तु कैवल्य प्राप्त गराउनु। अतः यहाँ धर्मानुष्ठानको फल धन कमाउने हो भन्ने कुराको खण्डन गर्दै सूतजी शौनक आदि ऋषिहरूलाई उपदेश गर्दै भन्नुहुन्छ– **धर्मस्य ह्यापवर्ग्यस्य**।

जहाँ पवर्गको समाप्ति हुन्छ त्यसलाई अपवर्ग भनिन्छ। पवर्ग हुन् प, फ, ब, भ र म। पको अर्थ हो पतन, फको अर्थ हो फलाशा, बको अर्थ हो बन्धन, भको अर्थ हो भय र मको अर्थ हो मृत्यु। अर्थात् मोक्ष भनेको त्यो स्थिति हो जहाँ पतन, फलाशा, बन्धन, भय र मृत्युको अभाव छ।

धर्मको वास्तविक फल मोक्ष प्राप्त गराउने हुनाले यहाँ आपवर्ग्यः यो शब्द धर्मको विशेषणको रूपमा आएकाले धर्मको अनुष्ठानको मुख्य फल चित्तशुद्धिद्वारा ज्ञान प्राप्त गराएर जीवलाई मोक्ष प्राप्त गराउनु हो भन्ने बुझिन्छ।

यस श्लोकमा आएको **नार्थोऽर्थायोपकल्पते** यस पदावलीको चर्चा गरौँ– यहाँ यस पदावलीको अन्वय यसप्रकार गर्नुपर्दछ– **अर्थः अर्थाय न उपकल्पते**। यस वाक्यमा अर्थ यो शब्दको प्रयोग दुईपटक भएको छ। पहिलो अर्थ शब्द प्रथमान्त छ भने दोस्रो अर्थ शब्द चतुर्थ्यन्त छ। प्रथमान्त अर्थ शब्दको अर्थ प्रयोजन हो भने चतुर्थ्यन्त अर्थ शब्दको अर्थ धनका लागि हो।
यस श्लोकमा आएको **काम** शब्दको अर्थ हो विषयको उपभोग। **लाभाय** यो शब्दको अर्थ हो प्रयोजन। यस वाक्यले धनको प्रयोजन विषयभोगका लागि हो भन्ने सामान्य मान्यताको खण्डन गर्दै धन धर्मका लागि हो, विषयभोगका लागि होइन भन्ने कुरा बताएको छ। त्यसै गरी विषयभोगको प्रयोजन इन्द्रियलाई तृप्त गराउनु होइन, अपितु जीवननिर्वाहमात्र गर्नु हो। बाँच्नुको प्रयोजन वेदमा बताइएका सकाम कर्महरूको अनुष्ठानद्वारा स्वर्ग प्राप्त गर्नु होइन, अपितु तत्त्वजिज्ञासा गर्नु हो।

**कामस्य नेन्द्रियप्रीतिर्लाभो जीवेत यावता।**
**जीवस्य तत्त्वजिज्ञासा नार्थो यश्चेह कर्मभिः॥ १०॥**

पदार्थ–

**कामस्य** = विषयभोगको
**लाभः** = प्रयोजन
**इन्द्रियप्रीतिः न** = इन्द्रियलाई तृप्त गर्नु होइन किन्तु
**यावता जीवेत** = जतिले जीवननिर्वाह हुन्छ त्यति मात्र हो

| | | |
|---|---|---|
| **जीवस्य** = जीवनको | **कर्मभिः** = अग्निहोत्र आदि वैदिक कर्महरूको अनुष्ठान गरेर स्वर्गप्राप्ति गर्नुपर्छ भन्ने | **यः** = जुन |
| **अर्थः** = प्रयोजन | **च** = पनि | **इह न** = यहाँ प्रसिद्ध छ त्यो फल होइन |
| **तत्त्वजिज्ञासा** = तत्त्वको जिज्ञासा | | |

**वाक्यार्थ—** विषयभोगको प्रयोजन इन्द्रियतृप्ति होइन, अपितु जीवननिर्वाहमात्र हो, जीवनको प्रयोजन वेदमा बताइएका कर्महरूको अनुष्ठानद्वारा स्वर्ग आदि फल प्राप्त गर्नु होइन अपितु तत्त्वजिज्ञासा हो।

**विवरण—** यस श्लोकमा आएको जीव शब्दको अर्थ हो जीवन। जीवनको प्रयोजन वैदिक कर्महरू गरेर स्वर्गलाई प्राप्त गर्नु होइन अपितु तत्त्वजिज्ञासा गर्नु हो। तत्त्वजिज्ञासा नै मनुष्यजीवनको लक्ष्य हुनुपर्छ भन्ने सन्दर्भमा योगवाशिष्ठमा ब्रह्मर्षि वशिष्ठ भगवान् रामलाई उपदेश गर्दै भन्नुहुन्छ— हेर्नुहोस् राम, मनुष्यले यस संसारमा आएपछि खानका लागि शास्त्रसम्मत केही न केही काम गर्नुपर्दछ। प्राणधारण गर्नका लागि अर्थात् बाँच्नका लागि खानुपर्दछ। तत्त्वज्ञानका लागि बाँच्नुपर्छ र संसारबन्धनबाट मोक्ष प्राप्त गर्नका लागि तत्त्वज्ञान गर्नुपर्दछ।

**वदन्ति तत्तत्त्वविदस्तत्त्वं यज्ज्ञानमद्वयम्।**
**ब्रह्मेति परमात्मेति भगवानिति शब्द्यते॥ ११॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **तत्त्वविदः** = तत्त्वलाई जान्ने मानिसहरू | **ज्ञानम्** = ज्ञान छ | **ब्रह्म इति** = ब्रह्म भनेर |
| **यत्** = जुन | **तत्** = त्यसैलाई | **परमात्मा इति** = परमात्मा भनेर |
| **अद्वयम्** = अद्वितीय | **तत्त्वं** = तत्त्व भनेर | **भगवान् इति** = भगवान् भनेर |
| | **वदन्ति** = भन्दछन् | **शब्द्यते** = भनिन्छ |

**वाक्यार्थ—** तत्त्वलाई जान्ने मानिसहरू अद्वितीय ज्ञान नै तत्त्व हो भन्दछन्, त्यही अद्वितीय ज्ञानलाई कसैले ब्रह्म भन्दछन्, कसैले परमात्मा भन्दछन् भने त्यसैलाई कसैले भगवान् पनि भन्दछन्।

**विवरण—** यस श्लोकमा आएको अद्वय ज्ञान तत्त्वका विषयमा चर्चा गरौं। यस संसारको उत्पत्ति हुनुभन्दा पहिले भएको वस्तु केवल आत्मा हो। त्यही आत्मा नै विज्ञान हो, त्यही नै अद्वयतत्त्व पनि हो र त्यो शान्तस्वरूप छ। त्यो तत्त्व कहिल्यै पनि जन्मदैन। त्यसमा कुनै प्रकारको चलनक्रिया पनि छैन। अनि त्यो वस्तु पनि होइन। वेदान्तसिद्धान्तअनुसार आत्मामा न गुणहरू छन्, न त कुनै प्रकारका क्रिया नै छन्। त्यसै कारणले उपनिषद्मा आत्मालाई निर्गुणं निष्क्रियं शान्तम् भनिएको छ। परन्तु मायाको कारणले नजन्मने आत्मा पनि जन्मने जस्तो प्रतीत हुन्छ। आत्मा द्रव्य नभए तापनि द्रव्यझैं प्रतीत हुन्छ। त्यही अद्वितीय तत्त्वलाई नै वेदान्तीहरू ब्रह्म भन्दछन्। हिरण्यगर्भका उपासकहरू परमात्मा मान्दछन् र भगवान्का भक्तहरू भगवान् भन्दछन्।

**तच्छ्रद्दधाना मुनयो ज्ञानवैराग्ययुक्तया ।**
**पश्यन्त्यात्मनि चात्मानं भक्त्या श्रुतगृहीतया ॥ १२ ॥**

**पदार्थ–**

**श्रद्दधानाः** = श्रद्धाले युक्त भएका
**मुनयः** = मुनिहरू
**श्रुतगृहीतया** = वेदान्त श्रवणद्वारा प्राप्त भएको
**ज्ञानवैराग्ययुक्तया** = ज्ञान र वैराग्यले युक्त भएको
**भक्त्या** = भक्तिद्वारा
**आत्मनि** = शुद्ध अन्तःकरणमा
**तत् आत्मानं** = त्यो ज्ञानरूप परमात्मालाई
**च** = पनि
**पश्यन्ति** = देख्दछन् (अनुभव गर्दछन्)

**वाक्यार्थ–** श्रद्धालु मुनिहरू भागवत श्रवणबाट प्राप्त ज्ञान र वैराग्यले युक्त भएको भक्तिद्वारा आफ्नो शुद्ध अन्तःकरणमा त्यो ज्ञानरूप परमात्माको अनुभव गर्दछन्।

**अतः पुम्भिर्द्विजश्रेष्ठा वर्णाश्रमविभागशः ।**
**स्वनुष्ठितस्य धर्मस्य संसिद्धिर्हरितोषणम् ॥ १३ ॥**

**पदार्थ–**

**द्विजश्रेष्ठाः** = ब्राह्मणहरूमा श्रेष्ठ हे शौनक आदि ऋषिहरू हो
**अतः** = त्यसकारण
**पुम्भिः** = मानिसहरूद्वारा
**वर्णाश्रमविभागशः** = आफ्नो वर्ण र आश्रमको विभाजन अनुसार
**स्वनुष्ठितस्य** = आफूले गरेको
**धर्मस्य** = धर्मको
**संसिद्धिः** = पूर्ण सिद्धि
**हरितोषणम्** = परमात्मालाई खुसी गराउनु हो

**वाक्यार्थ–** हे शौनक आदि ऋषिहरू हो ! यही कारण हो कि आफ्नै वर्ण र आश्रमको अनुसार मनुष्यहरूले गरिएको धर्मानुष्ठानको पूर्ण सफलता हो भगवान्लाई प्रसन्न गराउनु।

**तस्मादेकेन मनसा भगवान् सात्वतां पतिः ।**
**श्रोतव्यः कीर्तितव्यश्च ध्येयः पूज्यश्च नित्यदा ॥ १४ ॥**

**पदार्थ–**

**तस्मात्** = त्यस कारण
**एकेन** = एकाग्र
**मनसा** = मनले
**सात्वतां पतिः** = भक्तहरूका मालिक
**भगवान्** = भगवान्का विषयमा
**नित्यदा** = नित्य, निरन्तर
**श्रोतव्यः** = श्रवण गर्नुपर्छ
**कीर्तितव्यः च** = कीर्तन पनि गर्नुपर्छ
**ध्येयः** = ध्यान गर्नुपर्छ
**पूज्यः च** = पूजा पनि गर्नुपर्छ

**वाक्यार्थ–** त्यसकारण एकाग्र मनले नित्य-निरन्तर भगवान्कै दिव्य लीलाहरूको श्रवण, उहाँकै गुणहरूको कीर्तन, उहाँकै दिव्य गुणहरूको चिन्तन र उहाँको दिव्य विग्रहको पूजा गर्नुपर्दछ।

**यदनुध्यासिना युक्ताः कर्मग्रन्थिनिबन्धनम् ।**

**छिन्दन्ति कोविदास्तस्य को न कुर्यात् कथारतिम् ॥ १५ ॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **यदनुध्यासिना** = जसको ध्यानरूपी खड्गले | **कर्मग्रन्थिनिबन्धनम्** = अहङ्कार बढाउने कर्मलाई | **तस्य** = भगवान्‌को |
| **युक्ताः** = युक्त भएका | **छिन्दन्ति** = काट्दछन् | **कथारतिम्** = कथामा प्रेम |
| **कोविदाः** = विवेकीहरू | **कः** = को | **न कुर्यात्** = नगर्ला |

**वाक्यार्थ—** जसको ध्यानरूपी खड्गले युक्त भएका विचारवान् मनुष्यहरू अहङ्कारलाई बढाउने कर्मको छेदन गर्दछन्। अतः को त्यस्तो मनुष्य होला जसले भगवान्‌को कथाश्रवणमा प्रेम नगर्ला।

**विवरण—** यस श्लोकमा आएको **कर्मग्रन्थिनिबन्धन** यस पदको बारेमा चर्चा गरौँ। कर्मग्रन्थिनिबन्धन यो समस्त पदमा आएको ग्रन्थिशब्दको अर्थ हो— अहङ्कार। किनभने अहङ्कारलाई चिज्जडग्रन्थि भन्दछन्। जति-जति कर्म गऱ्यो, त्यति-त्यति नै जीवको अहङ्कार बढदैजाने हुनाले कर्मलाई ग्रन्थिनिबन्धन भनिएको हो। **कर्मणः ग्रन्थिः कर्मग्रन्थिः, कर्मग्रन्थिं निबध्नातीति** यसप्रकार समास गरेपछि कर्मग्रन्थिनिबन्धनम् यस्तो समस्तपद बन्दछ।

भगवान्‌को कथा सुनेपछि चित्तशुद्धिद्वारा ज्ञान हुन्छ। ज्ञान भएपछि अज्ञान नष्ट हुन्छ। अज्ञान नष्ट भएपछि अहङ्कार बढाउने कर्म नष्ट हुन्छ। भगवान्‌को कथाश्रवण गरेपछि हुने ज्ञानद्वारा अज्ञान नष्ट भएपछि अहङ्कारलाई बढाउने सबै कारण नष्ट हुने हुँदा भगवान्‌को कथाश्रवणमा प्रेम गर्नुपर्छ भन्ने यो श्लोकको आशय हो।

**शुश्रूषोः श्रद्दधानस्य वासुदेवकथारुचिः ।**

**स्यान्महत्सेवया विप्राः पुण्यतीर्थनिषेवणात् ॥ १६ ॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **विप्राः** = हे शौनक आदि ऋषिहरू हो | सेवाद्वारा | **वासुदेवकथारुचिः** = भगवान्‌को कथामा प्रेम |
| **पुण्यतीर्थनिषेवणात्** = पवित्र तीर्थहरूको सेवन गर्नाले | **शुश्रूषोः** = श्रवण गर्ने इच्छा भएपछि | **स्यात्** = उत्पन्न हुन्छ |
| **महत्सेवया** = महापुरुषहरूको | **श्रद्दधानस्य** = श्रद्धा उत्पन्न भएपछि | |

**वाक्यार्थ—** पुण्यतीर्थमा बसेर महापुरुषको सेवा गरेपछि भगवान्‌को कथाश्रवणको इच्छा हुन्छ, त्यसपछि श्रद्धा र त्यसपछि भगवत्‌कथा श्रवणमा प्रेमको उदय हुन्छ।

**शृण्वतां स्वकथाः कृष्णः पुण्यश्रवणकीर्तनः ।**

**हृद्यन्तःस्थो ह्यभद्राणि विधुनोति सुहृत्सताम् ॥ १७ ॥**

**पदार्थ—**

**पुण्यश्रवणकीर्तनः** = जसको यशको श्रवण र कीर्तनले मनुष्यहरू पवित्र हुन्छन् त्यस्ता
**सताम्** = सज्जनहरूका
**सुहृत्** = साथी
**कृष्णः** = भगवान् श्रीकृष्ण
**स्वकथाः** = आफ्ना कथाहरू
**शृण्वतां** = सुन्नेहरूको
**अभद्राणि** = अशुभ वासनाहरूलाई
**हृदि** = हृदयमा
**अन्तःस्थः** = भित्र बसेर
**हि** = नै
**विधुनोति** = नष्ट गरिदिनुहुन्छ

**वाक्यार्थ—** भगवान् श्रीकृष्णको यशको श्रवण र कीर्तन दुबैले मनुष्यलाई पवित्र पार्दछन्, भगवान् सज्जनहरूको सुहृत् हुनुहुन्छ। आफ्नो कथा श्रवण गर्ने भक्तहरूको हृदयमा प्रवेश गरेर उनीहरूको अशुभ वासनालाई उहाँ नष्ट गरिदिनुहुन्छ।

**नष्टप्रायेष्वभद्रेषु नित्यं भागवतसेवया।**
**भगवत्युत्तमश्लोके भक्तिर्भवति नैष्ठिकी ॥ १८ ॥**

**पदार्थ—**

**नित्यं** = सधैं
**भागवतसेवया** = भागवत ग्रन्थ र भगवान्का भक्तहरूको सेवाद्वारा
**अभद्रेषु** = अशुभ वासनाहरू
**नष्टप्रायेषु** = लगभग नष्ट भएपछि
**उत्तमश्लोके** = पवित्र कीर्ति भएका
**भगवति** = भगवान्मा
**नैष्ठिकी** = निष्ठायुक्त
**भक्तिः** = भक्ति
**भवति** = हुन्छ

**वाक्यार्थ—** सधैं भगवान् र भगवान्का भक्तहरूको सेवाद्वारा अशुभ वासनाहरू नष्ट भएपछि पवित्रकीर्ति भगवान्मा अचल भक्तिको उदय हुन्छ।

**तदा रजस्तमोभावाः कामलोभादयश्च ये।**
**चेत एतैरनाविद्धं स्थितं सत्त्वे प्रसीदति ॥ १९ ॥**

**पदार्थ—**

**तदा** = त्यस वेला
**रजस्तमोभावाः** = रजोगुण र तमोगुणबाट उत्पन्न हुने
**कामलोभादयः** = काम, लोभ आदि
**च** = पनि
**एतैः** = यिनीहरूद्वारा
**अनाविद्धं** = अभिभूत नभएर
**स्थितं** = रहेको
**ये** = जुन
**चेतः** = चित्त
**सत्त्वे** = सत्त्व गुणमा (स्थित हुन्छ) र
**प्रसीदति** = प्रसन्न हुन्छ

**वाक्यार्थ—** त्यसपछि अन्तःकरणको रजोगुण र तमोगुणका भाव काम र लोभद्वारा अभिभूत नभएको चित्त सत्त्वगुणमा स्थित भएर निर्मल हुन्छ।

**विवरण—** रजोगुण र तमोगुणबाट उत्पन्न भएका जुन काम, लोभ आदि शत्रुहरू छन् ती शत्रुहरूद्वारा अभिभूत नभएको भगवान्को भक्तियुक्त चित्त सत्त्वगुणमा अवस्थित हुन्छ र शान्त हुन्छ। मुमुक्षुका लागि रजोगुण र तमोगुण हानिकारक छन् भने सत्त्वगुण चाहिँ निर्गुणको स्थितिमा पुग्नका लागि द्वार भएकाले यहाँ सत्त्वगुणको प्रशंसा गरिएको हो। रजोगुणको कारणले चित्त

विक्षिप्त हुन्छ भने तमोगुणको कारणले चित्त लयावस्थामा प्राप्त हुन्छ। लय र विक्षेपले रहित भएको चित्त सत्त्वगुणमा अवस्थित हुन्छ। सत्त्वगुणले ब्रह्मको दर्शन गराउने हुनाले यस श्लोकमा **सत्त्वे प्रसीदति** भनिएको हो। यहाँ **प्रसीदति**को अर्थ **उपशाम्यति** अर्थात् शान्त हुन्छ भन्ने हो। आत्माबाहेक संसारका सम्पूर्ण पदार्थहरू त्रिगुणात्मक हुन्छन्। चित्त पनि त्रिगुणात्मक हुन्छ। चित्तबाट सत्त्व, रज र तमोगुणलाई हटाएपछि चित्तको कुनै पनि अस्तित्व सिद्ध हुँदैन। वैराग्य, सहनशीलता, उदारता आदि सत्त्वगुणका कार्य हुन्। तृष्णा, स्नेह, राग र लोभ आदि रजोगुणका कार्य हुन्। सम्मोह, भय इत्यादि तमोगुणका कार्य हुन्।

**एवं प्रसन्नमनसो भगवद्भक्तियोगतः।**

**भगवत्तत्त्वविज्ञानं मुक्तसङ्गस्य जायते ॥ २० ॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **एवं** = यसप्रकार | **प्रसन्नमनसः** = चित्त प्रसन्न भएपछि | **भगवत्तत्त्वविज्ञानं** = भगवत् तत्त्व साक्षात्कार |
| **भगवद्भक्तियोगतः** = भगवान्मा गरिएको प्रेममय निष्काम भक्तिद्वारा | **मुक्तसङ्गस्य** = आसक्तिको नाश भएको व्यक्तिलाई | **जायते** = हुन्छ |

**वाक्यार्थ—** यसप्रकार भगवान्को भक्तिद्वारा चित्त प्रसन्न भएपछि आसक्तिले रहित भएका व्यक्तिलाई भगवत् तत्त्वसाक्षात्कार हुन्छ।

**भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः।**

**क्षीयन्ते चास्य कर्माणि दृष्ट एवात्मनीश्वरे ॥ २१ ॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **आत्मनि** = शुद्ध अन्तःकरणमा | **हृदयग्रन्थिः** = हृदयको ग्रन्थि | **च एव** = पनि |
| **ईश्वरे** = भगवान्को | **भिद्यते** = टुट्दछ | **क्षीयन्ते** = नष्ट हुन्छन् |
| **दृष्टे** = साक्षात्कार भएपछि | **अस्य** = उक्त मुक्तात्मा व्यक्तिका | |
| **सर्वसंशयाः** = सम्पूर्ण शङ्काहरू | **कर्माणि** = कर्महरू | |
| **छिद्यन्ते** = नष्ट हुन्छन् | | |

**वाक्यार्थ—** शुद्ध अन्तःकरणमा परमात्मतत्त्वको साक्षात्कार भएपछि हृदयको गाँठो फुस्कन्छ, सम्पूर्ण संशयहरू मेटिन्छन्, त्यस मुक्तात्मा व्यक्तिका सम्पूर्ण कर्महरू नष्ट हुन्छन्।

**विवरण—** यो श्लोक मुण्डकोपनिषद् (२। २। ९)बाट यथावत्रूपमा लिइएको छ। यस श्लोकमा ब्रह्मतत्त्वसाक्षात्कारको फल बताइएको छ। यहाँ आत्मा र अन्तःकरणको परस्परको तादात्म्याध्यासलाई **हृदयग्रन्थि** भनिएको हो। फलाम तात्ने क्रममा जसरी आगाको उष्णता फलाममा सर्दछ, फलाम आगोजस्तै प्रतीत हुन्छ, त्यसै गरी आत्माको चैतन्यको प्रतीति बुद्धिमा हुन्छ, अनि बुद्धिमा रहेका प्रमातृत्व, कर्तृत्व र भोक्तृत्वको प्रतीति आत्मामा हुन्छ। यसप्रकार

परस्परको तादात्म्याध्यासलाई यहाँ हृदयग्रन्थि भनिएको हो।

भगवान्‌को भक्तिद्वारा अन्तःकरणका सम्पूर्ण दुर्वासनाहरू हटिसकेपछि अन्तःकरण शुद्ध हुन्छ। शुद्ध अन्तःकरणमा आत्माको साक्षात्कार हुन्छ। उपनिषद्‌हरूमा मनद्वारा अथवा सूक्ष्मबुद्धिद्वारा आत्माको साक्षात्कार हुन्छ भनिएको छ।

भगवान् शङ्कराचार्यले गीताभाष्यमा आत्मज्ञानको साधनको विषयमा यसप्रकार लेख्नुभएको छ— शास्त्र र आचार्यको उपदेशद्वारा आत्मज्ञानको साधनको विषयमा अनुभव हुन्छ, त्यो अनुभवद्वारा अन्तःकरणमा संस्कार उत्पन्न हुन्छ। त्यो संस्कारद्वारा संस्कृत भएको अन्तःकरणलाइ शुद्ध अन्तःकरण भनिन्छ। त्यही शुद्ध अन्तःकरणमा आत्माको साक्षात्कार हुन्छ। जसरी धुलोमैलो नलागेको र नहल्लिएको ऐनामा मुखको प्रतिबिम्ब पर्दछ, त्यसै गरी कर्म र उपासनाद्वारा शुद्ध भएको अन्तःकरणमा तत्त्वमस्यादि महावाक्यको श्रवणद्वारा आत्मतत्त्वको साक्षात्कार हुन्छ।

यहाँ आत्मतत्त्वसाक्षात्कार भनेर जीव र परमात्माको अभेदज्ञानलाई लिनुपर्दछ। न्याय, वैशेषिक, सांख्य र योग दर्शनका अनुयायीहरू भेदज्ञानद्वारा मोक्ष हुन्छ भन्ने स्विकार्दछन्। तर वेदान्त दर्शनका अनुयायीहरू भेदज्ञानद्वारा नभई अभेदज्ञानद्वारा मोक्ष हुने बताउँछन्। उपनिषद्‌हरूमा पनि भेदज्ञानद्वारा मोक्ष हुन्छ भन्ने सिद्धान्तको खण्डन गरिएको छ। उपनिषद्‌का अनुसार भेददर्शन वस्तुतः ज्ञान होइन अपितु अभेददर्शन नै ज्ञान हो। भेददर्शनले द्वैतको सिद्धि गर्दछ र द्वैतमा संशय रहन्छ। अद्वैतमा संशय सम्भव छैन। उदाहरणका लागि जाग्रत् र स्वप्नमा द्वैतको प्रतीति हुने हुनाले ती अवस्थामा संशय हुन्छ। सुषुप्ति अवस्थामा द्वैतको अभाव हुने हुनाले संशयको पनि अभाव हुन्छ। संशय गर्नु वस्तुतः मनको कार्य हो। शुद्ध अन्तःकरणमा परमात्मतत्त्वको साक्षात्कार भएपछि अज्ञानको निवृत्ति हुन्छ र अज्ञानको निवृत्ति भएपछि अज्ञानको कार्य मनको पनि बाध हुन्छ। अर्थात् जीवन्मुक्ति कालमा मन आत्मादेखि अभिन्नरूपले रहेको हुनाले मनमा कुनै प्रकारको संशय हुन सक्दैन। त्यसकारण भगवत्तत्त्वसाक्षात्कार भएपछि सम्पूर्ण संशय मेटिन्छन् भनिएको हो।

आफ्नो आत्मादेखि अभिन्न ब्रह्मतत्त्वको साक्षात्कार भएपछि हृदयग्रन्थिको भेदन हुन्छ अथवा अहङ्कार नष्ट हुन्छ। ब्रह्मज्ञानको फल हो— अहङ्कारको निवृत्ति। अहङ्कार नै बन्धनको कारण हो। जीव र ब्रह्मको एकताको साक्षात्कारलाई छोडेर यस अहङ्कारलाई हटाउने अरू कुनै पनि उपाय छैन।

ब्रह्मसाक्षात्कारको एउटा फल चिज्जडग्रन्थिनरूप अहङ्कारको निवृत्ति हो भने अर्को फल हो सम्पूर्ण संशयको निवृत्ति। जीव र परमात्माको एकताको साक्षात्कार हुनुभन्दा पहिले असंभावना र विपरीतभावनारूप संशय रहन्छ। ब्रह्म हुन सकिँदैन भन्ने भावनालाई असंभावना भनिन्छ भने म प्रमाता, कर्ता र भोक्ता हुँ भन्ने भावलाई विपरीतभावना भनिन्छ। ब्रह्मज्ञान भएपछि त्यस्तो असंभावना र विपरीतभावनारूपी संशयको पनि निवृत्ति हुन्छ। ब्रह्मज्ञानको तेस्रो फल हो कर्मफलनाश। सञ्चित र प्रारब्ध गरी दुई प्रकारका कर्महरू हुन्छन्। जीवले अनन्त जन्ममा असंख्य कर्महरू गरेका हुन्छन्। ती कर्महरूलाई सञ्चित कर्म भन्दछन्। ती कर्महरूमध्ये जीवलाई फल दिनका लागि उन्मुख कर्महरूलाई प्रारब्ध कर्म भनिन्छ। कपासको थुप्रोमा आगो लगाउँदा

कपासको थुप्रो एक क्षणमा भस्म भएझैं ब्रह्मज्ञान भएपछि जीवका सम्पूर्ण सञ्चित कर्महरूलाई ज्ञानरूपी आगोले भस्म गरिदिन्छ। तर प्रारब्ध कर्म भने हातबाट छुटेका बाणजस्ता हुन्। जसरी हातबाट छुटेका बाणलाई फेरि फर्काउन सकिँदैन त्यसै गरी प्रारब्ध कर्मलाई ज्ञानले नष्ट गर्न सक्दैन। ज्ञानलाई प्रारब्ध कर्मले उत्पन्न गर्ने हुँदा ज्ञानको जनक प्रारब्ध कर्म हो। प्रारब्धकर्मबाट उत्पन्न भएको ज्ञानले प्रारब्धकर्मलाई नष्ट गर्न सक्दैन। अतः **क्षीयन्ते चास्य कर्माणि** यहाँ कर्म भनेर सञ्चित कर्मलाई बुझ्नुपर्दछ। प्रारब्ध कर्मलाई छोडेर ज्ञानीका अरू सम्पूर्ण कर्महरू ज्ञानद्वारा नष्ट हुन्छन्।

**अतो वै कवयो नित्यं भक्तिं परमया मुदा।**
**वासुदेवे भगवति कुर्वन्त्यात्मप्रसादनीम्॥ २२॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **अतः** = त्यसकारण | **परमया** = ठुलो | **आत्मप्रसादनीम्** = |
| **वै** = निश्चय नै | **मुदा** = आनन्दले | अन्तःकरणलाई शुद्ध गराउने |
| **कवयः** = विवेकशील मनुष्यहरू | **भगवति** = भगवान् | **भक्तिं** = भक्ति |
| **नित्यं** = सधैं | **वासुदेवे** = वासुदेवमा | **कुर्वन्ति** = गर्दछन् |

**वाक्यार्थ—** यसै कारणले विवेकशील मनुष्यहरू सधैं ठुलो आनन्दले अन्तःकरणलाई शुद्ध गराउने भक्ति भगवान् वासुदेवमा गर्दछन्।

**सत्त्वं रजस्तम इति प्रकृतेर्गुणास्तै-**
**र्युक्तः परः पुरुष एक इहास्य धत्ते।**
**स्थित्यादये हरिविरिञ्चिहरेति संज्ञाः**
**श्रेयांसि तत्र खलु सत्त्वतनोर्नृणां स्युः॥ २३॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **सत्त्वं रजः तमः इति** = सत्त्व, | **अस्य** = यस संसारको | **तत्र** = ती तीनजना |
| रज र तमका भेदले | **इह** = यहाँ | देवताहरूमध्ये |
| **प्रकृतेः** = प्रकृतिका | **स्थित्यादये** = सृष्टि, स्थिति र | **नृणां** = मनुष्यहरूको |
| **गुणाः** = गुणहरू छन् | प्रलयका लागि | **श्रेयांसि** = कल्याण |
| **तैः** = ती तीन गुणहरूद्वारा | **हरिविरिञ्चिहर इति** = विष्णु, | **खलु** = निश्चय नै |
| **युक्तः** = युक्त | ब्रह्मा र रुद्र यी | **सत्त्वतनोः** = सत्त्व गुणलाई |
| **एकः** = एउटै | **संज्ञाः** = नामलाई | स्वीकार गर्ने श्रीनारायणबाट |
| **परः पुरुषः** = परब्रह्म परमात्मा | **धत्ते** = धारण गर्दछन् | **स्युः** = हुन्छ |

**वाक्यार्थ—** सत्त्व, रज र तमका भेदले प्रकृतिका तीनओटा गुणहरू छन्। यी तीन गुणहरूलाई

स्वीकार गरेर एउटै परब्रह्म परमात्मा यस संसारको सृष्टि, स्थिति र प्रलयका लागि ब्रह्मा, विष्णु र महेश्वरको रूप धारण गर्नुहुन्छ। परन्तु यी तीन देवताहरूमध्ये मनुष्यहरूको परम कल्याण त सत्त्व गुणलाई स्वीकार गर्ने भगवान् नारायणबाट मात्र सम्भव छ।

**पार्थिवाद् दारुणो धूमस्तस्मादग्निस्त्रयीमयः।**
**तमसस्तु रजस्तस्मात् सत्त्वं यद् ब्रह्मदर्शनम्॥ २४॥**

**पदार्थ–**

**पार्थिवात्** = पृथिवीको विकार भएको
**दारुणः** = दाउरा वा समिधाको अपेक्षा
**धूमः** = धुवाँ श्रेष्ठ हुन्छ
**तस्मात्** = त्यसभन्दा पनि
**त्रयीमयः** = वेदोक्त कर्ममय
**अग्निः** = अग्नि श्रेष्ठ हुन्छ
**तमसः** = तमोगुणको अपेक्षा
**रजः** = रजोगुण श्रेष्ठ हुन्छ
**तस्मात्** = त्यसभन्दा
**तु** = पनि
**सत्त्वं** = सत्त्व गुण श्रेष्ठ हुन्छ
**यत्** = सत्त्व गुणले
**ब्रह्मदर्शनम्** = ब्रह्मको ज्ञान गराउँछ

**वाक्यार्थ–** पृथ्वीतत्त्वको विकार दाउराको अपेक्षा धुवाँ श्रेष्ठ हुन्छ। धुवाँको अपेक्षा वेदोक्त कर्मद्वारा मनुष्यहरूलाई सद्‌गति प्रदान गर्ने हुनाले अग्नि श्रेष्ठ हुन्छ। त्यसै गरी तमोगुणको अपेक्षा रजोगुण श्रेष्ठ, रजोगुणको अपेक्षा सत्त्वगुण श्रेष्ठ हुन्छ। किनभने सत्त्वगुणले ब्रह्मको दर्शन गराउँछ।

**भेजिरे मुनयोऽथाग्रे भगवन्तमधोक्षजम्।**
**सत्त्वं विशुद्धं क्षेमाय कल्पन्ते येऽनु तानिह॥ २५॥**

**पदार्थ–**

**अथ** = यसकारण
**अग्रे** = प्राचीन कालमा
**मुनयः** = मननशील महात्माहरू
**क्षेमाय** = आफ्नो कल्याणका लागि
**विशुद्धं** = विशुद्ध
**सत्त्वं** = सत्त्वमय
**भगवन्तम्** = भगवान्
**अधोक्षजम्** = वासुदेवको
**भेजिरे** = भजन गर्दथे
**इह** = यहाँ
**ये** = जो भक्तहरू
**तान् अनु** = तिनीहरूको अनुसरण गर्दछन्
**क्षेमाय कल्पन्ते** = कल्याणका भागी हुन्छन्

**वाक्यार्थ–** यसकारण प्राचीन कालमा मननशील महात्माहरू आफ्ना कल्याणका लागि विशुद्ध सत्त्वमय भगवान् वासुदेवको भजन गर्दथे। अहिले पनि जो भक्तहरू उनीहरूको अनुसरण गर्दछन्, तिनीहरू पनि कल्याणका भागी हुन्छन्।

**मुमुक्षवो घोररूपान् हित्वा भूतपतीनथ।**
**नारायणकलाः शान्ता भजन्ति ह्यनसूयवः॥ २६॥**

पदार्थ—

**अनसूयवः** = कसैमा पनि दोषदर्शन नगर्ने
**मुमुक्षवः** = मुमुक्षुहरू
**घोररूपान्** = डरलाग्दा रूप भएका
**भूतपतीन्** = भूतपति भैरव आदिलाई
**हित्वा** = छाडेर
**अथ** = त्यसपछि
**शान्ताः** = शान्त स्वरूप भएका
**नारायणकलाः** = नारायणका कलाको
**हि** = निश्चय नै
**भजन्ति** = भजन गर्दछन्

**वाक्यार्थ—** कसैमा पनि दोषदर्शन नगर्ने मुमुक्षुहरू डरलाग्दा रूप भएका भूतपति भैरव आदिलाई छाडेर शान्त स्वरूप भएका नारायण र उहाँका कलाको भजन गर्दछन्।

**रजस्तमःप्रकृतयः समशीला भजन्ति वै।**
**पितृभूतप्रजेशादीन् श्रियैश्वर्यप्रजेप्सवः॥ २७॥**

पदार्थ—

**रजस्तमःप्रकृतयः** = रजोगुणी र तमोगुणी स्वभाव भएका
**समशीलाः** = भूत-प्रेतसँग मिल्ने स्वभाव भएका मनुष्यहरू
**श्रियैश्वर्यप्रजेप्सवः** = धन, ऐश्वर्य र सन्तानको कामनाले वशीभूत भएकाहरू
**वै** = निश्चय नै
**पितृभूतप्रजेशादीन्** = पितृ, भूत र प्रजापतिहरूको
**भजन्ति** = उपासना गर्दछन्

**वाक्यार्थ—** रजोगुणी र तमोगुणी स्वभाव भएका मनुष्यहरू भूतप्रेत आदिका साथ स्वभाव मिल्ने हुनाले धन, ऐश्वर्य र सन्तानको कामनाले पितृ, भूत र प्रजापति आदिको भजन गर्दछन्।

**वासुदेवपरा वेदा वासुदेवपरा मखाः।**
**वासुदेवपरा योगा वासुदेवपराः क्रियाः॥ २८॥**

पदार्थ—

**वेदाः** = वेदहरू
**वासुदेवपराः** = भगवान् नारायण नै तात्पर्य भएका
**मखाः** = यज्ञहरू
**वासुदेवपराः** = भगवान् नारायण नै तात्पर्य भएका
**योगाः** = योगहरू
**वासुदेवपराः** = भगवान् नारायण नै तात्पर्य भएका
**क्रियाः** = वेद र स्मृतिमा बताइएका कर्महरू
**वासुदेवपराः** = भगवान् नारायण नै तात्पर्य भएका

**वाक्यार्थ—** सम्पूर्ण वेदहरूको प्रतिपाद्य विषय भगवान् नारायण हुनुहुन्छ। सम्पूर्ण यज्ञहरूको अनुष्ठान भगवान् नारायणलाई प्राप्त गर्ने उद्देश्य मनमा राखेर गरिन्छन्। अष्टाङ्ग योगहरूको अनुष्ठान पनि भगवान् नारायणलाई नै प्राप्त गर्ने उद्देश्यले गरिन्छन्। सम्पूर्ण वैदिक कर्महरूले चित्तशुद्धिद्वारा भगवान्कै ज्ञान गराउने हुनाले सम्पूर्ण कर्महरूको उद्देश्य पनि भगवान्लाई प्राप्त गर्नु नै हो।

**वासुदेवपरं ज्ञानं वासुदेवपरं तपः।**
**वासुदेवपरो धर्मो वासुदेवपरा गतिः॥ २९॥**

पदार्थ—

**ज्ञानं** = ज्ञानशास्त्र
**वासुदेवपरं** = भगवान् वासुदेवलाई नै विषय गर्ने
**तपः** = तपस्या
**वासुदेवपरं** = भगवान् वासुदेवलाई नै विषय गर्ने
**धर्मः** = दान, व्रत आदि धर्महरू
**वासुदेवपरः** = भगवान् वासुदेवलाई नै विषय गर्ने
**गतिः** = स्वर्गादि फल
**वासुदेवपरा** = भगवान् वासुदेवलाई नै विषय गर्ने हुन्छन्

**वाक्यार्थ—** शास्त्र र ज्ञान दुबै भगवत्प्राप्तिका लागि हुन्। दान, व्रत आदिलाई विषय गर्ने धर्मशास्त्र पनि भगवत्प्राप्तिकै लागि हो। स्वर्गादि फल पनि आनन्दरूप भगवान्को एक अंश भएकाले स्वर्गादि फलको विषय पनि भगवान् नारायण नै हुनुहुन्छ।

**विवरण—** माथिका २८ र २९ दुई श्लोकमा भगवत्तत्त्वको प्रतिपादन नै वेद, यज्ञ, योग, कर्म, ज्ञान, तप र धर्मको उद्देश्य रहेको कुरा बताइएको छ।

सम्पूर्ण वेदहरूको प्रतिपाद्य विषय भगवान् नै हुनुहुन्छ भन्ने यस अंशको तात्पर्यार्थ हो। वेदमा कर्मकाण्ड, उपासनाकाण्ड र ज्ञानकाण्ड गरी तीन काण्डहरू छन्। वेदमा भएका एकलाख मन्त्रहरूमध्ये ८० हजार मन्त्रहरूले कर्मको प्रतिपादन गर्दछन्। १६ हजार मन्त्रहरूले उपासनाको प्रतिपादन गर्दछन् भने ४ हजार मन्त्रहरूले ज्ञानको प्रतिपादन गर्दछन्।

वेदमा बताइएका तीनै काण्डहरूले भगवान् नारायणकै वास्तविक स्वरूपको प्रतिपादन गर्दछन्। वेदको कर्मकाण्ड र उपासनाकाण्डले चित्तशुद्धिद्वारा परमात्मा भगवान्को स्वरूपलाई बताउँछन् भने वेदको ज्ञानकाण्ड उपनिषद्ले चाँहि भगवान्को वास्तविक स्वरूपलाई साक्षात् बताउँछ (माण्डूक्योपनिषद्कारिका २।३०, आनन्दगिरिटीका)। ब्रह्मसूत्र (१।१।३) मा पनि वेदादि सम्पूर्ण शास्त्रहरूको लक्ष्य पनि भगवत्स्वरूपको प्रतिपादन गर्नु नै हो भन्ने उल्लेख गरिएको छ। गीताको **वेदैश्च सर्वैरहमेव वेद्यः** (१५।१५) यो भगवद्वाक्यद्वारा पनि सम्पूर्ण वेदको असली तात्पर्य परमात्माको वास्तविक स्वरूपको प्रतिपादनमा नै छ भन्ने कुरा प्रमाणित हुन्छ।

त्यसै गरी सम्पूर्ण यज्ञहरूले, योगले, श्रौत र स्मार्त कर्महरूले, ज्ञानले, तपस्याले र धर्मले परमात्माकै ज्ञान गराउने हुनाले उक्त सम्पूर्ण साधन भगवत्तत्त्वसाक्षात्कारका लागि हुन् भन्ने कुरा प्रमाणित हुन्छ।

यहाँ गति भनेर स्वर्गादिफललाई लिनुपर्दछ। स्वर्ग एउटा आनन्दको विषय हो। परमात्मालाई छोडेर आनन्द भन्ने वस्तु कहीँ पनि सिद्ध नहुने हुनाले स्वर्ग पनि परमात्माकै एक अंश हो। अतः सकामपुरुषहरू अग्निहोत्रादि कर्म गरेर स्वर्ग प्राप्त गर्दछन्।

**स एवेदं ससर्जाग्रे भगवानात्ममायया।**
**सदसद्रूपया चासौ गुणमय्यागुणो विभुः॥ ३०॥**

पदार्थ—

| | | |
|---|---|---|
| **अगुणः** = प्रकृतिका गुणले रहित भएका | **सदसद्रूपया** = सत् र असत्‌रूप | **अग्रे** = सृष्टिको आदिकालमा |
| **विभुः** = व्यापक | **गुणमय्या** = गुणमयी | **इदं** = यो भूत र भौतिक प्रपञ्चलाई |
| **सः एव** = ती उनै | **च** = पनि | **ससर्ज** = सृष्टि गर्नुभयो |
| **असौ भगवान्** = भगवान्‌ले | **आत्ममायया** = आफ्नो मायाद्वारा | |

**वाक्यार्थ—** प्रकृतिका गुणले रहित भएका व्यापक ती उनै भगवान्‌ले सत् र असत्‌रूप गुणमयी आफ्नो मायाद्वारा सृष्टिको आदिकालमा यो भूत र भौतिक प्रपञ्चलाई सृष्टि गर्नुभयो।

**तया विलसितेष्वेषु गुणेषु गुणवानिव।**
**अन्तःप्रविष्ट आभाति विज्ञानेन विजृम्भितः॥ ३१॥**

पदार्थ—

| | | |
|---|---|---|
| **तया** = त्यस मायाबाट | गुणमा | पञ्च महाभूत र तिनका कार्यहरूमा |
| **विलसितेषु** = बनेका | **विज्ञानेन विजृम्भितः** = परिपूर्ण विज्ञानस्वरूप परमात्मा | **गुणवान् इव** = गुणवान्‌झैं |
| **एषु** = यी | **अन्तःप्रविष्टः** = आकाश आदि | **आभाति** = प्रतीत हुनुहुन्छ |
| **गुणेषु** = सत्त्व, रज र तम | | |

**वाक्यार्थ—** सत्त्वगुण, रजोगुण र तमोगुण मायाका विलास हुन्। ती मायाका गुणभित्र प्रवेश गरेर भगवान् पनि गुणहरूले युक्त भएको जस्तो प्रतीत हुनुहुन्छ। वस्तुतः भगवान् नारायण विज्ञानानन्दघन हुनुहुन्छ।

**यथा ह्यवहितो वह्निर्दारुष्वेकः स्वयोनिषु।**
**नानेव भाति विश्वात्मा भूतेषु च तथा पुमान्॥ ३२॥**

पदार्थ—

| | | |
|---|---|---|
| **यथा** = जसरी | **नाना** = भिन्न-भिन्न | **पुमान्** = परमात्मा |
| **वह्निः** = आगो | **इव** = जस्तै | **च** = पनि |
| **एकः हि अवहितः** = एउटै नै रहेर | **भाति** = प्रतीत हुन्छ | **भूतेषु** = प्राणीहरूमा |
| **स्वयोनिषु** = आफू प्रकट हुने | **तथा** = त्यसै गरी | **नाना इव** = भिन्न-भिन्नजस्तो भएर |
| **दारुषु** = दाउराहरूमा | **विश्वात्मा** = सम्पूर्ण प्राणीहरूमा आत्मरूप | **भाति** = प्रतीत हुनुहुन्छ |

**वाक्यार्थ—** अग्नि वस्तुतः एउटै भए तापनि अनेक प्रकारका उपाधिको संसर्गले गर्दा अनेक रूपमा देखा पर्दछ। त्यसै गरी सम्पूर्ण प्राणीका आत्मस्वरूप भगवान् नारायण एउटै हुनुहुन्छ परन्तु प्राणीहरूको अनेकताको दृष्टिले विभिन्न रूपमा देखिनुहुन्छ।

**असौ गुणमयैर्भावैर्भूतसूक्ष्मेन्द्रियात्मभिः।**

**स्वनिर्मितेषु निर्विष्टो भुङ्क्ते भूतेषु तद्गुणान्॥ ३३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **असौ** = यी परमात्मा | **भावैः** = भावहरूद्वारा | **तद्गुणान्** = तत्-तत् |
| **भूतसूक्ष्मेन्द्रियात्मभिः** = भूत, | **स्वनिर्मितेषु** = आफूद्वारा | विषयहरूको |
| सूक्ष्म भूत, श्रोत्रादि इन्द्रियहरू र | बनाइएका | **भुङ्क्ते** = भोग गर्नुहुन्छ |
| अन्तःकरण आदि | **भूतेषु** = प्राणीहरूमा | |
| **गुणमयैः** = गुणमय | **निर्विष्टः** = प्रवेश गरेर | |

**वाक्यार्थ–** भगवान् नै सूक्ष्म भूत, इन्द्रिय र अन्तःकरण आदि गुणहरूका विकारभूत भावद्वारा अनेक प्रकारका योनिहरूको निर्माण गरेर तिनमा भिन्न-भिन्न जीवहरूले प्रवेश गरेर तत्तत् योनिहरूको अनुरूप विषयहरूको भोग गर्नुहुन्छ।

**भावयत्येष सत्त्वेन लोकान् वै लोकभावनः।**

**लीलावतारानुरतो देवतिर्यङ्नरादिषु॥ ३४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **लोकभावनः** = विभिन्न | **देवतिर्यङ्नरादिषु** = देवता, पशु | **सत्त्वेन** = सत्त्व गुणद्वारा |
| लोकहहरूको रचना गर्ने | पक्षी र मनुष्य आदि योनिहरूमा | **लोकान्** = जीवहरूको |
| **एषः** = यी भगवान् नारायण | **लीलावतारानुरतः** = लीलावतार | **भावयति** = पालन-पोषण |
| **वै** = निश्चय नै | ग्रहण गरेर | गर्नुहुन्छ |

**वाक्यार्थ–** उहाँ सम्पूर्ण लोकहरूको रचना गर्नुहुन्छ। देवता, पशु, पक्षी र मनुष्य आदि योनिहरूमा लीलावतार ग्रहण गरेर सत्त्वगुणद्वारा जीवहरूको पालन-पोषण गर्नुहुन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां प्रथमस्कन्धे**

**नैमिषीयोपाख्याने द्वितीयोऽध्यायः॥ २॥**

# अथ तृतीयोऽध्यायः

## भगवान्का अवतारहरूको वर्णन

**सूत उवाच** (सूतले भन्नुभयो)

**जगृहे पौरुषं रूपं भगवान् महदादिभिः।**

**सम्भूतं षोडशकलमादौ लोकसिसृक्षया॥ १॥**

पदार्थ—

**आदौ** = सृष्टिको आदिमा
**लोकसिसृक्षया** = लोकहरूको सृष्टि गर्ने इच्छाले
**भगवान्** = भगवान् नारायणले
**महदादिभिः** = महत्तत्त्व इत्यादिले
**सम्भूतं** = युक्त
**षोडशकलम्** = दश इन्द्रिय, पञ्चमहाभूत र मन यी सोह्र कलाहरूले युक्त भएको
**पौरुषं रूपं** = पुरुष रूपलाई
**जगृहे** = धारण गर्नुभयो

**वाक्यार्थ—** सृष्टिको आदिमा भगवान्ले लोकहरूको निर्माण गर्ने इच्छा गर्नुभयो। इच्छा हुने बित्तिकै उहाँले महत्तत्त्व आदिद्वारा निष्पन्न पुरुषरूपलाई ग्रहण गर्नुभयो जुन रूपमा दश इन्द्रियहरू, पञ्च महाभूत र सोह्र कलाहरू थिए।

**यस्याम्भसि शयानस्य योगनिद्रां वितन्वतः।**

**नाभिह्रदाम्बुजादासीद् ब्रह्मा विश्वसृजां पतिः॥ २॥**

पदार्थ—

**अम्भसि** = जलमा
**शयानस्य** = सुत्नुभएका
**योगनिद्रां** = योगनिद्रालाई
**वितन्वतः** = फैलाउने
**यस्य** = जसको
**नाभिह्रदाम्बुजात्** = नाभिरूप सरोवरमा उत्पन्न भएको कमलबाट
**विश्वसृजां** = प्रजापतिहरूका
**पतिः** = अधिपति
**ब्रह्मा** = ब्रह्मा
**आसीत्** = उत्पन्न हुनुभएको थियो

**वाक्यार्थ—** उहाँले प्रलय कालको जलमा शयन गर्दै योगनिद्राको विस्तार गर्नुभयो। उहाँको नाभिसरोवरबाट एक कमल उत्पन्न भयो, त्यस कमलबाट प्रजापतिका अधिपति ब्रह्माजी उत्पन्न हुनुभयो।

**यस्यावयवसंस्थानैः कल्पितो लोकविस्तरः।**

**तद् वै भगवतो रूपं विशुद्धं सत्त्वमूर्जितम्॥ ३॥**

पदार्थ—

**यस्य** = जुन विराट्रूप भगवान्को
**अवयवसंस्थानैः** = अङ्ग-

प्रत्यङ्गद्वारा
**लोकविस्तरः** = समस्त लोकहरूको
**कल्पितः** = कल्पना गरियो
**भगवतः** = भगवान् नारायणको
**तत्** = त्यो
**वै** = निश्चय नै
**विशुद्धं** = विशुद्ध
**रूपं** = रूप
**सत्त्वम् ऊर्जितम्** = सत्त्वमय विशुद्ध रूप हो

**वाक्यार्थ–** भगवान्को त्यस विराट्रूपको अङ्गप्रत्यङ्गमा समस्त लोकहरूको कल्पना भएको छ। भगवान्को त्यो रूप विशुद्ध सत्त्वमय श्रेष्ठ रूप हो।

**पश्यन्त्यदो रूपमदभ्रचक्षुषा**
**सहस्रपादोरुभुजाननाद्भुतम्।**
**सहस्रमूर्धश्रवणाक्षिनासिकं**
**सहस्रमौल्यम्बरकुण्डलोल्लसत्॥ ४॥**

**पदार्थ–**
**अदभ्रचक्षुषा** = योगीहरू ज्ञानात्मक चक्षुद्वारा
**सहस्रपादोरुभुजाननाद्भुतम्** = हजारौँ गोडा, तिघ्रा, हात र मुखहरूको कारण अत्यन्त विलक्षण
**सहस्रमूर्धश्रवणाक्षिनासिकं** = हजारौँ शिर, कान, आँखा र नाक भएको
**सहस्रमौल्यम्बरकुण्डलोल्लसत्** = हजारौँ मुकुट, वस्त्र र कुण्डल आदि आभूषणद्वारा सुशोभित
**अदः रूपम्** = यस्तो रूप
**पश्यन्ति** = हेर्दछन्

**वाक्यार्थ–** योगीहरू दिव्य दृष्टिले भगवान्को त्यो रूपको दर्शन गर्दछन्। भगवान्को त्यो रूप हजारौँ गोडा, तिघ्रा, हात र मुखहरूको कारणले अत्यन्त विलक्षण छ, त्यो रूपमा हजारौँ शिर, हजारौँ कान, हजारौँ आँखा र नाकहरू छन्। त्यसै गरी त्यो रूप हजारौँ मुकुट, वस्त्र र कुण्डल आदि आभूषणद्वारा उल्लसित छ।

**एतन्नानावताराणां निधानं बीजमव्ययम्।**
**यस्यांशांशेन सृज्यन्ते देवतिर्यङ्नरादयः॥ ५॥**

**पदार्थ–**
**एतत्** = भगवान्को यो पुरुषरूप
**नानावताराणां** = अनेक अवतारहरूको
**निधानं** = आफ्नो लीला समाप्त गरेपछि प्रवेश गर्ने ठाउँ हो
**बीजम् अव्ययम्** = ती विभिन्न अवतारहरूको उद्गमस्थान नाश नहुने खालको बीउ हो
**यस्य अंशांशेन** = जुन भगवान्को अंश ब्रह्मा, ब्रह्माको पनि अंश मरीचि आदि ऋषिहरूद्वारा
**देवतिर्यङ्नरादयः** = देवता, पशु, पक्षी र मनुष्यादि योनिहरूको
**सृज्यन्ते** = सृष्टि हुन्छ

**वाक्यार्थ–** भगवान्को त्यो पुरुषरूप जसलाई नारायण भनिन्छ, अनेक अवतारहरूको अक्षय कोष हो, यही रूपबाट सम्पूर्ण अवतार प्रकट हुन्छन्। यही रूपको साना-साना अंशबाट देवता, पशु, पक्षी र मनुष्य आदि योनिहरूको सृष्टि हुन्छ।

**स एव प्रथमं देवः कौमारं सर्गमाश्रितः।**

**चचार दुश्चरं ब्रह्मा ब्रह्मचर्यमखण्डितम्॥ ६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सः एव** = तिनै | **सर्गम्** = सर्गलाई | **दुश्चरं** = अत्यन्त कठिन |
| **देवः** = भगवान् नारायणले | **आश्रितः** = स्वीकार गरेर | **अखण्डितम्** = अखण्डित |
| **प्रथमं** = पहिले | **ब्रह्मा** = ब्राह्मणको रूपलाई | **ब्रह्मचर्यम्** = ब्रह्मचर्य व्रतलाई |
| **कौमारं** = कौमार | धारण गरेर | **चचार** = पालन गर्नुभयो |

**वाक्यार्थ–** ती भगवान् नारायणले पहिलो कौमार सर्गमा सनक, सनन्दन, सनातन र सनत्कुमार यी चार ब्राह्मणहरूको रूपमा अवतार ग्रहण गरेर अत्यन्त कठिन अखण्ड ब्रह्मचर्यको पालना गर्नुभयो।

**द्वितीयं तु भवायास्य रसातलगतां महीम्।**

**उद्धरिष्यन्नुपादत्त यज्ञेशः सौकरं वपुः॥ ७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **द्वितीयं** = दोस्रो अवतारमा | **यज्ञेशः** = यज्ञहरूका स्वामी | **उद्धरिष्यन्** = उद्धारका लागि |
| **तु** = त | भगवान् नारायणले | **सौकरं** = वराहको |
| **अस्य** = यस संसारको | **रसातलगतां** = रसातलमा पुगेकी | **वपुः** = शरीरलाई |
| **भवाय** = कल्याणका लागि | **महीम्** = पृथ्वीको | **उपादत्त** = स्वीकार गर्नुभयो |

**वाक्यार्थ–** दोस्रो पटक यस संसारको कल्याणका लागि समस्त यज्ञका स्वामी ती भगवान् नारायणले रसातलमा पुगेकी पृथिवीलाई ल्याउनका लागि बराहको रूपलाई धारण गर्नुभयो।

**तृतीयमृषिसर्गं च देवर्षित्वमुपेत्य सः।**

**तन्त्रं सात्वतमाचष्ट नैष्कर्म्यं कर्मणां यतः॥ ८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **तृतीयम्** = तेस्रो अवतारमा | **देवर्षित्वम् उपेत्य** = नारदको | **आचष्ट** = उपदेश गर्नुभयो |
| **ऋषिसर्गं** = ऋषिहरूको सृष्टिमा | अवतारलाई स्वीकार गरेर | **यतः** = जुन शास्त्रको अध्ययनले |
| **सः** = ती भगवान् नारायणले | **सात्वतम् तन्त्रं** = सात्वत तन्त्र | **कर्मणां** = कर्मबन्धनबाट |
| **च** = पनि | वा पाञ्चरात्र आगमको | **नैष्कर्म्यं** = मुक्ति मिल्दछ |

**वाक्यार्थ–** तेस्रो पटक ऋषिहरूको सृष्टिमा उहाँले देवर्षि नारदको रूपमा अवतार ग्रहण गरेर सात्वत तन्त्र अर्थात् नारद पाञ्चरात्रको उपदेश गर्नुभयो। यसमा कर्मद्वारा नै कसरी कर्मबन्धनबाट मुक्ति मिल्न सक्दछ भन्ने कुराको वर्णन गरिएको छ।

**तुर्ये धर्मकलासर्गे नरनारायणावृषी।**
**भूत्वाऽऽत्मोपशमोपेतमकरोद् दुश्चरं तपः॥ ९॥**

पदार्थ–

**तुर्ये** = चतुर्थ अवतारमा
**धर्मकलासर्गे** = धर्मपत्नी मूर्तिको गर्भबाट
**नरनारायणौ ऋषी** = नर र नारायण ऋषि
**भूत्वा** = भएर
**आत्मोपशमोपेतम्** = आत्मालाई शम अवस्थामा पुऱ्याउने
**दुश्चरं** = अत्यन्त कठिन
**तपः** = तपस्या
**अकरोत्** = गर्नुभयो

**वाक्यार्थ–** चौथो पटक भगवान् नारायणले धर्मपत्नी मूर्तिको गर्भबाट नर र नारायणको रूपमा अवतार लिनुभयो। यस अवतारमा उहाँले मन र इन्द्रियको सर्वथा संयम गरेर अत्यन्त कठिन तपस्या गर्नुभयो।

**पञ्चमः कपिलो नाम सिद्धेशः कालविप्लुतम्।**
**प्रोवाचासुरये साङ्ख्यं तत्त्वग्रामविनिर्णयम्॥ १०॥**

पदार्थ–

**पञ्चमः** = पाँचौं अवतारमा
**सिद्धेशः** = सिद्धहरूका स्वामी
**कपिलः** = कपिल
**नाम** = नाम गरेका
**कालविप्लुतम्** = समयको कारणले लुप्त भएको
**तत्त्वग्रामविनिर्णयम्** = तत्त्वको निर्णय गर्ने
**साङ्ख्यं** = सांख्य शास्त्र
**आसुरये** = आसुरी नामका ऋषिलाई
**प्रोवाच** = उपदेश गर्नुभयो

**वाक्यार्थ–** पाँचौं अवतारमा सिद्धहरूका स्वामी महर्षि कपिलको रूपमा प्रकट भएर समयको प्रभावले लुप्त हुन लागेको तत्त्वको निर्णय गर्ने सांख्यशास्त्रको उपदेश आफ्नो आसुरि शिष्यलाई गर्नुभयो।

**षष्ठे अत्रेरपत्यत्वं वृतः प्राप्तोऽनसूयया।**
**आन्वीक्षिकीमलर्काय प्रह्लादादिभ्य ऊचिवान्॥ ११॥**

पदार्थ–

**षष्ठे** = छैटौं अवतारमा
**अनसूयया वृतः** = अनसूयाले हजुरलाई पुत्रको रूपमा प्राप्त गरौं भन्ने वर मागेको हुनाले
**अत्रेः** = अत्रि ऋषिको
**अपत्यत्वं प्राप्तः** = पुत्ररूपमा जन्म लिएर
**अलर्काय** = अलर्क ऋषिलाई र
**प्रह्लादादिभ्यः** = प्रह्लाद आदिलाई
**आन्वीक्षिकीम्** = ब्रह्मविद्या
**ऊचिवान्** = उपदेश गर्नुभयो

**वाक्यार्थ–** छैटौं अवतारमा अनसूयाको इच्छा पूरा गर्न अत्रि ऋषिको पुत्र दत्तात्रेयरूपमा उहाँले अवतार लिनुभयो। यस अवतारमा उहाँले अलर्क एवं प्रह्लाद आदिलाई ब्रह्मज्ञानको उपदेश दिनुभयो।

**ततः सप्तम आकूत्यां रुचेर्यज्ञोऽभ्यजायत।**

**स यामाद्यैः सुरगणैरपात् स्वायम्भुवान्तरम्॥ १२॥**

पदार्थ—

| | | |
|---|---|---|
| **ततः** = त्यसपछि | **यज्ञः** = यज्ञको रूपमा | **स्वायम्भुवान्तरम्** = स्वायम्भुव मन्वन्तरलाई |
| **सप्तमे** = सातौँ अवतारमा | **अभ्यजायत** = उत्पन्न हुनुभयो | **अपात्** = रक्षा गर्नुभयो |
| **रुचेः** = रुचि प्रजापतिकी | **सः** = ती भगवान् नारायण | |
| **आकूत्यां** = आकूति नामक पत्नीमा | **यामाद्यैः** = याम आदि | |
| | **सुरगणैः** = देवताका साथ | |

**वाक्यार्थ—** ती भगवान् नारायणले सातौँ पटक रुचि प्रजापतिकी आकूति नामक पत्नीबाट यज्ञको रूपमा अवतार लिनुभयो। यस अवतारमा उहाँले आफ्ना पुत्र याम आदि देवताहरूका साथ स्वायम्भुव मन्वन्तरको रक्षा गर्नुभयो।

**अष्टमे मेरुदेव्यां तु नाभेर्जात उरुक्रमः।**

**दर्शयन् वर्त्म धीराणां सर्वाश्रमनमस्कृतम्॥ १३॥**

पदार्थ—

| | | |
|---|---|---|
| **अष्टमे** = आठौँ अवतारमा | **उरुक्रमः** = ऋषभदेवको रूपमा | **धीराणां** = परमहंसको |
| **तु** = त | **जातः** = उत्पन्न हुनुभयो | **वर्त्म** = मार्गलाई |
| **मेरुदेव्यां** = मेरु देवीमा | **सर्वाश्रमनमस्कृतम्** = सम्पूर्ण आश्रमीहरूका लागि | **दर्शयन्** = देखाउनुभयो |
| **नाभेः** = नाभिबाट | | |

**वाक्यार्थ—** आठौँ पटक राजा नाभिकी पत्नी मेरुदेवीको गर्भबाट भगवान् नारायणले ऋषभदेवको रूपमा अवतार ग्रहण गर्नुभयो। यस अवतारमा उहाँले सम्पूर्ण आश्रमीहरूका लागि वन्दनीय परमहंसको मार्गलाई देखाउनुभयो।

**ऋषिभिर्याचितो भेजे नवमं पार्थिवं वपुः।**

**दुग्धेमामोषधीर्विप्रास्तेनायं स उशत्तमः॥ १४॥**

पदार्थ—

| | | |
|---|---|---|
| **नवमं** = नवौँ अवतारमा | अवतार | **दुग्ध** = दोहन गर्नुभयो |
| **सः** = ती भगवान् नारायणले | **भेजे** = धारण गरे | **तेन** = त्यसकारणले |
| **ऋषिभिः** = ऋषिहरूको | **विप्राः** = हे ऋषिहरू हो | **अयं** = यो अवतार |
| **याचितः** = प्रार्थनाले | **इमाम्** = यी पृथ्वीबाट | **उशत्तमः** = अत्यन्त |
| **पार्थिवं वपुः** = राजा पृथुको | **ओषधीः** = औषधिहरू | कल्याणकारी भयो |

**वाक्यार्थ—** नवौँ पटक ऋषिहरूको प्रार्थनालाई स्वीकार गरेर भगवान् नारायणले राजा पृथुको

रूपमा अवतार ग्रहण गर्नुभयो। यस अवतारमा उहाँले पृथिवीबाट समस्त औषधिहरूको दोहन गर्नुभयो। त्यसकारण उहाँको यो अवतार प्राणीहरूका लागि अत्यन्त कल्याणकारक भयो।

**रूपं स जगृहे मात्स्यं चाक्षुषोदधिसम्प्लवे।**

**नाव्यारोप्य महीमय्यामपाद् वैवस्वतं मनुम्॥ १५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सः** = ती भगवान् नारायणले | **रूपं** = अवतार | **नावि** = नौकामा |
| **चाक्षुषोदधिसम्प्लवे** = चाक्षुष | **जगृहे** = धारण गरेर | **आरोप्य** = राखेर |
| मन्वन्तरको अन्तमा जब तीनै | **वैवस्वतं** = वैवस्वत | **अपात्** = रक्षा गर्नुभयो |
| लोक समुद्रमा डुबेका थिए | **मनुम्** = मनुलाई | |
| **मात्स्यं** = मत्स्य | **महीमय्याम्** = पृथिवीमय | |

**वाक्यार्थ–** चाक्षुष मन्वन्तरको अन्तमा जब सम्पूर्ण लोकहरू समुद्रमा डुबेका थिए, त्यस समयमा दसौँ मत्स्य अवतारलाई ग्रहण गरेर पृथ्वीरूपी डुङ्गामा राखेर आगामी मन्वन्तरका अधिपति वैवस्वत मनुको रक्षा गर्नुभयो।

**सुरासुराणामुदधिं मथ्नतां मन्दराचलम्।**

**दध्रे कमठरूपेण पृष्ठ एकादशे विभुः॥ १६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **एकादशे** = एघारौँ अवतारमा | **मथ्नतां** = मन्थन गरेको समयमा | **मन्दराचलम्** = मन्दराचल |
| **सुरासुराणाम्** = देवता र दानव | **विभुः** = सर्वव्यापक परमात्माले | पर्वतलाई |
| मिलेर | **कमठरूपेण** = कछुवाको रूप | **पृष्ठे** = पिठिउँमा |
| **उदधिं** = समुद्र | धारण गरेर | **दध्रे** = बोक्नुभयो |

**वाक्यार्थ–** जुन समयमा देवता र दैत्यहरू समुद्र मन्थन गरिरहेका थिए त्यस समयमा एघारौँ कच्छपरूपलाई धारण गरेर भगवान्ले मन्दराचललाई आफ्नो पिठिउँमा बोक्नुभयो।

**धान्वन्तरं द्वादशमं त्रयोदशममेव च।**

**अपाययत् सुरानन्यान् मोहिन्या मोहयन् स्त्रिया॥ १७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **द्वादशमं** = बाह्रौँ अवतारमा | **मोहिन्या** = मोहिनी | **सुरान्** = देवताहरूलाई |
| **धान्वन्तरं** = धन्वन्तरिको रूपमा | **स्त्रिया** = स्त्रीको रूप धारण | **च एव** = चाहिँ |
| समुद्रबाट अमृतको घडा लिएर | गरेर | **अपाययत्** = (अमृत) पान |
| प्रकट हुनुभयो | **अन्यान्** = अन्य असुरहरूलाई | गराउनुभयो |
| **त्रयोदशमम्** = तेह्रौँ अवतारमा | **मोहयन्** = मोहित गर्दै | |

**वाक्यार्थ–** बाह्रौँ अवतारमा धन्वन्तरिको रूपमा अमृत लिएर समुद्रबाट प्रकट हुनुभयो। तेह्रौँ

अवतारमा मोहिनीरूपलाई धारण गरेर दैत्यहरूलाई मोहित गराएर देवताहरूलाई अमृत पान गराउनुभयो।

**चतुर्दशं नारसिंहं बिभ्रद् दैत्येन्द्रमूर्जितम्।**

**ददार करजैर्वक्षस्येरकां कटकृद्यथा॥ १८॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **चतुर्दशं** = चौधौँ अवतारमा | **दैत्येन्द्रम्** = दैत्यराज | **ददार** = चिरिदिनुभयो |
| **नारसिंहं** = नरसिंहरूपलाई | हिरण्यकशिपुको | **यथा** = जसरी |
| **बिभ्रत्** = धारण गरेर | **ऊरौ** = छातीमा | **कटकृत्** = चकटी बनाउनेले |
| **ऊर्जितम्** = अत्यन्त बलवान् | **करजैः** = नङ्ग्राले | **एरकां** = परालालाई चिर्दछ |

**वाक्यार्थ–** चौधौँ अवतारमा नरसिंहरूप धारण गरेर अत्यन्त बलवान् दैत्यराज हिरण्यकशिपुको छातीलाई आफ्ना वज्र जस्ता तीखा नङ्ग्राले चकटी बनाउने मान्छेले परालको त्यान्द्रालाई चिरेझैँ चिरेर मारिदिनुभयो।

**पञ्चदशं वामनकं कृत्वागादध्वरं बलेः।**

**पदत्रयं याचमानः प्रत्यादित्सुस्त्रिविष्टपम्॥ १९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **पञ्चदशं** = पन्धौँ अवतारमा | **अध्वरं** = यज्ञमा | **पदत्रयं** = तीन पाइला जमिन |
| **वामनकं कृत्वा** = वामनरूपलाई | **अगात्** = गएर | **याचमानः** = माग्नुभयो |
| धारण गरेर | **त्रिविष्टपम्** = तीनै लोकको राज्य | |
| **बलेः** = राजा बलिको | **प्रत्यादित्सुः** = लिने इच्छाले | |

**वाक्यार्थ–** पन्धौँ पटक वामनरूप धारण गरेर दैत्यराज बलिको यज्ञमा जानुभयो। यस अवतारमा उहाँले तीन पाइला जमिन माग्ने बहाना गरेर बलिबाट तीनै लोकको राज्य लिनुभयो।

**अवतारे षोडशमे पश्यन् ब्रह्मद्रुहो नृपान्।**

**त्रिःसप्तकृत्वः कुपितो निःक्षत्रामकरोन्महीम्॥ २०॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **षोडशमे** = सोह्रौँ | **नृपान्** = राजाहरूलाई | पटकसम्म |
| **अवतारे** = परशुराम अवतारमा | **पश्यन्** = देखेर | **महीम्** = पृथ्वीलाई |
| **ब्रह्मद्रुहः** = ब्राह्मणहरूसँग द्वेष | **कुपितः** = सिराएर | **निःक्षत्राम्** = क्षत्रियहरूरहित |
| गर्ने | **त्रिःसप्तकृत्वः** = एक्काईस | **अकरोत्** = बनाउनुभयो |

**वाक्यार्थ–** सोह्रौँ अवतारमा परशुरामको अवतार लिई ब्राह्मणद्रोही राजाहरूसँग क्रुद्ध भएर एक्काईस पटकसम्म पृथ्वीको परिक्रमा गरी पृथ्वीलाई क्षत्रियशून्य गराउनुभयो।

**ततः सप्तदशे जातः सत्यवत्यां पराशरात् ।**

**चक्रे वेदतरोः शाखा दृष्ट्वा पुंसोऽल्पमेधसः ॥ २१ ॥**

**पदार्थ–**

**ततः** = त्यसपछि
**सप्तदशे** = सत्रौँ अवतारमा
**पराशरात्** = पराशर ऋषिबाट
**सत्यवत्यां** = सत्यवतीको गर्भमा
**जातः** = वेदव्यासको रूपमा उत्पन्न भएर
**अल्पमेधसः** = अल्प बुद्धि भएका
**पुंसः** = मानिसहरूलाई
**दृष्ट्वा** = देखेर
**वेदतरोः** = वेदरूपी वृक्षका
**शाखाः** = विभिन्न शाखाहरू
**चक्रे** = बनाउनभयो

**वाक्यार्थ–** त्यसपछि सत्रौँ पटक पराशर र सत्यवतीबाट वेदव्यासको रूपमा अवतार लिनुभयो र अल्पबुद्धि भएका मनुष्यहरूको उद्धारका लागि वेदरूपी वृक्षका शाखाहरूको विस्तार गर्नुभयो।

**नरदेवत्वमापन्नः सुरकार्यचिकीर्षया ।**

**समुद्रनिग्रहादीनि चक्रे वीर्याण्यतः परम् ॥ २२ ॥**

**पदार्थ–**

**अतः परम्** = यसपछि अठारौँ अवतारमा
**सुरकार्यचिकीर्षया** = देवताहरूको कार्य सम्पन्न गर्ने इच्छाले
**नरदेवत्वम्** = राजाको रूपमा
**आपन्नः** = राम अवतार ग्रहण गरेर
**समुद्रनिग्रहादीनि** = समुद्र निग्रह, रावणवध आदि
**वीर्याणि** = वीरतापूर्ण कार्यहरू
**चक्रे** = गर्नुभयो

**वाक्यार्थ–** त्यसपछि अठारौँ पटक देवताहरूको कार्य सम्पन्न गर्ने इच्छाले राजाको रूपमा रामावतार ग्रहण गरेर समुद्रनिग्रह र रावणवध आदि कार्यहरू गर्नुभयो।

**एकोनविंशे विंशतिमे वृष्णिषु प्राप्य जन्मनी ।**

**रामकृष्णाविति भुवो भगवानहरद्भरम् ॥ २३ ॥**

**पदार्थ–**

**एकोनविंशे** = उन्नाईसौँ र
**विंशतिमे** = बीसौँ अवतारमा
**वृष्णिषु** = यदुवंशमा
**रामकृष्णौ इति** = बलराम र कृष्णको रूपमा
**जन्मनी** = अवतार
**प्राप्य** = पाएर
**भगवान्** = भगवान्‌ले
**भुवः** = पृथ्वीको
**भरम्** = भारलाई
**अहरत्** = हरण गर्नुभयो

**वाक्यार्थ–** उन्नाईसौँ र बीसौँ अवतारमा भगवान् बलराम र भगवान् श्रीकृष्णको रूपमा अवतार लिएर पृथ्वीको भारलाई हरण गर्नुभयो।

**ततः कलौ सम्प्रवृत्ते सम्मोहाय सुरद्विषाम् ।**

**बुद्धो नाम्नाञ्जनसुतः कीकटेषु भविष्यति ॥ २४ ॥**

पदार्थ—

**ततः** = त्यसपछि
**कलौ** = कलियुग
**सम्प्रवृत्ते** = लागेपछि
**सुरद्विषाम्** = देवताहरूसँग रिस गर्ने दैत्यहरूलाई
**सम्मोहाय** = मोहित गराउनका लागि
**अञ्जनसुतः** = अञ्जनको पुत्रको रूपमा
**बुद्धः नाम्ना** = बुद्ध नाम लिएर
**कीकटेषु** = कीकट देशमा
**भविष्यति** = उत्पन्न हुनुहुनेछ

**वाक्यार्थ—** त्यसपछि कलियुग आएपछि दानवहरूलाई मोहमा पार्नका लागि अञ्जनको पुत्रको रूपमा कीकट प्रदेशमा भगवान् बुद्धको रूपमा अवतार ग्रहण गर्नुहुनेछ।

**अथासौ युगसन्ध्यायां दस्युप्रायेषु राजसु ।**

**जनिता विष्णुयशसो नाम्ना कल्किर्जगत्पतिः ॥ २५ ॥**

पदार्थ—

**अथ** = यसपछि
**युगसन्ध्यायां** = कलियुगको अन्त्य हुने समयमा
**राजसु** = राजाहरू
**दस्युप्रायेषु** = सबैजसो लुटेरा भएपछि
**विष्णुयशसः** = विष्णुयश नाम गरेका ब्राह्मणबाट
**असौ** = यी
**जगत्पतिः** = संसारका स्वामी भगवान् नारायण
**कल्किः नाम्ना** = कल्किको नाममा
**जनिता** = उत्पन्न हुनुहुनेछ

**वाक्यार्थ—** यसपछि कलियुगको अन्त हुने समयमा पृथ्वीको शासन गर्ने बहानाले राजाहरूमा लुट्ने प्रवृत्ति बढेपछि जगत् रक्षक भगवान्ले विष्णुयश ब्राह्मणको घरमा कल्किको रूपमा अवतार लिनुहुनेछ।

**अवतारा ह्यसङ्ख्येया हरेः सत्त्वनिधेर्द्विजाः ।**

**यथाविदासिनः कुल्याः सरसः स्युः सहस्रशः ॥ २६ ॥**

पदार्थ—

**द्विजाः** = हे शौनक आदि ऋषिहरू
**यथा** = जसरी
**अविदासिनः** = अगाध
**सरसः** = तलाउबाट
**सहस्रशः** = हजारौँ
**कुल्याः** = साना-साना कुलाहरू
**स्युः** = निक्लन्छन्
**हि** = निश्चय नै
**सत्त्वनिधेः** = सत्त्व गुणका खानि भएका
**हरेः** = भगवान् हरिबाट
**असङ्ख्येयाः** = असङ्ख्य
**अवताराः** = अवतारहरू हुन्छन्

**वाक्यार्थ—** हे शौनक आदि ऋषिहरू हो जसरी अगाध सरोवरबाट हजारौँ साना-साना कुलाहरू निस्कन्छन् त्यसै गरी सत्त्वनिधि भगवान् श्रीहरिका असङ्ख्य अवतारहरू भइरहन्छन्।

**ऋषयो मनवो देवा मनुपुत्रा महौजसः ।**

**कलाः सर्वे हरेरेव सप्रजापतयः स्मृताः ॥ २७ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **ऋषयः** = ऋषिहरू | **सप्रजापतयः** = प्रजापतिहरू | भएकाहरू |
| **मनवः** = मनुहरू | सहित | **हरेः एव** = भगवान् नारायणकै |
| **देवाः** = देवताहरू | **सर्वे** = सबै | **कलाः** = कलाहरू |
| **मनुपुत्राः** = मनुपुत्रहरू | **महौजसः** = महान् सामर्थ्य | **स्मृताः** = मानिन्छन् |

**वाक्यार्थ–** ऋषि, मनु, देवता, प्रजापति, मनुपुत्र र अरू जति पनि शक्तिशाली पुरुष संसारमा देखिन्छन् ती सम्पूर्ण शक्तिशाली प्राणीहरू भगवान्कै अंश हुन्।

**एते चांशकलाः पुंसः कृष्णस्तु भगवान् स्वयम्।**
**इन्द्रारिव्याकुलं लोकं मृडयन्ति युगे युगे॥ २८॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **एते च** = यी उपर्युक्त अवतारहरू | **स्वयम् भगवान्** = स्वयं भगवान् | भएका |
| **पुंसः** = भगवान् नारायणका | हुनुहुन्छ | **लोकं** = मानिसहरूलाई |
| **अंशकलाः** = कलावतार हुन् | **इन्द्रारिव्याकुलं** = इन्द्रका शत्रु | **युगे युगे** = युग–युगमा |
| **कृष्णः तु** = कृष्ण त | दैत्यहरूको अत्याचारबाट पीडित | **मृडयन्ति** = रक्षा गर्दछन् |

**वाक्यार्थ–** यी उपर्युक्त अवतारहरू भगवान्का अंशावतारहरू हुन् भने श्रीकृष्ण भगवान् पूर्ण अवतारी हुनुहुन्छ, अर्थात् साक्षात् अवतारी नै हुनुहुन्छ। जब संसारका प्राणीहरू दैत्यहरूको अत्याचारले पीडित हुन्छन्, त्यस समयमा युग–युगमा अनेक रूप धारण गरेर भगवान्ले उनीहरूको रक्षा गर्नुहुन्छ।

**जन्म गुह्यं भगवतो य एतत् प्रयतो नरः।**
**सायं प्रातर्गृणन् भक्त्या दुःखग्रामाद् विमुच्यते॥ २९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यः** = जो | **गुह्यं** = रहस्यमय | **गृणन्** = पाठ गर्दछ भने त्यो |
| **नरः** = मानिस | **जन्म** = दिव्य जन्मको कथा | मानिस |
| **प्रयतः** = पवित्र भएर | **सायं प्रातः** = सायंकाल र प्रातः | **दुःखग्रामात्** = सम्पूर्ण |
| **एतत्** = यो | काल | दुःखसमूहबाट |
| **भगवतः** = भगवान्को | **भक्त्या** = भक्तिपूर्वक | **विमुच्यते** = मुक्त हुन्छ |

**वाक्यार्थ–** भगवान्को दिव्य जन्मको यो कथा अत्यन्त गोपनीय एवं रहस्यमय छ, जो मनुष्य एकाग्रचित्तले शुद्ध भएर भक्तिपूर्वक यसको पाठ गर्दछ, त्यस मनुष्यले सम्पूर्ण दुःखबाट छुट्कारा प्राप्त गर्दछ।

**विवरण–** यस श्लोकमा आएको **दुःखग्रामात्** यस शब्दको विषयमा चर्चा गरौं। दुःखग्राम भनेको दुःखहरूको समूह हो। दुःख भनेको मनको त्यस्तो वृत्तिविशेष हो जसलाई सबै जीवले हटाउन चाहेका हुन्छन्। अर्थात् दुःख भनेको त्यस्तो वस्तु हो जसलाई कुनै पनि प्राणीले मन पराएको

हुँदैन। योगवाशिष्ठअनुसार चञ्चल चित्तमा परेको आत्माको प्रतिबिम्ब नै दुःख हो। किनभने जब कुनै व्यक्तिको चित्त शान्त हुन्छ तब त्यो व्यक्ति दुःखी भएको देखिँदैन। जसको चित्त अशान्त छ, त्यही व्यक्ति दुःखी भएको देखिन्छ।

आध्यात्मिक, आधिभौतिक र आधिदैविकका भेदले दुःख तीन प्रकारका हुन्छन्। श्रीमद्भागवत माहात्म्यको मङ्गलाचरण श्लोकमा नै **तापत्रयविनाशाय श्रीकृष्णाय वयं नुमः** भनी बताइएको छ।

आध्यात्मिक दुःख शारीरिक र मानसिकका भेदले दुई प्रकारका हुन्छन्। शरीरमा हुने जरो आउनु टाउको दुख्नु, दाँत दुख्नु, पेट दुख्नु आदिलाई शारीररिक दुःख भन्दछन्। प्रियवियोग र अप्रियसंयोगबाट हुने दुःख विशेषलाई मानसिक दुःख भनिन्छ। शारीरिक रोगलाई व्याधि र मानसिक रोगलाई आधि भनिन्छ।

चोर, डाँका, बाघ, भालु, हात्ती, गैँडा र सर्प आदिबाट हुने कष्टलाई आधिभौतिक कष्ट भनिन्छ। त्यस्तै देवताहरू रुष्ट भएर हुने अतिवृष्टि, अनावृष्टि, वज्रपात, भूकम्प आदिबाट हुने कष्टलाई आधिदैविक कष्ट या दुःख भन्दछन्।

उपनिषद्अनुसार आत्मालाई छोडेर माया र मायाका सम्पूर्ण कार्यहरू दुःखरूप हुन्। मायाका कार्यअन्तर्गत सम्पूर्ण द्वैत प्रपञ्च पर्दछ। यसकारण उपनिषद्अनुसार सम्पूर्ण द्वैत प्रपञ्च दुःखरूप हो। सम्पूर्ण दुःखहरूबाट छुट्कारा प्राप्त गर्ने एकमात्र उपाय हो, आत्मतत्त्वको ज्ञान।

**एतद् रूपं भगवतो ह्यरूपस्य चिदात्मनः।**
**मायागुणैर्विरचितं महदादिभिरात्मनि ॥ ३० ॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **अरूपस्य** = प्राकृत स्वरूपले रहित हुनुभएका | **एतद्** = यो | **महदादिभिः** = महत्तत्त्व आदिद्वारा |
| **चिदात्मनः** = चिन्मय | **रूपं** = स्थूलरूप | **आत्मनि** = परमात्मामा |
| **भगवतः** = भगवान्को | **हि** = निश्चय नै | **विरचितं** = कल्पित हो |
| | **मायागुणैः** = मायाका गुण | |

**वाक्यार्थ—** प्राकृत स्वरूप रहित चिन्मय भगवान्को यो जुन स्थूल जगदाकाररूप हो, त्यो उहाँकै माया महत्तत्त्व आदि गुणको कारणले भगवान्मा कल्पित छ।

**विवरण—** यस श्लोकमा निराकार भगवान्ले सृष्टिका क्रममा साकार रूप लिने कुरा बताइएको छ। वेदादि शास्त्रहरूमा परमात्माका तीन प्रकारका रूप बताइएका छन्— निर्गुण निराकार, सगुण निराकार र सगुण साकार। जसमा कुनै गुण र आकार छैन त्यस्ता परमात्मालाई निर्गुण निराकार भन्दछन्। ब्रह्ममा कुनै गुण र आकार नभएको हुनाले ब्रह्मलाई निर्गुण र निराकार भन्दछन्। सम्पूर्ण प्राणीहरूभित्र अन्तर्यामीरूपमा निवास गर्ने कुनै आकार नभए तापनि उसले मायाको गुणहरूलाई स्वीकार गरेर संसारको नियमन गरेकाले उसलाई सगुण निराकार भनिएको हो। अर्थात् आफू निराकार भए तापनि उसले मायाका गुणहरूलाई स्वीकार गरेको हुनाले उसलाई सगुण निराकार

भनिएको हो। जुन परमात्मामा गुण र आकार दुबै छन्, त्यस्तो परमात्मालाई सगुण र साकार परमात्मा भन्दछन्। राम, कृष्ण आदि अवतारहरू भगवान्का सगुण र साकार रूप हुन्।

निर्गुण भगवान्ले सगुण साकार रूप किन र कसरी लिनुहुन्छ भन्ने कुरामा शास्त्रहरूमा विभिन्न मतहरू देखिन्छन्। निर्गुण परमात्माले सगुण साकार रूप लिनुका कारणमा जे-जति मतमतान्तरहरू भए तापनि वस्तुतः आफ्ना भक्तहरूको कल्याणका लागि नै भगवान्ले सगुण साकार रूप ग्रहण गर्नुहुन्छ।

भगवान्को उपासनाको पहिलो क्रम सगुण रूपको उपासना हो। सगुण रूपको उपासनाबाट मुमुक्षुहरूको वासनाको क्षय भई चित्त निर्मल हुन्छ। जीवहरू अविद्या, काम र कर्मको कारणले अनादिकालदेखि संसारसागरमा पौडिरहेका छन्। आत्माको परमानन्दरूपतालाई नजान्नु अविद्या हो। त्यस अविद्याको कारणले शरीरमा अहंबुद्धि हुन्छ, शरीरमा अहंबुद्धि भएपछि कामना उत्पन्न हुन्छ। त्यो कामनाबाट कर्महरू हुन्छन्। कर्मफल भोग्नका लागि जन्म हुन्छ। जन्म भएपछि फेरि कर्म हुन्छ। कर्मको फल भोग्नका लागि फेरि जन्म हुन्छ। साइकलको एउटा पाङ्ग्रो चलाएपछि अर्को पाङ्ग्रो स्वतः चलेझैँ जीवको लागि जन्म र मृत्युको प्रवाह कहिल्यै पनि शान्त हुँदैन। भगवान् सगुण साकार रूपमा आएर विभिन्न लीलाहरू गर्नुहुन्छ। उहाँका भक्तहरूले कानद्वारा उहाँका तिनै लीलाहरूको श्रवण गर्दछन्, वाणीद्वारा उहाँका लीलाहरूको वर्णन गर्दछन् र मनद्वारा उहाँका लीलाहरूको स्मरण गर्दछन्। यसप्रकार भगवान्का लीलाहरूको श्रवण, कीर्तन र स्मरणद्वारा भक्तहरूको अन्तःकरण शुद्ध हुन्छ। त्यो शुद्ध अन्तःकरणमा परमात्मा प्रकट हुनुहुन्छ। परमात्माको साक्षात्कार भएपछि अविद्याको निवृत्ति हुन्छ। अविद्याको निवृत्ति भएपछि जीव संसारबन्धनबाट मुक्त हुन्छ। यसप्रकार वासनाग्रस्त मुमुक्षु जीवहरूको कल्याणको लागि निर्गुण निराकार परमात्माले सगुण साकार रूप ग्रहण गर्नुहुन्छ।

उपनिषद्अनुसार निर्गुण ब्रह्म साक्षात्कार नभईकन मोक्ष सम्भव छैन। साधकहरूको अन्तःकरणको अशुद्धिको कारणले प्रारम्भमा उनीहरूको मन निर्गुण निराकारमा लाग्न सक्दैन। अशुद्ध मनले सूक्ष्म वस्तुलाई ग्रहण गर्न सक्तैन। विषय स्थूल भएकाले मनलाई स्थूल वस्तुहरूको चिन्तनको अभ्यास परेको हुन्छ। अतः साधकहरूले प्रारम्भमा भगवान्को स्थूल वा सगुण रूपको चिन्तन गर्नुपर्दछ। निर्गुण निराकार ब्रह्मको साक्षात्कार मुमुक्षुहरूको लक्ष्य हो भने सगुण साकारको उपासना त्यो निर्गुण ब्रह्मसाक्षात्कारको साधन हो।

**यथा नभसि मेघौघो रेणुर्वा पार्थिवोऽनिले।**
**एवं द्रष्टरि दृश्यत्वमारोपितमबुद्धिभिः॥ ३१॥**

**पदार्थ—**

**यथा** = जसरी
**अनिले** = वायुमा रहेको
**मेघौघः** = मेघको समूहलाई
**नभसि** = आकाशमा र
**पार्थिवः** = पृथ्वीमा रहने
**रेणुः** = धूलो
**वा** = अथवा
**एवं** = त्यसै गरी
**अबुद्धिभिः** = अज्ञानीहरूद्वारा
**द्रष्टरि** = द्रष्टा आत्मामा
**दृश्यत्वम्** = दृश्यत्व धर्म
**आरोपितम्** = आरोप गरिएको

हो

**वाक्यार्थ–** जसरी बादल वायुको आश्रयमा रहन्छ र धूलो पनि रहेको हुन्छ तर पनि अज्ञानी मनुष्यहरू वायुमा रहेको बादललाई आकाश छ भनेर मान्दछन्, धूलोमा रहेको धूसरपनलाई वायुमा मान्दछन् त्यसै गरी अज्ञानीहरूले साक्षी आत्मामा स्थूल दृश्यरूप जगत्को आरोप गर्दछन्।

**विवरण–** वेदान्तसिद्धान्तअनुसार जान्नुपर्ने केवल दुइटामात्र पदार्थ छन्– द्रष्टा र दृश्य। द्रष्टा भनेको त्यो वस्तु हो जसले आफूलाई पनि जान्दछ र आफूदेखि अतिरिक्त दृश्यलाई पनि जान्दछ। अनि दृश्य भनेको त्यो वस्तु हो जसले न आफूलाई जान्दछ न आफूदेखि अतिरिक्तलाई जान्दछ। शरीर दृश्य हो भने शरीरभित्र बस्ने आत्मा द्रष्टा हो। शरीरभित्र बस्ने आत्माले आफूलाई पनि जान्दछ र आफूदेखि अतिरिक्त शरीर, इन्द्रिय, मन, बुद्धि, प्राण र संसारका अन्य सम्पूर्ण पदार्थलाई पनि जान्दछ। शरीरले न त शरीरभित्र बस्ने आत्मालाई जान्दछ, न अरू घडा, कपडा आदि वस्तुहरूलाई नै जान्दछ। यिनै द्रष्टा र दृश्यलाई अर्को शब्दमा क्षेत्र र क्षेत्रज्ञ पनि भन्दछन्। गीता (१३।२)मा भगवान् श्रीकृष्णले अर्जुनलाई यसप्रकार उपदेश गर्नुभएको छ– **क्षेत्रक्षेत्रज्ञयोर्ज्ञानं यत्तज्ज्ञानं मतं मम**। अर्थात् क्षेत्र र क्षेत्रज्ञको ज्ञान नै मेरो वास्तविक ज्ञान हो।

द्रष्टाको अज्ञानको कारणले द्रष्टामाथि दृश्यको आरोप हुन्छ। उदाहरणका लागि यदि कुनै व्यक्तिले डोरीलाई डोरी भनेर राम्रोसँग जानेको छ भने उसलाई डोरीमा सर्पको भ्रम हुँदैन। डोरीलाई डोरी भनेर नजानेको हुनाले उसलाई डोरीको अज्ञान भयो। त्यही अज्ञानको कारणले उसलाई डोरीमा सर्पको भ्रम भएको हो।

अष्टावक्रगीता (२।७)मा भनिएको छ– आत्माको अज्ञानको कारणले गर्दा जगत्को भान भएको हो। आत्माको ज्ञान भएपछि जगत्को भान हुँदैन। डोरीको अज्ञानको कारणले गर्दा डोरीमा सर्पको भ्रम भएको हो। परन्तु डोरीको ज्ञान भएपछि डोरीमा सर्पको भ्रम हुँदैन।

यही कुरा माण्डूक्यकारिका (२।१७-१८)मा यसप्रकार बताइएको छ– डोरीको ज्ञान भएपछि डोरीको अज्ञान जसरी नष्ट हुन्छ त्यसै गरी आत्माको ज्ञान भएपछि आत्माको अज्ञान नष्ट हुन्छ। जसरी डोरीको ज्ञानद्वारा अज्ञानको कारणले देखिएको सर्प नष्ट हुन्छ, ठीक त्यसै गरी आत्माको ज्ञानद्वारा अज्ञान नष्ट भएपछि आत्माको अज्ञानबाट देखिएको संसार पनि नष्ट हुन्छ।

**अतः परं यदव्यक्तमव्यूढगुणव्यूंहितम्।**
**अदृष्टाश्रुतवस्तुत्वात् स जीवो यत्पुनर्भवः॥ ३२॥**

**पदार्थ–**

**अतः परं** = यस स्थूलरूपदेखि अतिरिक्त
**यत्** = जुन
**अव्यक्तम्** = सूक्ष्मरूप छ
**अव्यूढगुणबृंहितम्** = हात, गोडा आदि आकारले रहित भएका पृथिवी आदि गुणद्वारा बनेको
**अदृष्टाश्रुतवस्तुत्वात्** = नदेखिएको र नसुनिएको वस्तु हुनाले
**सः** = त्यो
**जीवः** = जीवको उपाधि लिङ्ग शरीर हो
**यत् पुनर्भवः** = जसको बारम्बार जन्म भइरहन्छ

**वाक्यार्थ–** यस स्थूलरूपदेखि अतिरिक्त जुन सूक्ष्मरूप छ हात, गोडा आदि आकारले रहित

पृथिवी आदि गुणद्वारा बनेको, नदेखिएको र नसुनिएको वस्तु हुनाले त्यो जीवको उपाधि लिङ्ग शरीर हो। यसैको बारम्बार जन्म भइरहन्छ।

**विवरण–** यस श्लोकमा आएको जीवको विषयमा चर्चा गरौँ। अधिष्ठान ब्रह्मचैतन्य, अन्तःकरण र अन्तःकरणमा परेको ब्रह्मचैतन्यको प्रतिबिम्ब यी तीनओटाको समष्टिलाई जीव भनिन्छ। पञ्चदशीमा विद्यारण्यस्वामीले जीवको स्वरूपलाई यसप्रकार देखाउनुभएको छ– अधिष्ठानरूप चैतन्य, सूक्ष्म शरीर र सूक्ष्म शरीरमा प्रतिबिम्बित चिदाभासको समूहलाई जीव भनिन्छ।[४]

उपाधिले रहित शुद्ध आत्माको जन्म हुँदैन। लिङ्गशरीर अर्थात् सूक्ष्म शरीरका साथै तादात्म्याध्यासलाई प्राप्त गरेको जुन चैतन्य हो, त्यसैको पुनर्जन्म हुन्छ। जसरी पानीको तलतिर बग्नु स्वभाव हो, त्यस्तै विषयप्रति निरन्तर आकृष्ट भइरहनु जीवको स्वभाव हो। जब जीवले कुनै विषयको भोग गर्दछ, त्यस भोगबाट उसको अन्तःकरणमा संस्कार उत्पन्न हुन्छ। त्यस भोगबाट उत्पन्न भएको संस्कारलाई वासना भनिन्छ। यो भोगवासना नै उसको पुनर्जन्मको कारण हो। जसको विषयप्रतिको राग समाप्त भएको छ उसको पुनर्जन्म सम्भव छैन। न्यायसूत्रमा गौतम महर्षिले लेख्नुभएको छ– **वीतरागजन्मादर्शनात्**। अर्थात् जसमा विषयप्रतिको राग समाप्त भएको छ, उसको पुनर्जन्म भएको देखिंदैन। अतः विषयप्रतिको जुन आसक्ति हो, त्यही नै पुनर्जन्मको कारण हो। गीतामा भगवान्‌ले अर्जुनलाई यही कुरा भन्नुभएको छ– जीवको विषयप्रतिको आसक्ति नै सद्योनि र असद्योनि प्राप्तिको कारण हो।[५]

पुनर्जन्म प्रक्रियाको अन्त्य कसरी हुन्छ भन्ने कुरा नैष्कर्म्यसिद्धिमा यसप्रकार बताइएको छ– सर्वप्रथम मुमुक्षुले नित्य र नैमित्तिक कर्मको अनुष्ठान गर्नुपर्दछ। नित्य र नैमित्तिक कर्मको अनुष्ठानद्वारा धर्मको उत्पत्ति हुन्छ। सूर्य र अन्धकारमा परस्पर विरोध भएझैं धर्म र पापमा परस्परको विरोध हुने हुनाले धर्मको उत्पत्ति भएपछि पापको नाश हुन्छ। पापको नाश भएपछि चित्तको शुद्धि हुन्छ। चित्तको शुद्धि भएपछि संसारको यथार्थताको बोध हुन्छ। संसारको यथार्थताको बोध भएपछि सर्वकर्मसंन्यास हुन्छ। सर्वकर्मसंन्यास भएपछि योगाभ्यास हुन्छ। योगाभ्यासपछि चित्तको अन्तर्मुखता हुन्छ। चित्तको अन्तर्मुखता भएपछि तत्त्वमसि आदि महावाक्यार्थ ज्ञान हुन्छ। महावाक्यार्थको ज्ञान भएपछि अविद्याको निवृत्ति हुन्छ। अविद्याको निवृत्ति भएपछि जीवको ब्रह्मस्वरूपले अवस्थिति हुन्छ। जीवको यही ब्रह्मस्वरूपले अवस्थितिलाई नै मोक्ष भन्दछन्।[६]

जीव र परमात्माको एकताको साक्षात्कार नभईकन पुनर्जन्म प्रक्रियाको अन्त्य सम्भव

---

४. चैतन्यं यदधिष्ठानं लिङ्गदेहश्च यः पुनः।
चिच्छाया लिङ्गदेहस्था तत्सङ्गो जीव उच्यते।।

५. कारणं गुणसङ्गोऽस्य सदसद्योनिजन्मसु। (१३।२१)

६. नित्यनैमित्तिककर्मानुष्ठानात् धर्मोत्पत्तिः, धर्मोत्पत्तेः पापहानिः, ततः चित्तशुद्धिः, ततः संसारायाथात्म्यावबोधः, ततः वैराग्यम्, ततः सर्वकर्मसंन्यासः, ततः योगाभ्यासः, ततः चित्तस्य प्रत्यक्प्रवणता, ततः तत्त्वमस्यादिवाक्यार्थपरिज्ञानम् ततः अविद्योच्छेद ततः स्वात्मनि अवस्थानम्।

छैन। यो पुनर्जन्म प्रक्रियाको अन्त्य भन्नु र मोक्ष भन्नु एउटै कुरा हो। **ऋते ज्ञानान्नमुक्तिः** अर्थात् ज्ञान नभईकन मोक्ष सम्भव छैन भनी शास्त्रमा यही कुरा बताइएको छ।

जीव वस्तुतः अकर्ता, अभोक्ता र अप्रमाता हो। अज्ञानको कारणले गर्दा अन्तःकरणका साथ उसको तादात्म्याध्यास भएकाले उसले आफूलाई कर्ता, भोक्ता, प्रमाता मानेको हुनाले अनन्तकालदेखि ऊ संसारचक्रमा घुमिरहेको छ। श्रोत्रिय र ब्रह्मनिष्ठ गुरुबाट तत्त्वमस्यादि महावाक्यहरूको श्रवण गरेपछि जीवले जीव र परमात्माको एकताको साक्षात्कार गर्दछ। त्यो साक्षात्कारद्वारा जीव र परमात्माको एकताको बाधक अज्ञान नष्ट हुन्छ। अज्ञान नष्ट भएपछि त्यस अज्ञानको कार्य अन्तःकरण नष्ट हुन्छ। अन्तःकरण नष्ट भएपछि वासना नष्ट हुन्छ। वासना नष्ट भएपछि जीवको पुनर्जन्म प्रक्रियाको अन्त्य हुन्छ।

**यत्रेमे सदसद्रूपे प्रतिषिद्धे स्वसंविदा।**
**अविद्ययाऽऽत्मनि कृते इति तद् ब्रह्मदर्शनम्॥ ३३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **इमे** = यी | **कृते** = कल्पित छन् | **प्रतिषिद्धे** = हट्दछन् |
| **सदसद्रूपे** = सत् र असत् रूप | **यत्र** = जुन अवस्थामा | **इति** = यसो भएपछि |
| **अविद्यया** = अज्ञानद्वारा | **स्वसंविदा** = स्वरूपको | **तत् ब्रह्मदर्शनम्** = त्यस ब्रह्मको |
| **आत्मनि** = आत्मामा | सम्यग्ज्ञान भएपछि | साक्षात्कार हुन्छ |

**वाक्यार्थ–** यी सत् र असत् रूप अज्ञानद्वारा आत्मामा कल्पित छन्। स्वरूपको सम्यग्ज्ञान भएपछि यिनीहरू हट्दछन् र यसो भएपछि त्यस ब्रह्मको साक्षात्कार हुन्छ।

**यद्येषोपरता देवी माया वैशारदी मतिः।**
**सम्पन्न एवेति विदुर्महिम्नि स्वे महीयते॥ ३४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यदि** = यदि | **मतिः** = बुद्धि | **महिम्नि एव** = परमानन्दरूप |
| **वैशारदी** = ईश्वरकी | **सम्पन्नः इति** = ब्रह्मरूपमा प्राप्त | महिमामा नै |
| **एषा** = यी | हुन्छ भनी | **महीयते** = विराजमान हुन्छ |
| **माया देवी** = माया देवी | **विदुः** = ब्रह्म ज्ञानीहरू भन्दछन् | |
| **उपरता** = हट्दछ भने | **स्वे** = आफ्नो | |

**वाक्यार्थ–** तत्त्वज्ञानी मनुष्यहरूलाई के कुरा थाहा छ भने जुन समयमा परमेश्वरको बुद्धिरूप माया निवृत्त हुन्छ त्यसै समयमा जीव परमानन्दस्वरूप हुन्छ र आफ्नो महिमामा प्रतिष्ठित हुन्छ।

**एवं जन्मानि कर्माणि ह्यकर्तुरजनस्य च।**
**वर्णयन्ति स्म कवयो वेदगुह्यानि हृत्पतेः॥ ३५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **एवं** = यसप्रकार | नारायणका | **च** = पनि |
| **अकर्तुः** = वस्तुतः कर्म नभएका | **वेदगुह्यानि** = वेदका अत्यन्त | **कवयः** = तत्त्वज्ञानीहरू |
| **अजनस्य** = जन्म पनि नभएका | गोपनीय | **हि** = नै |
| **च** = पनि | **जन्मानि** = जन्म | **वर्णयन्ति स्म** = वर्णन गर्दछन् |
| **हृत्पतेः** = हृदयका स्वामी | **कर्माणि** = कर्म | |

**वाक्यार्थ–** वास्तवमा जुन परमात्माको न कुनै जन्म छ, न त कुनै कर्म नै छ, तर पनि वेदले पनि गोपनीय र रहस्यमय रूपमा राखेका भगवान्‌का अलौकिक जन्म र कर्महरूको वर्णन तत्त्वज्ञानीहरू गर्दछन्।

**स वा इदं विश्वममोघलीलः**
**सृजत्यवत्यत्ति न सज्जतेऽस्मिन्।**
**भूतेषु चान्तर्हित आत्मतन्त्रः**
**षाड्वर्गिकं जिघ्रति षड्गुणेशः॥ ३६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अमोघलीलः** = जसको लीला | **अत्ति** = संहार गर्नुहुन्छ | **षड्गुणेशः** = पञ्च ज्ञानेन्द्रिय र |
| कहिल्यै व्यर्थ हुँदैन ऊ | **च** = पनि | मनका मालिक भएका |
| **सः** = यस्ता नारायणले | **अस्मिन्** = यो संसारमा | **षाड्वर्गिकं** = उक्त ६ इन्द्रियका |
| **इदं** = यो | **न सज्जते** = आसक्त हुनुहुन्न | विषयहरूलाई |
| **विश्वम्** = संसारलाई | **भूतेषु** = प्राणीहरूको | **जिघ्रति** = (सुँघ्नुहुन्छ) टाढैबाट |
| **सृजति** = बनाउनुहुन्छ | अन्तःकरणमा | ग्रहण गर्नुहुन्छ |
| **अवति** = रक्षा गर्नुहुन्छ | **अन्तर्हितः** = लुकेर बस्नुभएका | |
| **वा** = अथवा | **आत्मतन्त्रः** = परम स्वतन्त्र | |

**वाक्यार्थ–** भगवान् नारायणको लीला अमोघ छ। उहाँ आफ्नो लीलाद्वारा नै यस संसारको सृष्टि, स्थिति र संहार गर्नुहुन्छ। सम्पूर्ण प्राणीहरूको अन्तःकरणमा लुकेर बसी ज्ञानेन्द्रिय र मनको नियन्ताको रूपमा ती इन्द्रियका विषयहरूलाई ग्रहण गर्नुहुन्छ। परन्तु उहाँ ती पदार्थहरूमा आसक्त हुनुहुन्न, उहाँ परम स्वतन्त्र हुनुहुन्छ।

**विवरण–** यस श्लोकमा आएको **न सज्जतेऽस्मिन्** यस अंशको बारेमा चर्चा गरौं। राग नभईकन विषयमा लिप्तता हुन सक्दैन। परमात्मामा राग आदि दोषको अभाव हुनाले परमात्माद्वारा विषयको भोग भए तापनि उहाँ जीवझैं विषयमा लिप्त हुनुहुन्न। भगवान् ६ ओटा इन्द्रियहरूको नियन्ता भएकाले भगवान्‌लाई हृषीकेश भनिएको हो। भगवान्‌ले विषयहरूको भोग गर्नुहुन्छ भन्नुको तात्पर्य भगवान्‌द्वारा विषयहरू प्रकाशित हुन्छन् भनिएको हो।

**न चास्य कश्चिन्निपुणेन धातु-**
**रवैति जन्तुः कुमनीष ऊतीः।**
**नामानि रूपाणि मनोवचोभिः**
**सन्तन्वतो नटचर्यामिवाज्ञः ॥ ३७ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अज्ञः** = कुनै अज्ञानी मनुष्यले | **नामानि** = नामहरू र | **कुमनीषः** = अल्प बुद्धि भएको |
| **मनोवचोभिः** = सङ्कल्प र वचनद्वरा | **रूपाणि** = रूपहरू | **कश्चित्** = कुनै पनि |
| **सन्तन्वतः** = फैलाइएको | **सन्तन्वतः** = फैलाउने | **जन्तुः** = जीवले |
| **नटचर्याम्** = जादुगरको खेललाई | **अस्य** = यी | **निपुणेन** = तर्कद्वारा |
| **न अवैति इव** = नबुझ्‍ेजस्तै | **धातुः** = परमात्माको | **न च अवैति** = जान्न सक्दैन नै |
| | **ऊतीः** = लीलाहरूलाई | |

**वाक्यार्थ–** जसरी कुनै अज्ञानी मनुष्य जादूगर अथवा नटको सङ्कल्प र वचनद्वारा गरिएको खेललाई बुझ्‍न सक्दैन, त्यसै गरी आफ्नो सङ्कल्प र वेदवाणीद्वारा भगवान्‌ले प्रकट गर्नुभएको विभिन्न नाम, रूप र उहाँका लीलाहरूलाई अल्पज्ञ जीवले धेरै तर्क र युक्तिहरूद्वारा पनि जान्न सक्दैन।

**स वेद धातुः पदवीं परस्य**
**दुरन्तवीर्यस्य रथाङ्गपाणेः।**
**योऽमायया सन्ततयानुवृत्त्या**
**भजेत तत्पादसरोजगन्धम् ॥ ३८ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **दुरन्तवीर्यस्य** = अनन्त पराक्रम भएका | ती परमात्माको | **सन्ततया** = निरन्तर |
| **परस्य** = संसारदेखि निकै माथि रहनुभएका | **पदवीं** = स्वरूपलाई | **अनुवृत्त्या** = सेवाद्वारा |
| **रथाङ्गपाणेः** = रथको चक्र हातमा लिनुभएका | **सः** = त्यस पुरुषले | **तत्पादसरोजगन्धम्** = भगवान्‌को चरणकमलको दिव्य गन्धलाई |
| **धातुः** = संसारलाई बनाउनुहुने | **वेद** = जान्न सक्दछ | **भजेत** = सेवन गर्दछ |
| | **यः** = जसले | |
| | **अमायया** = कुटिल भावले रहित भएको | |

**वाक्यार्थ–** चक्रपाणि भगवान्‌का शक्ति र पराक्रम अनन्त छन्, उहाँ जगत्‌को निर्माता भएर पनि आफूले बनाएको संसारबाट निकै पर हुनुहुन्छ। उहाँको स्वरूप र लीलालाई त्यही मनुष्यले जान्न

सक्दछ जो नित्य-निरन्तर निष्कपट भावले उहाँका चरणकमलको दिव्य गन्धको सेवन गर्दछ।

**अथेह धन्या भगवन्त इत्थं**
**यद् वासुदेवेऽखिललोकनाथे।**
**कुर्वन्ति सर्वात्मकमात्मभावं**
**न यत्र भूयः परिवर्त उग्रः॥ ३९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भगवन्तः** = हे ऋषिहरू तपाईंहरू | **सर्वात्मकम्** = सम्पूर्ण रूपमा | **इह** = यहाँ |
| **धन्याः** = अत्यन्त भाग्यशाली हुनुहुन्छ | **आत्मभावं** = अनन्य प्रेम | **इत्थं** = यसरी |
| **अखिललोकनाथे** = सम्पूर्ण लोकका स्वामी | **कुर्वन्ति** = गर्नुहुन्छ | **उग्रः** = डरलाग्दो |
| **वासुदेवे** = भगवान् श्रीकृष्णमा | **यत्र** = जुन भावलाई प्राप्त गरेपछि | **यत् परिवर्तः** = जन्म मरणको यस्तो भुमरीमा |
| | **भूयः** = फेरि | **न** = पर्नुपर्दैन |
| | **अथ** = यसपछि | |

**वाक्यार्थ–** हे शौनक आदि ऋषिहरू हो ! तपाईंहरू ज्यादै भाग्यशाली हुनुहुन्छ। यस जीवनमा विभिन्न विघ्न र बाधाहरूले भरिएको यस संसारमा सम्पूर्ण लोकहरूका स्वामी भगवान् श्रीकृष्णमा तपाईंहरूको अनन्य प्रेम छ। जुन अनन्य प्रेमलाई प्राप्त गरेपछि फेरि जन्म-मरणरूप संसारको भयङ्कर चक्रमा पर्नुपर्दैन।

**विवरण–** ज्ञान नभईकन मोक्ष सम्भव छैन। तर भगवान्मा अनन्य भक्ति नभईकन ज्ञान सम्भव नहुने हुनाले संसारचक्रबाट मुक्ति प्राप्त गर्नका लागि भक्तिको ठुलो भूमिका छ। वेदमा कर्म, उपासना र ज्ञान गरी तीन काण्डहरू छन् भने मनमा पनि मल, विक्षेप र आवरण गरी तीनओटा दोषहरू छन्। अन्तःकरणको मलदोषलाई हटाउनको लागि कर्मको आवश्यकता पर्दछ भने अन्तःकरणको विक्षेपदोषलाई हटाउनका लागि भक्तिको आवश्यकता पर्दछ। मनको चञ्चलतालाई विक्षेप भन्दछन्। यसलाई हटाउनका लागि भक्तिको अवश्यकता पर्दछ। जसरी ऐनामा मुखको प्रतिबिम्ब पर्नका लागि ऐनामा धुलोमैलो पनि लागेको हुनुहुँदैन र ऐना हल्लिएको पनि हुनुहुँदैन त्यसै गरी आत्माको ज्ञानको लागि चित्तमा मलदोष र विक्षेपदोष दुबै हुनुहुँदैन। कर्मयोगद्वारा मलदोष हटे तापनि विक्षेप दोष नहट्ने हुनाले त्यो विक्षेप दोषको निवृत्तिका लागि भक्तिको आवश्यकता पर्दछ।

**इदं भागवतं नाम पुराणं ब्रह्मसम्मितम्।**
**उत्तमश्लोकचरितं चकार भगवानृषिः॥ ४०॥**

पदार्थ—

**भगवान् ऋषिः** = महर्षि भगवान् वेदव्यासले
**ब्रह्मसम्मितम्** = वेदसमान उत्तम
**उत्तमश्लोकचरितं** = भगवान् श्रीकृष्णको चरित्रले परिपूर्ण भएको
**इदं** = यो
**भागवतं** = भागवत
**नाम** = नामक
**पुराणं** = पुराण
**चकार** = बनाउनुभयो

**वाक्यार्थ—** भगवान् वेदव्यासले वेदसमान भगवच्चरित्रले परिपूर्ण भएको यो भागवत नामक पुराण बनाउनुभयो।

**निःश्रेयसाय लोकस्य धन्यं स्वस्त्ययनं महत्।**
**तदिदं ग्राहयामास सुतमात्मवतां वरम्॥ ४१॥**

पदार्थ—

**धन्यं** = प्रशंसनीय
**स्वस्त्ययनं** = कल्याणकारी
**महत्** = महान्
**तत् इदं** = यही पुराणलाई
**लोकस्य** = मनुष्यहरूको
**निःश्रेयसाय** = परम कल्याणका लागि
**आत्मवतां** = ब्रह्मज्ञानीहरूमा
**वरम्** = श्रेष्ठ
**सुतम्** = आफ्ना छोरा शुकदेवजीलाई
**ग्राहयामास** = पढाउनुभयो

**वाक्यार्थ—** उहाँले यो प्रशंसनीय, कल्याणकारी र महान् पुराणलाई लोकहरूको परम कल्याणका लागि आफ्ना आत्मज्ञानशिरोमणि पुत्रलाई पढाउनुभयो।

**सर्ववेदेतिहासानां सारं सारं समुद्धृतम्।**
**स तु संश्रावयामास महाराजं परीक्षितम्॥ ४२॥**

पदार्थ—

**सर्ववेदेतिहासानां** = सम्पूर्ण वेद र इतिहासको
**सारं सारं** = सार-सार कुरालाई
**समुद्धृतम्** = सङ्ग्रह गरिएको
**सः** = ती भगवान् शुकदेवजीले
**तु** = त
**परमर्षिभिः** = ठुला ऋषिहरूद्वारा
**परीतं** = घेरिएका
**प्रायोपविष्टं** = निराहार व्रत लिएका
**गङ्गायां** = गङ्गातटमा बसेका
**महाराजं** = महाराज
**परीक्षितम्** = परीक्षित्लाई
**संश्रावयामास** = सुनाउनुभयो

**वाक्यार्थ—** यसमा सम्पूर्ण वेद र इतिहासको सार सङ्ग्रह गरिएको छ। जुन समयमा राजा परीक्षित् आमरण निराहार व्रत लिएर गङ्गाको तटमा परमर्षिहरूद्वारा घेरिएर बस्नुभएको थियो, त्यस समयमा उहाँलाई भगवान् शुकदेवजीले यो पुराण सुनाउनुभयो।

**प्रायोपविष्टं गङ्गायां परीतं परमर्षिभिः।**
**कृष्णे स्वधामोपगते धर्मज्ञानादिभिः सह॥ ४३॥**

**कलौ नष्टदृशामेष पुराणार्कोऽधुनोदितः ।**

**तत्र कीर्तयतो विप्रा विप्रर्षेर्भूरितेजसः ॥ ४४ ॥**

**पदार्थ–**

**धर्मज्ञानादिभिः सह** = धर्म र ज्ञानका साथ
**कृष्णे** = भगवान् श्रीकृष्ण
**स्वधामोपगते** = आफ्नो धाम वैकुण्ठतिर फर्केपछि
**कलौ** = यस कलियुगमा
**नष्टदृशाम्** = अज्ञानरूपी अन्धकारले अन्धा भएका मनुष्यहरूका लागि
**अधुना** = अहिले
**एषः** = यो
**पुराणार्कः** = पुराणरूपी सूर्य
**उदितः** = उदाएको छ
**विप्राः** = हे शौनक आदि ऋषिहरू हो
**तत्र** = त्यहाँ
**भूरितेजसः** = महातेजस्वी
**विप्रर्षेः** = भगवान् शुकदेवजी
**कीर्तयतः** = सुनाउँदै हुनुहुन्थ्यो

**वाक्यार्थ–** हे शौनक आदि ऋषिहरू ! जब भगवान् श्रीकृष्ण धर्म र ज्ञान आदिका साथ आफ्नो परम धामतिर जानुभयो, तब अहिले यस कलियुगमा अज्ञानरूपी अन्धकारले अन्धा भएका मनुष्यहरूका लागि अहिले यो पुराणरूपी सूर्य प्रकट भएको छ। त्यहाँ महातेजस्वी भगवान् शुकदेवजी सुनाउँदै हुनुहुन्थ्यो।

**अहं चाध्यगमं तत्र निविष्टस्तदनुग्रहात् ।**

**सोऽहं वः श्रावयिष्यामि यथाधीतं यथामति ॥ ४५ ॥**

**पदार्थ–**

**तत्र** = त्यहाँ
**अहं** = म
**निविष्टः** = बसेको थिएँ
**तदनुग्रहात्** = उहाँको कृपापूर्ण अनुमतिले
**अहं** = मैले
**अध्यगमं** = यो भागवतको अध्ययन गरेँ
**च** = पनि
**यथा अधीतं** = जसरी अध्ययन गरेँ त्यस अनुसार
**यथामति** = आफ्नो बुद्धिको अनुसार
**सः अहं** = म
**वः** = तपाईंहरूलाई
**श्रावयिष्यामि** = सुनाउनेछु

**वाक्यार्थ–** महातेजस्वी श्रीशुकदेवजी यो पुराण राजा परीक्षित्लाई सुनाइरहनुभएको थियो, त्यस समयमा म पनि त्यहाँ बसेको थिएँ। मैले उहाँको कृपापूर्ण अनुमतिले यस भागवतको अध्ययन गरेँ। मैले यस भागवतको जसरी अध्ययन गरेको छु र मेरो बुद्धिले जति ग्रहण गर्न सकेको छ त्यसैको अनुसार म तपाईंहरूलाई सुनाउनेछु।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां प्रथमस्कन्धे**

**नैमिषीयोपाख्याने तृतीयोऽध्यायः ॥ ३ ॥**

# अथ चतुर्थोऽध्यायः

## महर्षि व्यासको असन्तोष

**व्यास उवाच** (व्यासजीले भन्नुभयो)

**इति ब्रुवाणं संस्तूय मुनीनां दीर्घसत्रिणाम्।**

**वृद्धः कुलपतिः सूतं बह्वृचः शौनकोऽब्रवीत्॥ १॥**

पदार्थ—

**इति** = यसप्रकार
**ब्रुवाणं** = भनिरहनुभएका (सूतजीको)
**संस्तूय** = स्तुति गर्दै
**दीर्घसत्रिणाम्** = दीर्घकालीन यज्ञमा सम्मिलित भएका
**मुनीनां** = मुनिहरूको बीचमा
**वृद्धः** = (विद्या र अवस्था दुबैमा) वृद्ध
**कुलपतिः** = कुलपति
**बह्वृचः** = ऋग्वेदाध्यायी
**शौनकः** = शौनक ऋषिले
**सूतं** = सूतजीलाई
**अब्रवीत्** = भन्नभुयो

**वाक्यार्थ—** यसप्रकार समग्र ऋषिहरूको प्रशंसा गर्ने सूतजीको स्तुति गर्दै दीर्घकालीन यज्ञमा सम्मिलित भएका मुनिहरूको बीचमा विद्या र अवस्था दुबैले वृद्ध कुलपति ऋग्वेदाध्यायी शौनक ऋषिले सूतजीलाई भन्नुभयो।

**शौनक उवाच** (शौनकजीले भन्नुभयो)

**सूत सूत महाभाग वद नो वदतां वर।**

**कथां भागवतीं पुण्यां यदाह भगवाञ्छुकः॥ २॥**

पदार्थ—

**वदतां** = कथा भन्नेहरूमा
**वर** = श्रेष्ठ
**महाभाग** = महाभाग्यशाली
**सूत सूत** = हे सूतजी
**यत्** = जुन
**पुण्यां** = पवित्र
**भागवतीं** = भागवत
**कथां** = कथालाई
**भगवान्** = भगवान्
**शुकः** = शुकदेवजीले
**आह** = भन्नुभयो (त्यो कथा)
**नः** = हामीहरूलाई
**वद** = भन्नुहोस्

**वाक्यार्थ—** हे सूतजी ! तपाईं वक्ताहरूमा उत्तम हुनाका साथै अत्यन्त भाग्यशाली पनि हुनुहुन्छ। यसर्थ जुन पवित्र भागवत कथा भगवान् शुकदेवजीले भन्नुभएको थियो त्यो हामीहरूलाई सुनाउनुहोस्।

**कस्मिन् युगे प्रवृत्तेयं स्थाने वा केन हेतुना ।**

**कुतः सञ्चोदितः कृष्णः कृतवान् संहितां मुनिः ॥ ३ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **कस्मिन्** = कुन | **इयं** = यो कथा | **कृष्णः** = कृष्ण द्वैपायन |
| **युगे** = युगमा | **केन** = कुन | **मुनिः** = मुनिले |
| **वा** = अथवा | **हेतुना** = कारणले | **संहितां** = परमहंसको संहितालाई |
| **स्थाने** = ठाउँमा | **कुतः** = कसबाट | **कृतवान्** = बनाउनुभयो |
| **प्रवृत्ता** = प्रवृत्त भयो | **सञ्चोदितः** = प्रेरित भएर | |

**वाक्यार्थ–** यो कथा कुन युगमा, कुन ठाउँमा र कुन कारणले भनिएको थियो ? कृष्णद्वैपायन भगवान् वेदव्यासले कसबाट प्रेरित भएर यो परमहंस संहिताको निर्माण गर्नु भएको हो ?

**तस्य पुत्रो महायोगी समदृङ्निर्विकल्पकः ।**

**एकान्तमतिरुन्निद्रो गूढो मूढ इवेयते ॥ ४ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तस्य** = भगवान् वेदव्यासका | **एकान्तमतिः** = एकमात्र | नपाउने ढङ्गले रहनुभएकाले |
| **पुत्रः** = छोरा | परमात्मामा स्थित | **मूढः** = मूढ |
| **महायोगी** = ठुलो योगी | **उन्निद्रः** = संसारनिद्राबाट | **इव** = जस्तै |
| **समदृक्** = समदर्शी | जागेका | **ईयते** = प्रतीत हुनुहुन्छ |
| **निर्विकल्पकः** = भेदभावरहित | **गूढः** = संसारी प्राणीले थाहा | |

**वाक्यार्थ–** भगवान् वेदव्यासकाका छोरा शुकदेवजी ठुला योगी, समदर्शी, भेदभावरहित, संसारनिद्राबाट बिउँझनुभएका र निरन्तर एकमात्र परमात्मामा तल्लीन हुनुहुन्छ। संसारी प्राणीले थाहा नपाउने ढङ्गले रहनुभएकाले उहाँ मूढजस्तै प्रतीत हुनुहुन्छ।

**दृष्ट्वानुयान्तमृषिमात्मजमप्यनग्नं**

**देव्यो ह्रिया परिदधुर्न सुतस्य चित्रम् ।**

**तद्वीक्ष्य पृच्छति मुनौ जगदुस्तवास्ति**

**स्त्रीपुम्भिदा न तु सुतस्य विविक्तदृष्टेः ॥ ५ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अनग्नं** = कपडा लगाएका | **ऋषिम्** = भगवान् वेदव्यासलाई | स्त्रीहरूले |
| **आत्मजम्** = छोराको | **दृष्ट्वा** = देखेर | **ह्रिया** = लाजले |
| **अनुयान्तम्** = पछि लागेका | **देव्यः** = तलाउमा स्नान गरिहेका | **परिदधुः** = कपडा लगाए |

**अपि** = परन्तु
**सुतस्य** = व्यासजीका छोरालाई
**वीक्ष्य** = नाङ्गै देखेर चाहिँ कपडा लगाएनन्
**तत्** = त्यो
**चित्रम्** = आश्चर्य छ
**मुनौ** = वेदव्यासले
**पृच्छति** = सोधेपछि
**जगदुः** = स्त्रीहरूले उत्तर दिए कि
**तव** = तपाईंको
**स्त्रीपुम्भिदा** = स्त्री र पुरुषमा भेदबुद्धि
**अस्ति** = छ
**विविक्तदृष्टेः** = निर्विकार दृष्टि भएका
**सुतस्य** = तपाईंका छोराको
**तु** = चाहिँ
**न** = यो स्त्री हो र यो पुरुष हो भन्ने भेददृष्टि छैन
**न** = छैन

**वाक्यार्थ–** संन्यास लिएर वनतिर जान लाग्नुभएका शुकदेवजीको पछि-पछि भगवान् वेदव्यासजी गइरहनुभएको थियो। त्यसवेला जलमा स्नान गरिरहेका स्त्रीहरूले नाङ्गै हिँडिरहेका सोह्रवर्षे शुकदेवजीलाई देखेर कपडा लगाएनन् परन्तु वस्त्रधारण गरेका व्यसजीलाई देखेर लाजले कपडा लगाए। यो आश्चर्य देखेर व्यासजीले कारण सोध्दा ती स्त्रीहरूले यसप्रकार उत्तर दिएका थिए– 'यो व्यक्ति स्त्री हो अनि यो व्यक्ति पुरुष हो भन्ने भेददृष्टि तपाईंमा भएकाले हामीले तपाईंलाई देखेर कपडा लगाएका हौँ, परन्तु तपाईंका छोरा शुकदेवजीमा स्त्रीपुरुषमा भेददृष्टि नभएकाले उहाँलाई देख्दा हामीले कपडा नलगाएका हौँ।'

**कथमालक्षितः पौरैः सम्प्राप्तः कुरुजाङ्गलान्।**
**उन्मत्तमूकजडवद् विचरन् गजसाह्वये॥ ६॥**

पदार्थ–

**कुरुजाङ्गलान्** = कुरुजाङ्गल देशको
**गजसाह्वये** = हस्तिनापुरमा
**सम्प्राप्तः** = पुगेर
**उन्मत्तमूकजडवत्** = पागल, लाटो र जडजस्तो भएर
**विचरन्** = घुम्ने ती शुकदेवजीलाई
**पौरैः** = नगरवासीहरूले
**कथम्** = कसरी
**आलक्षितः** = चिने

**वाक्यार्थ–** कुरुजाङ्गल देशको हस्तिनापुरमा पुगेर पागल, लाटो र जडसमान विचरण गर्ने शुकदेव मुनिलाई नगरवासीहरूले कसरी चिने ?

**कथं वा पाण्डवेयस्य राजर्षेर्मुनिना सह।**
**संवादः समभूत्तात यत्रैषा सात्वती श्रुतिः॥ ७॥**

पदार्थ–

**तात** = हे पितातुल्य
**वा** = अथवा
**पाण्डवेयस्य** = पाण्डवपुत्र
**राजर्षेः** = राजा परीक्षित्को
**मुनिना** = शुकदेव मुनिका
**सह** = साथ
**संवादः** = संवाद
**कथं** = कसरी
**समभूत्** = भयो
**यत्र** = जुन संवादमा
**एषा** = यो
**सात्वती** = भागवत
**श्रुतिः** = संहिता भनियो

**वाक्यार्थ—** पाण्डवनन्दन राजर्षि परीक्षित्को भगवान् शुकदेवजीका साथ कुन प्रसङ्गमा कसरी वार्तालाप भयो र यो भागवत संहिता भन्ने काम गरियो ?

**स गोदोहनमात्रं हि गृहेषु गृहमेधिनाम्।**
**अवेक्षते महाभागस्तीर्थीकुर्वंस्तदाश्रमम्॥ ८॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **सः** = ती | **गृहमेधिनाम्** = गृहस्थहरूको | **गोदोहनमात्रं** = गाई दुहुन लाग्ने |
| **महाभागः** = महाभाग्यशाली | **गृहेषु** = घरमा | समयजति मात्र |
| शुकदेवजी | **तदाश्रमम्** = तिनीहरूको घरलाई | **अवेक्षते** = रहनुहुन्छ |
| **हि** = निश्चय नै | **तीर्थीकुर्वन्** = तीर्थस्वरूप बनाउँदै | |

**वाक्यार्थ—** भगवान् शुकदेवजी त निश्चय नै गृहस्थहरूको घरमा उनीहरूको घरलाई तीर्थरूप बनाउनको लागि गाई दुहुन जति समय लाग्छ त्यति समयका लागि मात्र रहनुहुन्छ।

**अभिमन्युसुतं सूत प्राहुर्भागवतोत्तमम्।**
**तस्य जन्म महाश्चर्यं कर्माणि च गृणीहि नः॥ ९॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **सूत** = हे सूतजी | **प्राहुः** = भन्दछन् | **च** = पनि |
| **अभिमन्युसुतं** = अभिमन्युका | **तस्य** = उहाँको | **नः** = हामीहरूलाई |
| छोरा राजा परीक्षित्लाई | **महाश्चर्यं** = आश्चर्यमय | **गृणीहि** = वर्णन गर्नुहोस् |
| **भागवतोत्तमम्** = भगवान्का | **जन्म** = जन्म र | |
| अनन्य भक्त छन् भनेर | **कर्माणि** = कर्महरूलाई | |

**वाक्यार्थ—** सूतजी ! अभिमन्युपुत्र राजर्षि परीक्षित् भगवान्का ज्यादै अनन्य भक्त हुनुहुन्थ्यो भन्ने कुरा हामीहरूले सुनेका छौँ। उहाँको अत्यन्त आश्चर्यमय जन्म र कर्महरूको वर्णन गर्नुहोस्।

**स सम्राट् कस्य वा हेतोः पाण्डूनां मानवर्धनः।**
**प्रायोपविष्टो गङ्गायामनादृत्याधिराट्श्रियम्॥ १०॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **वा** = अथवा | **कस्य** = कुन | गरेर |
| **पाण्डूनां** = पाण्डव वंशको | **हेतोः** = कारणले | **गङ्गायाम्** = गङ्गातटमा |
| **मानवर्धनः** = मानलाई बढाउने | **अधिराट्श्रियम्** = साम्राज्य | **प्रायोपविष्टः** = मृत्युपर्यन्त |
| **सः** = ती | लक्ष्मीलाई | निराहार व्रत लिएर बस्नुभयो |
| **सम्राट्** = सम्राट् राजा परीक्षित् | **अनादृत्य** = अनादर (परित्याग) | |

**वाक्यार्थ–** राजा परीक्षित् त पाण्डवहरूको मानलाई बढाउने सम्राट् हुनुहुन्थ्यो र के कारणले साम्राज्य लक्ष्मीको परित्याग गरेर गङ्गाको तटमा मृत्युपर्यन्त निराहार व्रत लिएर बस्नुभयो ?

**नमन्ति यत्पादनिकेतमात्मनः**
**शिवाय हानीय धनानि शत्रवः ।**
**कथं स वीरः श्रियमङ्ग दुस्त्यजां**
**युवैषतोत्स्रष्टुमहो सहासुभिः ॥ ११ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अङ्ग** = हे प्रिय सूतजी | **नमन्ति** = नमस्कार गर्दछन् | **असुभिः** = प्राणका |
| **शत्रवः** = शत्रुहरू पनि | **सः** = ती राजा | **सह** = साथ |
| **आत्मनः** = आफ्नो | **वीरः** = वीर र | **उत्स्रष्टुम्** = त्यागनका लागि |
| **शिवाय** = भलाइका लागि | **ह** = निश्चय नै | **कथं** = कसरी |
| **धनानि** = धनहरू | **युवा** = युवक पनि हुनुहुन्थ्यो | **ऐषत** = इच्छा गर्नुभयो |
| **आनीय** = ल्याएर | **अहो** = फेरि किन | |
| **यत्पादनिकेतम्** = जसको चरणपादुकालाई | **दुस्त्यजां** = दुस्त्यज | |
| | **श्रियम्** = लक्ष्मीलाई | |

**वाक्यार्थ–** हे प्रिय सूतजी ! शत्रु राजाहरू पनि आफ्नो भलाइका लागि धेरै धन ल्याएर उहाँको चरणपादुकामा चढाएर नमस्कार गर्दथे। उहाँ वीर र युवक पनि हुनुहुन्थ्यो। उहाँले त्यस्तो दुस्त्यज लक्ष्मीलाई आफ्ना प्राणका साथ किन त्याग गर्ने इच्छा गर्नुभयो ?

**शिवाय लोकस्य भवाय भूतये**
**य उत्तमश्लोकपरायणा जनाः ।**
**जीवन्ति नात्मार्थमसौ पराश्रयं**
**मुमोच निर्विद्य कुतः कलेवरम् ॥ १२ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **ये** = जुन | **भवाय** = समृद्धिका लागि | **निर्विद्य** = विरक्त भएर पनि |
| **उत्तमश्लोकपरायणाः** = भगवान्मा चित्त समर्पण गरेका | **भूतये** = ऐश्वर्यका लागि | **पराश्रयं** = अर्काको आश्रय भएको |
| | **जीवन्ति** = जीवन धारण गर्दछन् | |
| **जनाः** = मानिसहरू | **आत्मार्थम् न** = आफ्ना लागि उनीहरू जीवन धारण गर्दैनन् | **कलेवरम्** = शरीरलाई |
| **लोकस्य** = संसारको | | **कुतः** = के कारण |
| **शिवाय** = सुखका लागि | **असौ** = यी राजाले | **मुमोच** = छोड्नुभयो |

**वाक्यार्थ–** भगवान्मा चित्त समर्पण गरेका मानिसहरू स्वार्थरहित भएर संसारको सुख र समृद्धिका लागि जीवन धारण गर्दछन्। यस्तै राजा परीक्षित्को शरीर पनि अर्काको हितका लागि थियो। उहाँले विरक्त भएर अरूहरूको आश्रय भएको शरीरलाई किन परित्याग गर्नुभयो ?

**तत्सर्वं नः समाचक्ष्व पृष्टो यदिह किञ्चन।**
**मन्ये त्वां विषये वाचां स्नातमन्यत्र छान्दसात्॥ १३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **इह** = यस समयमा | **समाचक्ष्व** = भन्नुहोस् | **विषये** = विषयमा |
| **यत् किञ्चन** = जुन कुरा | **त्वां** = तपाईंलाई | **स्नातम्** = पारङ्गत |
| **पृष्टः** = सोधेका छौँ | **छान्दसात्** = वेदवाणीलाई | **मन्ये** = ठान्दछु |
| **तत्सर्वं** = ती सम्पूर्ण कुराहरू | **अन्यत्र** = छाडेर | |
| **नः** = हामीहरूलाई | **वाचां** = अरू सम्पूर्ण शास्त्रको | |

**वाक्यार्थ–** सुतजी ! तपाईं वेदवाणीलाई छोडेर अरू सम्पूर्ण शास्त्रहरूका पारदर्शी विद्वान् हुनुहुन्छ। त्यसकारण हामीले अहिले जुन कुरा सोधेका छौँ, कृपा गरेर त्यसको उत्तर हामीलाई दिनुहोस्।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**द्वापरे समनुप्राप्ते तृतीये युगपर्यये।**
**जातः पराशराद् योगी वासव्यां कलया हरेः॥ १४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **युगपर्यये** = सत्य युग आदि चार युगहरूको गणनामा | **समनुप्राप्ते** = आएपछि | **हरेः** = भगवान् नारायणको |
| **तृतीये** = तेस्रो | **पराशरात्** = पराशरद्वारा | **कलया** = कलावतार |
| **द्वापरे** = द्वापर युगमा | **वासव्यां** = वसुकन्या सत्यवतीको गर्भबाट | **योगी** = भगवान् वेदव्यासको |
| | | **जातः** = जन्म भयो |

**वाक्यार्थ–** सत्य युग आदि चार युगहरूमध्ये तेस्रो द्वापर युगमा महर्षि पराशरद्वारा वसुकन्या सत्यवतीको गर्भबाट भगवान्को कलावतार योगिराज व्यासजीको जन्म भयो।

**स कदाचित् सरस्वत्या उपस्पृश्य जलं शुचिः।**
**विविक्तदेश आसीन उदिते रविमण्डले॥ १५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सः** = ती भगवान् वेदव्यास | **कदाचित्** = कुनै दिन | **रविमण्डले** = सूर्य |

**उदिते** = उदयको समयमा
**सरस्वत्याः** = सरस्वती नदीको
**शुचिः** = पवित्र
**जलं** = जलमा
**उपस्पृश्य** = स्थान गरेर
**विविक्तदेशे** = एकान्त ठाउँमा
**आसीनः** = बस्नुभयो

**वाक्यार्थ–** एकदिन भगवान् वेदव्यास सूर्योदयको वेलामा सरस्वती नदीको पवित्र जलमा स्नान गरी एकान्त पवित्र ठाउँमा बस्नुभएको थियो।

**परावरज्ञः स ऋषिः कालेनाव्यक्तरंहसा।**
**युगधर्मव्यतिकरं प्राप्तं भुवि युगे युगे॥ १६॥**
**भौतिकानां च भावानां शक्तिह्रासं च तत्कृतम्।**
**अश्रद्दधानान्निःसत्त्वान् दुर्मेधान् ह्रसितायुषः॥ १७॥**
**दुर्भगांश्च जनान् वीक्ष्य मुनिर्दिव्येन चक्षुषा।**
**सर्ववर्णाश्रमाणां यद् दध्यौ हितममोघदृक्॥ १८॥**

**पदार्थ–**

**परावरज्ञः** = भूत र भविष्यत्लाई जान्ने
**सः** = ती
**ऋषिः** = भगवान् वेदव्यासले
**अव्यक्तरंहसा** = अव्यक्त वेग भएको
**कालेन** = समयको प्रभावले
**युगधर्मव्यतिकरं** = युगधर्महरूको सङ्कर वा नाश
**प्राप्तं** = प्राप्त भएको (दिव्य चक्षुले देखेर त्यस्तै)
**भुवि** = पृथिवीमा
**युगे युगे** = युग युगमा
**तत्कृतम्** = कालद्वारा गरिएको
**भौतिकानां** = पञ्च महाभूतका कार्य भएका
**भावानां** = शरीर आदिको
**शक्तिह्रासं** = शक्तिको ह्रास
**च** = पनि देखेर त्यस्तै
**अश्रद्दधानान्** = श्रद्धारहित
**निःसत्त्वान्** = धर्मशून्य अथवा रजोगुण र तमोगुणले युक्त भएका
**दुर्मेधान्** = मन्दमति
**ह्रसितायुषः** = अल्पायु
**दुर्भगान्** = भाग्यहीन
**जनान्** = मानिसहरूलाई
**वीक्ष्य** = देखेर
**सर्ववर्णाश्रमाणां** = सम्पूर्ण वर्ण र आश्रमहरूको
**च** = पनि
**अमोघदृक्** = अमोघ दृष्टि भएका
**मुनिः** = मुनि भगवान् वेदव्यासले
**यत्** = जुन
**हितम्** = हितकारक छ, त्यसको
**दिव्येन** = दिव्य
**चक्षुषा** = दृष्टिद्वारा
**दध्यौ** = विचार गर्नुभयो

**वाक्यार्थ–** अमोघ दृष्टि भएका महर्षि वेदव्यास भूत र भविष्यत्लाई जान्नुहुन्थ्यो। उहाँले विचार गर्नुभयो कि समयको गतिसँगै प्रत्येक युगमा धर्मको नाशको कारणले भौतिक वस्तुको शक्तिको ह्रास भइरहेको छ, संसारका प्राणीहरू श्रद्धाहीन र शक्तिहीन भइरहेका छन्, उनीहरूको बुद्धिले आफ्नो कर्तव्यको ठीक-बेठीक निर्णय गर्न सकिरहेको छैन, मानिसहरूको आयु पनि कम हुँदै

गइरहेको छ। यसर्थ मानिसहरूको भाग्यहीनतालाई देखेर मुनीश्वर भगवान् वेदव्यासले आफ्नो दिव्य दृष्टिले सम्पूर्ण वर्ण र आश्रमको हित कसरी हुन्छ भन्ने कुरालाई लिएर खुब विचार गर्नुभयो।

**चातुर्होत्रं कर्म शुद्धं प्रजानां वीक्ष्य वैदिकम्।**
**व्यदधाद् यज्ञसन्तत्यै वेदमेकं चतुर्विधम्॥ १९॥**

पदार्थ–
**चातुर्होत्रं** = होता, अध्वर्यु, उद्गाता र ब्रह्मा यी चारजना ऋत्विक्‌बाट सम्पन्न हुने
**वैदिकम्** = वैदिक
**कर्म** = कर्म
**प्रजानां** = कर्ममा अधिकार भएका मनुष्यका लागि
**शुद्धं** = अन्तःकरणलाई शुद्ध गर्ने
**वीक्ष्य** = विचार गरेर
**यज्ञसन्तत्यै** = यज्ञको विस्तारको लागि
**एकं** = एउटै
**वेदम्** = वेदलाई
**चतुर्विधम्** = चार प्रकारको
**व्यदधात्** = गर्नुभयो

**वाक्यार्थ–** महर्षि वेदव्यासले वेदोक्त चातुर्होत्र कर्मले मानिसहरूको हृदयलाई शुद्ध गराउँछ भन्ने विचार गरी उहाँले यज्ञको विस्तार गर्नको लागि एउटै वेदलाई चार भागमा विभक्त गर्नुभयो।

**ऋग्यजुःसामाथर्वाख्या वेदाश्चत्वार उद्धृताः।**
**इतिहासपुराणं च पञ्चमो वेद उच्यते॥ २०॥**

पदार्थ–
**ऋग्यजुःसामाथर्वाख्याः** = ऋक्, यजु, साम र अथर्व नाम गरेका
**चत्वारः** = चार
**वेदाः** = वेद
**उद्धृताः** = एकबाट चार भागमा विभाजित गर्नुभयो
**इतिहासपुराणं** = इतिहासपुराण-लाई
**च** = पनि
**पञ्चमः** = पाँचौँ
**वेदः** = वेद
**उच्यते** = भनिन्छ

**वाक्यार्थ–** यसरी महर्षि वेदव्यासले एउटा वेदलाई ऋक्, यजु, साम र अथर्व चार भागमा वर्गीकृत गर्नुभयो। यसपछि इतिहासपुराणको रचना गर्नुभयो। यसलाई पाँचौँ वेद भनिन्छ।

**तत्रर्ग्वेदधरः पैलः सामगो जैमिनिः कविः।**
**वैशम्पायन एवैको निष्णातो यजुषामुत॥ २१॥**
**अथर्वाङ्गिरसामासीत् सुमन्तुर्दारुणो मुनिः।**
**इतिहासपुराणानां पिता मे रोमहर्षणः॥ २२॥**

पदार्थ–

**तत्र** = वेदहरूमध्ये
**पैलः** = पैल नाम गरेका ऋषिले
**ऋग्वेदधरः** = ऋग्वेदको अध्ययन गर्नुभयो
**जैमिनिः** = जैमिनि
**कविः** = ऋषिले
**सामगः** = सामवेदको अध्ययन गर्नुभयो
**यजुषाम्** = यजुर्वेदमा
**उत** = चाहिँ
**वैशम्पायनः** = वैशम्पायन ऋषिले
**एकः** = एक्लै
**एव** = नै
**निष्णातः** = कुशल हुनुभयो
**अथर्वाङ्गिरसाम्** = अथर्व वेदमा
**दारुणः** = दरुणका पुत्र
**सुमन्तुः** = सुमन्तु
**मुनिः** = मुनि निष्णात हुनुभयो
**इतिहासपुराणानां** = इतिहास र पुराणको विषयमा
**मे** = मेरा
**पिता** = पिता
**रोमहर्षणः** = रोमहर्षण
**आसीत्** = निष्णात हुनुभयो

**वाक्यार्थ–** पैल ऋषिले ऋग्वेद र जैमिनि ऋषिले सामवेदको अध्ययन गर्नुभयो। वैशम्पायन मुनि यजुर्वेदमा र दरुणनन्दन सुमन्तु ऋषि अथर्ववेदमा निष्णात हुनुभयो। मेरा पिता रोमहर्षण चाहिँ इतिहास र पुराणमा निष्णात हुनुभयो।

**त एत ऋषयो वेदं स्वं स्वं व्यस्यन्ननेकधा।**
**शिष्यैः प्रशिष्यैस्तच्छिष्यैर्वेदास्ते शाखिनोऽभवन्॥ २३॥**

**पदार्थ–**

**ते** = ती
**एते** = यिनै
**ऋषयः** = ऋषिहरूले
**ते** = ती ऋषिहरूले
**स्वं स्वं** = आ-आफ्नो
**वेदं** = शाखाहरूलाई
**अनेकधा** = अनेक भागमा
**व्यस्यन्** = विभक्त गर्नुभयो यसप्रकार
**शिष्यैः** = शिष्य
**प्रशिष्यैः** = प्रशिष्य र
**तच्छिष्यैः** = उनीहरूका पनि शिष्यद्वारा
**वेदाः** = वेदहरू
**शाखिनः** = विभिन्न शाखाहरूले युक्त
**अभवन्** = भए

**वाक्यार्थ–** यी पूर्वोक्त ऋषिहरूले आ-आफ्नो शाखालाई अनेक भागमा विभक्त गर्नुभयो। यसप्रकार शिष्य, प्रशिष्य र उनीहरूका पनि शिष्यहरूद्वारा वेदका धेरै शाखाहरू बने।

**त एव वेदा दुर्मेधैर्धार्यन्ते पुरुषैर्यथा।**
**एवं चकार भगवान्व्यासः कृपणवत्सलः॥ २४॥**

**पदार्थ–**

**कृपणवत्सलः** = मन्द बुद्धि भएका मानिसहरूलाई कृपा गरेर
**भगवान्** = भगवान्
**व्यासः** = वेदव्यासले
**दुर्मेधैः** = मन्दबुद्धि भएका
**पुरुषैः** = पुरुषहरूद्वारा
**यथा** = जसरी
**ते एव** = ती
**वेदाः** = वेदहरू
**धार्यन्ते** = धारण गर्न सकिन्छन्
**एवं** = त्यही ढङ्गले
**चकार** = विभाजन गर्नुभयो

**वाक्यार्थ–** भगवान् वेदव्यासले कम बुद्धि भएका मानिसहरूले वेदको ज्ञान सजिलैसँग गर्नसकून् भन्ने उद्देश्यले वेदको विभाजन गर्नुभएको हो।

**स्त्रीशूद्रद्विजबन्धूनां त्रयी न श्रुतिगोचरा।**
**कर्मश्रेयसि मूढानां श्रेय एवं भवेदिह ॥**
**इति भारतमाख्यानं कृपया मुनिना कृतम् ॥ २५ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **स्त्रीशूद्रद्विजबन्धूनां** = स्त्री, शूद्र र पतित द्विजातिहरू | **मूढानां** = भूल गर्ने | **कृपया** = कृपापूर्वक |
| **त्रयी** = यी तीनै | **एवं** = त्यस्ता पुरुषको पनि | **मुनिना** = मुनि वेदव्यासले |
| **न श्रुतिगोचरा** = वेदश्रवणका अधिकारी नहुनाले | **इह** = यहाँ | **भारतमाख्यानं** = महाभारत इतिहासको |
| **कर्मश्रेयसि** = कल्याणकारक शास्त्रोक्त कर्ममा | **श्रेयः** = कल्याण | **कृतम्** = रचना गर्नुभयो |
| | **भवेत्** = होस् | |
| | **इति** = भन्ने विचार गरेर | |

**वाक्यार्थ–** स्त्री, शूद्र र पतित द्विजाति यी तीनै थरी वेदश्रवणका अधिकारी नहुनाले उनीहरू कल्याणकारी शास्त्रोक्त कर्ममा गल्ती गर्दछन्। यसर्थ त्यस्ता पुरुषको पनि कल्याण होस् भन्ने दृष्टिले महामुनि वेदव्यासले कृपा गरेर महाभारत इतिहासको रचना गर्नुभयो।

**एवं प्रवृत्तस्य सदा भूतानां श्रेयसि द्विजाः।**
**सर्वात्मकेनापि यदा नातुष्यद्धृदयं ततः ॥ २६ ॥**
**नातिप्रसीदद्धृदयः सरस्वत्यास्तटे शुचौ।**
**वितर्कयन् विविक्तस्थ इदं प्रोवाच धर्मवित् ॥ २७ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **द्विजाः** = शौनक आदि ऋषिहरू हो | **प्रवृत्तस्य** = प्रवृत्त | **धर्मवित्** = धर्म जान्ने ती वेदव्यास |
| **एवं** = यसप्रकार | **अपि** = भए पनि | **सरस्वत्याः** = सरस्वती नदीको |
| **भूतानां** = प्राणीको | **यदा** = जब | **शुचौ** = पवित्र |
| **श्रेयसि** = कल्याणका लागि | **हृदयं** = उहाँको हृदय | **तटे** = तटमा |
| **सर्वात्मकेन** = आफ्नो सम्पूर्ण शक्ति लगाएर | **न अतुष्यत्** = प्रसन्न भएन | **विविक्तस्थः** = एकान्तमा बसेर |
| **सदा** = सधैं | **ततः** = त्यसपछि | **वितर्कयन्** = मनमना विचार गर्दै |
| | **नातिप्रसीदद्धृदयः** = मनमा केही खिन्नता लिएका | |

**इदं** = यसप्रकार
**उवाच** = भन्न लाग्नुभयो

**वाक्यार्थ–** हे शौनक आदि ऋषिहरू ! यद्यपि व्यासजी आफ्नो सम्पूर्ण शक्ति लगाएर सदा सर्वदा प्राणीहरूको कल्याणमा लागिरहनुभयो तर पनि उहाँको हृदयमा सन्तोषको अनुभूति भएन। यसपछि सरस्वती नदीको पवित्र तटमा एकान्तमा बसेर धर्मवेत्ता व्यासजी मनमनै विचार गर्दै यसप्रकार भन्न लाग्नुभयो।

**धृतव्रतेन हि मया छन्दांसि गुरवोऽग्नयः।**
**मानिता निर्व्यलीकेन गृहीतं चानुशासनम्॥ २८॥**

पदार्थ–
**निर्व्यलीकेन** = निष्कपट भावले
**हि** = निश्चय
**धृतव्रतेन** = ब्रह्मचर्य आदि व्रतलाई पालन गर्दै
**मया** = मैले
**छन्दांसि** = वेदहरू
**गुरवः** = गुरुहरू
**च** = र
**अग्नयः** = अग्निहरूको
**मानिताः** = सम्मान गरेको छु
**अनुशासनम्** = उहाँहरूको आज्ञाको
**गृहीतं** = पालन पनि गरेको छु

**वाक्यार्थ–** मैलै निष्कपट भावले ब्रह्मचर्य आदि व्रतको पालन गर्दै वेद, गुरुजन र अग्निको सम्मान गरेको छु र उहाँहरूको आज्ञाको पालन पनि गरेको छु।

**भारतव्यपदेशेन ह्याम्नायार्थश्च दर्शितः।**
**दृश्यते यत्र धर्मादि स्त्रीशूद्रादिभिरप्युत॥ २९॥**

पदार्थ–
**उत** = यस्तै
**भारतव्यपदेशेन** = महाभारतको बहानाले
**आम्नायार्थः** = वेदको अर्थ
**च** = पनि
**प्रदर्शितः** = खोलिदिएको छु
**यत्र** = जुन महाभारतमा
**स्त्रीशूद्रादिभिः** = स्त्री, शूद्र आदिहरूद्वारा
**अपि** = पनि
**हि** = निश्चय नै
**धर्मादि** = धर्म आदिको
**दृश्यते** = ज्ञान गर्न सकिन्छ

**वाक्यार्थ–** महाभारत बनाउने बहानाले मैले वेदको अर्थलाई पनि खोलिदिएको छु। यसको अध्ययन गरेर स्त्री, शूद्र आदिले पनि आ-आफ्नो धर्म र कर्मको ज्ञान प्राप्त गर्दछन्।

**तथापि बत मे दैह्यो ह्यात्मा चैवात्मना विभुः।**
**असम्पन्न इवाभाति ब्रह्मवर्चस्यसत्तमः॥ ३०॥**

पदार्थ–
**तथा अपि** = तर पनि
**दैह्यः** = देहमा विश्वास गर्ने
**आत्मा** = जीवात्मा
**बत** = वस्तुतः
**विभुः** = पूर्ण
**एव** = नै छ

**च** = र
**हि** = निश्चय नै
**ब्रह्मवर्चसी** = ब्रह्मतेजले सम्पन्न भए पनि
**मे** = मेरो
**आत्मना** = आफ्नो रूपले
**असत्तमः** = श्रेष्ठ
**असम्पन्नः** = अपूर्ण
**इव** = जस्तो
**आभाति** = प्रतीत भइरहेको छु

**वाक्यार्थ—** यद्यपि म ब्रह्मतेजले सम्पन्न र श्रेष्ठ पनि छु, तापनि म आफ्नो रूपले अपूर्णझैं प्रतीत भइरहेको छु।

**किं वा भागवता धर्मा न प्रायेण निरूपिताः।**

**प्रियाः परमहंसानां त एव ह्यच्युतप्रियाः॥ ३१॥**

**पदार्थ—**

**भागवताः** = भगवान्लाई प्राप्त गराउने
**धर्माः** = धर्मको बारेमा
**किं वा** = अवश्य पनि
**न निरूपिताः** = मैले निरूपण गरिनँ
**प्रायेण** = खास गरी
**ते** = ती भागवत धर्म
**एव** = नै
**परमहंसानां** = परमहंसका लागि
**प्रियाः** = प्रिय छन्
**हि** = निश्चय नै
**अच्युतप्रियाः** = अच्युतका प्रिय छन्

**वाक्यार्थ—** अवश्य पनि मैले अहिलेसम्म भगवान्लाई प्राप्त गराउने धर्महरूको बारेमा निरूपण गरेको छैन। मेरो मनको अपूर्णताको कारण यही नै हुन सक्दछ। खास गरी परमहंसका लागि प्रिय भागवत धर्म नै भगवान्का लागि पनि प्रिय हुन्छन्।

**तस्यैवं खिलमात्मानं मन्यमानस्य खिद्यतः।**

**कृष्णस्य नारदोऽभ्यागादाश्रमं प्रागुदाहृतम्॥ ३२॥**

**पदार्थ—**

**एवं** = यसप्रकार
**आत्मानं** = आफूलाई
**खिलम्** = अपूर्ण
**मन्यमानस्य** = ठान्ने
**खिद्यतः** = खिन्न चित्त भएका
**तस्य** = ती
**कृष्णस्य** = द्वैपायन वेदव्यासको
**प्राक्** = पहिले
**उदाहृतम्** = बताइएको
**आश्रमं** = आश्रममा
**नारदः** = देवर्षि नारद
**अभ्यागात्** = आउनुभयो

**वाक्यार्थ—** कृष्णद्वैपायन व्यास यसप्रकार आफूलाई अपूर्ण मानेर खिन्न भएर बसिरहनुभएको थियो। यसै समयमा पूर्वोक्त आश्रममा देवर्षि नारदजी आउनुभयो।

**तमभिज्ञाय सहसा प्रत्युत्थायागतं मुनिः।**

**पूजयामास विधिवन्नारदं सुरपूजितम्॥ ३३॥**

**पदार्थ—**

**तम्** = उहाँ
**आगतं** = आउनुभएको
**अभिज्ञाय** = थाहा पाएर
**सहसा** = तुरुन्त
**प्रत्युत्थाय** = उठेर
**मुनिः** = भगवान् वेदव्यासले
**सुरपूजितम्** = देवताद्वारा पूजित
**नारदं** = नारद ऋषिलाई
**विधिवत्** = विधिपूर्वक
**पूजयामास** = पूजा गर्नुभयो

**वाक्यार्थ–** नारदजी आउनुभएको देखेर व्यासजी तुरुन्त उठ्नुभयो र देवताद्वारा सम्मानित उहाँको विधिपूर्वक पूजा गर्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां प्रथमस्कन्धे**

**नैमिषीयोपाख्याने चतुर्थोऽध्यायः ॥ ४ ॥**

# अथ पञ्चमोऽध्यायः

## भगवान्को यशकीर्तिको महिमा एवं देवर्षि नारदको पूर्व जुनीको वर्णन

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**अथ तं सुखमासीन उपासीनं बृहच्छ्रवाः।**

**देवर्षिः प्राह विप्रर्षिं वीणापाणिः स्मयन्निव ॥ १ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अथ** = यसपछि | लिएका | **तं** = ती |
| **सुखम्** = सुखपूर्वक | **देवर्षिः** = देवर्षि नारदले | **विप्रर्षिं** = वेदव्यासलाई |
| **आसीनः** = बसेका | **स्मयन् इव** = मुसुक्क हाँस्दै | **प्राह** = भन्न लाग्नुभयो |
| **बृहच्छ्रवाः** = ठुलो कीर्ति भएका | **उपासीनं** = आफ्ना नजिकमा | |
| **वीणापाणिः** = हातमा वीणा | बस्नुभएका | |

**वाक्यार्थ–** यसपछि सुखपूर्वक बसेका ठुला कीर्ति भएका, हातमा वीणा लिएका देवर्षि नारदले मुसुक्क हाँस्दै आफ्नो नजिकमा बस्नुभएका भगवान् वेदव्यासलाई भन्न लाग्नुभयो।

**नारद उवाच** (नारदजीले भन्नुभयो)

**पाराशर्य महाभाग भवतः कच्चिदात्मना।**

**परितुष्यति शारीर आत्मा मानस एव वा ॥ २ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **महाभाग** = महाभाग्यशाली | **आत्मा** = आत्मा | आफ्नो चिन्तनले |
| **पाराशर्य** = व्यासजी | **आत्मना** = आफ्नो कर्मले | **एव** = नै |
| **भवतः** = तपाईंको | **वा** = अथवा | **परितुष्यति** = सन्तुष्ट छन् |
| **कच्चित्** = के | **मानसः** = मनमा अभिमान गर्ने | |
| **शारीरः** = शरीरमा अभिमान गर्ने | आत्मा | |

**वाक्यार्थ–** हे भाग्यशाली व्यासजी ! तपाईंका शरीर र मन दुबै आफ्नो कर्म र चिन्तनबाट सन्तुष्ट त छन् ?

**जिज्ञासितं सुसम्पन्नमपि ते महदद्भुतम्।**

**कृतवान् भारतं यस्त्वं सर्वार्थपरिबृंहितम् ॥ ३ ॥**

पदार्थ–

**जिज्ञासितं** = तपाईंले जान्न खोज्नुभएको धर्मादि विषयलाई
**सुसम्पन्नम्** = राम्रोसँग जान्नुभयो
**यः** = जुन
**त्वं** = तपाईंले
**सर्वार्थपरिबृंहितम्** = धर्म, अर्थ आदि सम्पूर्ण पुरुषार्थले युक्त
**भारतं** = महाभारत
**कृतवान्** = बनाउनुभयो
**ते** = तपाईंको त्यो
**महत्** = ठूलो
**अपि** = र
**अद्भुतम्** = अद्भुत कार्य हो

**वाक्यार्थ–** व्यासजी ! तपाईं आफ्नो जिज्ञासा राम्रोसँग पूर्ण भएको होला किनभने धर्म आदि सम्पूर्ण पुरुषार्थले परिपूर्ण भएको जुन महाभारतको रचना गर्नुभयो त्यो तपाईंको अत्यन्त ठूलो र अद्भुत कार्य हो।

**जिज्ञासितमधीतं च यत्तद् ब्रह्म सनातनम्।**
**तथापि शोचस्यात्मानमकृतार्थ इव प्रभो ॥ ४ ॥**

पदार्थ–

**यत्** = जुन
**सनातनम्** = सनातन
**ब्रह्म** = ब्रह्म हो
**तत्** = त्यस ब्रह्मको
**जिज्ञासितम्** = खुब विचार गर्नुभयो
**अधीतं च** = जान्नु पनि भयो
**तथा अपि** = तर पनि
**प्रभो** = हे व्यासजी
**आत्मानम्** = आफूलाई
**अकृतार्थः** = अकृतार्थ पुरुषले (शोक गरेको)
**इव** = झैं
**शोचसि** = शोक गरिरहनुभएको छ

**वाक्यार्थ–** सनातन ब्रह्मको विषयमा पनि तपाईंले खुब विचार गर्नुभयो र त्यो ब्रह्मलाई जान्नु पनि भयो। यति गर्दागर्दै पनि अकृतार्थ पुरुषझैं आफ्नो विषयमा तपाईं किन शोक गरिरहनुभएको छ ?

**व्यास उवाच** (व्यासजीले भन्नुभयो)

**अस्त्येव मे सर्वमिदं त्वयोक्तं**
**तथापि नात्मा परितुष्यते मे।**
**तन्मूलमव्यक्तमगाधबोधं**
**पृच्छामहे त्वाऽऽत्मभवात्मभूतम् ॥ ५ ॥**

पदार्थ–

**मे** = मेरा विषयमा
**त्वया** = तपाईंले
**उक्तं** = भन्नुभएको
**इदं** = यो
**सर्वम्** = सबै
**अस्ति** = ठीक हो

**एव** = नै
**तथा अपि** = तैपनि
**मे** = मेरो
**आत्मा** = हृदय
**तु** = चाहिँ
**न परितुष्यते** = प्रसन्न छैन
**तन्मूलम्** = मेरो असन्तोषको कारण
**अव्यक्तम्** = थाहा छैन
**अगाधबोधं** = अगाध ज्ञानले परिपूर्ण भएका
**आत्मभवात्मभूतम्** = ब्रह्माजीका मानसपुत्र
**त्वा** = तपाईंलाई
**पृच्छामहे** = सोध्दछु

**वाक्यार्थ–** तपाईंले मेरा विषयमा जे भन्नुभयो त्यो सब ठीकै हो तापनि मेरो हृदय सन्तुष्ट छैन। परन्तु मेरो असन्तोषको कारण मलाई पनि थाहा छैन। हे नारदजी ! तपाईंको ज्ञान अगाध छ। तपाईं ब्रह्माजीको मानसपुत्र हुनुहुन्छ। त्यसकारण म तपाईंसँग आफ्नो असन्तोषको कारण सोध्दछु।

**स वै भवान् वेद समस्तगुह्य-**
**मुपासितो यत्पुरुषः पुराणः।**
**परावरेशो मनसैव विश्वं**
**सृजत्यवत्यत्ति गुणैरसङ्गः॥ ६॥**

**पदार्थ–**

**सः वै** = त्यस्तो
**भवान्** = तपाईं नारदजी
**समस्तगुह्यम्** = समस्त गोपनीय रहस्यलाई
**वेद** = जान्नुहुन्छ
**यत्** = किनभने तपाईंले
**पुराणः** = त्यो पुराण
**पुरुषः** = पुरुषको
**उपासितः** = उपासना गर्नुभएको छ (जुन पुराणपुरुष)
**परावरेशः** = प्रकृति र पुरुष दुबैको स्वामी हुनुहुन्छ
**असङ्गः** = असङ्ग भईकन पनि
**गुणैः** = प्रकृतिका गुणलाई
**मनसा** = आफ्नो सङ्कल्पमात्रले
**एव** = नै
**विश्वं** = संसारको
**सृजति** = सृष्टि गर्नुहुन्छ
**अवति** = पालन गर्नुहुन्छ
**अत्ति** = संहार गर्नुहुन्छ

**वाक्यार्थ–** पुराणपुरुष परमात्माको उपासना गरेको हुनाले नै तपाईं सम्पूर्ण गोपनीय रहस्यलाई जान्नुहुन्छ। तपाईंले त्यस्ता पुराणपुरुषको उपासना गर्नुभएको छ जो प्रकृति र पुरुष दुबैको स्वामी हुनुहुन्छ र असङ्ग भईकन पनि आफ्नो सङ्कल्पमात्रले प्रकृतिका तीन गुणद्वारा संसारको सृष्टि, स्थिति र प्रलय गर्नुहुन्छ।

**त्वं पर्यटन्नर्क इव त्रिलोकी-**
**मन्तश्चरो वायुरिवात्मसाक्षी।**
**परावरे ब्रह्मणि धर्मतो व्रतैः**
**स्नातस्य मे न्यूनमलं विचक्ष्व॥ ७॥**

पदार्थ–

**त्वं** = तपाईं
**अर्क** = सूर्य
**इव** = झैं
**त्रिलोकीम्** = तिनै लोकमा
**पर्यटन्** = भ्रमण गर्दै
**वायुः इव** = योगबलले प्राणवायुसमान
**अन्तश्चरः** = सबको भित्र बसेर
**आत्मसाक्षी** = अन्तःकरणको साक्षी पनि हुनुहुन्छ
**परे** = परम
**ब्रह्मणि** = ब्रह्ममा
**धर्मतः** = योगानुष्ठानद्वारा
**अवरे** = वेदरूपी अपर ब्रह्ममा
**व्रतैः** = स्वाध्याय र नियमद्वारा
**स्नातस्य** = निष्णात
**मे** = मेरो
**अलं** = पर्याप्त
**न्यूनम्** = जुन कमी छ (त्यस कमीलाई)
**विचक्ष्व** = बताइदिनुहोस्

**वाक्यार्थ–** तपाईं सूर्यझैं तीनै लोकमा भ्रमण गर्नुहुन्छ अनि योगबलद्वारा प्राणवायुझैं सबको भित्र बसेर अन्तःकरणको साक्षी हुनुहुन्छ। योगानुष्ठान र नियमद्वारा परब्रह्म र शब्दब्रह्म दुबैमा पूर्णता प्राप्त गरे पनि आफूमा केही कमी भइरहेको मैलै अनुभव गरिरहेको छु। ममा भएको उक्त कमीलाई कृपापूर्वक बताइदिनुहोस्।

**नारद उवाच** (नारदजीले भन्नुभयो)

**भवतानुदितप्रायं यशो भगवतोऽमलम्।**
**येनैवासौ न तुष्येत मन्ये तद्दर्शनं खिलम्॥ ८॥**

पदार्थ–

**भवता** = तपाईंले
**भगवतः** = भगवान् नारायणको
**अमलम्** = निर्मल
**यशः** = यशको
**अनुदितप्रायं** = वर्णन गर्नुभएन
**येन** = जसबाट
**असौ** = भगवान् नारायण
**न तुष्येत** = प्रसन्न हुनुहुन्न
**तद्दर्शनं** = त्यो शास्त्र
**खिलम्** = अपूर्ण
**एव** = नै
**मन्ये** = ठान्दछु

**वाक्यार्थ–** हे व्यासजी ! तपाईंले भगवान् नारायणको निर्मल यशको वर्णन गर्नुभएन। जसबाट भगवान् नारायण प्रसन्न हुनुहुन्न त्यस्तो शास्त्रलाई म अपूर्ण नै ठान्दछु।

**यथा धर्मादयश्चार्था मुनिवर्यानुकीर्तिताः।**
**न तथा वासुदेवस्य महिमा ह्यनुवर्णितः॥ ९॥**

पदार्थ–

**मुनिवर्य** = हे मुनिश्रेष्ठ व्यास (तपाईंले महाभारत आदि ग्रन्थमा)
**यथा** = जसरी
**धर्मादयः** = धर्म आदि
**अर्थाः** = पुरुषार्थहरूको
**अनुकीर्तिताः** = वर्णन गर्नुभयो
**तथा च** = त्यसरी
**वासुदेवस्य** = भगवान् नारायणको
**महिमा** = महिमाको
**हि** = निश्चय नै
**न अनुवर्णितः** = वर्णन गर्नुभएन

**वाक्यार्थ–** हे मुनिश्रेष्ठ व्यास ! तपाईंले महाभारत आदि ग्रन्थमा जसरी धर्म आदि पुरुषार्थहरूको वर्णन गर्नुभयो त्यसरी भगवान् नारायणको महिमाको वर्णन गर्नुभएन।

**न यद्वचश्चित्रपदं हरेर्यशो**
**जगत्पवित्रं प्रगृणीत कर्हिचित्।**
**तद्वायसं तीर्थमुशन्ति मानसा**
**न यत्र हंसा निरमन्त्युशिक्क्षयाः॥ १०॥**

**पदार्थ–**

**चित्रपदं** = रस अलङ्कार आदिले युक्त भए तापनि
**यत्** = जुन
**वचः** = वाणीले
**जगत्पवित्रं** = संसारलाई पवित्र गर्ने
**हरेः** = भगवान्को
**यशः** = कीर्तिलाई
**कर्हिचित्** = कहिल्यै पनि
**न प्रगृणीत** = वर्णन गर्दैन भने
**तत्** = त्यस्तो वाणी
**वायसं** = काकहरूको लागि
**तीर्थम्** = जुठो फ्याँक्ने ठाउँ भनेर
**उशन्ति** = भन्दछन्
**मानसाः** = मानसरोवरको कमलवनमा विहार गर्ने
**हंसाः** = हंसजस्ता
**उशिक्क्षयाः** = निरन्तर ब्रह्म विचारमा लागेका मुमुक्षुहरू
**यत्र** = त्यस्ता वाणीमा
**न निरमन्ति** = रमाउँदैनन्

**वाक्यार्थ–** रस, भाव र अलङ्कार आदिले युक्त भए तापनि जगत्लाई पवित्र गर्ने भगवान् नारायणको कीर्तिको गान नगर्ने वाणी काकहरूलाई जुठो फ्याँक्ने ठाउँ (रछ्यान) जस्तै अपवित्र मानिन्छ। मानसरोवरको सुन्दर कमलवनमा विहार गर्ने हाँस जस्ता ब्रह्मधाममा विहार गर्ने भगवच्चरणानुरागी ममुक्षुहरू त्यस्ता वाणीमा कहिल्यै पनि रमाउँदैनन्।

**तद् वाग्विसर्गो जनताघविप्लवो**
**यस्मिन् प्रतिश्लोकमबद्धवत्यपि।**
**नामान्यनन्तस्य यशोऽङ्कितानि य-**
**च्छृण्वन्ति गायन्ति गृणन्ति साधवः॥ ११॥**

**पदार्थ–**

**तद्वाग्विसर्गः** = त्यस वाणीको प्रयोगले
**जनताघविप्लवः** = सम्पूर्ण मनुष्यहरूको पापलाई नाश गर्दछ
**यस्मिन्** = जुन वाणीको प्रयोगमा
**अबद्धवति अपि** = अपशब्द आदिले युक्त भए तापनि
**प्रतिश्लोकम्** = प्रत्येक श्लोकमा
**अनन्तस्य** = भगवान् नारायणको
**यशोऽङ्कितानि** = कीर्तिले अङ्कित
**नामानि** = नामहरू हुन्छन्
**यत्** = जुन नामहरूलाई

| | |
|---|---|
| **साधवः** = सज्जनहरूले | **गृणन्ति** = भन्दछन् |
| **शृण्वन्ति** = श्रवण गर्दछन् | **गायन्ति** = गाउँदछन् |

**वाक्यार्थ–** जसमा सुन्दर रचना पनि छैन र अनि जुन अपशब्दले पनि युक्त छ तर जसका प्रत्येक श्लोक भगवान्का कीर्तिसूचक नामद्वारा युक्त छन् भने त्यस्तो वाणीले मनुष्यहरूको सम्पूर्ण पापलाई नष्ट गरिदिन्छ। किनभने सज्जनहरू त्यस्तै वाणीको श्रवण, गान र कीर्तन गर्ने गर्दछन्।

**नैष्कर्म्यमप्यच्युतभाववर्जितं**
**न शोभते ज्ञानमलं निरञ्जनम्।**
**कुतः पुनः शश्वदभद्रमीश्वरे**
**न चार्पितं कर्म यदप्यकारणम्॥ १२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यत्** = जुन | **अलं** = पर्याप्त | **ईश्वरे** = भगवान् नारायणमा |
| **नैष्कर्म्यम्** = ब्रह्मलाई विषय गर्ने | **न शोभते** = शोभा पाउँदैन | **न अर्पितं** = अर्पण नगरिएको |
| **निरञ्जनम्** = उपाधिलाई नाश गर्ने | **पुनः** = फेरि | **अकारणम्** = निष्काम |
| **ज्ञानम्** = ज्ञान | **कुतः** = कसरी | **कर्म** = कर्म |
| **अपि** = पनि | **शश्वत्** = साधन र फलकाल दुबैमा | **च अपि** = पनि कसरी सुशोभित होला ? |
| **अच्युतभाववर्जितं** = भगवान् अच्युतको भक्तिले रहित छ भने | **अभद्रम्** = दुःखरूप काम्य कर्म र | |

**वाक्यार्थ–** मोक्षप्राप्तिको साक्षात् साधन भए पनि भगवान्को भक्तिले रहित ज्ञानको शोभा हुँदैन। यस्तै साधन र सिद्ध दुबै कालमा दुःखरूप भएको काम्य कर्म र भगवान्मा अर्पण नगरिएको निष्काम कर्म पनि शोभाहीन हुन्छन्।

**विवरण–** यस श्लोकमा **निष्कर्म** भनेर ब्रह्मलाई लिइएको हो। त्यो निष्कर्म ब्रह्मको आकारमा आकारित अन्तःकरणको वृत्तिलाई नैष्कर्म्य भनिएको हो। निष्कर्म भनेको ब्रह्म हो। नैष्कर्म्य भनेको ब्रह्मको आकारमा आकारित अन्तःकरणको वृत्तिमा आरूढ ब्रह्मचैतन्य हो। यसैलाई ब्रह्मचैतन्य, ब्रह्मसाक्षात्कार, जीव र परमात्माको एकाताको साक्षात्कारका रूपमा पनि लिने गरिन्छ। यस्तो ब्रह्मज्ञान पनि भगवान्को भक्तिले रहित छ भने शोभायुक्त हुँदैन।

यस श्लोकमा रहेको **अकारणम्**को अर्थ हो फलको अर्थ नराखी गरिएको कर्म। सकाम कर्म फलकाल र साधनाकालमा दुःखदायी हुन्छ। निष्काम कर्म अर्थात् कामनाले रहित कर्म छ तापनि यदि त्यो कर्म भगवान्मा अर्पण गरिएको छैन भने त्यसले मुमुक्षुको चित्त शुद्ध हुँदैन। यस प्रक्रियामा चित्तको अन्तर्मुखता हुँदैन। अर्थात् चित्त बहिर्मुख हुन्छ। यसर्थ भगवत्प्रीत्यर्थ गरिने कर्म नै निष्काम कर्म हो। यसैलाई नै यहाँ अकारणम् शब्दद्वारा बुझाइएको छ।

**अथो महाभाग भवानमोघदृक्**
**शुचिश्रवाः सत्यरतो धृतव्रतः ।**
**उरुक्रमस्याखिलबन्धमुक्तये**
**समाधिनानुस्मर तद्विचेष्टितम् ॥ १३ ॥**

**पदार्थ—**

**अथ** = यसकारण
**महाभाग** = महाभाग्यशाली
**भवान्** = व्यासजी
**अमोघदृक्** = यथार्थ दृष्टि हुनुभएका
**शुचिश्रवाः** = पवित्र कीर्ति हुनुभएका
**सत्यरतः** = सत्यपरायण
**धृतव्रतः** = दृढवर्ती हुनुहुन्छ, (त्यसकारण तपाईं)
**अखिलबन्धमुक्तये** = सम्पूर्ण लोकको मुक्तिका लागि
**तत्** = सम्पूर्ण प्राणीलाई प्रिय लाग्ने
**उरुक्रमस्य** = भगवान् नारायणको
**विचेष्टितम्** = विभिन्न प्रकारका लीलालाई
**समाधिना** = चित्तको एकाग्रताद्वारा
**अनुस्मर** = स्मरण गरेर वर्णन गर्नुहोस्

**वाक्यार्थ—** हे महाभाग्यशाली वेदव्यासजी ! तपाईंको दृष्टि अमोघ छ र कीर्ति पवित्र छ। तपाईं सत्यपरायण र दृढव्रत हुनुहुन्छ। यसकारण अब तपाईं सम्पूर्ण जीवहरूलाई बन्धनबाट मुक्त गराउनका लागि समाधिद्वारा अचिन्त्य शक्ति भगवान्का लीलाहरूको स्मरण गर्नुहोस्।

**ततोऽन्यथा किञ्चन यद्विवक्षतः**
**पृथग्दृशस्तत्कृतरूपनामभिः ।**
**न कर्हिचित् क्वापि च दुःस्थिता मति-**
**र्लभेत वाताहतनौरिवास्पदम् ॥ १४ ॥**

**पदार्थ—**

**ततः** = भगवान्को लीलालाई छोडेर
**पृथग्दृशः** = अनात्म वस्तुमा दृष्टि गएको हुनाले
**अन्यथा** = भिन्न प्रकारले
**यत्** = अरू
**किञ्चन** = केही विषय
**विवक्षतः** = भन्न इच्छा गर्ने मनुष्यको
**तत्कृतरूपनामभिः** = त्यो इच्छाबाट उत्पन्न रूप र नामद्वारा
**दुःस्थिता** = विचलित
**मतिः** = बुद्धि
**कर्हिचित्** = कहिल्यै पनि
**क्व अपि** = कुनै पनि विषयमा
**वाताहतनौः** = हावाद्वारा डगमगाएको डुङ्गा
**इव** = झैँ
**च** = पनि
**आस्पदम्** = स्थान
**न लभेत** = प्राप्त गर्न सक्दैन

**वाक्यार्थ—** भगवान्‌को लीलादेखि अतिरिक्त कुनै वस्तुको वर्णन गर्न चाहने मनुष्य अनेक नाम र रूपहरूको चक्करमा पर्दछ। त्यस्ता व्यक्तिको बुद्धि भेदभावले भरिएको हुन्छ। जसरी नदी पार गर्न लाग्दा हावाले हल्लिएको डुङ्गा स्थिर हुन सक्दैन त्यसै गरी त्यो व्यक्तिको बुद्धि कहीँ पनि स्थिर हुन सक्दैन।

**जुगुप्सितं धर्मकृतेऽनुशासतः**
**स्वभावरक्तस्य महान् व्यतिक्रमः।**
**यद्वाक्यतो धर्म इतीतरः स्थितो**
**न मन्यते तस्य निवारणं जनः॥ १५॥**

पदार्थ—

**जुगुप्सितं** = निन्द्य काम्य कर्ममा
**स्वभावरक्तस्य** = स्वभावले नै अनुरक्त भएका व्यक्तिका लागि
**धर्मकृते** = यही नै धर्म हो भनेर
**अनुशासतः** = प्रेरणा गर्ने तपाईंको
**महान्** = ठुलो
**व्यतिक्रमः** = उल्टो कार्य भयो
**यद्वाक्यतः** = तपाईं वेदव्यासको वाक्यद्वारा
**धर्मः इति** = यही नै मुख्य धर्म हो भन्दै
**स्थितः** = अटल भएर
**इतरः** = प्राकृत अर्थात् अज्ञानी
**जनः** = मनुष्य
**तस्य** = त्यस काम्य कर्मको
**निवारणं** = तत्त्वज्ञानीले गरेको निषेधलाई
**न मन्यते** = स्वीकार गर्दैन

**वाक्यार्थ—** संसारी मनुष्यहरू स्वभावले नै विषयमा फसेका हुन्छन्। धर्मको उपदेश गर्ने क्रममा तपाईंले उनीहरूलाई सकाम कर्म गर्ने आज्ञा दिनुभएको छ। यो बिल्कुल विपरीत कार्य भयो। अविवेकी मनुष्यहरू तपाईंको वचनमा विश्वास गरेर तपाईंले बताउनुभएको सकाम कर्म नै धर्म हो भन्ने निश्चय गरेर त्यसको निषेध गर्ने वचनलाई वास्तविक मान्दैनन्।

**विचक्षणोऽस्यार्हति वेदितुं विभो-**
**रनन्तपारस्य निवृत्तितः सुखम्।**
**प्रवर्तमानस्य गुणैरनात्मन-**
**स्ततो भवान् दर्शय चेष्टितं विभोः॥ १६॥**

पदार्थ—

**विचक्षणः** = कुनै अत्यन्त निपुण व्यक्तिमात्र
**निवृत्तितः** = सर्वकर्म संन्यासद्वारा
**अनन्तपारस्य** = देशकृत, वस्तुकृत र कालकृत त्रिविधपरिच्छेदशून्य भएकाले
**विभोः** = व्यापक परमात्माको
**सुखम्** = निर्विकल्प सुखात्मक स्वरूपलाई
**वेदितुं** = जान्न
**अर्हति** = समर्थ हुन्छ
**ततः** = त्यसकारणले

**भवान्** = हे समर्थ वेदव्यासजी
**अनात्मनः** = देहादिमा अभिमान गर्नाले
**गुणैः** = प्रकृतिका सत्त्व आदि गुणद्वारा
**प्रवर्तमानस्य** = प्रवृत्त भएका
**अस्य** = व्यक्तिका लागि
**विभोः** = भगवान्‌को
**चेष्टितं** = लीलाहरूलाई
**दर्शय** = वर्णन गर्नुहोस्

**वाक्यार्थ–** भगवान् अनन्त हुनुहुन्छ। कुनै विचारवान् ज्ञानी पुरुष नै संसारबाट निवृत्त भएर उहाँको स्वरूप परमानन्दलाई प्राप्त गर्न सक्दछन्। अतः जो मनुष्यहरू पारमार्थिक बुद्धिले रहित छन् उनीहरूको कल्याणका लागि भगवान्‌का लीलाहरूको वर्णन गर्नुहोस्।

**विवरण–** यस श्लोकमा रहेको **निवृत्तितः सुखम्** यस अंशको बारेमा चर्चा गरौँ। निवृत्ति भनेको मोक्ष हो र यसबाट नै वास्तविक सुख प्राप्त हुन्छ।

संसारका पदार्थहरू स्वरूपतः बन्धनका कारण होइनन्, अपितु ती पदार्थहरूप्रतिको आसक्ति नै बन्धनको कारण हो। बन्धन र मोक्षको कारण संसारका पदार्थहरू नभएर मन नै हो। जुन समयमा हाम्रो मनले केही कुराको इच्छा गर्दछ, केही कुरा सोचेको हुन्छ अथवा केही कुरालाई ग्रहण गरेको हुन्छ, त्यही नै बन्धन हो। जुन समयमा मनले कुनै पनि वस्तुलाई ग्रहण गरेको हुँदैन त्यही नै मोक्ष हो।

संसारका पदार्थहरूमा ममताबुद्धिको परित्याग गरेर ती पदार्थहरूको उपभोग गरेमा जीवलाई दुःखको अनुभव हुँदैन। जीवका लागि सबभन्दा ठुलो बन्धन के हो भन्ने प्रश्नको उत्तरमा शङ्कराचार्यले प्रश्नोत्तरी मणिरत्नमालामा अनात्मा शरीरमा अहंबुद्धि गर्नु नै बन्धनको कारण हो भनी बताउनुभएको छ।

कर्म गर्नका लागि जीवले कुनै न कुनै शरीरलाई अवश्य ग्रहण गरेको हुनुपर्दछ। स्थूलशरीरको अभावमा कुनै पनि मनुष्यले केही पनि कर्म गरेको देखिँदैन। कर्म गर्नका लागि शरीरको आवश्यकता परेझैँ कर्ताको पनि आवश्यकता पर्दछ। कर्ता भनेर अन्तःकरणमा रहेको चिदाभासलाई बुझ्नुपर्दछ। ढुङ्गा, माटो, काठ आदिमा कर्तृत्वभाव देखिँदैन, किनभने तिनीहरूमा अन्तःकरण छैन। त्यसै गरी कर्म हुनका लागि विभिन्न करणहरूको पनि आवश्यकता पर्दछ। करण भनेर ज्ञानेन्द्रिय, कर्मेन्द्रिय अनि मनलाई लिनुपर्दछ। कुनै पनि कर्म हुनका लागि जसरी इन्द्रियहरूको आवश्यकता पर्दछ त्यसै गरी प्राणहरूको पनि आवश्यकता पर्दछ।

वेदान्तसिद्धान्तअनुसार शुद्ध आत्मा न कर्ता हो, न भोक्ता हो, न त प्रमाता नै हो। प्रमातृत्व, कर्तृत्व र भोक्तृत्व यी धर्महरू अन्तःकरणका हुन्। परन्तु आत्मा र अन्तःकरणको तादात्म्याध्यास भएकाले आत्माले अन्तःकरणका धर्महरूलाई आफ्नो धर्म मानेर बन्धनको अनुभव गर्दछ। यसैलाई अविवेक पनि भन्दछन्। विवेकद्वारा उक्त अविवेक नष्ट भएपछि आत्माले आफ्नो असङ्गताको अनुभव गर्दछ। यही असङ्गताको अनुभव नै मोक्ष हो। यसप्रकार आसक्तिको फल बन्धन हो भने निवृत्तिको फल मोक्ष हो।

**त्यक्त्वा स्वधर्मं चरणाम्बुजं हरे-**
**र्भजन्नपक्वोऽथ पतेत् ततो यदि ।**
**यत्र क्व वाभद्रमभूदमुष्य किं**
**को वार्थ आप्तोऽभजतां स्वधर्मतः ॥ १७ ॥**

पदार्थ—

**यत्र** = जहाँ
**स्वधर्मं** = आफ्नो नित्य र नैमित्तिक कर्मलाई
**त्यक्त्वा** = छोडेर
**हरेः** = भगवान् नारायणको
**चरणाम्बुजं** = चरणकमलको
**भजन्** = भजन गर्ने मनुष्यको
**अपक्वः** = भजनको परिपाक नभईकन
**यदि** = यदि
**पतेत्** = शरीर छुट्यो भने
**अथ** = यसपछि
**अमुष्य** = त्यस व्यक्तिको
**अभद्रम्** = अकल्याण
**अभूत् किं** = के हुनसक्छ र
**क्व वा** = अथवा कहीँ
**अभजतां** = भगवान्को भजन नगरीकन
**स्वधर्मतः** = खालि आफ्नो नित्य र नैमित्तिक कर्म गर्ने व्यक्तिले
**ततः** = त्यसबाट
**कः अर्थः** = त्यस्तो विशेष के फल
**आप्तः** = प्राप्त गर्न सक्दछन्

**वाक्यार्थ—** नित्य र नैमित्तिक कर्मको परित्याग गरेर भगवान्को भजन गर्ने मनुष्यको यदि कथञ्चित् भजनको परिपाक नभईकन शरीर छुटिहाल्यो भने पनि उसको कुनै अकल्याण हुँदैन। परन्तु कुनै व्यक्तिले स्वधर्मको पालन गरेको छ तर ऊ भगवान्को भजन गर्दैन भने उसलाई कुनै विशिष्ट लाभ हुँदैन।

**तस्यैव हेतोः प्रयतेत कोविदो**
**न लभ्यते यद् भ्रमतामुपर्यधः ।**
**तल्लभ्यते दुःखवदन्यतः सुखं**
**कालेन सर्वत्र गभीररंहसा ॥ १८ ॥**

पदार्थ—

**कोविदः** = बुद्धिमान् मनुष्यले
**तस्य एव** = त्यही वस्तुको
**हेतोः** = प्राप्तिका लागि
**प्रयतेत** = प्रयास गरोस्
**यत्** = जुन वस्तु
**उपरि** = माथि ब्रह्मापर्यन्त र
**अधः** = तल स्थावर योनिपर्यन्त
**भ्रमताम्** = भ्रमण गर्ने जीवले
**न लभ्यते** = प्राप्त गर्न सकिन्न
**तत्** = त्यो
**सुखं** = सुख त
**गभीररंहसा** = कर्मलाई उद्बुद्ध गर्न समर्थ
**कालेन** = समयद्वारा उद्बोधित
**अन्यतः** = पूर्वजन्ममा गरिएका कर्महरूद्वारा
**सर्वत्र** = नरक आदिमा पनि
**दुःखवत्** = दुःख अनायास प्राप्त भएझैँ
**लभ्यते** = अवश्य प्राप्त हुन्छ

**वाक्यार्थ–** बुद्धिमान् मनुष्यले त्यस्तो वस्तु प्राप्त गर्नका लागि प्रयास गर्नुपर्छ जुन वस्तुको प्राप्ति त माथि ब्रह्मापर्यन्त र तल स्थावरपर्यन्तका योनिहरूमा हुन सक्दैन। संसारको विषयसुख त पूर्वजन्ममा गरिएका कर्महरूद्वारा नरकमा दुःख अनायास प्राप्त भएझैं स्वतः प्राप्त हुन्छ।

**न वै जनो जातु कथञ्चनाव्रजेन्**
**मुकुन्दसेव्यन्यवदङ्ग संसृतिम्।**
**स्मरन्मुकुन्दाङ्घ्र्युपगूहनं पुन-**
**र्विहातुमिच्छेन्न रसग्रहो यतः॥ १९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अङ्ग** = हे मुनि | मनुष्यझैं | यसकारण |
| **मुकुन्दसेवी** = भगवान्को भजन गर्ने | **संसृतिम्** = जन्म र मृत्युरूप संसारमा | **मुकुन्दाङ्घ्र्युपगूहनं** = भगवान्को चरणकमलको आलिङ्गनलाई |
| **जनः** = मानिस | **वै** = निश्चय नै | **पुनः** = बारम्बार |
| **जातु** = कहिल्यै पनि | **न आव्रजेत्** = आउँदैन | **स्मरन्** = स्मरण गर्दै |
| **कथञ्चन** = कुनै प्रकार कुयोनिमा गएको छ तापनि | **यतः** = यसबाट | **विहातुम्** = छोड्न |
| **अन्यवत्** = खालि कर्म गर्ने | **रसग्रहः** = भगवान्को भक्तिको आस्वादनलाई प्राप्त गरेको छ | **न इच्छेत्** = चाहँदैन |

**वाक्यार्थ–** व्यासजी ! जो व्यक्ति भगवान् श्रीकृष्णको चरणारविन्दको सेवक छ ऊ अन्य मनुष्यझैं जन्ममृत्युमय संसारमा फेरि फर्केर आउँदैन। भगवान्को चरणकमलको स्मरण गरेर उहाँको भक्तिलाई उसले फेरि प्रारम्भ गर्दछ किनभने उसलाई भक्तिरसको चस्का लागिसकेको हुन्छ।

**इदं हि विश्वं भगवानिवेतरो**
**यतो जगत्स्थाननिरोधसम्भवाः।**
**तद्धि स्वयं वेद भवांस्तथापि वै**
**प्रादेशमात्रं भवतः प्रदर्शितम्॥ २०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **हि** = निश्चय नै | **जगत्स्थाननिरोधसम्भवाः** = संसारको उत्पत्ति, स्थिति र प्रलय हुन्छन् (परन्तु भगवान्चाहिँ यो संसारदेखि) | **इव** = भिन्नझैं प्रतीयमान जो जीव हो त्यो पनि भगवान् नै हो |
| **इदं** = यो | | **तत्** = त्यो कुरा |
| **विश्वं** = विश्व | | **भवान्** = तपाईं |
| **भगवान्** = भगवान् हो | | |
| **यतः** = जुन भगवान्बाट | **इतरः** = भिन्न नै हुनुहुन्छ | **स्वयं** = आफैं |

**हि** = नै
**वेद** = जान्नुहुन्छ
**तथा अपि** = तर पनि
**ते** = त्यस्ता
**भवतः** = तपाईंलाई
**प्रादेशमात्रं** = सङ्केतमात्र
**प्रदर्शितम्** = गरेको हुँ

**वाक्यार्थ–** जसबाट संसारको उत्पत्ति, स्थिति र प्रलय हुन्छ उही भगवान् नै विश्वको रूपमा पनि हुनुहुन्छ। भगवान् संसारको रूपमा भईकन पनि उहाँ संसारदेखि भिन्न नै हुनुहुन्छ। यो कुरालाई तपाईं स्वयं जान्नुहुन्छ। मैले त केवल सङ्केतमात्र गरेको हुँ।

**त्वमात्मनात्मानमवेह्यमोघदृक्**
**परस्य पुंसः परमात्मनः कलाम्।**
**अजं प्रजातं जगतः शिवाय तन्**
**महानुभावाभ्युदयोऽधिगण्यताम्॥ २१॥**

पदार्थ–
**अमोघदृक्** = अमोघ दृष्टि भएका हे वेदव्यासजी
**त्वम्** = तपाईं
**आत्मानम्** = आफूलाई
**परस्य** = परम
**पुंसः** = पुरुष
**परमात्मनः** = परमात्माको
**कलाम्** = अंशभूत
**अजं** = न जन्मने भईकन
**जगतः** = संसारको
**शिवाय** = कल्याणका लागि
**प्रजातं** = उत्पन्न भएको
**आत्मना** = आफैँले
**अवेहि** = जान्नुहोस्
**तत्** = त्यसकारणले
**महानुभावाभ्युदयः** = भगवान् नारायणको पराक्रम
**अधिगण्यताम्** = प्रशस्त मात्रामा निरूपण गर्नुहोस्

**वाक्यार्थ–** व्यासजी ! तपाईंको दृष्टि अमोघ छ। यस कुरालाई तपाईं राम्रोसँग जान्नुहोस् कि तपाईं पुरुषोत्तम भगवान्‌को कलावतार हुनुहुन्छ। तपाईं अजन्मा भईकन पनि जगत्‌को कल्याणका लागि जन्मलाई स्वीकार गर्नुभएको छ। यसकारण अब तपाईं विशेष रूपले भगवान्‌का लीलाहरूको कीर्तन गर्नुहोस्।

**इदं हि पुंसस्तपसः श्रुतस्य वा**
**स्विष्टस्य सूक्तस्य च बुद्धिदत्तयोः।**
**अविच्युतोऽर्थः कविभिर्निरूपितो**
**यदुत्तमश्लोकगुणानुवर्णनम्॥ २२॥**

पदार्थ–
**यत्** = जुन
**उत्तमश्लोकगुणानुवर्णनम्** = पवित्र कीर्ति भएका भगवान् नारायणका गुणहरूको वर्णन हो
**हि** = निश्चय नै
**इदं** = यही नै

**पुंसः** = पुरुषको
**तपसः** = तपस्याको
**श्रुतस्य** = वेदाध्ययनको
**स्विष्टस्य** = यज्ञानुष्ठानको
**सूक्तस्य** = स्वाध्यायको
**च** = र
**बुद्धिदत्तयोः** = ज्ञान र दानको
**अविच्युतः** = एकमात्र
**अर्थः** = प्रयोजन हो भनी
**कविभिः** = विद्वान्हरूद्वारा
**निरूपितः** = निरूपण गरिएको छ

**वाक्यार्थ—** विद्वान्हरूले यो कुराको निर्णय गरेका छन् कि मनुष्यको तपस्या, वेदाध्ययन, यज्ञानुष्ठान, स्वाध्याय, ज्ञान र दानको एकमात्र प्रयोजन पुण्यकीर्ति श्रीकृष्णको गुण र लीलाहरूको वर्णन गर्नु हो।

**अहं पुरातीतभवेऽभवं मुने**
**दास्यास्तु कस्याश्चन वेदवादिनाम्।**
**निरूपितो बालक एव योगिनां**
**शुश्रूषणे प्रावृषि निर्विविक्षताम्॥ २३॥**

पदार्थ—
**मुने** = हे मुनि
**अहं** = म
**तु** = चाहिँ
**पुरातीतभवे** = पूर्वकल्पमा
**वेदवादिनाम्** = वेदवादी ब्राह्मणहरूकी
**कस्याश्चन** = कुनै एउटी
**दास्याः** = दासीबाट
**अभवं** = उत्पन्न भएको थिएँ त्यस समयमा म
**बालकः** = बालक
**एव** = नै थिएँ
**प्रावृषि** = वर्षाकाल उपलक्षित चातुर्मास्यमा
**निर्विविक्षताम्** = एकै ठाउँमा बस्न चाहने
**योगिनां** = योगीहरूको
**शुश्रूषणे** = सेवामा
**निरूपितः** = नियुक्त गरिएको थिएँ

**वाक्यार्थ—** हे व्यासजी, पहिलो कल्पमा म वेदवादी ब्राह्मणहरूकी एउटी दासीको छोरो थिएँ। वर्षाऋतुमा एकै ठाउँमा बसेर चातुर्मास्य यज्ञ गरिरहेका ती वेदवादी ब्राह्मणको सेवामा म नियुक्त गरिएको थिएँ।

**ते मय्यपेताखिलचापलेऽर्भके**
**दान्तेऽधृतक्रीडनकेऽनुवर्तिनि।**
**चक्रुः कृपां यद्यपि तुल्यदर्शनाः**
**शुश्रूषमाणे मुनयोऽल्पभाषिणि॥ २४॥**

पदार्थ—
**यद्यपि** = यद्यपि
**ते** = उहाँ
**मुनयः** = योगीहरू

**तुल्यदर्शनाः** = सेवा गर्ने र नगर्ने दुबैमा समदृष्टि भएका हुनुहुन्थ्यो तापनि
**अपेताखिलचापले** = सम्पूर्ण चञ्चलताले रहित
**दान्ते** = इन्द्रियविजयी
**अधृतक्रीडनके** = क्रीडाका सम्पूर्ण साधनहरूलाई परित्याग गरेको
**अनुवर्तिनि** = अनुकूल
**अल्पभाषिणि** = थोरै बोल्ने
**शुश्रूषमाणे** = सेवापरायण
**अर्भके** = बालक
**मयि** = ममा
**कृपां** = कृपा
**चक्रुः** = गर्नुभयो

**वाक्यार्थ–** यद्यपि म बालक थिएँ तापनि ममा कुनै प्रकारको चञ्चलता थिएन। म जितेन्द्रिय थिएँ, खेलकूदबाट टाढा रहन्थैं, आज्ञानुसार मुनिहरूको सेवा गर्दथैं र बोल्न पनि निकै कम बोल्दथैं। मेरो यस्तो शील र स्वभावलाई देखेर मुनिहरूले ममाथि ठुलो कृपा गर्नुभयो।

**उच्छिष्टलेपाननुमोदितो द्विजैः**
**सकृत् स्म भुञ्जे तदपास्तकिल्बिषः।**
**एवं प्रवृत्तस्य विशुद्धचेतस-**
**स्तद्धर्म एवात्मरुचिः प्रजायते॥ २५॥**

**पदार्थ–**
**द्विजैः** = ती वेदवादी ब्राह्मणहरूद्वारा
**अनुमोदितः** = आज्ञालाई प्राप्त गरेर म
**उच्छिष्टलेपान्** = उहाँहरूले खाएर बाँकी रहेको अन्न
**सकृत्** = एकपटक
**भुञ्जे स्म** = खाने गर्दथैं
**तद्** = त्यस भोजनद्वारा
**अपास्तकिल्बिषः** = सम्पूर्ण पापले रहित भएको भएँ
**एवं** = यसप्रकार
**प्रवृत्तस्य** = सेवा गर्दागर्दै
**विशुद्धचेतसः** = चित्त शुद्ध भएपछि
**तद्धर्मः** = उहाँहरूले गर्नुभएको परमेश्वरको भजनरूपी धर्म
**एव** = नै
**आत्मरुचिः** = मेरो मनको पनि रुचि
**प्रजायते** = हुन लाग्यो

**वाक्यार्थ–** वेदवादी ब्राह्मणको अनुमति पाइसकेपछि उहाँहरूले खाएर बाँकी रहेको भोजन म दिनको एक पटक गर्दथैं। यसबाट मेरा सम्पूर्ण पापहरू नष्ट भए। यसप्रकार उहाँहरूको सेवा गर्दागर्दै मेरो हृदय शुद्ध भयो। उहाँहरू जसरी भजन र पूजन गर्नुहुन्थ्यो, त्यो काममा मेरो पनि रुचि भयो।

**तत्रान्वहं कृष्णकथाः प्रगायता-**
**मनुग्रहेणाशृणवं मनोहराः।**
**ताः श्रद्धया मेऽनुपदं विशृण्वतः**
**प्रियश्रवस्यङ्ग ममाभवद्रुचिः॥ २६॥**

पदार्थ–

**अङ्ग** = हे मुनि
**तत्र** = त्यहाँ
**अन्वहं** = प्रतिदिन
**मनोहराः** = मनलाई हरण गर्ने
**कृष्णकथाः** = भगवान् श्रीकृष्णको कथा
**प्रगायताम्** = भन्ने महात्माहरूको
**अनुग्रहेण** = अनुग्रहद्वारा ती कथाहरू
**आश्रृणवं** = राम्रोसँग सुनैं
**ताः** = ती कथाहरू
**श्रद्धया** = श्रद्धापूर्वक
**अनुपदं** = प्रत्येक पद
**विश्रृण्वतः** = श्रवण गर्दागर्दै
**प्रियश्रवसि** = पवित्र कीर्ति भएका परमात्मामा
**मम** = मेरो
**रुचिः** = रुचि
**अभवत्** = भयो

**वाक्यार्थ–** प्रिय व्यासजी, त्यस सत्सङ्गमा लीलागानपरायण महात्माको अनुग्रहले म प्रतिदिन भगवान् श्रीकृष्णका मनोहर कथाहरू सुन्ने गर्दथैं। श्रद्धापूर्वक एक-एक पद सुन्दासुन्दै प्रियकीर्ति भगवान्मा मेरो रुचि भयो।

**तस्मिंस्तदा लब्धरुचेर्महामुने**
**प्रियश्रवस्यस्खलिता मतिर्मम।**
**ययाहमेतत् सदसत् स्वमायया**
**पश्ये मयि ब्रह्मणि कल्पितं परे ॥ २७ ॥**

पदार्थ–

**महामुने** = व्यासजी
**तदा** = त्यस वेला
**तस्मिन्** = ती
**प्रियश्रवसि** = पवित्रकीर्ति परमात्मामा
**लब्धरुचेः** = रुचि भएका
**मम** = मेरो
**अस्खलिता** = निश्चल
**मतिः** = बुद्धि भयो
**यया** = जुन बुद्धिद्वारा
**अहम्** = म
**एतत्** = यो
**सदसत्** = सत् र असत् रुग्ण संसारलाई
**मयि** = आत्मरूप
**परे** = परम
**ब्रह्मणि** = ब्रह्ममा
**स्वमायया** = मायाद्वारा
**कल्पितं** = कल्पित रूपले
**पश्ये** = देख्दछु

**वाक्यार्थ–** जब भगवान्मा मेरो रुचि भयो तब मनोहर प्रभुमा मेरो बुद्धि निश्चल भयो। त्यस बुद्धिद्वारा सम्पूर्ण सत् र असत्‌रूप जगत्‌लाई आफ्नो परब्रह्मस्वरूप आत्मामा मायाद्वारा कल्पित देख्न थालैं।

**इत्थं शरत्प्रावृषिकावृतू हरे-**
**र्विश्रृण्वतो मेऽनुसवं यशोऽमलम्।**

**सङ्कीर्त्यमानं मुनिभिर्महात्मभि-**

**र्भक्तिः प्रवृत्ताऽऽत्मरजस्तमोपहा ॥ २८ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **इत्थं** = यसप्रकार | **यशः** = कीर्ति | **आत्मरजस्तमोपहा** = जीवात्मा- |
| **महात्मभिः** = महात्मा | **अनुसवं** = दिनको तीन पटक | हरूको रजोगुण र तमोगुणलाई |
| **मुनिभिः** = मुनिहरूद्वारा | **शरत्प्रावृषिकौ** = वर्षा र शरत् | नष्ट गर्ने |
| **सङ्कीर्त्यमानं** = गाइएको | **ऋतू** = ऋतुमा | **भक्तिः** = भगवान्मा भक्ति |
| **हरेः** = भगवान् नारायणको | **विशृण्वतः** = सुन्दासुन्दै | **प्रवृत्ता** = लाग्यो |
| **अमलम्** = निर्मल | **मे** = मेरो | |

**वाक्यार्थ–** यसप्रकार शरद् र वर्षा यी दुई ऋतुहरूमा दिनको तीन पटक महात्मा मुनिहरूले श्रीहरिको निर्मल कीर्तिको वर्णन गर्नुभयो। म प्रेमपूर्वक प्रत्येक कुरा सुन्दथेँ, यसकारणले गर्दा मेरा हृदयमा चित्तको रजोगुण र तमोगुणलाई नाश गर्ने भक्तिको प्रादुर्भाव भयो।

**तस्यैवं मेऽनुरक्तस्य प्रश्रितस्य हतैनसः।**

**श्रद्दधानस्य बालस्य दान्तस्यानुचरस्य च ॥ २९ ॥**

**ज्ञानं गुह्यतमं यत्तत् साक्षाद्भगवतोदितम्।**

**अन्ववोचन् गमिष्यन्तः कृपया दीनवत्सलाः ॥ ३० ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **एवं** = यसप्रकारले | **तस्य** = शुद्ध त्वं पदार्थस्वरूप | **गुह्यतमं** = अत्यन्त गोप्य |
| **अनुरक्तस्य** = भगवान्मा आसक्त | **बालस्य** = बालक | **ज्ञानं** = भागवताख्य शास्त्रलाई |
| **प्रश्रितस्य** = नम्र | **मे** = ममाथि कृपा गरेर | **दीनवत्सलाः** = ती दीनवत्सल |
| **हतैनसः** = पापले रहित | **यत्** = जुन | महात्माहरूले |
| **श्रद्दधानस्य** = श्रद्धाले युक्त | **साक्षात्** = साक्षात् | **गमिष्यन्तः** = जाने समयमा |
| **दान्तस्य** = जितेन्द्रिय | **भगवता** = भगवान् नारायणले | **कृपया** = कृपा गरेर |
| **च** = र | **उदितम्** = ब्रह्माजीलाई | **अन्ववोचन्** = उपदेश गर्नुभयो |
| **अनुचरस्य** = सेवापरायण | बताइएको | |

**वाक्यार्थ–** म उहाँहरूको ज्यादै अनुरागी थिएँ र विनयी पनि थिएँ। उहाँहरूको सेवाले मेरा पापहरू नष्ट भएका थिए। मेरा हृदयमा श्रद्धा थियो। शरीर वाणी र मनले म उहाँहरूको आज्ञाकारी थिएँ। यसैले ममाथि कृपा गरेर ती दीनवत्सल महात्माहरूले जाने समयमा त्यो गुह्यतम ज्ञानको उपदेश गर्नुभयो, जसको उपदेश स्वयं भगवान्ले आफ्नो श्रीमुखले गर्नुभएको थियो।

**येनैवाहं भगवतो वासुदेवस्य वेधसः।**

**मायानुभावमविदं येन गच्छन्ति तत्पदम्॥ ३१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **येन** = जुन ज्ञानले | प्रभावलाई | स्वरूपलाई |
| **वेधसः** = जगत्को रचना गर्ने | **अहं** = मैले | **एव** = नै |
| **भगवतः** = भगवान् | **अविदं** = जानैं | **गच्छन्ति** = मुमुक्षुहरू प्राप्त |
| **वासुदेवस्य** = वासुदेवको | **येन** = जुन ज्ञानले | गर्दछन् |
| **मायानुभावम्** = मायाको | **तत्पदम्** = भगवान्को | |

**वाक्यार्थ–** त्यस उपदेशले जगन्निर्माता भगवान् श्रीकृष्णको मायाको प्रभावलाई मैले जानैं जसलाई जानेपछि मुमुक्षुहरू उहाँको परमपद प्राप्त गर्दछन्।

**एतत् संसूचितं ब्रह्मंस्तापत्रयचिकित्सितम्।**

**यदीश्वरे भगवति कर्म ब्रह्मणि भावितम्॥ ३२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ब्रह्मन्** = हे वेदव्यासजी | **भावितम्** = समर्पण गरिएको | काम गर्ने |
| **यत्** = जुन | कर्म नै | **एतत्** = यो |
| **ईश्वरे** = सर्वाभिमानी | **तापत्रयचिकित्सितम्** = | **कर्म** = कर्म |
| **भगवति** = सगुण | आध्यात्मिक आदि तीन तापलाई | **संसूचितं** = बताएँ |
| **ब्रह्मणि** = ब्रह्ममा | नष्ट गर्नका लागि औषधीको | |

**वाक्यार्थ–** हे वेदव्यासजी ! पुरुषोत्तम भगवान् श्रीकृष्णप्रति सम्पूर्ण कर्मलाई समर्पण गर्नु नै संसारको तीन तापको एकमात्र औषधि हो, यो कुरा मैले यहाँलाई बताएँ।

**आमयो यश्च भूतानां जायते येन सुव्रत।**

**तदेव ह्यामयं द्रव्यं न पुनाति चिकित्सितम्॥ ३३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सुव्रत** = नियमको पालन गर्ने | **जायते** = उत्पन्न हुन्छ | **चिकित्सितम्** = शोधन गरिएको |
| वेदव्यासजी (जसरी) | **तत्** = त्यही | त्यही पदार्थले |
| **भूतानां** = प्राणीहरू | **द्रव्यं** = पदार्थले | **च** = चाहिँ |
| **यः** = जुन | **एव** = नै | **हि** = निश्चय नै |
| **आमयः** = रोग | **न आमयं** = त्यही रोगलाई नष्ट | **पुनाति** = पवित्र (स्वस्थ) |
| **येन** = जुन पदार्थबाट | गर्न सक्दैन तर | बनाउँछ |

**वाक्यार्थ–** नियमको पालन गर्ने हे वेदव्यासजी ! प्राणीहरूलाई जुन पदार्थको सेवनबाट जुन रोग

लाग्दछ त्यही पदार्थ चिकित्सा विधिबाट शोधन गरेर प्रयोग गर्दाखेरि त्यस रोगलाई नष्ट गर्दछ।

**एवं नृणां क्रियायोगाः सर्वे संसृतिहेतवः।**

**त एवात्मविनाशाय कल्पन्ते कल्पिताः परे॥ ३४॥**

**पदार्थ–**

**एवं** = यसप्रकार
**नृणां** = मनुष्यहरूका
**सर्वे** = सबै
**क्रियायोगाः** = क्रियायोगहरू
**संसृतिहेतवः** = जन्म र मृत्युका कारण बन्दछन्
**ते** = तिनै क्रियायोगहरू
**परे** = ईश्वरमा
**कल्पिताः** = समर्पित गरेका खण्डमा
**एव** = चाहिँ
**आत्मविनाशाय** = आफ्नै विनाशका लागि
**कल्पन्ते** = बन्दछन्

**वाक्यार्थ–** यसप्रकार यद्यपि सम्पूर्ण कर्महरू मनुष्यलाई जन्म र मृत्युरूप संसारको चक्रमा पार्ने खालका हुन्छन्। यदि भगवान्मा समर्पण गरेर ती कर्महरू गर्ने हो भने त्यस्ता कर्महरूले आफ्नै कर्मपनलाई पनि नष्ट गर्दछन्।

**यदत्र क्रियते कर्म भगवत्परितोषणम्।**

**ज्ञानं यत्तदधीनं हि भक्तियोगसमन्वितम्॥ ३५॥**

**पदार्थ–**

**हि** = निश्चय नै
**अत्र** = यो कर्मभूमिमा
**भगवत्परितोषणम्** = भगवान्लाई प्रसन्न गराउने
**यत्** = जुन
**कर्म** = कर्म
**क्रियते** = गरिन्छ
**भक्तियोगसमन्वितम्** = भक्तियोगले युक्त भएको
**ज्ञानं** = ज्ञान
**तदधीनं** = त्यही कर्मको अधीनमा हुन्छ

**वाक्यार्थ–** यस लोकमा भगवान्को प्रसन्नताका लागि जुन कर्म गरिन्छ भक्तियोगले युक्त भएको ज्ञान त्यही कर्मको अधीनमा हुन्छ।

**कुर्वाणा यत्र कर्माणि भगवच्छिक्षयासकृत्।**

**गृणन्ति गुणनामानि कृष्णस्यानुस्मरन्ति च॥ ३६॥**

**पदार्थ–**

**यत्र** = जुन समयमा
**भगवच्छिक्षया** = भगवान्को शिक्षालाई प्राप्त गरेर
**कर्माणि** = कर्महरू
**कुर्वाणाः** = गर्दछन् (त्यस समयमा)
**कृष्णस्य** = श्रीकृष्णको
**गुणनामानि** = गुण र नामहरू
**असकृत्** = बारम्बार
**गृणन्ति** = लिने गर्दछन्
**अनुस्मरन्ति च** = (भगवान् कृष्णको) स्मरण पनि गर्दछन्।

**वाक्यार्थ–** भगवान् प्रसन्न गराउनका लागि गरिने कर्ममार्गमा उहाँको आज्ञानुसार आचरण गर्दै मानिसहरू बारम्बार भगवान् श्रीकृष्णको गुणगान, नामकीर्तन तथा स्मरण गर्दछन्।

**नमो भगवते तुभ्यं वासुदेवाय धीमहि ।**
**प्रद्युम्नायानिरुद्धाय नमः सङ्कर्षणाय च ॥ ३७ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तुभ्यं** = तपाईं | **धीमहि** = मनद्वारा गर्दछौँ त्यस्तै | **च** = पनि |
| **भगवते** = भगवान् | **प्रद्युम्नाय** = प्रद्युम्नलाई | **नमः** = नमस्कार छ |
| **वासुदेवाय** = वासुदेवलाई | **अनिरुद्धाय** = अनिरुद्धलाई | |
| **नमः** = नमस्कार | **सङ्कर्षणाय** = सङ्कर्षणलाई | |

**वाक्यार्थ–** हे प्रभु ! तपाईं भगवान् श्रीवासुदेवलाई नमस्कार छ। हामीहरू हजुरको ध्यान गर्दछौँ। प्रद्युम्न, अनिरुद्ध र सङ्कर्षणलाई पनि नमस्कार छ।

**इति मूर्त्यभिधानेन मन्त्रमूर्तिममूर्तिकम् ।**
**यजते यज्ञपुरुषं स सम्यग्दर्शनः पुमान् ॥ ३८ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **इति** = यसप्रकार | **यज्ञपुरुषं** = भगवान् | **सः** = त्यो |
| **मन्त्रमूर्तिम्** = मन्त्र र ध्यानले | यज्ञपुरुषलाई | **पुमान्** = मनुष्य |
| बताएको मूर्ति भएका (वस्तुतः) | **मूर्त्यभिधानेन** = वासुदेव आदि | **सम्यग्दर्शनः** = सम्यग् ज्ञानवान् |
| **अमूर्तिकम्** = कुनै पनि मूर्ति | नामद्वारा | हुन्छ |
| नभएका | **यजते** = जसले पूजा गर्दछ | |

**वाक्यार्थ–** यसप्रकार मन्त्र र ध्यानले बताएको मूर्ति भएका (वस्तुतः) कुनै पनि मूर्ति नभएका भगवान् यज्ञपुरुषलाई वासुदेव आदि नामद्वारा जसले पूजा गर्दछ त्यो मनुष्य सम्यग् ज्ञानवान् हुन्छ।

**इमं स्वनिगमं ब्रह्मन्नवेत्य मदनुष्ठितम् ।**
**अदान्मे ज्ञानमैश्वर्यं स्वस्मिन् भावं च केशवः ॥ ३९ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **ब्रह्मन्** = हे व्यासजी | **अवेत्य** = जानेर | **भावं** = प्रेमा भक्ति |
| **केशवः** = भगवान् नारायणले | **मे** = मलाई | **च** = पनि |
| **इमं** = यो पूर्वोक्त | **ज्ञानम्** = आफ्नो ज्ञान | **अदात्** = दिनुभयो |
| **मदनुष्ठितम्** = मैले गरेको | **ऐश्वर्यं** = अणिमादि ऐश्वर्य | |
| **स्वनिगमं** = उपदेशलाई | **स्वस्मिन्** = आफ्नो | |

**वाक्यार्थ–** ब्रह्मन् ! जब मैले भगवान्को आज्ञाको यसप्रकार पालन गरेँ तब यस कुरालाई जानेर भगवान् श्रीकृष्णले मलाई आत्मज्ञान, ऐश्वर्य र आफ्नो भावरूप प्रेमाभक्ति प्रदान गर्नुभयो।

**त्वमप्यदभ्रश्रुत विश्रुतं विभोः**
**समाप्यते येन विदां बुभुत्सितम्।**
**प्राख्याहि दुःखैर्मुहुरर्दितात्मनां**
**सङ्क्लेशनिर्वाणमुशन्ति नान्यथा ॥ ४० ॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **अदभ्रश्रुत** = बहुश्रुत अर्थात् धेरै शास्त्रका ज्ञाता भएका हे व्यासजी | **विदां** = विद्वान्‌हरूको | **दुःखैः** = दुःखहरूद्वारा |
| **त्वम्** = तपाईंले | **बुभुत्सितम्** = जान्ने इच्छा | **मुहुः** = बारम्बार |
| **अपि** = पनि | **समाप्यते** = समाप्त हुन्छ | **अर्दितात्मनां** = पीडित मन भएका जीवहरूको |
| **येन** = जसको श्रवण गर्नाले | **विश्रुतं** = चारैतिर फैलिएको कीर्तिलाई | **सङ्क्लेशनिर्वाणम्** = पीडाको शान्ति |
| **विभोः** = भगवान्‌को | **प्राख्याहि** = वर्णन गर्नुहोस् | **न उशन्ति** = ठान्दैनन् |
| | **अन्यथा** = अरू कुनै प्रकारले | |

**वाक्यार्थ—** व्यासजी ! तपाईंको ज्ञान पूर्ण छ। तपाईं भगवान्‌को कीर्तिको वर्णन गर्नुहोस्। यसैबाट ठुला-ठुला ज्ञानीहरूको जिज्ञासा पूर्ण हुन्छ। जो मनुष्यहरू दुःखद्वारा बारम्बार सताइएका छन् तिनीहरूको दुःखको शान्ति यसैबाट मात्र सम्भव छ, अरू कुनै उपाय छैन।

**अध्यायविवरण—** महर्षि भगवान् वेदव्यास भगवान् नारायणका कलावतावर हुनुहुन्थ्यो। उहाँले एक वेदलाई चार भागमा विभक्त गरेको हुनाले उहाँको नाम वेदव्यास रहेको हो। वेदव्यासले अन्य १७ ओटा पुराणहरू र महाभारतको रचना गरिसक्दा पनि उहाँको चित्त शान्त भएन। एकदिन उहाँ सूर्योदयको समय सरस्वती नदीको तटमा अत्यन्त खिन्नचित्त भएर बस्नुभएको थियो त्यसै समयमा त्यहाँ देवर्षि नारद आउनुभयो। महर्षि वेदव्यासको मुख अत्यन्त मलिन देखेर देवर्षि नारदले उहाँसँग असन्तोषको कारण सोध्नुभयो। वेदव्यासले भन्नुभयो— हे देवर्षे ! म असन्तुष्ट छु भन्ने कुरामात्र मलाई थाहा छ, तर मेरो असन्तोषको कारण के हो भन्ने कुरा मलाई थाहा छैन। तपाईं भगवान् नारायणका अनन्य भक्त हुनुहुन्छ त्यसकारण तपाईं भूत, वर्तमान र भविष्यत् तीनै कालका कुराहरू जान्नुहुन्छ। अतः आफ्नो योगशक्तिद्वारा तपाईं मेरो असन्तोषको कारण बताइदिनुहोस्। त्यसपछि देवर्षि नारदले ध्यानदृष्टिद्वारा वेदव्यासको असन्तोषको कारणलाई जानेर यसप्रकार उहाँलाई भन्नुभयो— तपाईंले आफ्ना रचनाहरूमा जसरी अरू-अरू विषयको वर्णन गर्नुभएको छ, त्यसरी भगवान् नारायणको भक्तिलाई जोड दिएर वर्णन गर्नुभएको छैन। त्यसै कारणले तपाईंको मनमा सन्तोष नभएको हो।

विभिन्न रस अलङ्कार आदिले युक्त भएको काव्य छ तापनि यदि त्यसमा भगवान्‌को महिमाको वर्णन गरिएको छैन भने भगवान्‌का भक्तहरूले त्यसलाई प्रेमपूर्वक पढ्दैनन्। फेरि त्यस्तो अर्को कुनै काव्य छ, जसमा रस, अलङ्कार आदिको अभाव छ तापनि यदि त्यसमा

भगवान्को महिमाको वर्णन भएको छ भने भगवान्का भक्तहरूले त्यसलाई अत्यन्त प्रेमपूर्वक पढ्दछन्। जीव र ब्रह्मको एकतालाई प्रतिपादन गर्ने ब्रह्मज्ञान पनि यदि भगवान्को भक्तिले रहित छ भने त्यसले जति शोभा पाउनुपर्ने हो, त्यति शोभा पाउन सक्तैन। त्यस्तो कर्म जुन भगवान्मा अर्पण गरिएको छैन भने बहिर्मुख हुनाले त्यो कर्मद्वारा मुमुक्षुको चित्त शान्त हुन नसक्ने हुनाले त्यो कर्म निरर्थक हुन्छ।

यस संसारमा आएको मनुष्यले त्यस्तो वस्तुको प्राप्तिका लागि प्रयास गर्नुपर्दछ जुन वस्तुको प्राप्ति न स्वर्ग आदि लोकहरूमा सम्भव छ, न त नरक आदि लोकमा नै छ। भगवान्मा भक्ति, विषयबाट वैराग्य र ज्ञान यी तीन कुराहरूको प्राप्ति केवल मानवजीवनमा मात्र सम्भव छ। भगवान्को भक्तिको चस्का एकपटक लागेपछि फेरि मनुष्य कुनै पनि परिस्थितिमा संसारी बन्न सक्दैन।

यसप्रकार देवर्षि नारदले भगवान् वेदव्यासलाई उपदेश गर्नुभयो र उहाँको प्रेरणाका लागि आफू पूर्वजन्ममा दासीपुत्र भएको र महापुरुषहरूको कृपाद्वारा देवर्षि नारद भएको पूर्वजन्मको वृत्तान्त पनि सुनाउनुभयो। यसप्रकार देवर्षि नारदबाट प्रेरणा प्राप्त गरेर आश्रममा बसेर वेदव्यासले परमहंससंहिता श्रीमद्भागवतको रचना गर्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां प्रथमस्कन्धे**

**व्यासनारदसंवादे पञ्चमोऽध्यायः॥ ५॥**

# अथ षष्ठोऽध्यायः

## नारदजीको पूर्व जुनीको वर्णनको बाँकी अंश

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**एवं निशम्य भगवान् देवर्षेर्जन्म कर्म च।**

**भूयः पप्रच्छ तं ब्रह्मन् व्यासः सत्यवतीसुतः॥ १॥**

पदार्थ—

**ब्रह्मन्** = हे शौनक जी
**एवं** = यसप्रकार
**देवर्षेः** = देवर्षि नारदको
**जन्म** = जन्म र
**कर्म च** = कर्म पनि
**निशम्य** = सुनेर
**सत्यवतीसुतः** = सत्यवतीका छोरा
**भगवान्** = भगवान्
**व्यासः** = वेदव्यासले
**तं** = ती नारदलाई
**भूयः** = फेरि
**पप्रच्छ** = सोध्नुभयो

**वाक्यार्थ—** हे शौनकजी ! देवर्षि नारदको जन्म र साधनाको कुरा सुनेर सत्यवतीका छोरा भगवान् वेदव्यासले नारदजीसँग फेरि प्रश्न गर्नुभयो।

**व्यास उवाच** (व्यासजीले भन्नुभयो)

**भिक्षुभिर्विप्रवसिते विज्ञानादेष्टृभिस्तव।**

**वर्तमानो वयस्याद्ये ततः किमकरोद् भवान्॥ २॥**

पदार्थ—

**तव** = तपाईंलाई
**विज्ञानादेष्टृभिः** = ज्ञानको उपदेश गर्ने
**भिक्षुभिः** = भिक्षुहरू
**विप्रवसिते** = तपाईंलाई छोडेर अन्यत्र गएपछि
**आद्ये** = बाल्य
**वयसि** = अवस्थामा
**वर्तमानः** = रहनुभएका
**भवान्** = तपाईंले
**ततः** = त्यसपछि
**किम्** = के
**अकरोत्** = गर्नुभयो

**वाक्यार्थ—** तपाईंलाई ज्ञानको उपदेश गर्ने महात्माहरूले तपाईंलाई बाल्य अवस्थामा नै छोडेर गएपछि तपाईंले के गर्नुभयो ?

**स्वायम्भुव कया वृत्त्या वर्तितं ते परं वयः।**

**कथं चेदमुदस्राक्षीः काले प्राप्ते कलेवरम्॥ ३॥**

पदार्थ—

**स्वायम्भुव** = ब्रह्माजीका पुत्र हे नारदजी
**ते** = तपाईंको
**परं** = बाल्यावस्थादेखि अतिरिक्तको
**वयः** = आयु (समय)
**कया** = कुन
**वृत्त्या** = प्रकारले
**वर्तितं** = बित्यो
**काले** = मरण काल
**प्राप्ते** = प्राप्त भएपछि
**इदम्** = यो
**कलेवरम्** = दासीपुत्रको शरीरलाई
**कथं च** = कसरी
**उदस्राक्षीः** = छोड्नुभयो

**वाक्यार्थ—** हे स्वयम्भूपुत्र नारदजी ! तपाईंले आफ्नो शेष आयुलाई कसरी बिताउनुभयो ? मृत्युको समयमा कुन विधिले आफ्नो शरीरको त्याग गर्नुभयो ?

**प्राक्कल्पविषयामेतां स्मृतिं ते मुनिसत्तम ।**
**न ह्येष व्यवधात् काल एष सर्वनिराकृतिः ॥ ४ ॥**

पदार्थ—

**मुनिसत्तम** = हे देवर्षि
**सर्वनिराकृतिः** = सम्पूर्ण वस्तुहरूलाई नष्ट गर्ने
**एषः** = त्यो
**काल** = कालले
**ते** = तपाईंको
**प्राक्कल्पविषयाम्** = पूर्व कल्पको
**एतां** = यो
**स्मृतिं** = स्मृतिलाई
**न व्यवधात्** = किन नाश गरेन

**वाक्यार्थ—** हे देवर्षि ! कालले सम्पूर्ण वस्तुलाई नष्ट गर्दछ तर त्यस कालले तपाईंको पूर्वकल्पको स्मृतिलाई किन नष्ट गरेन ?

**नारद उवाच** (नारदजीले भन्नुभयो)

**भिक्षुभिर्विप्रवसिते विज्ञानादेष्टृभिर्मम ।**
**वर्तमानो वयस्याद्ये तत एतदकारषम् ॥ ५ ॥**

पदार्थ—

**मम** = मलाई
**विज्ञानादेष्टृभिः** = विज्ञानको उपदेश गर्ने महात्माहरू
**भिक्षुभिः** = भिक्षुहरूले
**विप्रवसिते** = मलाई छोडेर अन्यत्र गएपछि
**आद्ये वयसि** = बाल्यावस्थामा
**वर्तमानः** = रहेको मैले
**ततः** = त्यसपछि
**एतत्** = यो
**अकारषम्** = गरैं

**वाक्यार्थ—** मलाई ज्ञानको उपदेश गर्ने महात्माहरू गएपछि बाल्यावस्थामा रहेको मैले आफ्नो जीवन यसप्रकार व्यतीत गरैं।

**एकात्मजा मे जननी योषिन्मूढा च किङ्करी ।**
**मय्यात्मजेऽनन्यगतौ चक्रे स्नेहानुबन्धनम् ॥ ६ ॥**

**पदार्थ–**

**एकात्मजा** = म एउटै छोरो भएको
**मे** = मेरी
**जननी** = आमा
**योषित्** = स्त्री
**मूढा** = अल्पबुद्धियुक्त भएकी र
**किङ्करी च** = दासी पनि हुनुहुन्थ्यो
**अनन्यगतौ** = उहाँलाई छोडेर अरू कुनै सहारा नभएको
**मयि** = म
**आत्मजे** = छोरामा
**स्नेहानुबन्धनम्** = अत्यन्त स्नेह
**चक्रे** = गर्दथिन्

**वाक्यार्थ–** मेरी आमाको म एकमात्र छोरो थिएँ। मेरी आमा स्त्री, अल्पबुद्धि भएकी र दासी हुनुहुन्थ्यो। उहाँलाई छोडेर मेरा लागि अरू कुनै सहारा थिएन। मेरी आमाको ममाथि ज्यादै स्नेह थियो।

**सास्वतन्त्रा न कल्पाऽऽसीद् योगक्षेमं ममेच्छती ।**
**ईशस्य हि वशे लोको योषा दारुमयी यथा ॥ ७ ॥**

**पदार्थ–**

**मम** = मेरो
**योगक्षेमं** = योग र क्षेमका विषयमा
**इच्छती** = चिन्ता गर्नुहुन्थ्यो परन्तु
**सा** = उहाँ
**अस्वतन्त्रा** = परतन्त्र हुनाले
**न कल्पासीत्** = योगक्षेमका लागि असमर्थ हुनुहुन्थ्यो
**यथा** = जसरी
**दारुमयी योषा** = कठपुतली (नचाउनेवालाको वशमा हुन्छ)
**ईशस्य** = ईश्वरको
**हि** = निश्चय नै
**लोकः** = यो सम्पूर्ण संसार
**वशे** = वशमा छ

**वाक्यार्थ–** उहाँ सधैं मेरो योगक्षेमको चिन्ता गर्नुहुन्थ्यो। परन्तु पराधीन हुनाले उहाँ मेरा लागि केही पनि गर्न सक्नुहुन्नथ्यो। जसरी कठपुतली नचाउने मान्छेका इच्छाको अनुसार चल्दछ; त्यसै गरी यो सम्पूर्ण संसार ईश्वरकै अधीनमा चल्छ।

**विवरण–** परमात्मा यस संसारको अभिन्ननिमित्तोपादान कारण हुनुहुन्छ। कुनै कार्यका प्रति एउटै वस्तु निमित्तकारण र उपादानकारण दुबै बन्यो भने त्यस्तो कारणलाई अभिन्ननिमित्तो-पादानकारण भनिन्छ। माकुराले जालो बुन्दाखेरि जालो कार्य हो भने त्यसको उपादानकारण र निमित्तकारण दुबै माकुरो नै हो। जालोरूप कार्यका प्रति माकुराको शरीर उपादानकारण हुन्छ भने माकुराभित्रको चेतनतत्त्व निमित्तकारण हुन्छ। मुण्डकोपनिषद् (१।१।७)मा यही कुरा यसप्रकार बताइएको छ– जसरी माकुराले जालो फैलाउँछ र फेरि आफूमा नै लीन पनि गर्दछ। जसरी पृथिवीमा विभिन्न प्रकारका वनस्पतिहरू उत्पन्न हुन्छन् अनि जसरी जीवित पुरुषबाट दाह्री-जुँगाहरू उत्पन्न हुन्छन्। त्यसै गरी परमात्माबाट यो संसार उत्पन्न हुन्छ।

उपादानकारणविना कार्यको आफ्नो छुट्टै अस्तित्व हुँदैन। उदाहरणका लागि माटोबाट घडा

उत्पन्न हुँदा घडा कार्य हो, त्यसको उपादानकारण माटो हो। माटोविना घडाको कुनै अस्तित्व हुँदैन। त्यसै गरी परमात्माविना यो संसारको कुनै अस्तित्व छैन।

**अहं च तद्ब्रह्मकुले ऊषिवांस्तदपेक्षया।**
**दिग्देशकालाव्युत्पन्नो बालकः पञ्चहायनः॥ ८॥**

पदार्थ—

**अहं** = म
**तदपेक्षया** = आफ्नो आमाको स्नेह बन्धनमा बाँधिएर
**च** = पनि
**तद्ब्रह्मकुले** = ब्राह्मणहरूको त्यस वस्तीमा
**ऊषिवान्** = म बसेँ
**पञ्चहायनः** = पाँच वर्षको
**दिग्देशकालाव्युत्पन्नः** = दिशा, देश र कालका सम्बन्धमा केही थाहा नपाएको
**बालकः** = बालक थिएँ

**वाक्यार्थ—** म आफ्नी आमाको स्नेहबन्धनमा बाँधिएर त्यही ब्रह्मवस्तीमा नै बसेँ। मेरो अवस्था केवल पाँच वर्षको थियो। मलाई दिशा, देश र कालको सम्बन्धमा अलिकति पनि ज्ञान थिएन।

**एकदा निर्गतां गेहाद् दुहन्तीं निशि गां पथि।**
**सर्पोऽदशत्पदा स्पृष्टः कृपणां कालचोदितः॥ ९॥**

पदार्थ—

**एकदा** = एक दिन
**निशि** = रातका समयमा
**गां** = गाई
**दुहन्तीं** = दुहुनका लागि
**गेहात्** = घरबाट
**निर्गतां** = निक्लेकी
**कृपणां** = दुःखी ती मेरी आमालाई
**पथि** = बाटोमा
**पदा** = गोडाले
**आस्पृष्टः** = स्पर्श गरिएको
**कालचोदितः** = कालद्वारा प्रेरित
**सर्पः** = सर्पले
**अदशत्** = डस्यो

**वाक्यार्थ—** एक दिनको कुरा हो, मेरी आमा गाई दुहुनका लागि घरबाट बाहिर निक्लनुभएको थियो। बाटोमा उहाँका गोडाले सर्पलाई कुल्चेको हुनाले कालद्वारा प्रेरित भएको त्यस सर्पले उहाँलाई डस्यो।

**तदा तदहमीशस्य भक्तानां शमभीप्सतः।**
**अनुग्रहं मन्यमानः प्रातिष्ठं दिशमुत्तराम्॥ १०॥**

पदार्थ—

**तदा** = त्यस समयमा
**तत्** = आमाको त्यो मृत्युलाई
**भक्तानां** = भक्तहरूको
**शम्** = कल्याण
**अहम्** = मैले
**अभीप्सतः** = चाहने
**ईशस्य** = ईश्वरको
**अनुग्रहं** = अनुग्रह हो भन्ने
**मन्यमानः** = ठानेर
**उत्तराम् दिशम्** = उत्तर दिशातिर
**प्रातिष्ठं** = प्रस्थान गरेँ

**वाक्यार्थ–** आमाको मृत्युलाई मैले भक्तहरूको मङ्गल चाहने भगवान्‌को यो मप्रति ठुलो अनुग्रह हो भन्ने ठानेँ। त्यसपछि म उत्तर दिशातिर लागेँ।

**स्फीताञ्जनपदांस्तत्र पुरग्रामव्रजाकरान्।**
**खेटखर्वटवाटीश्च वनान्युपवनानि च॥ ११॥**
**चित्रधातुविचित्राद्रीनिभभग्नभुजद्रुमान्।**
**जलाशयाञ्छिवजलान्नलिनीः सुरसेविताः॥ १२॥**
**चित्रस्वनैः पत्ररथैर्विभ्रमद्भ्रमरश्रियः।**
**नलवेणुशरस्तम्बकुशकीचकगह्वरम्॥ १३॥**
**एक एवातियातोऽहमद्राक्षं विपिनं महत्।**
**घोरं प्रतिभयाकारं व्यालोलूकशिवाजिरम्॥ १४॥**

**पदार्थ–**

**तत्र** = त्यहाँ
**स्फीतान्** = धनधान्य आदिले सम्पन्न भएका
**जनपदान्** = देशहरूलाई
**पुरग्रामव्रजाकरान्** = शहर, गाउँ, गोपाल वस्ती र रत्नादि खानीहरूलाई
**वनानि** = जङ्गल
**उपवनानि** = बगैँचाहरूलाई
**खेटखर्वटवाटीः** = पर्वतका नजिकका र साना गाउँहरू एवं बगैँचाहरू
**च** = पनि
**चित्रधातुविचित्राद्रीन्** = विभिन्न धातुहरूले युक्त भएको पर्वतहरूलाई
**इभभग्नभुजद्रुमान्** = हात्तीद्वारा हाँगा भाँचिएका वृक्षहरूलाई
**सुरसेविताः** = देवताहरूले उपयोग गर्ने खालका
**जलाशयान्** = तलाउहरूलाई
**नलिनीः** = कमलहरूले युक्त भएका
**शिवजलान्** = शीतल जलवाला
**चित्रस्वनैः** = विभिन्न सुमधुर स्वरवाला
**पत्ररथैः** = पक्षीहरूसँग
**विभ्रमद्भ्रमरश्रियः** = घुमिरहने भ्रमर फूलका शोभाहरूलाई
**नलवेणुशरस्तम्बकुशकीचकगह्वरम्** = निगाला, विभिन्न जातका बाँस, कुश र घाँसका झाडीहरूले गर्दा अत्यन्त भयानक लाग्ने
**एकः एव** = एक्लै नै
**अतियातः** = उत्तर दिशातिर हिँडेको
**अहम्** = मैले
**व्यालोलूकशिवाजिरम्** = सर्प, लाटोकोसेरो र स्यालहरू खेल्ने
**घोरं** = डरलाग्दो
**प्रतिभयाकारं** = डरमाथि पनि डर थपिने
**महत्** = ठुलो
**विपिनं** = जङ्गललाई
**अद्राक्षं** = देखेँ

**वाक्यार्थ–** त्यस मार्गमा मैले अनेक धनधान्यले सम्पन्न देश, नगर, गाउँ, नदी र पर्वतको तटवर्ती स्थानहरू, वाटिका, वन-उपवन र रङ्गविरङ्गका धातुहरूले युक्त भएका अत्यन्त सुन्दर पर्वतहरू

देखेँ। कहीँकहीँ जङ्गली वृक्षहरू थिए। जसका हाँगाहरू हात्तीले भाँचिदिएका थिए। शीतल जलले भरिएका जलाशय थिए। जहाँ देवताहरूको काममा आउने खालका कमल थिए। त्यहाँ पक्षीहरू विभिन्न प्रकारका आवाज गरिरहेका थिए। भमराहरू भुँ-भुँ गरिरहेका थिए। यी सबै दृश्य हेर्दै म अगाडि बढेँ। यति लामो बाटो पार गरिसकेपछि मैले एउटा ज्यादै डरलाग्दो र ठुलो जङ्गल देखेँ।

**परिश्रान्तेन्द्रियात्माहं तृट्परीतो बुभुक्षितः।**
**स्नात्वा पीत्वा ह्रदे नद्या उपस्पृष्टो गतश्रमः॥ १५॥**
**तस्मिन्निर्मनुजेऽरण्ये पिप्पलोपस्थ आश्रितः।**
**आत्मनाऽऽत्मानमात्मस्थं यथाश्रुतमचिन्तयम्॥ १६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **परिश्रान्तेन्द्रियात्मा** = सम्पूर्ण इन्द्रिय र शरीर थाकेर चूर भएको | **पीत्वा** = पानी पिएर | **आत्मस्थं** = हृदाकाशमा बस्ने |
| **तृट्परीतः** = तिर्खाएको | **उपस्पृष्टः** = आगमन गरेँ | **आत्मानम्** = परमात्मालाई |
| **बुभुक्षितः** = भोकाएको | **गतश्रमः** = श्रमरहित भएको | **यथाश्रुतम्** = परमहंसहरूले बताए जसरी नै |
| **अहं** = म | **अहं** = म | **अरण्ये** = जङ्गलमा |
| **नद्याः** = कुनै नदीको | **तस्मिन्** = त्यो | **आश्रितः** = बसेर |
| **ह्रदे** = कुण्डमा | **निर्मनुजे** = कोही पनि मनुष्य नभएको | **अचिन्तयम्** = चिन्तन गरेँ |
| **स्नात्वा** = स्नान गरेर | **पिप्पलोपस्थे** = पिपलको फेदमा | |
| | **आत्मना** = समाहित मनले | |

**वाक्यार्थ–** मार्गमा हिँड्दा-हिँड्दै मेरो शरीर र इन्द्रियहरू अत्यन्त शिथिल भएका थिए। मलाई ज्यादै भोक र तिर्खा पनि लागेको थियो। त्यहाँ मलाई एउटा नदीको नजिक म पुगेँ। नदीको तलाउमा मैँले स्नान, आचमन र जलपान गरेँ। यसबाट मेरो थकाइ हट्यो। त्यस निर्जन वनमा पीपलको फेदमा आसन लगाएर म बसेँ। महात्माहरूबाट मैले जे सुनेको थिएँ परमात्माको त्यही स्वरूपको मैले मनमनै ध्यान गर्न लागेँ।

**ध्यायतश्चरणाम्भोजं भावनिर्जितचेतसा।**
**औत्कण्ठ्याश्रुकलाक्षस्य हृद्यासीन्मे शनैर्हरिः॥ १७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भावनिर्जितचेतसा** = भगवान्‌का प्रेमले वशीभूत हृदयद्वारा | **ध्यायतः** = ध्यान गर्दै गरेको | **हृदि** = हृदयमा |
| **चरणाम्भोजं** = भगवान्‌का चरकमललाई | **औत्कण्ठ्याश्रुकलाक्षस्य** = अत्यन्त उत्कण्ठाका कारणले आँखाभरि आँसु भएको मेरो | **शनैः** = बिस्तारै-बिस्तारै |
| | | **हरिः** = भगवान् श्रीहरि |
| | | **आसीत्** = प्रकट हुनुभयो |

**वाक्यार्थ–** भक्तिभावबाट वशीकृत चित्तद्वारा भगवान्‌का चरणकमलको ध्यान गर्दागर्दै भगवत् प्राप्तिको उत्कट इच्छाले आँखाबाट आँसु आउन लाग्यो र मेरो हृदयमा विस्तारै-विस्तारै भगवान् प्रकट हुनुभयो।

**प्रेमातिभरनिर्भिन्नपुलकाङ्गोऽतिनिर्वृतः।**
**आनन्दसम्प्लवे लीनो नापश्यमुभयं मुने॥ १८॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **मुने** = हे व्यासजी, त्यस समयमा | अङ्ग पुलकित भएको | बाढीमा |
| **प्रेमातिभरनिर्भिन्नपुलकाङ्गः** = प्रेम भावको उद्रेकका कारणले अङ्ग | **अतिनिर्वृतः** = समाहित र शान्त हृदयद्वारा | **लीनः** = चुर्लुम्म डुबेको मैले |
| | **आनन्दसम्प्लवे** = आनन्दको | **उभयं** = दुबैलाई |
| | | **न अपश्यम्** = सम्झिनँ |

**वाक्यार्थ–** हेर्नुहोस् वेदव्यास जी ! त्यस समयमा प्रेम भावको अत्यन्त उद्रेकद्वारा मेरो शरीरमा रोमाञ्च पैदा भयो। हृदय अत्यन्त शान्त र शीतल भयो। आनन्दको बाढीमा म यसरी डुबेँ कि मलाई आफ्नो र ध्येय वस्तुको केही पनि भान भएन।

**रूपं भगवतो यत्तन्मनःकान्तं शुचापहम्।**
**अपश्यन् सहसोत्तस्थे वैक्लव्याद्दुर्मना इव॥ १९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भगवतः** = भगवान्‌को | **रूपं** = रूप छ | कारणले |
| **यत्** = जुन | **तत्** = त्यसलाई | **दुर्मनाः इव** = भारी मन गराई |
| **मनःकान्तं** = मनमोहक | **सहसा** = अनायास | **अपश्यन्** = नदेखेर |
| **शुचापहम्** = शोकनाशक | **वैक्लव्यात्** = विफलताको | **उत्तस्थे** = झटपट आसनबाट उठेँ |

**वाक्यार्थ–** भगवान्‌को त्यो अनिर्वचनीय स्वरूप समस्त शोकलाई नाश गर्ने र मनलाई अत्यन्त लोभ्याउने खालको थियो। अकस्मात् त्यस रूपलाई नदेखदाखेरि म विह्वल भएँ र मेरो मन अत्यन्त दुःखी भयो म आसनबाट उठेँ।

**दिदृक्षुस्तदहं भूयः प्रणिधाय मनो हृदि।**
**वीक्षमाणोऽपि नापश्यमवितृप्त इवातुरः॥ २०॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **भूयः** = फेरि पनि | **ततः च** = त्यसपछि | **न अपश्यम्** = फेरि देख्न सकिनँ |
| **दिदृक्षुः** = हेर्ने इच्छा गर्ने | **मनः** = मनलाई | **अपि** = पनि |
| **अहं** = मैले | **प्रणिधाय** = स्थिर गरेर | **अवितृप्तः इव** = अतृप्तझैँ |
| **हृदि** = हृदयमा | **वीक्षमाणः** = हेर्न खोज्दा | **आतुरः** = आतुर भएँ |

**वाक्यार्थ–** मैले त्यस रूपको दर्शन गर्न फेरि चाहेँ। मनलाई हृदयमा समाहित गरेर बारम्बार दर्शन गर्ने प्रयास गर्दा पनि मैले त्यस रूपलाई फेरि देख्न सकिनँ। म अतृप्तझैँ आतुर भएँ।

**एवं यतन्तं विजने मामाहागोचरो गिराम्।**
**गम्भीरश्लक्ष्णया वाचा शुचः प्रशमयन्निव॥ २१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **एवं** = यसप्रकार | **अगोचरः** = विषय नहुने | **प्रशमयन् इव** = शान्त गराउने |
| **विजने** = निर्जन वनमा | भगवान्ले | उद्देश्यले झैँ |
| **यतन्तं** = प्रयास गरिरहेको | **गम्भीरश्लक्ष्णया** = गम्भीर र मधुर | **आह** = भन्नुभयो |
| **माम्** = मलाई | **गिराम्** = वाणीको | |
| **वाचा** = वाणीले | **शुचः** = शोकलाई | |

**वाक्यार्थ–** यसप्रकार निर्जन वनमा मलाई प्रयत्न गरिरहेको देखेर वाणीका विषय नभएका भगवान्ले अत्यन्त गम्भीर र मधुर वाणीले मेरो शोकलाई शान्त गर्दै भन्नुभयो।

**हन्तास्मिञ्जन्मनि भवान् मा मां द्रष्टुमिहार्हति।**
**अविपक्वकषायाणां दुर्दर्शोऽहं कुयोगिनाम्॥ २२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **हन्त** = यो खेदको कुरा हो | **मा द्रष्टुमर्हति** = देख्न सक्नुहुन्न | लागि |
| **अस्मिन्** = यस | **अहं** = म | **दुर्दर्शः** = उनीहरूको अगाडि |
| **जन्मनि** = जन्ममा | **अविपक्वकषायाणां** = पूर्ण रूपले | प्रकट हुन सक्दिनँ |
| **भवान्** = तपाईंले | वासना शान्त नभएका | |
| **मां** = मलाई | **कुयोगिनाम्** = कुयोगीहरूको | |

**वाक्यार्थ–** दुःखको कुरा के भने यस जन्ममा तिमीले मेरो दर्शन गर्न सक्दैनौ। जसको वासना पूर्णतया शान्त भएको छैन। त्यस्ता भोगीहरूका लागि मेरो दर्शन अत्यन्त दुर्लभ छ।

**सकृद् यद् दर्शितं रूपमेतत् कामाय तेऽनघ।**
**मत्कामः शनकैः साधु सर्वान्मुञ्चति हृच्छयान्॥ २३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अनघ** = हे निष्पाप बालक | **एतत्** = यो एक पटकको दर्शन | इच्छा राख्ने |
| **यत्** = जुन | **ते** = तिम्रो | **साधु** = साधक पुरुष |
| **सकृत्** = एक पटक | **कामाय** = ममा रुचि बढाउनका | **शनकैः** = बिस्तारै बिस्तारै |
| **रूपम्** = रूप | लागि हो | **सर्वान्** = सम्पूर्ण |
| **दर्शितं** = देखाइयो | **मत्कामः** = मलाई प्राप्त गर्ने | **हृच्छयान्** = हृदयका |

वासनाहरूलाई
**मुञ्चति** = त्यागिदिन्छ

**वाक्यार्थ–** हे निष्पाप बालक ! तिम्रा हृदयमा मलाई प्राप्त गर्ने इच्छा जागृत गर्नका लागि मैले एक पटक आफ्नो रूपको दर्शन तिमीलाई गराएको हुँ। मलाई प्राप्त गर्ने आकाङ्क्षाले युक्त साधकले बिस्तारै-बिस्तारै हृदयका सम्पूर्ण वासनालाई त्यागिदिन्छ।

**सत्सेवया दीर्घयापि जाता मयि दृढा मतिः।**

**हित्वावद्यमिमं लोकं गन्ता मज्जनतामसि ॥ २४ ॥**

पदार्थ–

**अदीर्घया** = अल्पकालीन
**अपि** = पनि
**सत्सेवया** = महापुरुषको सेवाले
**मयि** = ममा
**दृढा** = दृढ
**मतिः** = बुद्धि
**जाता** = उत्पन्न भयो भने यसपछि
**इमं** = यो
**अवद्यम्** = शूद्र कुलमा उत्पन्न भएको
**लोकं** = शरीरलाई
**हित्वा** = छोडेर
**मज्जनताम्** = मेरो पार्षद
**गन्ता असि** = भएर जन्मनेछौ

**वाक्यार्थ–** अल्पकालीन सन्त सेवाबाट तिम्रो चित्तवृत्ति ममा स्थिर भएको छ। अब तिमी यो प्राकृत मलीन शरीरलाई छाडेर मेरो पार्षद भएर जन्मनेछौ।

**मतिर्मयि निबद्धेयं न विपद्येत कर्हिचित्।**

**प्रजासर्गनिरोधेऽपि स्मृतिश्च मदनुग्रहात्॥ २५॥**

पदार्थ–

**मयि** = ममा
**निबद्धा** = प्राप्त गर्ने इच्छा लागेको
**इयं** = यो
**मतिः** = बुद्धि
**कर्हिचित्** = कहिल्यै पनि
**न विपद्येत** = छुप्ने छैन
**प्रजासर्गनिरोधे अपि** = प्रायः सम्पूर्ण सृष्टिको प्रलय पछि पनि
**मदनुग्रहात्** = मेरो कृपाले
**स्मृतिः च** = मविषयक स्मृति बनी नै रहनेछ

**वाक्यार्थ–** मलाई प्राप्त गर्ने तिम्रो निश्चयमा कुनै पनि परिवर्तन आउने छैन। समस्त प्राणीको प्रलय भइसकेपछि पनि तिमीलाई मेरो स्मृति बाँकी नै रहनेछ।

**एतावदुक्त्वोपरराम तन्महद्-**

**भूतं नभोलिङ्गमलिङ्गमीश्वरम्।**

**अहं च तस्मै महतां महीयसे**

**शीर्ष्णावनामं विदधेऽनुकम्पितः॥ २६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **एतावद्** = यति | **महद्भूतं** = सर्वव्यापक परमात्मा | **महीयसे** = श्रेष्ठ |
| **उक्त्वा** = भनेर | **उपरराम** = चूप लाग्नुभयो | **तस्मै** = ती भगवान्‌लाई |
| **नभोलिङ्गम्** = हृदयाकाशमा प्रकट हुने | **अनुकम्पितः** = यसप्रकार भगवान्‌को कृपालाई प्राप्त गरेको | **च** = पनि |
| **अलिङ्गम्** = अव्यक्त | **अहम्** = मैले | **शीर्ष्णा** = शिर झुकाएर |
| **ईश्वरम्** = सर्वनियामक | **महतां** = श्रेष्ठहरूमा | **अवनामम्** = प्रणाम |
| **तत्** = शास्त्र प्रसिद्ध | | **विदधे** = गरेँ |

**वाक्यार्थ–** आकाश समान अव्यक्त सर्वशक्तिमान् भगवान् परमात्मा यति भनेर चुप लाग्नुभयो। उहाँको यो कृपाको अनुभव गरेर मैले श्रेष्ठभन्दा श्रेष्ठ परमात्मालाई आफ्नो शिर झुकाएर प्रणाम गरेँ।

**नामान्यनन्तस्य हतत्रपः पठन्**
**गुह्यानि भद्राणि कृतानि च स्मरन्।**
**गां पर्यटंस्तुष्टमना गतस्पृहः**
**कालं प्रतीक्षन् विमदो विमत्सरः॥ २७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अनन्तस्य** = भगवान्‌का | **जन्मानि** = जन्म र | **गतस्पृहः** = इच्छारहित |
| **नामानि** = पवित्र नामहरू | **कृतानि च** = कर्महरूको | **विमदः** = मदले रहित |
| **हतत्रपः** = लज्जालाई छोडेर | **स्मरन्** = स्मरण गर्दै | **विमत्सरः** = मात्सर्यले रहित भएर |
| **पठन्** = पढ्दै | **गां** = पृथिवी | **कालं प्रतीक्षन्** = केवल कालको प्रतीक्षा गरेर बसेको थिएँ |
| **भद्राणि** = लोकको कल्याण गर्ने | **पर्यटन्** = घुम्दै | |
| **गुह्यानि** = रहस्यमय | **तुष्टमना** = प्रसन्न मनले | |

**वाक्यार्थ–** त्यसपछि म लज्जा र सङ्कोच छोडेर भगवान्‌को अत्यन्त रहस्यमय र मङ्गलमय मधुर नाम र लीलाहरूको कीर्तन र स्मरण गर्न लागेँ। इच्छा, घमण्ड र ईर्ष्या मेरो हृदयबाट पहिले नै हटिसकेका थिए। त्यसपछि म आनन्दपूर्वक कालको प्रतीक्षा गर्दै पृथ्वीमा विचरण गर्न लागेँ।

**एवं कृष्णमतेर्ब्रह्मन्नासक्तस्यामलात्मनः।**
**कालः प्रादुरभूत्काले तडित्सौदामनी यथा॥ २८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ब्रह्मन्** = हे व्यासजी | भक्ति लागेका हुनाले | **एवं** = यसप्रकार |
| **कृष्णमतेः** = भगवान् श्रीकृष्णमा | **असक्तस्य** = आसक्तिले रहित | **अमलात्मनः** = निर्मल चित्त |

पदार्थ–

**सात्वतपुङ्गवे** = यदुवंश शिरोमणि
**विभूम्नि** = सर्वोत्कृष्ट महत्त्वले युक्त हुनुभएका
**स्वसुखम्** = आफ्नो परमानन्दस्वरूपमा
**उपगते** = अवस्थित
**यत् भवप्रवाहः** = जुन प्रकृतिबाट संसारको सृष्टि परम्परा चल्दछ त्यस्तो
**प्रकृतिम्** = प्रकृतिलाई
**क्वचित्** = कहिलेकाहीँ
**विहर्तुं** = संसारको सृष्टि, स्थिति र प्रलयको लागि
**उपेयुषि** = स्वीकार गर्ने
**भगवति** = भगवान् श्रीकृष्णमा
**वितृष्णा** = कुनै फलको सङ्कल्पले रहित भएको
**मतिः** = बुद्धि
**इति** = यस्तो
**उपकल्पिता** = उपहारको रूपमा म चढाउँछु

**वाक्यार्थ–** जीवनभर नाना प्रकारका साधन र अनुष्ठान गर्नाले आफ्नो जीवनका यस अन्तिम समयमा म शुद्ध र कामनाले रहित भएको मेरो बुद्धि सदासर्वदा आफ्नो आनन्दमय स्वरूपमा रहनुभएका यदुवंशशिरोमणि सर्वव्यापक श्रीकृष्ण भगवान्मा समर्पण गर्दछु। तपाईं आफ्नो वैष्णवी मायाद्वारा सृष्टि परम्परा चलाउनुपर्ने भएकाले कहिलेकाहीँ लीला गर्ने इच्छाले मायालार्य पनि स्वीकार गर्नुहुन्छ।

**त्रिभुवनकमनं तमालवर्णं**
**रविकरगौरवराम्बरं दधाने।**
**वपुरलककुलावृताननाब्जं**
**विजयसखे रतिरस्तु मेऽनवद्या॥ ३३॥**

पदार्थ–

**त्रिभुवनकमनं** = तीनै लोकमा सुन्दर
**तमालवर्णं** = तमालपत्रको जस्तो नीलवर्ण भएको
**रविकरगौरवराम्बरं** = भगवान् सूर्यको किरणजस्तो सेतो र पहेँलो वर्णको सुन्दर वस्त्रले
**अलककुलावृताननाब्जं** = नागबेली परेका कपालहरूद्वारा सुशोभित कमलजस्तो मुख भएका
**वपुः** = शरीर
**दधाने** = धारण गर्ने
**विजयसखे** = अर्जुनका साथी भगवान् श्रीकृष्णमा
**मे** = मेरो
**अनवद्या** = कपटले रहित
**रतिः** = प्रेम
**अस्तु** = होस्

**वाक्यार्थ–** जसको शरीर त्रिभुवन सुन्दर एवं श्याम तमालझैं नीलो वर्णको छ, जुन शरीरमा सूर्यका किरणजस्तो श्रेष्ठ पीताम्बर फर्फराइरहेको छ, जसको कमलजस्तो मुखमा नागवेली परेका कपालहरू लट्किरहेका छन्, ती अर्जुनका साथी श्रीकृष्णमा मेरो निष्कपट प्रेम होस्।

**युधि तुरगरजोविधूम्रविष्वक्-**
**कचलुलितश्रमवार्यलङ्कृतास्ये।**

**मम निशितशरैर्विभिद्यमानत्वचि**

**विलसत्कवचेऽस्तु कृष्ण आत्मा ॥ ३४ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **युधि** = युद्धमा | पसिनाबिन्दुहरूद्वारा अलङ्कृत | परेका थिए त्यस्ता |
| **तुरगरजोविधूम्रविष्वक्कचलुलित-** | अनुहार हुनुभएका | **विलसत्कवचे** = कवचले |
| **श्रमवार्यलङ्कृतास्ये** = घोडाको | **मम** = मेरो | मण्डित हुनुभएका |
| टापबाट उडेको धुलाबाट | **निशितशरैः** = तीखा बाणहरूले | **कृष्णे** = भगवान् श्रीकृष्णमा |
| मैलिएर हल्लिँदै नागवेली परेका | **विभिद्यमानत्वचि** = जसका | **आत्मा** = मेरो अन्तःकरण |
| कपालहरूबाट खसेका | शरीरका छालाहरू छियाछिया | **अस्तु** = समर्पित होस् |

**वाक्यार्थ–** युद्धमा घोडाको टापबाट उडेको धुलोद्वारा मैलिएर हल्लिँदै नागवेली परेका कपालहरूबाट खसेका पसिनाका थोपाहरूद्वारा अलङ्कृत अनुहार हुनुभएका र मेरा तीखा बाणहरूले जसका शरीरका छालाहरू छियाछिया भएका थिए, त्यस्ता कवचले सुशोभित हुनुभएका भगवान् श्रीकृष्णमा मेरो अन्तःकरण समर्पित होस्।

**सपदि सखिवचो निशम्य मध्ये**

**निजपरयोर्बलयो रथं निवेश्य।**

**स्थितवति परसैनिकायुरक्ष्णा**

**हृतवति पार्थसखे रतिर्ममास्तु ॥ ३५ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सखिवचः** = अर्जुनका वचनलाई | **निवेश्य** = राखेर | **स्थितवति** = स्थिर भएर |
| **निशम्य** = सुनेर | **अक्ष्णा** = आफ्ना दृष्टिले | **मम** = मेरो |
| **सपदि** = चाँडै नै | **परसैनिकायुः** = कौरवसेनाको | **रतिः** = प्रेम |
| **निजपरयोः बलयः** = कौरव र | आयुलाई | **अस्तु** = होस् |
| पाण्डव सेनाका | **हृतवति** = नष्ट गर्नुहुने | |
| **मध्ये** = माझमा | **पार्थसखे** = अर्जुनका साथी | |
| **रथं** = रथलाई | भगवान् श्रीकृष्णमा | |

**वाक्यार्थ–** आफ्ना मित्र अर्जुनको कुरा सुनेर जसले तुरुन्तै पाण्डवसेना र कौरवसेनाको बीचमा रथ ल्याउनुभएको थियो, जसले आफ्नो दृष्टिद्वारा कौरवसेनाको आयुलाई क्षीण गर्नुभएको थियो, त्यस्ता पार्थसारथि भगवान् श्रीकृष्णमा मेरो प्रेम लागोस्।

**व्यवहितपृतनामुखं निरीक्ष्य**

**स्वजनवधाद् विमुखस्य दोषबुद्ध्या ।**

**कुमतिमहरदात्मविद्यया**

**यश्चरणरतिः परमस्य तस्य मेऽस्तु ॥ ३६ ॥**

पदार्थ—

**व्यवहितपृतनामुखं** = केही टाढा बसेका कौरवसेनाका मुख्य हामीहरूलाई
**निरीक्ष्य** = देखेर
**दोषबुद्ध्या** = पापको भयले
**स्वजनवधात्** = आफ्ना मान्छेहरूको वधबाट
**विमुखस्य** = हटेका अर्जुनको
**कुमतिम्** = म मार्नेवाला हुँ भन्ने कुबुद्धिलाई
**यः** = जुन भगवान् श्रीकृष्णले
**आत्मविद्यया** = आत्मविद्याको उपदेशले
**अहरत्** = छुटाउनुभयो
**तस्य** = त्यस्ता
**परमस्य** = परमपुरुष भगवान् श्रीकृष्णमा
**मे** = मेरो
**चरणरतिः** = चरणप्रतिको अनुराग
**अस्तु** = होस्

**वाक्यार्थ—** टाढाबाट कौरवसेनाका मुख्य हामीहरूलाई देखेर पापको भयले बन्धुहत्याबाट विमुख भएका अर्जुनको म मार्नेवाला हुँ भन्ने कुबुद्धिलाई आत्मविद्याको उपदेश गरेर जुन भगवान्‌ले हटाउनुभएको थियो, त्यस्ता भगवान् श्रीकृष्णमा मेरो प्रेम लागिरहोस् ।

**स्वनिगममपहाय मत्प्रतिज्ञामृतम्-**

**अधिकर्तुमवप्लुतो रथस्थः ।**

**धृतरथचरणोऽभ्ययाच्चलद्‌गु-**

**र्हरिरिव हन्तुमिभं गतोत्तरीयः ॥ ३७ ॥**

**शितविशिखहतो विशीर्णदंशः**

**क्षतजपरिप्लुत आततायिनो मे ।**

**प्रसभमभिससार मद्वधार्थं**

**स भवतु मे भगवान् गतिर्मुकुन्दः ॥ ३८ ॥**

पदार्थ—

**मत्प्रतिज्ञामृतम्** = महाभारतको युद्धमा कृष्णलाई शस्त्र ग्रहण गराएर छोड्छु भन्ने मेरो प्रतिज्ञालाई
**अधिकर्तुम्** = सत्य बनाउन
**स्वनिगमम्** = युद्धमा कदापि शस्त्रग्रहण नगर्ने आफ्नो प्रतिज्ञालाई
**अपहाय** = छोडेर
**रथस्थः** = रथमा रहे तापनि त्यहाँबाट
**अवप्लुतः** = तुरुन्त तल ओर्लिएर

**धृतरथचरणः** = हातमा रथको पाङ्ग्रो लिनुभएका
**चलद्गुः** = आफूले टेकेको पृथिवीलाई कम्पायमान गर्दै
**गतोत्तरीयः** = जसको काँधको ओड्ने खसेको थियो
**इभं** = हात्तीलाई
**हन्तुम्** = मार्न
**हरिः इव** = सिंहझैं
**अभ्ययात्** = ममाथि आइलाग्नुभएको थियो
जब ममाथि आइलाग्नुभयो तब
**आततायिनः** = धनुर्धारी
**मे** = मेरो
**शितविशिखहतः** = तीखा बाणहरूले प्रहार गरिएका
**विशीर्णदंशः** = कवच नष्ट गरिएका र
**क्षतजपरिप्लुतः** = रगतले ढाकिएका भगवान्
**मद्वधार्थं** = मलाई मार्नका लागि
**प्रसभम्** = सहसा (निषेध गर्न लागेका अर्जुनको अतिक्रमण गर्दै)
**अभिससार** = मेरो नजिक आउनुभएको थियो
**सः** = त्यस्ता
**भगवान्** = भगवान्
**मुकुन्दः** = मुकुन्द
**मे** = मेरा
**गतिः** = आश्रय
**भवतु** = बन्नुहोस्

**वाक्यार्थ–** महाभारतको युद्धमा म कृष्णलाई शस्त्रग्रहण गराएरै छोड्छु भन्ने मेरो प्रतिज्ञालाई सत्य बनाउन युद्धमा कदापि शस्त्र ग्रहण नगर्ने आफ्नो प्रतिज्ञालाई छोडेर रथमा रहे तापनि त्यहाँबाट तल ओर्लेर हातमा रथको पाङ्ग्रो लिनुभएका, आफ्नो शरीरका भारले पृथिवीलाई कम्पायमान गर्दै दौँडदाखेरी जसको काँधको ओड्ने तल खसेको थियो त्यस्ता हात्तीलाई मार्न सिंह जाइलागेझैं जब ममाथि आइलाग्नुभएको थियो, तब धनुर्धारी मेरा तीखा बाणहरूले प्रहार गरिएका, कवच नष्ट गरिएका र रगतले ढाकिएका भगवान् निषेध गर्न लागेका अर्जुनको पनि अतिक्रमण गर्दै मलाई मार्नका लागि मेरो नजिक आउनुभएको थियो, त्यस्ता भगवान् नै मेरा आश्रय बन्नुहोस्।

**विजयरथकुटुम्ब आत्ततोत्रे**
**धृतहयरश्मिनि तच्छ्रियेक्षणीये।**
**भगवति रतिरस्तु मे मुमूर्षो-**
**र्यमिह निरीक्ष्य हता गताः स्वरूपम्॥ ३९॥**

**पदार्थ–**

**विजयरथकुटुम्बे** = अर्जुनको रथको रक्षामा सावधान हुनुभएका
**आत्ततोत्रे** = दाँया हातमा छडी लिनुभएका
**धृतहयरश्मिनि** = बाँया हातमा घोडाको लगाम लिनुभएका अनि
**तच्छ्रिया** = चाबुक र लगामको शोभाले
**ईक्षणीये** = दर्शनीय हुनुभएका
**भगवति** = त्यस्ता भगवान् श्रीकृष्णमा
**मुमूर्षोः** = मरणासन्न
**मे** = मेरो
**रतिः** = प्रेम
**अस्तु** = होस्
**यम्** = जुन भगवान्को
**निरीक्ष्य** = दर्शन गरेर
**इह** = युद्धक्षेत्रमा
**हताः** = मरेका वीरहरू
**स्वरूपम्** = भगवान्को स्वरूपलाई
**गताः** = प्राप्त गरे

**वाक्यार्थ–** अर्जुनको रथको रक्षामा सावधान हुनुभएका, दायाँ हातमा छडी लिनुभएका, वायाँ हातमा लगाम लिनुभएका, अनि छडी र लगामको शोभाले दर्शनीय हुनुभएका भगवान् श्रीकृष्णमा मरणासन्न मेरो प्रेम बनिरहोस्। यस्ता भगवान्को दर्शन गरेर युद्धक्षेत्रमा मरेका वीरहरूले पनि भगवान्को स्वरूपलाई प्राप्त गरेका थिए।

**ललितगतिविलासवल्गुहास**
**प्रणयनिरीक्षणकल्पितोरुमानाः।**
**कृतमनुकृतवत्य उन्मदान्धाः**
**प्रकृतिमगन् किल यस्य गोपवध्वः॥ ४०॥**

पदार्थ–

**ललितगतिविलासवल्गुहास-प्रणयनिरीक्षणकल्पितोरुमानाः** = सुन्दर गति, रासादि विलास, मनोहारी हाँसो र स्नेहपूर्वकको हेराइले राम्रोसँग भगवान्बाट सम्मान प्राप्त गरेका अनि

**कृतम्** = विभिन्न लीलाको

**अनुकृतवत्य** = अनुकरण गरेर

**उन्मदान्धाः** = भगवान्को वियोगमा प्रेमले उन्मत्त भएका

**गोपवध्वः** = गोपीहरूले

**यस्य** = जुन भगवान्को

**प्रकृतिम्** = स्वरूपलाई

**अगन् किल** = निश्चय नै प्राप्त गरेका थिए

**वाक्यार्थ–** सुन्दर गति, रासादि विलास, मनोहारी हाँसो र स्नेहपूर्वकको हेराइले राम्रोसँग भगवान्बाट सम्मान प्राप्त गरेका अनि विभिन्न लीलाको अनुकरण गरेर भगवान्को वियोगमा प्रेमले उन्मत्त भएका गोपीहरूले त्यस्ता भगवान्को स्वरूपलाई निश्चय नै प्राप्त गरेका थिए।

**मुनिगणनृपवर्यसङ्कुलेऽन्तः**
**सदसि युधिष्ठिरराजसूय एषाम्।**
**अर्हणमुपपेद ईक्षणीयो**
**मम दृशिगोचर एष आविरात्मा॥ ४१॥**

पदार्थ–

**युधिष्ठिरराजसूये** = युधिष्ठिरको राजसूय यज्ञमा

**मुनिगणनृपवर्यसङ्कुले** = महान् मुनि र श्रेष्ठ राजाहरूले व्याप्त

**अन्तः सदसि** = सभाको मध्यमा

**एषाम्** = यी मुनिहरू र श्रेष्ठ राजाहरूको

**ईक्षणीयः** = मनोहारी दर्शनको विषय बन्दै

**अर्हणम्** = अग्र पूजालाई

**उपपेदे** = प्राप्त गर्नुभयो

**एषः आत्मा** = अन्तर्यामी त्यस्ता भगवान् श्रीकृष्ण

**मम** = मेरो

**दृशिगोचरः** = आँखाको अगाडि

**आविः** = प्रकट हुनुहुन्छ, यो मेरो सौभाग्य हो

**वाक्यार्थ–** युधिष्ठिरको राजसूय यज्ञमा महान् मुनि र श्रेष्ठ राजाहरूले व्याप्त सभाको मध्यमा

ऋषिहरूको मनोहारी दर्शनको विषय बन्दै जुन भगवान्ले अग्रपूजालाई प्राप्त गर्नुभयो, त्यस्ता अन्तर्यामी भगवान् श्रीकृष्ण मेरा आँखाका अगाडि प्रकट हुनुहुन्छ, यो मेरो सौभाग्य हो।

**तमिममहमजं शरीरभाजां**
**हृदि हृदि धिष्ठितमात्मकल्पितानाम्।**
**प्रतिदृशमिव नैकधार्कमेकं**
**समधिगतोऽस्मि विधूतभेदमोहः॥ ४२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **एकं अर्कम्** = (आकाशमा) सूर्य एउटामात्र भए तापनि | **शरीरभाजां** = अनेक शरीरधारीहरूको | श्रीकृष्णलाई |
| **प्रतिदृशम्** = अनेक आँखाहरूद्वारा | **हृदि हृदि** = प्रत्येक हृदयमा | **विधूतभेदमोहः** = भेदप्रयुक्त मोहलाई नष्ट गरेर |
| **न एकधा इव** = अनेक रूपमा देखिएझैँ | **धिष्ठितम्** = अनेकरूपले प्रतीयमान | **अहम्** = मैले |
| **आत्मकल्पितानाम्** = आफैँद्वारा रचिएका | **तम्** = ती | **समधिगतः अस्मि** = प्राप्त गरेको छु |
| | **इमम्** = यिनै | |
| | **अजं** = अजन्मा भगवान् | |

**वाक्यार्थ–** आकाशमा सूर्य एउटामात्र भए तापनि अनेक आँखाहरूले अनेकरूपमा देखिएझैँ आफूद्वारा रचिएको अनेक शरीरधारीहरूको प्रत्येक हृदयमा अनेकरूपले प्रतीयमान ती अजन्मा भगवान् श्रीकृष्णलाई मैले भेदप्रयुक्त मोहलाई नष्ट गरेर प्राप्त गरेको छु।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**कृष्ण एवं भगवति मनोवाग्दृष्टिवृत्तिभिः।**
**आत्मन्यात्मानमावेश्य सोऽन्तःश्वास उपारमत्॥ ४३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सः** = भीष्मपितामहले | **आत्मनि** = आत्मस्वरूप | **आवेश्य** = लीन गरेर |
| **एवं** = यसप्रकार | **भगवति** = भगवान् | **अन्तःश्वासः** = उनका प्राण भगवान्मै लीन भए |
| **मनोवाग्दृष्टिवृत्तिभिः** = मन, वाणी र दृष्टिहरूको वृत्तिद्वारा | **कृष्णे** = कृष्णमा | **उपारमत्** = उनी शान्त भए |
| | **आत्मानम्** = आफूलाई | |

**वाक्यार्थ–** भीष्मपितामहले मन, वाणी र दृष्टिका वृत्तिहरूले भगवान् श्रीकृष्णमा आफूलाई लीन गरिदिनुभयो। उहाँका प्राण त्यहीँ लीन भए अनि उहाँ शान्त हुनुभयो।

**सम्पद्यमानमाज्ञाय भीष्मं ब्रह्मणि निष्कले।**

**सर्वे बभूवुस्ते तूष्णीं वयांसीव दिनात्यये ॥ ४४ ॥**

पदार्थ–

**भीष्मं** = भीष्मलाई
**निष्कले** = अनन्त
**ब्रह्मणि** = ब्रह्ममा
**सम्पद्यमानम्** = लीन भएको
**आज्ञाय** = जानेर
**दिनात्यये** = दिन बितिसकेपछि
**वयांसि इव** = पक्षीहरू शान्त भएझैं
**ते** = त्यहाँ उपस्थित
**सर्वे** = सम्पूर्ण मानिसहरू
**तूष्णीं बभूवुः** = चुप लागे

**वाक्यार्थ–** उहाँ अनन्त ब्रह्ममा लीन भएका जानेर त्यहाँ उपस्थित भएका सबै मनुष्यहरू दिन बितिसकेपछि सन्ध्याकालको समयमा पक्षीहरूको आवाज शान्त भएझैं चुपचाप भए।

**तत्र दुन्दुभयो नेदुर्देवमानववादिताः ।**

**शशंसुः साधवो राज्ञां खात् पेतुः पुष्पवृष्टयः ॥ ४५ ॥**

पदार्थ–

**तत्र** = त्यस समयमा
**देवमानववादिताः** = देवता र मनुष्यहरूद्वारा बजाइएका
**दुन्दुभयः** = दमाहाहरू
**नेदुः** = बजे
**राज्ञां** = राजाहरूमा
**साधवः** = साधु स्वभाव भएकाहरूले
**शशंसुः** = (भीष्मको) प्रशंसा गरे
**खात्** = आकाशबाट
**पुष्पवृष्टयः पेतुः** = पुष्पवृष्टि भयो

**वाक्यार्थ–** त्यस समयमा देवता र मनुष्यहरूका दमाहाहरू बज्न लागे। साधुस्वभाव भएका राजाहरूले उनको प्रशंसा गर्न लागे। आकाशबाट पुष्पवृष्टि हुन लाग्यो।

**तस्य निर्हरणादीनि सम्परेतस्य भार्गव ।**

**युधिष्ठिरः कारयित्वा मुहूर्तं दुःखितोऽभवत् ॥ ४६ ॥**

पदार्थ–

**भार्गव** = हे भृगुपुत्र शौनकजी
**युधिष्ठिरः** = राजा युधिष्ठिरले
**तस्य** = ती भीष्मको
**सम्परेतस्य** = मृत शरीरको
**निर्हरणादीनि** = दाहसंस्कारादि कर्म
**कारयित्वा** = गराएर
**मुहूर्तं** = एक मुहूर्तसम्म
**दुःखितः** = शोकमग्न
**अभवत्** = हुनुभयो

**वाक्यार्थ–** शौनकजी ! युधिष्ठिरले उनको मृत शरीरको अन्त्येष्टि क्रिया गर्नुभयो र एक मुहूर्तसम्म उहाँ शोकमग्न हुनुभयो।

**तुष्टुवुर्मुनयो हृष्टाः कृष्णं तद्गुह्यनामभिः ।**

**ततस्ते कृष्णहृदयाः स्वाश्रमान् प्रययुः पुनः ॥ ४७ ॥**

पदार्थ–

**ततः** = त्यसपछि
**हृष्टाः** = प्रसन्न भएका
**मुनयः** = मुनिहरूले

**तद्गुह्यनामभिः** = भगवान् श्रीकृष्णको रहस्यमय नामोच्चारण गर्दै
**कृष्णं** = भगवान् श्रीकृष्णको
**तुष्टुवुः** = स्तुति गरे त्यसपछि
**ते** = त्यहाँ उपस्थित सम्पूर्ण मानिसहरू
**कृष्णहृदयाः** = आफ्ना हृदयलाई कृष्णमय बनाएर
**पुनः** = फेरि
**स्वाश्रमान्** = आ-आफ्ना आश्रमतिर
**प्रययुः** = फर्के

**वाक्यार्थ–** त्यसपछि प्रसन्न ऋषिहरूले भगवान्‌को रहस्यमय नाम लिँदै भगवान् श्रीकृष्णको स्तुति गर्नुभयो। त्यसपछि आफ्नो हृदयलाई कृष्णमय बनाएर आ-आफ्ना आश्रमतिर फर्कनुभयो।

**ततो युधिष्ठिरो गत्वा सहकृष्णो गजाह्वयम्।**
**पितरं सान्त्वयामास गान्धारीं च तपस्विनीम्॥ ४८॥**

**पदार्थ–**

**ततः** = त्यसपछि
**युधिष्ठिरः** = राजा युधिष्ठिर
**सहकृष्णः** = भगवान् श्रीकृष्णका साथ
**गजाह्वयम्** = हस्तिनापुर
**गत्वा** = गएर
**पितरं** = ठूलाबा धृतराष्ट्रलाई
**तपस्विनीम्** = तपस्विनी
**गान्धारीं** = गान्धारीलाई
**च** = पनि
**सान्त्वयामास** = सान्त्वना दिनुभयो

**वाक्यार्थ–** त्यसपछि राजा युधिष्ठिरले भगवान् श्रीकृष्णका साथ हस्तिनापुरमा गएर आफ्ना ठूलाबा धृतराष्ट्र र तपस्विनी गान्धारीलाई सान्त्वना दिनुभयो।

**पित्रा चानुमतो राजा वासुदेवानुमोदितः।**
**चकार राज्यं धर्मेण पितृपैतामहं विभुः॥ ४९॥**

**पदार्थ–**

**पित्रा** = ठूलाबा धृतराष्ट्रको
**चानुमतः** = आज्ञाले
**वासुदेवानुमोदितः** = भगवान् श्रीकृष्णको अनुमतिले
**विभुः** = राज्य सञ्चालनकार्यमा समर्थ
**राजा** = राजा युधिष्ठिरले
**धर्मेण** = धर्मपूर्वक
**पितृपैतामहं** = वंशपरम्परागत
**राज्यं** = राज्य
**चकार** = गर्नुभयो

**वाक्यार्थ–** त्यसपछि धृतराष्ट्रको आज्ञा र भगवान् श्रीकृष्णको अनुमतिले राज्यसञ्चालन कार्यमा निपुण राजा युधिष्ठिरले आफ्नो वंशपरम्परागत राज्यको धर्मपूर्वक शासन गर्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां प्रथमस्कन्धे**
**युधिष्ठिरराज्यप्रलम्भो नाम नवमोऽध्यायः॥ ९॥**

# अथ दशमोऽध्यायः

## श्रीकृष्णको द्वारकागमन

**शौनक उवाच** (शौनकजीले भन्नुभयो)

**हत्वा स्वरिक्थस्पृध आततायिनो**
**युधिष्ठिरो धर्मभृतां वरिष्ठः ।**
**सहानुजैः प्रत्यवरुद्धभोजनः**
**कथं प्रवृत्तः किमकारषीत् ततः ॥ १ ॥**

पदार्थ–

**स्वरिक्थस्पृधः** = पाण्डवहरूको सम्पत्तिलाई आफ्नो गर्न चाहने
**आततायिनः** = आतङ्क मच्चाउने (दुर्योधन आदि)लाई
**हत्वा** = मारेर
**धर्मभृताम्** = धर्म धारणगर्नेहरूमा
**वरिष्ठः** = श्रेष्ठ भएका
**प्रत्यवरुद्धभोजनः** = बन्धुहत्याको शोकका कारण भोजनमा रुचि नभएका
**युधिष्ठिरः** = राजा युधिष्ठिर
**अनुजैः** = आफ्ना भाइहरूका
**सह** = साथ
**कथं** = कसरी
**प्रवृत्तः** = राज्यशासनमा प्रवृत्त हुनुभयो
**ततः** = त्यसपछि
**किम्** = के
**अकारषीत्** = गर्नुभयो

**वाक्यार्थ–** धार्मिक शिरोमणि महाराज युधिष्ठिरले पैतृक सम्पत्ति आफ्ना अधीनमा गर्न चाहने आततायीहरूको नाश गरेर आफ्ना भाइहरूका साथ कुन प्रकारले राज्यशासन गर्नुभयो र अनि उहाँले अररू के–के काम गर्नुभयो ? किनभने उहाँको त भोगमा कुनै प्रवृत्ति नै थिएन।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**वंशं कुरोर्वंशदवाग्निनिर्हृतं**
**संरोहयित्वा भवभावनो हरिः ।**
**निवेशयित्वा निजराज्य ईश्वरो**
**युधिष्ठिरं प्रीतमना बभूव ह ॥ २ ॥**

पदार्थ–

**वंशदवाग्निनिर्हृतं** = कुरु वंशरूपी जङ्गलबाट उत्पन्न भएको क्रोधरूपी अग्निले डढेको
**कुरोः** = कुरुको
**वंशं** = वंशलाई

**संरोहयित्वा** = परीक्षित्को रक्षाद्वारा अङ्कुरित गरेर
**युधिष्ठिरम्** = राजा युधिष्ठिरलाई
**निजराज्ये** = आफ्नो राज्यमा
**निवेशयित्वा** = स्थापित गरेर
**भवभावनः** = लोकरक्षक
**हरिः** = भगवान् श्रीकृष्ण
**ईश्वरः** = ईश्वर
**ह** = निश्चय नै
**प्रीतमना** = प्रसन्न
**बभूव** = हुनुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले सम्पूर्ण सृष्टिलाई उज्जीवित गराउने परस्परको कलहरूपी अग्निले डढेको कुरुवंशलाई पुनः उज्जीवित गर्नुभयो। अनि युधिष्ठिरलाई राज्यसिंहासनमा राखेर ज्यादै प्रसन्न हुनुभयो।

**निशम्य भीष्मोक्तमथाच्युतोक्तं**
**प्रवृत्तविज्ञानविधूतविभ्रमः।**
**शशास गामिन्द्र इवाजिताश्रयः**
**परिध्युपान्तामनुजानुवर्तितः॥ ३॥**

**पदार्थ–**

**अथ** = यसपछि
**भीष्मोक्तम्** = भीष्मको उपदेश र
**अच्युतोक्तम्** = भगवान् श्रीकृष्णको उपदेशलाई
**निशम्य** = सुनेर
**प्रवृत्तविज्ञानविधूतविभ्रमः** = उत्पन्न भएको परमात्मा विषयक ज्ञानद्वारा अन्तःकरणको मोह हटेका युधिष्ठिर
**अजिताश्रयः** = भगवान्को आश्रयमा रहेर
**अनुजानुवर्तितः** = भाइहरूको सहायतालाई प्राप्त गरेर
**परिध्युपान्ताम्** = समुद्रसम्मको
**गाम्** = भूमिलाई
**इन्द्र** = इन्द्रले
**इव** = झैं
**शशास** = शासन गर्नुभयो

**वाक्यार्थ–** भीष्म पितामह र भगवान्को उपदेशले युधिष्ठिरको अन्तःकरणमा विवेकको उदय भयो र उहाँको भ्रान्ति हट्यो। भगवान्को आश्रयमा रहेर भीमसेन आदि भाइहरूको पूर्ण रूपले सहयोग प्राप्त गरेर उहाँले इन्द्रले स्वर्गको शासन गरेझैं समुद्रपर्यन्त सम्पूर्ण पृथिवीको शासन गर्न लाग्नुभयो।

**कामं ववर्ष पर्जन्यः सर्वकामदुघा मही।**
**सिषिचुः स्म व्रजान् गावः पयसोधस्वतीर्मुदा॥ ४॥**

**पदार्थ–**

(युधिष्ठिरको राज्यमा)
**पर्जन्यः** = मेघ
**कामं** = आवश्यकताअनुसार
**ववर्ष** = बर्स्यो
**मही** = पृथ्वी
**सर्वकामदुघा** = सम्पूर्ण अभीष्टलाई दिनेवाली थिइन्
**उधस्वतीः** = ठुला-ठुला कल्चौंडा भएका

**गावः** = गाईहरू
**मुदा** = हर्षले युक्त भएर
**पयसा** = दुधले
**व्रजान्** = गोठहरूलाई
**सिषिचुः स्म** = सेचन गर्दथे

**वाक्यार्थ–** युधिष्ठिरको राज्यमा आवश्यकताअनुसार यथेष्ट वर्षा हुन्थ्यो। पृथिवीमा समस्त अभीष्ट वस्तुहरू पैदा हुन्थे। ठुलाठुला कल्चौंडा भएका गाईहरू प्रसन्न भएर सम्पूर्ण गोठलाई दुधले सेचन गर्दथे।

**नद्यः समुद्रा गिरयः सवनस्पतिवीरुधः।**
**फलन्त्योषधयः सर्वाः काममन्वृतु तस्य वै॥ ५॥**

**पदार्थ–**
**नद्यः** = नदीहरू
**समुद्राः** = समुद्रहरू
**गिरयः** = पर्वतहरू
**सवनस्पतिवीरुधः** = वृक्ष र लताहरूले युक्त भएका
**सर्वाः** = सम्पूर्ण
**ओषधयः** = जौ, धान आदि औषधीहरूले
**तस्य** = ती राजा युधिष्ठिरलाई
**अनुऋतु** = प्रत्येक ऋतुमा
**कामम्** = पर्याप्त रूपमा
**वै** = निश्चय नै
**फलन्ति** = समृद्ध गराउँथे

**वाक्यार्थ–** नदी, समुद्र, पर्वत, वनस्पति, लताहरू र औषधिहरू प्रत्येक ऋतुमा यथेष्टरूपले आआफ्ना वस्तुहरू राजालाई प्रदान गर्दथे।

**नाधयो व्याधयः क्लेशा दैवभूतात्महेतवः।**
**अजातशत्रावभवन् जन्तूनां राज्ञि कर्हिचित्॥ ६॥**

**पदार्थ–**
**अजातशत्रौ** = शत्रुरहित भएका युधिष्ठिर
**राज्ञि** = राजा भएपछि
**दैवभूतात्महेतवः** = देवता, भूत र शरीरबाट
**आधयः** = मनको व्यथा
**व्याधयः** = शरीरका रोगहरू
**क्लेशाः** = सर्दी र गर्मीबाट हुने कष्टहरू
**जन्तूनाम्** = प्राणीहरूलाई
**कर्हिचित्** = कहिले पनि
**न अभवन्** = भएनन्

**वाक्यार्थ–** शत्रुरहित राजा युधिष्ठिरको राज्यमा कुनै पनि प्राणीलाई कहिल्यै पनि दैविक, भौतिक र आत्मिक क्लेश भएनन्।

**उषित्वा हास्तिनपुरे मासान् कतिपयान् हरिः।**
**सुहृदां च विशोकाय स्वसुश्च प्रियकाम्यया॥ ७॥**
**आमन्त्र्य चाभ्यनुज्ञातः परिष्वज्याभिवाद्य तम्।**
**आरुरोह रथं कैश्चित् परिष्वक्तोऽभिवादितः॥ ८॥**

पद्यार्थ–

**सुहृदाम्** = आफ्ना बन्धुहरूको
**विशोकाय** = शोक हटाउनका लागि
**च** = तथा
**स्वसु** = बहिनी सुभद्रालाई
**प्रियकाम्यया** = प्रसन्न गराउने उद्देश्यले
**हरिः** = भगवान् श्रीकृष्ण
**कतिपयान्** = केही
**मासान्** = महिनासम्म
**हास्तिनपुरे** = हस्तिनापुरमा
**उषित्वा** = बसेर
**आमन्त्र्य** = युधिष्ठिरसँग द्वारकातिर जाने आज्ञा मागेपछि
**च** = र
**परिष्वज्य** = युधिष्ठिरले भगवान्‌लाई आलिङ्गन गरेर
**अभ्यनुज्ञातः** = अनुमति दिएपछि
**तम्** = युधिष्ठिरलाई
**अभिवाद्य** = नमस्कार गरेर
**कैश्चित्** = केही समान अवस्था भएकाले
**परिष्वक्तः** = आलिंगन गरिएका
**अभिवादितः** = नमस्कार गरिएका भगवान् श्रीकृष्ण द्वारका जानका लागि
**रथम्** = रथमा
**आरुरोह** = चढ्नुभयो।

**वाक्यार्थ–** आफ्ना बन्धुहरूको शोकलाई हटाउन र बहिनी सुभद्रालाई प्रसन्न गराउनका लागि भगवान् केही महिनासम्म हस्तिनापुरमा नै बस्नुभयो। त्यसपछि उहाँले राजा युधिष्ठिरसँग दरवारमा जाने आज्ञा माग्नुभयो। राजा युधिष्ठिरले आलिङ्गन गरेर र अन्य कतिपयले नमस्कार गरेर भगवान् श्रीकृष्णलाई द्वारका जाने अनुमति दिनुभयो। भगवान् श्रीकृष्ण युधिष्ठिरलाई प्रणाम गरेर रथमा बस्नुभयो।

**सुभद्रा द्रौपदी कुन्ती विराटतनया तथा।**
**गान्धारी धृतराष्ट्रश्च युयुत्सुर्गौतमो यमौ॥ ९॥**
**वृकोदरश्च धौम्यश्च स्त्रियो मत्स्यसुतादयः।**
**न सेहिरे विमुह्यन्तो विरहं शार्ङ्गधन्वनः॥ १०॥**

पद्यार्थ–

**सुभद्रा** = सुभद्रा
**द्रौपदी** = द्रौपदी
**कुन्ती** = कुन्ती
**विराटतनया** = उत्तरा
**तथा** = तथा
**गान्धारी** = गान्धारी
**धृतराष्ट्रः** = धृतराष्ट
**युयुत्सुः** = युद्ध गर्न इच्छुक
**गौतमः** = गौतम कृपाचार्य
**च** = र
**यमौ** = जुम्ल्याहा नकुल, सहदेव
**वृकोदरः** = भीम
**धौम्य** = धौम्य
**मत्स्यसुतादयः** = सत्यवती आदि
**विमुह्यन्तः** = मोहमा प्राप्त भएर
**शार्ङ्गधन्वनः** = भगवान् श्रीकृष्णको
**विरहम्** = विरहलाई
**न सेहिरे** = सहन गर्न सकेनन्

**वाक्यार्थ–** त्यस समयमा सुभद्रा, द्रौपदी, कुन्ती, उत्तरा, गान्धारी, धृतराष्ट्र, युयुत्सु, कृपाचार्य, नकुल, सहदेव, भीमसेन, धौम्य, सत्यवती आदि सब मूर्च्छित जस्ता भए। उनीहरूले भगवान् श्रीकृष्णको विरहलाई सहन गर्न सकेनन्।

**सत्सङ्गान्मुक्तदुःसङ्गो हातुं नोत्सहते बुधः।**
**कीर्त्यमानं यशो यस्य सकृदाकर्ण्य रोचनम्॥ ११॥**

**सत्सङ्गात्** = सत्पुरुषको सङ्गतबाट
**मुक्तदुःसङ्गः** = दुःसङ्गलाई छोडेको
**बुधः** = विचारशील मनुष्य
**कीर्त्यमानम्** = सत्पुरुषहरूद्वारा वर्णन गरिएको
**रोचनम्** = रुचिकर
**यस्य** = जुन भगवान्को
**यशः** = कीर्ति
**सकृत्** = एकपटक पनि
**आकर्ण्य** = सुनेर
**हातुम्** = छोड्न
**न उत्सहते** = इच्छा गर्दैन

**वाक्यार्थ—** सत्पुरुषको सङ्गतबाट दुःसङ्गलाई छोडेको विचारशील मनुष्यले भगवान्को मधुर र मनोहर यशलाई एकपटक सुन्ने अवसर प्राप्त गरेको छ भने फेरि ऊ यस कार्यबाट टाढा रहने कल्पनासम्म पनि गर्न सक्दैन।

**विवरण—** जो व्यक्ति कुनै विषयमा आसक्त छ, उही नै बन्धनमा पर्दछ। यदि आसक्तिलाई सर्वथा छोड्न सकिँदैन भने त्यो आसक्ति सज्जनहरूका साथ गर्नुपर्दछ। सज्जनहरूका साथ गरिएको जो आसक्ति हो, त्यही नै संसारबन्धनबाट छुट्ने एकमात्र उपाय हो। आसक्तिको परित्याग मुक्तिप्राप्तिको एउटा सिँढी हो। मुक्तिप्राप्तिका लागि ९ ओटा सिँढीहरू बताइएका छन्— १. महापुरुषहरूको सेवा २. महापुरुषहरूको कृपा ३. महापुरुषहरूप्रतिको श्रद्धा ४. भगवत्कथाश्रवण ५. भगवान्मा प्रेम ६. द्वैत र अद्वैतको विवेकपूर्वकको आत्मज्ञान ७. भगवान्मा दृढ भक्ति ८. भगवत्तत्त्वसाक्षात्कार ९. भक्तमा भगवद्गुणको आविर्भाव।

पहिले महापुरुषको सेवा गर्नुपर्दछ। महापुरुषको सेवा गरेपछि सेवा गर्ने मानिसमाथि महापुरुषको कृपा हुन्छ। महापुरुषको कृपा भएपछि त्यो कृपाप्राप्त पुरुषलाई त्यो महापुरुषको काम मन पर्न थाल्दछ। त्यसपछि उसले भगवान्को कथाश्रवण गरेपछि भगवान्मा प्रेम हुन्छ। भगवान्मा प्रेमको उदय भएपछि साधकहरूले आफूलाई स्थूल शरीर र सूक्ष्मशरीरदेखि भिन्नरूपले देख्न थाल्दछ। त्यसपछि भगवान्मा अत्यन्त दृढ भक्ति हुन थाल्दछ। त्यसपछि भगवत्तत्त्वसाक्षात्कार हुन्छ र त्यसपछि भगवान्का गुणहरू भक्तमा पनि प्रकट हुन थाल्दछन्।

नारदभक्तिसूत्र (४६)मा जसले विषयी पुरुषहरूको सङ्गलाई परित्याग गर्दछ र जसले महापुरुषको सङ्गत गर्दछ त्यसैले मायामाथि विजय प्राप्त गर्दछ भनिएको छ।
भगवद्भक्त सज्जनको सङ्गतबाट जसको दुःसङ्ग हटेको छ त्यस्तो विचारशील मानिसले भगवान्को कथा सुनिसकेपछि त्यसलाई छोड्नै सक्दैन।

**तस्मिन् न्यस्तधियः पार्थाः सहेरन् विरहं कथम्।**
**दर्शनस्पर्शसंलाप शयनासनभोजनैः॥ १२॥**

**पदार्थ—**
**दर्शनस्पर्शसंलापशयनासन-भोजनैः** = भगवान्को दर्शन, स्पर्श, उहाँसँग आलाप, शयन,

बसउठ र भोजनद्वारा
**तस्मिन्** = ती भगवान्मा
**न्यस्तधियः** = आफ्नो सम्पूर्ण
हृदयलाई अर्पित गरेका
**पार्थाः** = पाण्डवहरू
**विरहम्** = भगवान् श्रीकृष्णको
विरहलाई
**कथम्** = कसरी
**सहेरन्** = सहन गर्न सक्लान्

**वाक्यार्थ–** भगवान्को दर्शन, स्पर्श, उहाँसँग वार्तालाप, साथसाथ सुत्ने, बस्ने, भोजन गर्नाले जसले आफ्नो सम्पूर्ण हृदयलाई भगवान्मा अर्पण गरेका थिए, त्यस्ता पाण्डवहरूले भगवान्को विरहलाई कसरी सहन गर्न सक्दथे ?

**सर्वे तेऽनिमिषैरक्षैस्तमनुद्रुतचेतसः ।**
**वीक्षन्तः स्नेहसम्बद्धा विचेलुस्तत्र तत्र ह ॥ १३ ॥**

**पदार्थ–**
**स्नेहसम्बद्धाः** = स्नेहसम्बन्धनले बाँधिएका
**द्रुतचेतसः** = द्रवीभूत चित्त भएका
**ते** = ती
**सर्वे** = सबै पाण्डवहरू
**अनिमिषैः** = निर्निमेष
**अक्षैः** = नेत्रद्वारा
**वीक्षन्तः** = हेर्दै
**तत्र** = त्यहाँ
**तत्र** = त्यहाँ
**ह** = निश्चयका साथ
**तम् अनु** = भगवान् श्रीकृष्णका पछाडि
**विचेलुः** = दौडे

**वाक्यार्थ–** पाण्डवहरूको चित्त स्नेहले पग्लिएको थियो। उनीहरू आँखा नझिम्क्याईकन भगवान्लाई हेर्दै स्नेहबन्धनले बाँधिएर उहाँका पछिपछि दौडे।

**न्यरुन्धन्नुद्गलद्बाष्पमौत्कण्ठ्याद् देवकीसुते ।**
**निर्यात्यगारान्नोऽभद्रमिति स्याद् बान्धवस्त्रियः ॥ १४ ॥**

**पदार्थ–**
**देवकीसुते** = देवकीपुत्र भगवान्
**अगारात्** = घरबाट
**निर्याति** = द्वारकातिर जानलाग्दा
**बान्धवस्त्रियः** = बन्धुहरूका स्त्रीहरू
**औत्कण्ठ्यात्** = उत्कण्ठावश
**अभद्रम्** = अपशकुन
**नो स्यात्** = नहोस्
**इति** = यस उद्देश्यले
**उद्गलद्बाष्पम्** = आँखाबाट निक्लन लागेको आँशुलाई
**न्यरुन्धन्** = रोके

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले पाण्डवहरूको दरवारबाट बिदा भएर जान लाग्दा उहाँका बन्धु स्त्रीहरूको आँखा आँसुले भरिएका थिए। परन्तु यात्राको समयमा कुनै प्रकारको अपशकुन नहोस् भनेर उनीहरूले आँसुलाई प्रयत्नपूर्वक रोके।

**मृदङ्गशङ्खभेर्यश्च वीणापणवगोमुखाः ।**
**धुन्धुर्यानकघण्टाद्या नेदुर्दुन्दुभयस्तथा ॥ १५ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **मृदङ्गशङ्खभेर्यः** = मादल, शङ्ख, भेरी | **धुन्धुर्यानकघण्टाद्याः** = धुन्धुरी, नगाडा, घण्टा | बाजाहरू |
| **वीणापणवगोमुखाः** = वीणा, ढोल, नरसिङ्गा, | **तथा च** = त्यस्तै | **नेदुः** = बजे |
| | **दुन्दुभयः** = दुन्दुभि आदि | |

**वाक्यार्थ–** भगवान्‌को प्रस्थानको समयमा मादल, शङ्ख, भेरी, वीणा, ढोल, नरसिङ्गा, धुन्धुरी, नगरा, घण्टा, दुन्दुभी आदि बाजाहरू बज्न लागे।

**प्रासादशिखरारूढाः कुरुनार्यो दिदृक्षया।**
**ववृषुः कुसुमैः कृष्णं प्रेमव्रीडास्मितेक्षणाः॥ १६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **कुरुनार्यः** = कुरुवंशका स्त्रीहरू | छतमाथि चढेर | **कुसुमैः** = पुष्प |
| **दिदृक्षया** = भगवान् श्रीकृष्णको दर्शन गर्ने इच्छाले | **कृष्णम्** = भगवान् श्रीकृष्णलाई | **ववृषुः** = वृष्टि गरे |
| **प्रासादशिखरारूढाः** = दरवाारको | **प्रेमव्रीडास्मितेक्षणाः** = प्रेम, लज्जा र मन्दमुस्कानले हेर्दै | |

**वाक्यार्थ–** भगवान्‌को दर्शनको लालसाले कुरुवंशका स्त्रीहरू दरबारको छतमाथि चढेर प्रेम, लज्जा र मन्दमुस्कानयुक्त दृष्टिले भगवान्‌माथि पुष्पवृष्टि गर्न लागे।

**सितातपत्रं जग्राह मुक्तादामविभूषितम्।**
**रत्नदण्डं गुडाकेशः प्रियः प्रियतमस्य ह॥ १७॥**

पदार्थ–

| | | |
|---|---|---|
| (त्यस समय) | भगवान् श्रीकृष्णको | युक्त भएको |
| **प्रियः** = भगवान्‌का प्रिय साथी | **मुक्तादामविभूषितम्** = मोतीको झल्लर टाँगिएको | **सितातपत्रम्** = सेतो छाता |
| **गुडाकेशः** = अर्जुनले | | **ह** = निश्चयका साथ |
| **प्रियतमस्य** = आफ्ना प्रियतम | **रत्नदण्डम्** = रत्ननिर्मित दण्डले | **जग्राह** = लिनुभयो |

**वाक्यार्थ–** त्यस समयमा भगवान्‌का प्रिय साथी अर्जुनले मोतीको झल्लर टाँगिएको रत्नको दण्डले युक्त भएको सेतो छाता आफ्नो हातमा लिनुभयो।

**उद्धवः सात्यकिश्चैव व्यजने परमाद्भुते।**
**विकीर्यमाणः कुसुमै रेजे मधुपतिः पथि॥ १८॥**

| | | |
|---|---|---|
| **उद्धवः** = उद्धव | **च एव** = पनि | **व्यजने** = पङ्खा डोलाउन लागे |
| **सात्यकिः** = सात्यकि | **परमाद्भुते** = विचित्र प्रकारको | **पथि** = बाटामा |

**कुसुमैः** = पुष्पवृष्टिद्वारा
**विकीर्यमाणः** = स्वागत
गरिनुभएका
**मधुपतिः** = भगवान् श्रीकृष्ण
**रेजे** = अत्यन्त सुशोभित हुनुभयो

**वाक्यार्थ–** उद्धव र सात्यकि विचित्र प्रकारको पङ्खा हम्कन लागे। मार्गमा भगवान् श्रीकृष्णमाथि चारैतिरबाट फूलहरूको वर्षा भइरहेको थियो र उहाँ अत्यन्त सुशोभित हुनुभएको थियो।

**अश्रूयन्ताशिषः सत्यास्तत्र तत्र द्विजेरिताः।**
**नानुरूपानुरूपाश्च निर्गुणस्य गुणात्मनः॥ १९॥**

पदार्थ–

**तत्र** = त्यहाँ
**तत्र** = त्यहाँ
**द्विजेरिताः** = ब्राह्मणद्वारा दिइएका
**निर्गुणस्य** = निर्गुण
**च** = र
**गुणात्मनः** = सगुण भगवान्का
**अनुरूपाः** = अनुरूप
**न अनुरूपाः** = अननुरूप
**सत्याः** = सत्य
**आशिषः** = आशीर्वादहरू
**अश्रूयन्त** = सुनिन्थे

**वाक्यार्थ–** त्यहाँ ब्राह्मणहरूले दिएका सत्य आशीर्वादहरू सुनिन्थे। ती आशीर्वादहरू सगुण भगवान्का लागि अनुरूप थिए परन्तु निर्गुणका लागि अनुरूप थिएनन्। किनभने निर्गुण भगवान्मा कुनै प्राकृत गुण नभएकाले ब्राह्मणहरूले आशीर्वाद दिने प्रसङ्ग नै उठ्दैन।

**अन्योन्यमासीत् सञ्जल्प उत्तमश्लोकचेतसाम्।**
**कौरवेन्द्रपुरस्त्रीणां सर्वश्रुतिमनोहरः॥ २०॥**

पदार्थ–

**उत्तमश्लोकचेतसाम्** = भगवान् श्रीकृष्णमा चित्त अर्पण गरेका
**कौरवेन्द्रपुरस्त्रीणाम्** = हस्तिनापुरका कुलीन स्त्रीहरूको
**अन्योन्यम्** = परस्परमा
**सर्वश्रुतिमनोहरः** = सबको कान र मनलाई आकृष्ट गर्ने
**सञ्जल्पः** = संवाद
**आसीत्** = थियो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णमा चित्त अर्पण गरेका हस्तिनापुरका कुलीन स्त्रीहरू एकआपसमा सबको मन र कानलाई प्रिय लाग्ने वार्तालाप यसप्रकार गरिरहेका थिए।

**स वै किलायं पुरुषः पुरातनो**
**य एक आसीदविशेष आत्मनि।**
**अग्रे गुणेभ्यो जगदात्मनीश्वरे**
**निमीलितात्मन् निशि सुप्तशक्तिषु॥ २१॥**

पदार्थ–

(आफ्नो चोरी औंलाले भगवान् श्रीकृष्णलाई देखाउँदै)
**अयं** = यी श्रीकृष्ण
**किल** = निश्चय
**सः** = त्यही
**वै** = नै
**पुरुषः** = परम पुरुष हुनुहुन्छ
**यः** = जो
**गुणेभ्यः** = प्रकृतिका सत्त्व, रज र तम यी तीन गुणदेखि
**अग्रे** = पहिले
**एकः** = आफूमात्र
**पुरातनः** = अनादि कालदेखि
**अविशेषे** = निर्विशेष
**आत्मनि** = आत्मस्वरूपमा
**आसीत्** = रहनुहुन्थ्यो अनि
**निशि** = प्रलय कालमा
**सुप्तशक्तिषु** = महत्तत्त्व आदि समस्तजगद्विधायक शक्तिहरू विलीन भइसकेपछि
**जगदात्मनि** = जगदात्मा
**ईश्वरे** = भगवान्मा
**निमीलितात्मन्** = जीवको विलय भइसकेपछि पनि एकमात्र रहनुहुन्छ

**वाक्यार्थ–** ए सखी हो ! कृष्ण जो अहिले हस्तिनापुरबाट द्वारकातिर प्रस्थान गर्दै हुनुहुन्छ, उहाँ सनातन परमपुरुष हुनुहुन्छ। जो प्रलयको समयमा पनि आफ्नो निर्विशेष स्वरूपमा स्थित रहनुहुन्छ। यस समयमा सृष्टिका मूल कारण तीन गुणहरू रहँदैनन् र सम्पूर्ण जीवहरू जगदात्मा ईश्वरमा लीन हुन्छन्। महत्तत्त्व आदि समस्त शक्तिहरू आफ्नो कारण अव्यक्तमा सुतेका हुन्छन्।

**स एव भूयो निजवीर्यचोदितां**
**स्वजीवमायां प्रकृतिं सिसृक्षतीम्।**
**अनामरूपात्मनि रूपनामनी**
**विधित्समानोऽनुससार शास्त्रकृत्॥ २२॥**

पदार्थ–

**भूयः** = फेरि जगत्को सृष्टि कालमा
**अनामरूपात्मनि** = नाम र रूपले रहित जीवमा
**रूपनामनी** = पृथक् नाम र रूप
**विधित्समानः** = बनाउन इच्छा गर्दै
**शास्त्रकृत्** = जीवको कर्मफल भोग व्यवस्थाको लागि वेद बनाएर
**निजवीर्यचोदिताम्** = आफ्नो काल शक्तिले प्रेरित
**सिसृक्षतीम्** = विविध सृष्टितिर उन्मुख भएकी
**स्वजीवमायाम्** = जीवलाई मोहित गर्ने
**प्रकृतिम्** = प्रकृतिलाई
**एव** = नै
**अनुससार** = चेतन अध्यक्षको रूपमा अनुसरण गर्नुहुन्छ।

**वाक्यार्थ–** यसपछि उहाँले आफ्नो नाम र रूपले रहित स्वरूपमा नाम र रूपको निर्माण गर्ने इच्छा गर्नुहुन्छ र अंशभूत जीवहरूलाई मोहमा पार्ने त्रिगुणात्मक प्रकृतिलाई संसारको सृष्टिको लागि कालशक्तिद्वारा प्रेरित गर्नुहुन्छ एवं व्यवहारका लागि वेदादि शास्त्रहरूको रचना गर्नुहुन्छ।

**स वा अयं यत्पदमत्र सूरयो**
**जितेन्द्रिया निर्जितमातरिश्वनः ।**
**पश्यन्ति भक्त्युत्कलितामलात्मना**
**नन्वेष सत्त्वं परिमार्ष्टुमर्हति ॥ २३ ॥**

**पदार्थ–**

**सः** = यी
**वा** = अथवा
**अयं** = तिनै भगवान् श्रीकृष्ण हुन्
**अत्र** = यस संसारमा
**यत्पदम्** = जसको स्वरूपलाई
**निर्जितमातरिश्वनः** = प्राणमाथि विजय प्राप्त गरेको
**जितेन्द्रियाः** = इन्द्रियहरूमाथि विजय प्राप्त गरेका
**सूरयः** = योगीहरू
**भक्त्युत्कलितामलात्मना** = भक्तिले प्रफुल्लित निर्मल हृदयमा
**पश्यन्ति** = देख्दछन्
**ननु** = वास्तवमा
**एषः** = यिनै भगवान् श्रीकृष्ण
**सत्त्वम्** = अन्तःकरणलाई
**परिमार्ष्टुम्** = शुद्ध गर्न
**अर्हति** = समर्थ छन्

**वाक्यार्थ–** यस जगत्मा जितेन्द्रिय योगीहरू प्राणलाई आफ्नो वशमा राखेर भक्तिद्वारा प्रफुल्लित निर्मल हृदयमा जसको स्वरूपको साक्षात्कार गर्दछन् ती योगी श्रीकृष्ण उही साक्षात् परब्रह्म हुनुहुन्छ। वास्तवमा उहाँको भक्तिद्वारा अन्तःकरणको पूर्ण शुद्धि हुन्छ तर योगादिद्वारा त हुँदैन।

**स वा अयं सख्यनुगीतसत्कथो**
**वेदेषु गुह्येषु च गुह्यवादिभिः ।**
**य एक ईशो जगदात्मलीलया**
**सृजत्यवत्यत्ति न तत्र सज्जते ॥ २४ ॥**

**पदार्थ–**

**सखि** = हे सखी
**वा** = अथवा
**सः** = यी
**अयम्** = उनै श्रीकृष्ण हुनुहुन्छ
**वेदेषु** = वेदहरूमा
**गुह्येषु** = वेदानुसारी आगमहरूमा
**गुह्यवादिभिः** = रहस्यको निरूपण गर्न समर्थ ऋषिहरूद्वारा
**अनुगीतसत्कथः** = यथार्थ कथाको वर्णन गरिएका
**यः** = जुन
**ईशः** = भगवान् श्रीकृष्ण
**एकः** = आफू एक्लै
**आत्मलीलया** = आफ्नो लीलाद्वारा
**जगत्** = संसारलाई
**सृजति** = बनाउनुहुन्छ
**अवति** = रक्षा गर्नुहुन्छ
**अत्ति** = नाश गर्नुहुन्छ
**च** = पनि परन्तु
**तत्र** = त्यहाँ
**न सज्जते** = आसक्त हुनुहुन्न

**वाक्यार्थ–** सखी ! वास्तवमा यी श्रीकृष्ण उहाँ नै हुनुहुन्छ, जसको सुन्दर लीलाहरूको वर्णन वेद

र वेदानुसारी शास्त्रहरूमा व्यास आदि ऋषिहरूले गर्नुभएको छ। उहाँ एक अद्वितीय ईश्वर हुनुहुन्छ र आफ्नो लीलाले जगत्को सृष्टि, पालन र संहार गर्नुहुन्छ तर ती कार्यहरूमा उहाँ आसक्त हुनुहुन्न।

**यदा ह्यधर्मेण तमोधियो नृपा**
**जीवन्ति तत्रैष हि सत्त्वतः किल।**
**धत्ते भगं सत्यमृतं दयां यशो**
**भवाय रूपाणि दधद्युगे युगे॥ २५॥**

**पदार्थ–**

**यदा** = जुन समयमा
**तमोधियः** = तामसी बुद्धिवाला
**नृपाः** = राजाहरू
**हि** = निश्चय नै
**अधर्मेण** = अधर्मद्वारा
**जीवन्ति** = आफ्नो पेट पाल्न लाग्दछन्
**तत्र** = त्यस समयमा
**एषः** = यी भगवान् श्रीकृष्ण
**किल** = निश्चय नै
**सत्त्वतः** = सत्त्व गुणलाई स्वीकार गरेर
**भगम्** = ऐश्वर्य
**सत्यम्** = सत्य प्रतिज्ञा
**ऋतम्** = यथार्थोपदेश
**दयां** = भक्तहरूमाथि दया
**यशः** = अद्भुत कर्म
**धत्ते** = उत्तम गुणहरूले परिपूर्ण भएर प्रकट हुनुहुन्छ
**भवाय** = संसारको कल्याणको लागि
**युगे युगे** = प्रत्येक युगमा
**रूपाणि** = अनेक अवतारहरू
**दधत्** = धारण गर्नुहुन्छ

**वाक्यार्थ–** जब तामसी बुद्धि भएका राजाहरू अधर्मद्वारा आफ्नो पेट पाल्न थाल्दछन् तब परमेश्वर सत्त्वगुणलाई स्वीकार गरेर ऐश्वर्य, सत्य, ऋत, दया र यश प्रकट गर्दै संसारको कल्याणको लागि युगयुगमा अनेक अवतार धारण गर्नुहुन्छ।

**अहो अलं श्लाघ्यतमं यदोः कुल–**
**महो अलं पुण्यतमं मधोर्वनम्।**
**यदेष पुंसामृषभः श्रियः पतिः**
**स्वजन्मना चङ्क्रमणेन चाञ्चति॥ २६॥**

**पदार्थ–**

**यत्** = किनभने
**श्रियः** = लक्ष्मीका
**पतिः** = स्वामी
**पुंसाम्** = मानिसहरूमा
**ऋषभः** = उत्तम भगवान् श्रीकृष्णले
**स्वजन्मना** = आफ्नो जन्मले
**यदोः** = यदुको
**कुलम्** = कुललाई
**अञ्चति** = सम्मान गर्नु भएको छ यसकारण यो यदुकुल
**अलम्** = ज्यादै
**श्लाघ्यतमम्** = अति प्रशंसनीय बन्न पुगेको छ
**मधोः वनम्** = व्रजमण्डल पनि

**अलम्** = ज्यादै
**पुण्यतमम्** = अति पवित्र भएको छ
जसलाई
**एषः** = भगवान्ले
**चङ्क्रमणेन** = बाल्यावस्थामा र किशोरावस्थामा क्रीडा गरेर
पवित्र गर्नु भएको छ

**वाक्यार्थ–** अहो ! यो यदुवंश परम प्रशंसनीय छ जुन वंशलाई लक्ष्मीपति पुरुषोत्तम भगवान् श्रीकृष्णले जन्म ग्रहण गरेर सम्मानित गर्नुभएको छ। यो पवित्र व्रजमण्डल पनि अत्यन्त धन्य छ जसलाई भगवान् श्रीकृष्णले आफ्नो शैशवावस्थामा र किशोर अवस्थामा आफ्ना दिव्य लीलाहरूद्वारा सुशोभित गर्नुभएको छ।

**अहो बत स्वर्यशसस्तिरस्करी**
**कुशस्थली पुण्ययशस्करी भुवः।**
**पश्यन्ति नित्यं यदनुग्रहेषितं**
**स्मितावलोकं स्वपतिं स्म यत्प्रजाः॥ २७॥**

पदार्थ–
**अहो बत** = यो आश्चर्यको कुरो हो कि
**कुशस्थली** = द्वारकाले
**स्वर्यशसः** = स्वर्गको कीर्तिलाई पनि
**तिरस्करी** = तिरस्कार गरेको छ
**भुवः** = पृथिवीको
**पुण्ययशस्करी** = पवित्र यशलाई फैलाएको छ
**यत्** = किनभने
**यत्प्रजाः** = जहाँका प्रजाहरू
**अनुग्रहेषितं** = आफ्नो भक्तमाथि अनुग्रह गर्नको लागि निवास गर्नुभएका
**स्मितावलोकं** = मन्दहास्यले युक्त
**स्वपतिं** = आफ्नो पतिलाई
**नित्यं** = सधैँ
**पश्यन्ति स्म** = देख्दथे

**वाक्यार्थ–** ज्यादै हर्षको विषय के हो भने द्वारका नगरीले स्वर्गको यशलाई बढाएको छ। यो कुरा किन नहोस्, यहाँका प्रजाहरू भक्तहरूमाथि अनुग्रह गर्नका लागि निवास गर्नुहुने मन्दमुस्कान र कृपापूर्ण दृष्टिले आफ्ना भक्तहरूलाई हेर्ने भगवान् श्रीकृष्णको दर्शन सधैँ गर्दछन्।

**नूनं व्रतस्नानहुतादिनेश्वरः**
**समर्चितो ह्यस्य गृहीतपाणिभिः।**
**पिबन्ति याः सख्यधरामृतं मुहु-**
**र्व्रजस्त्रियः सम्मुमुहुर्यदाशयाः॥ २८॥**

पदार्थ–
**सखि** = सखि
**नूनं** = अवश्य नै
**अस्य** = भगवान् श्रीकृष्णद्वारा
**गृहीतपाणिभिः** = पाणिग्रहण गरिएका व्रजका स्त्रीहरूले
**व्रतस्नानहुतादिना** = व्रत, स्नान र हवन आदिद्वारा
**ईश्वरः** = भगवान् श्रीकृष्ण
**समर्चितः** = आराधना गरिएको

हुनुपर्छ किनभने
**याः** = जुन स्त्रीहरू
**मुहुः** = बारम्बार
**अस्य** = भगवान् श्रीकृष्णको
**अधरामृतं** = अधरामृत
**हि** = निश्चय नै
**पिबन्ति** = पिउँदछन्
**यदाशयाः** = जसको
स्मरणमात्रले
**व्रजस्त्रियः** = व्रजका स्त्रीहरू
**सम्मुमुहुः** = आनन्दले मूर्च्छित भएका थिए

**वाक्यार्थ—** हेर सखी ! भगवान् श्रीकृष्णले जुन स्त्रीहरूको पाणिग्रहण गर्नुभएको छ तिनीहरूले अवश्य पनि व्रत, स्नान, हवन आदिद्वारा उहाँको आराधना गरेको हुनुपर्दछ। यसर्थ उनीहरूले भगवान् श्रीकृष्णको अधरसुधाको पान गर्ने अवसर प्राप्त गरेका छन् जसको स्मरणमात्रले पनि व्रजस्त्रीहरू आनन्दले मूर्च्छित हुन्थे।

**या वीर्यशुल्केन हृताः स्वयंवरे**
**प्रमथ्य चैद्यप्रमुखान् हि शुष्मिणः।**
**प्रद्युम्नसाम्बाम्बसुतादयोऽपरा**
**याश्चाहृता भौमवधे सहस्रशः॥ २९॥**
**एताः परं स्त्रीत्वमपास्तपेशलं**
**निरस्तशौचं बत साधु कुर्वते।**
**यासां गृहात्पुष्करलोचनः पति-**
**र्न जात्वपैत्याहृतिभिर्हृदि स्पृशन्॥ ३०॥**

**पदार्थ—**
**याः** = जो
**प्रद्युम्नसाम्बाम्बसुतादयः** = प्रद्युम्न, साम्ब, आम्ब आदि छोरा हुने रुक्मिणी आदि पटरानीहरू
**स्वयंवरे** = स्वयंवरमा
**वीर्यशुल्केन** = पराक्रमरूपी शुल्क दिएर
**शुष्मिणः** = बलवान्
**चैद्यप्रमुखान्** = शिशुपाल आदि वीरहरूलाई
**प्रमथ्य** = जितेर
**हृताः** = ल्याइएका थिए
**याः** = जो
**अपराः** = अन्य
**सहस्रशः** = सोह्र हजार रानीहरू थिए तिनीहरू
**च** = पनि
**भौमवधे** = भौमासुरलाई मारेर
**हि** = निश्चय
**आहृताः** = ल्याइएका थिए
**एताः** = भगवान् श्रीकृष्णका यी रानीहरूले
**अपास्तपेशलं** = स्वातन्त्र्यले रहित भएको र
**निरस्तशौचं** = पवित्रताले रहित भएको
**परं** = केवल वा खालि यस्तो
**स्त्रीत्वम्** = स्त्रीत्वलाई
**साधु** = राम्रो उत्कृष्ट
**कुर्वते** = बनाएका छन्
**यासां** = जसको
**गृहात्** = घरबाट
**पुष्करलोचनः** = कमलनयन भगवान् श्रीकृष्ण
**पतिः** = पति

**आहृतिभिः** = (पारिजात आदि प्रियवस्तुको) उपहारद्वारा
**हृदि स्पृशन्** = आनन्द प्रदान गर्दै
**जातु** = कहिल्यै पनि
**न अपैति** = उनीहरूबाट एक क्षणका लागि पनि टाढा हुनुहुन्न

**वाक्यार्थ–** स्वयंवरमा शिशुपाल आदि बलवान् राजाहरूको अहङ्कारलाई चूर्ण पारेर भगवान् श्रीकृष्णले आफ्ना बाहुवलले जसलाई हरण गरेर ल्याउनुभएको थियो तथा जसका छोराहरू प्रद्युम्न, साम्ब, आम्ब आदि छन् ती रुक्मिणी आदि आठ पटरानीहरू र भौमासुरलाई मारेर ल्याइएका अररू हजारौँ पत्नीहरू वास्तवमा धन्य छन् किनभने यी सबैले स्वतन्त्रता र पवित्रताले रहित स्त्रीजीवनलाई पवित्र र उज्ज्वल बनाएका छन्। यसर्थ यिनीहरूका स्वामी भगवान् श्रीकृष्ण नाना प्रकारका प्रिय चेष्टा र पारिजात आदि प्रियवस्तुहरूको उपहारद्वारा आनन्दित पार्दै एक क्षणका लागि पनि उनीहरूदेखि टाढा हुनुहुन्न।

**एवंविधा गदन्तीनां स गिरः पुरयोषिताम्।**
**निरीक्षणेनाभिनन्दन् सस्मितेन ययौ हरिः॥ ३१॥**

**पदार्थ–**

**सः** = ती
**हरिः** = भगवान् श्रीकृष्ण
**एवंविधाः** = यसप्रकारका
**गिरः** = वाणीहरू
**गदन्तीनां** = बौल्दै गरेका
**पुरयोषिताम्** = हस्तिनापुरका स्त्रीहरूको
**सस्मितेन** = मन्दमुस्कानयुक्त
**निरीक्षणेन** = हेराइले
**अभिनन्दन्** = अभिनन्दन गर्दै
**ययौ** = त्यहाँबाट बिदा भएर जानुभयो

**वाक्यार्थ–** हस्तिनापुरका स्त्रीहरू यसप्रकार वार्तालाप गरिरहेका थिए। भगवान् श्रीकृष्ण मन्दमुस्कान र प्रेमपूर्ण हेराइले उनीहरूको अभिनन्दन गर्दै त्यहाँबाट बिदा हुनुभयो।

**अजातशत्रुः पृतनां गोपीथाय मधुद्विषः।**
**परेभ्यः शङ्कितः स्नेहात् प्रायुङ्क्त चतुरङ्गिणीम्॥ ३२॥**

**पदार्थ–**

**परेभ्यः** = शत्रुहरूबाट
**शङ्कितः** = शङ्का गरेर
**अजातशत्रुः** = युधिष्ठिरले
**मधुद्विषः** = श्रीकृष्णको
**गोपीथाय** = संरक्षणका लागि
**स्नेहात्** = प्रेमको कारणले
**चतुरङ्गिणीम्** = चार प्रकारका
**पृतनां** = सेनालाई
**प्रायुङ्क्त** = खटाउनुभयो

**वाक्यार्थ–** अजातशत्रु युधिष्ठिरले भगवान् श्रीकृष्णलाई बाटामा शत्रुहरूले आक्रमण गर्दछन् कि भन्ने शङ्का गरी उहाँको रक्षाको लागि स्नेहवश हात्ती, घोडा, रथ र पैदल सेना साथमा लगाइदिनुभयो।

**अथ दूरागतान् शौरिः कौरवान् विरहातुरान्।**
**सन्निवर्त्य दृढं स्निग्धान् प्रायात्स्वनगरीं प्रियैः॥ ३३॥**

**पदार्थ–**

**अथ** = यसपछि
**शौरिः** = श्रीकृष्ण
**दूरागतान्** = टाढासम्म पुऱ्याउन साथमा आएका
**विरहातुरान्** = विरहले आतुर भएका
**दृढं** = अत्यन्त
**स्निग्धान्** = प्रिय
**कौरवान्** = कौरवहरूलाई
**सन्निवर्त्य** = सान्त्वनापूर्वक फर्काइदिएर
**प्रियैः** = प्रिय उद्धव आदिका साथ
**स्वनगरीं** = आफ्नो सहर द्वारकातिर
**प्रायात्** = प्रस्थान गर्नुभयो

**वाक्यार्थ–** सुदृढ प्रेमको कारणले कुरुवंशी पाण्डव भगवान्सँग उहाँको बिदाइका लागि टाढासम्म गए। भगवान् श्रीकृष्णले उनीहरूलाई सान्त्वनापूर्वक फर्काइदिनुभयो। त्यसपछि उहाँ सात्यकि, उद्धव आदि प्रिय मित्रहरूका साथ द्वारकातर्फ प्रस्थान गर्नुभयो।

**कुरुजाङ्गलपाञ्चालान् शूरसेनान् सयामुनान्।**
**ब्रह्मावर्तं कुरुक्षेत्रं मत्स्यान् सारस्वतानथ॥ ३४॥**
**मरुधन्वमतिक्रम्य सौवीराभीरयोः परान्।**
**आनर्तान् भार्गवोपागाच्छ्रान्तवाहो मनाग् विभुः॥ ३५॥**

**पदार्थ–**

**भार्गव** = हे शौनक
**कुरुजाङ्गलपाञ्चालान्** = कुरुजाङ्गल र पाञ्चाल
**शूरसेनान्** = शूरसेन
**सयामुनान्** = यमुनातटवर्ती प्रदेश
**ब्रह्मावर्तं** = ब्रह्मावर्त
**कुरुक्षेत्रं** = केरुक्षेत्र
**मत्स्यान्** = मत्स्य
**सारस्वतान्** = सारस्वत
**अथ** = यसपछि
**मरुधन्वम्** = मरुधन्वलाई
**अतिक्रम्य** = पार गरेर
**सौवीराभीरयोः** = सौवीर र आभीरको
**परान्** = पर पश्चिमतर्फ रहेका
**आनर्तान्** = द्वारका प्रदेशमा
**मनाक्** = केही मात्रामा
**श्रान्तवाहः** = घोडा थाकेका
**विभुः** = भगवान् श्रीकृष्ण
**उपागात्** = आउनुभयो

**वाक्यार्थ–** उहाँ कुरुजाङ्गल, पाञ्चाल, शूरसेन, यमुनाका तटवर्ती प्रदेश, ब्रह्मावर्त, कुरुक्षेत्र पार गरेर सौवीर र आभीर देशको पश्चिमतर्फ रहेको आनर्त देशमा आउनुभयो। त्यस वेला धेरै समयको यात्राको कारणले भगवान्का रथका घोडाहरू केही थाकेका थिए।

**तत्र तत्र ह तत्रत्यैर्हरिः प्रत्युद्यतार्हणः।**
**सायं भेजे दिशं पश्चाद् गविष्ठो गां गतस्तदा॥ ३६॥**

पदार्थ–

**तत्र तत्र** = ती मार्गहरूका ठाउँठाउँमा
**तत्रत्यैः** = त्यहाँका मानिसहरूले
**प्रत्युद्यतार्हणः** = विभिन्न उपहारद्वारा सम्मान गरिएका
**हरिः** = भगवान् श्रीकृष्ण
**ह** = निश्चय नै
**सायं** = साँझमा
**पश्चात् दिशं** = द्वारका
**भेजे** = पुग्नुभयो
**तदा** = त्यस वेला
**गविष्ठः** = सूर्य
**गां गतः** = अस्ताउनुभयो
**तदा** = सायङ्काल भएपछि
**गविष्ठः** = रथबाट पृथिवीमा ओर्लेर
**गां** = तलाउमा गएर
**पश्चात् दिशं** = सन्ध्योपासना
**भेजे** = गर्नुभयो

**वाक्यार्थ–** विभिन्न ठाउँमा असङ्ख्य भक्तहरूद्वारा अर्पण गरिएका विभिन्न प्रकारका उपहारहरू ग्रहण गर्दै भगवान् श्रीकृष्ण सूर्यास्तको समयमा द्वारका पुग्नुभयो र तलाउमा गएर सन्ध्योपासना गर्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां प्रथमस्कन्धे**

**नैमिषीयोपाख्याने श्रीकृष्णद्वारकागमनं नाम दशमोऽध्यायः॥ १०॥**

# अथ एकादशोऽध्यायः

## द्वारकामा श्रीकृष्णको स्वागत

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**आनर्तान् स उपव्रज्य स्वृद्धाञ्जनपदान् स्वकान् ।**
**दध्मौ दरवरं तेषां विषादं शमयन्निव ॥ १ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सः** = भगवान् श्रीकृष्ण | **उपव्रज्य** = पुगेर | **दरवरं** = पाञ्चजन्य शङ्ख |
| **स्वकान्** = आफ्ना | **तेषां** = ती आनर्त देशवासीहरूको | **दध्मौ** = बजाउनुभयो |
| **स्वृद्धान्** = समृद्ध | **विषादं** = विरहवेदनालाई | |
| **आनर्तान्** = आनर्त नाम गरेको | **शमयन् इव** = मानौँ शमन गर्दै | |
| **जनपदान्** = देशमा | | |

**वाक्यार्थ–** श्रीकृष्णले समृद्ध आनर्त देशमा पुगेर त्यहाँका प्रजाहरूको विरहवेदनालाई शान्त गराउँदै आफ्नो पाञ्चजन्य शङ्ख बजाउनुभयो।

**स उच्चकाशे धवलोदरो दरोऽ-**
**प्युरुक्रमस्याधरशोणशोणिमा ।**
**दाध्मायमानः करकञ्जसम्पुटे**
**यथाब्जखण्डे कलहंस उत्स्वनः ॥ २ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| (त्यस समयमा भगवान् श्रीकृष्णले) | **उरुक्रमस्य** = भगवान्को | **यथा** = जसरी |
| **करकञ्जसम्पुटे** = करकमलका बीचमा राखेर | **अधरशोणशोणिमा** = ओठको रातोपनले रातो भएको | **उत्स्वनः** = उच्च स्वरले शब्द गर्ने |
| **दाध्मायमानः** = बजाइएको | **सः** = त्यो | **कलहंसः** = रजहाँस |
| **धवलोदरः** = सेतो वर्ण भएको | **दरः** = शङ्ख | **अब्जखण्डे** = रातो कमलमाथि सुशोभित हुन्छ |
| **अपि** = र | **उच्चकाशे** = त्यसै गरी ज्यादै शोभित भयो | |

**वाक्यार्थ–** भगवान्को ओठको रातोपनले रातो भएको त्यो सेतो वर्णको शङ्ख उहाँले आफ्नो करकमलभित्र राखेर बजाउँदा रातो कमलमाथि बसेर राजहंसले उच्च स्वरले मधुर गान गरेको जस्तो सुशोभित हुन्थ्यो।

**तमुपश्रुत्य निनदं जगद्भयभयावहम् ।**
**प्रत्युद्ययुः प्रजाः सर्वा भर्तृदर्शनलालसाः ॥ ३ ॥**

पदार्थ–

**जगद्भयभयावहम्** = संसारको भयलाई भयभीत गर्ने
**तम्** = त्यो
**निनदं** = शङ्खको ध्वनिलाई
**उपश्रुत्य** = सुनेर
**सर्वाः** = सम्पूर्ण
**प्रजाः** = प्रजाहरू
**भर्तृदर्शनलालसाः** = भगवान् श्रीकृष्णको दर्शन गर्ने इच्छाले
**प्रत्युद्ययुः** = बाहिर निक्ले

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले बजाएको शङ्खको ध्वनि संसारको भयलाई भयभीत गराउने खालको थियो। शङ्खको त्यस ध्वनिलाई सुनेर त्यहाँका प्रजाहरू श्रीकृष्णको दर्शन गर्ने इच्छाले घरबाट बाहिर निक्ले।

**तत्रोपनीतबलयो रवेर्दीपमिवादृताः ।**
**आत्मारामं पूर्णकामं निजलाभेन नित्यदा ॥ ४ ॥**
**प्रीत्युत्फुल्लमुखाः प्रोचुर्हर्षगद्गदया गिरा ।**
**पितरं सर्वसुहृदमवितारमिवार्भकाः ॥ ५ ॥**

पदार्थ–

**रवेः** = सूर्यलाई
**दीपम्** = सूर्यलाई दीपको आवश्यकता नपरे पनि भक्तहरू जसरी सूर्यलाई दीपदान गर्दछन्
**इव** = त्यस्तै
**तत्र** = त्यहाँ
**उपनीतबलयः** = हातमा विभिन्न प्रकारका उपहार लिएर
**प्रीत्युत्फुल्लमुखाः** = प्रेमले मुख-कमल प्रसन्न भएका
**आदृताः** = भक्तिले युक्त भएका द्वारकावासी प्रजाहरूले
**आत्मारामं** = आत्मामा रमण गर्ने
**निजलाभेन** = आफ्नो परमानन्द स्वरूपलाई प्राप्त गरेकाले
**नित्यदा** = सधैं
**पूर्णकामं** = पूर्णकाम
**अवितारम्** = रक्षक
**सर्वसुहृदम्** = सम्पूर्ण प्राणीका मित्र भगवान् श्रीकृष्णलाई
**अर्भकाः** = बालकहरू (जसरी आफ्नो ताते बोलीले)
**पितरं** = बाबुसँग (कुराकानी गर्दछन्)
**इव** = त्यसै गरी
**हर्षगद्गदया** = हर्षले गद्गद भएको
**गिरा** = वाणीले
**प्रोचुः** = स्तुति गर्न लागे

**वाक्यार्थ–**भगवान् श्रीकृष्ण आत्माराम हुनुहुन्छ। उहाँ आफ्नो आत्मलाभले नै सदा सर्वदा पूर्ण काम हुनुहुन्छ। तर पनि जसरी मानिसहरू ठूलो आदरका साथ भगवान् सूर्यलाई दीपदान गर्दछन् त्यसै गरी द्वारकावासीहरूले अनेक प्रकारको उपहारद्वारा भगवान् श्रीकृष्णको स्वागत गरे। सबैको अनुहारमा प्रेमको झलक स्पष्टरूपले देखिन्थ्यो। उनीहरूले हर्षले गद्गद् भएको वाणीले श्रीकृष्णको त्यसै गरी स्तुति गरे जसरी एउटा बालक आफ्नो बुबासँग तोते बोलीमा कुरा गर्दछ।

**नताः स्म ते नाथ सदाङ्घ्रिपङ्कजं**
**विरिञ्चवैरिञ्च्यसुरेन्द्रवन्दितम्।**
**परायणं क्षेममिहेच्छतां परं**
**न यत्र कालः प्रभवेत् परः प्रभुः ॥ ६ ॥**

**पदार्थ—**

**नाथ** = हे भगवान्
**विरिञ्चवैरिञ्च्यसुरेन्द्रवन्दितम्** = ब्रह्मा, सनकादि र इन्द्रद्वारा नमस्कार गरिएको
**इह** = यस संसारमा
**परं** = परम
**क्षेमम्** = कल्याण
**इच्छतां** = इच्छा गर्ने व्यक्तिहरूका लागि
**परायणं** = परम आश्रय भएको
**यत्र** = जुन चरणकमलको आश्रयलाई प्राप्त गरेपछि
**परः** = परम पिता ब्रह्मा आदि
**प्रभुः** = देवतालाई नियन्त्रणमा राख्न सक्षम
**कालः** = काल
**न प्रभवेत्** = समर्थ हुँदैन
**ते** = तपाईंको त्यस्तो
**अङ्घ्रिपङ्कजं** = चरणकमललाई
**सदा** = सधैँ
**नताः स्म** = नमस्कार गर्दछौँ

**वाक्यार्थ—** हे भगवान्! हामी तपाईंका ती चरणकमलमा सदा सर्वदा प्रणाम गर्दछौँ जसको वन्दना ब्रह्मा, शङ्कर, इन्द्र आदि देवताहरूले पनि गर्दछन्। तपाईंका चरणकमल यस संसारमा परम कल्याण चाहने व्यक्तिहरूका लागि सर्वोत्तम आश्रय छन् जसको शरण लिएपछि कालले पनि त्यस व्यक्तिका लागि कुनै अनिष्ट गर्न सक्दैन।

**भवाय नस्त्वं भव विश्वभावन**
**त्वमेव माताथ सुहृत्पतिः पिता।**
**त्वं सद्गुरुर्नः परमं च दैवतं**
**यस्यानुवृत्त्या कृतिनो बभूविम ॥ ७ ॥**

**पदार्थ—**

**विश्वभावन** = संसारका पालक भगवान्
**त्वं** = तपाईं
**नः** = हामीहरूको
**भवाय** = कल्याणका लागि
**भव** = हुनुहोस् किनभने
**त्वम्** = तपाईं
**एव** = नै
**माता** = माता
**सुहृत्** = मित्र
**पिता** = पिता हुनुहुन्छ
**नः** = हामीहरूको
**सद्गुरुः** = सद्गुरु
**पतिः** = स्वामी
**अथ** = यसपछि
**परमं** = परम
**दैवतं** = आराध्य देव
**च** = पनि हुनुहुन्छ
**यस्य** = जसको
**अनुवृत्त्या** = सेवाले हामीहरू
**कृतिनः** = कृतार्थ
**बभूविम** = भएका छौँ

**वाक्यार्थ–** संसारका पालक हे भगवान्, तपाईं नै हाम्रा लागि माता, सुहृद्, स्वामी, पिता हुनुहुन्छ। तपाईंको चरणको सेवा गर्न पाउँदा हामी कृतार्थ भएका छौँ, तपाईं हाम्रो कल्याण गर्नुहोस्।

**अहो सनाथा भवता स्म यद्वयं**
**त्रैविष्टपानामपि दूरदर्शनम्।**
**प्रेमस्मितस्निग्धनिरीक्षणाननं**
**पश्येम रूपं तव सर्वसौभगम्॥ ८॥**

**पदार्थ–**

**अहो** = यो ठुलो भाग्यको कुरो हो
**यत्** = कि
**वयं** = हामीहरू
**भवता** = तपाईंलाई पाएर
**सनाथाः** = सनाथ भएका
**स्म** = छौँ
**त्रैविष्टपानाम्** = देवताहरूका लागि
**अपि** = पनि
**दूरदर्शनम्** = दुर्लभ
**प्रेमस्मितस्निग्धनिरीक्षणाननं** = प्रेम मिसिएको हाँसो र अनुरागपरिपूर्ण नेत्रले युक्त भएको मुखले
**सर्वसौभगम्** = सम्पूर्ण अङ्गमा सौन्दर्यमिश्रित
**तव** = तपाईंको
**रूपं** = रूप
**पश्येम** = हेर्दछौँ

**वाक्यार्थ–** हामीहरू तपाईंलाई पाएर सनाथ भएका छौँ। किनभने तपाईंको सर्वसौन्दर्यसार अनुपम रूपको हामी दर्शन गर्दछौँ। तपाईंको यो सुन्दर मुख, प्रेमपूर्ण मुस्कानमिश्रित हेराइ र रूपको दर्शन त देवताहरूलाई पनि दुर्लभ छ।

**यर्ह्यम्बुजाक्षापससार भो भवान्**
**कुरून् मधून् वाथ सुहृद्दिदृक्षया।**
**तत्राब्दकोटिप्रतिमः क्षणो भवेद्**
**रविं विनाक्ष्णोरिव नस्तवाच्युत॥ ९॥**

**पदार्थ–**

**भो** = हे
**अम्बुजाक्ष** = कमलनयन
**अच्युत** = अच्युत
**यर्हि** = जब
**भवान्** = तपाईं
**सुहृद्दिदृक्षया** = आफ्ना बन्धुबान्धव भेट्नका लागि
**कुरून्** = हस्तिनापुर
**वा** = अथवा
**मधून्** = व्रजमण्डलतिर
**अपससार** = हामीलाई छोडेर जानुहुन्छ
**अथ** = यसपछि
**तत्र** = त्यस समयमा
**रविं** = भगवान् सूर्यको
**विना** = अभावमा
**अक्ष्णोः** = आँखाको लागि
**इव** = जसरी

**क्षणः** = एक छिन पनि
**अब्दकोटिप्रतिमः** = करोड वर्ष बराबर
**भवेत्** = हुन्छ
**तव** = त्यसै गरी तपाईंको
**विना** = अभावमा
**नः** = हामीहरूका लागि (एक छिन पनि कोटि वर्ष बराबर हुन्छ)

**वाक्यार्थ–** कमलनयन श्रीकृष्ण ! जब आफ्नो बन्धुबान्धवलाई भेट्न द्वारकालाई छोडेर हस्तिनापुर अथवा ब्रजमण्डलतिर लाग्नुहुन्छ त्यस अवस्थामा तपाईंको अभावमा एक क्षण पनि हाम्रा लागि करोड वर्षजस्तो लाग्छ। सूर्यको अभावमा आँखाको जुन अवस्था हुन्छ तपाईंको अभावमा हाम्रो पनि त्यही अवस्था हुन्छ।

**इति चोदीरिता वाचः प्रजानां भक्तवत्सलः।**
**शृण्वानोऽनुग्रहं दृष्ट्या वितन्वन्प्राविशत् पुरम्॥ १०॥**

**पदार्थ–**

**भक्तवत्सलः** = भगवान् श्रीकृष्ण
**प्रजानां** = प्रजाहरूले
**उदीरिताः** = प्रशंसामा भनिएका
**इति** = यी
**वाचः** = वाणीहरूलाई
**शृण्वानः** = श्रवण गर्दै
**च** = र
**दृष्ट्या** = कृपामय दृष्टिले
**अनुग्रहं** = कृपालाई
**वितन्वन्** = बर्साउँदै
**पुरम्** = द्वारका पुरीमा
**प्राविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** भक्तवत्सल भगवान् श्रीकृष्ण प्रजाहरूको मुखबाट यी कुराहरू सुन्दै आफ्नो कृपामय दृष्टिले उनीहरूमाथि अनुग्रहको वर्षा गर्दै द्वारकामा प्रवेश गर्नुभयो।

**मधुभोजदशार्हार्हकुकुरान्धकवृष्णिभिः।**
**आत्मतुल्यबलैर्गुप्तां नागैर्भोगवतीमिव॥ ११॥**
**सर्वर्तुसर्वविभवपुण्यवृक्षलताश्रमैः।**
**उद्यानोपवनारामैर्वृतपद्माकरश्रियम्॥ १२॥**
**गोपुरद्वारमार्गेषु कृतकौतुकतोरणाम्।**
**चित्रध्वजपताकाग्रैरन्तःप्रतिहतातपाम्॥ १३॥**
**सम्मार्जितमहामार्गरथ्यापणकचत्वराम्।**
**सिक्तां गन्धजलैरुप्तां फलपुष्पाक्षताङ्कुरैः॥ १४॥**
**द्वारि द्वारि गृहाणां च दध्यक्षतफलेक्षुभिः।**
**अलङ्कृतां पूर्णकुम्भैर्बलिभिर्धूपदीपकैः॥ १५॥**

पदार्थ–

**नागैः** = नागहरूले
**भोगवतीम् इव** = पातालपुरीको रक्षा गरेझैं (द्वारका पुरी)
**आत्मतुल्यबलैः** = भगवान् श्रीकृष्णजस्तै बलशाली,
**मधुभोजदशार्हार्हकुकुरान्धक-वृष्णिभिः** = मधु, भोज, दशार्ह, अर्ह, कुकुर, अन्धक र वृष्णिवंशीद्वारा
**गुप्तां** = सुरक्षित
**सर्वर्तुसर्वविभवपुण्यवृक्ष-लताश्रमैः** = समस्त ऋतुहरूमा सम्पूर्ण वैभवले सम्पन्न एवं पवित्र वृक्ष र लताहरूको कुञ्जले र
**उद्यानोपवनारामैः** = ठाउँठाउँमा फलहरूले परिपूर्ण उद्यान, पुष्पवाटिका र क्रीडावनहरूले युक्त
**वृतपद्माकरश्रियम्** = तलाउहरूको शोभाले सम्पन्न
**गोपुरद्वारमार्गेषु** = सहरका ढोकाहरूमा र राजमार्गमा
**कृतकौतुकतोरणाम्** = विभिन्न प्रकारका तोरणहरूद्वारा सजाइएको
**चित्रध्वजपताकाग्रैः** = चित्र-विचित्र ध्वजा र पताकाका कारणले
**अन्तः प्रतिहतातपाम्** = घामको कुनै प्रभाव नपर्ने द्वारकामा
**सम्मार्जितमहामार्गरथ्याआपणक-चत्वराम्** = राजमार्ग, अन्य सडक र बजारहरूमा राम्रोसँग सफा गरिएको
**गन्धजलैः** = सुगन्धित जलद्वारा
**सिक्तां** = छर्किएको
**फलपुष्पाक्षताङ्कुरैः** = भगवान्को स्वागतका लागि फल, पुष्प,अक्षता र अङ्कुरहरू चारैतिर
**उप्तां** = छरिएको द्वारका
**गृहाणां** = घरको
**द्वारि द्वारि** = प्रत्येक ढोकामा
**दध्यक्षतफलेक्षुभिः** = दही, अक्षता, फल र उखुद्वारा
**बलिभिः** = बलिद्वारा
**धूपदीपकैः** = धूप,दीप र
**पूर्णकुम्भैः** = जलपूर्ण घडाहरूद्वारा
**च** = पनि
**अलङ्कृतां** = सजाइएका थिए

**वाक्यार्थ–** जसरी नागहरू आफ्नो नगरी भोगवती पातालपुरीको रक्षा गर्दछन् त्यसै गरी भगवान्को त्यो द्वारकापुरी पनि मधु, भोज, दशार्ह, अर्ह, कुकुर, अन्धक र वृष्णिवंशी यादवहरूद्वारा सुरक्षित थियो। द्वारकापुरी समस्त ऋतुहरूका सम्पूर्ण वैभवले सम्पन्न एवं पवित्र वृक्ष र लताहरूको कुञ्जले युक्त थियो। ठाउँठाउँमा फलहरूले परिपूर्ण उद्यान, पुष्पवाटिका एवं क्रीडावनहरू थिए। बीचबीचमा कमलयुक्त सरोवरहरूले नगरको शोभालाई बढाइरहेका थिए। सहरका ढोकाहरूमा, दरबारका ढोकाहरूमा र सडकहरूमा भगवान्का तोरणहरू टाँगिएका थिए। चारैतिर चित्र-विचित्रका ध्वजापताकाहरू फहराइरहेका थिए। यसर्थ ती ठाउँहरूमा घामको कुनै पनि प्रभाव पर्दैनथ्यो। यस्तै द्वारकाका राजमार्ग, अरू सडक, बजारहरू र तिनका चोकहरूमा अत्यन्त सुगन्धित जलको सेचन गरिएको थियो। भगवान्को स्वागतका लागि बर्साइएका फलफूल, अक्षता र अङ्कुरहरू चारैतिर छरिएका थिए। द्वारकाका प्रत्येक ढोकामा दही, अक्षता, फल, उखु, जलपरिपूर्ण कलश, उपहारका वस्तुहरू र धूप, दीप आदि सजाइएका थिए।

**निशम्य प्रेष्ठमायान्तं वसुदेवो महामनाः।**
**अक्रूरश्चोग्रसेनश्च रामश्चाद्भुतविक्रमः॥ १६॥**

**प्रद्युम्नश्चारुदेष्णश्च साम्बो जाम्बवतीसुतः।**
**प्रहर्षवेगोच्छशितशयनासनभोजनाः॥ १७॥**
**वारणेन्द्रं पुरस्कृत्य ब्राह्मणैः ससुमङ्गलैः।**
**शङ्खतूर्यनिनादेन ब्रह्मघोषेण चादृताः॥**
**प्रत्युज्जग्मू रथैर्हृष्टाः प्रणयागतसाध्वसाः॥ १८॥**

**पदार्थ—**

**प्रेष्ठम्** = परम प्रिय भगवान् श्रीकृष्ण
**आयान्तं** = आउँदै गर्नुभएको
**निशम्य** = थाहा पाएर
**महामनाः** = उदारशिरोमणि
**वसुदेवः** = वसुदेव
**अक्रूरः** = अक्रूर
**उग्रसेनः** = उग्रसेन र
**अद्भुतविक्रमः** = अद्भुत पराक्रमी
**रामः** = बलराम
**च** = पनि
**प्रद्युम्नः** = प्रद्युम्न
**चारुदेष्णः** = चारुदेष्ण
**च** = र
**जाम्बवतीसुतः** = जाम्बवतीपुत्र
**साम्बः** = साम्ब
**प्रहर्षवेगोच्छशितशयनासन-भोजनाः** = हर्षको उद्रेकको कारणले सम्पूर्ण आवश्यक कार्य सुत्ने, बस्ने र भोजनआदिलाई छोडेर
**आदृताः** = भक्तिले युक्त
**हृष्टाः** = प्रसन्न
**वारणेन्द्रं** = श्रेष्ठ हात्तीलाई
**पुरस्कृत्य** = अगाडि लगाएर
**ससुमङ्गलैः** = मङ्गलसूचक पुष्पादि हातमा लिएका
**ब्राह्मणैः** = ब्राह्मणद्वारा
**ब्रह्मघोषेण** = स्वस्तिवाचनका साथ
**शङ्खतूर्यनिनादेन** = शङ्ख, तुरही बाजाहरू
**च** = र
**रथैः** = रथहरूका साथ
**प्रणयागतसाध्वसाः** = अतिशय स्नेहका कारण हतपत गर्दै
**प्रत्युज्जग्मुः** = भगवान् श्रीकृष्णको स्वागतका लागि आए

**वाक्यार्थ—**उदार शिरोमणि वसुदेव, अक्रूर, उग्रसेन, अद्भुत पराक्रमी बलराम, प्रद्युम्न, चारुदेष्ण, जाम्बवती पुत्र साम्बले भगवान् श्रीकृष्ण आउँदै हुनुहुन्छ भन्ने थाहा पाएपछि उनीहरूको मनमा यति आनन्द भयो कि उनीहरूले आफ्नो सम्पूर्ण आवश्यक कार्य सुत्ने-बस्ने र भोजन आदि छोडिदिए। प्रेमको कारणले उनीहरूको हृदय अत्यन्त भावविभोर भएको थियो। उनीहरूले मङ्गल शकुनका लागि एक गजराजलाई अगाडि लगाएर माङ्गलिक सामग्रीले सुसज्जित ब्राह्मणहरूद्वारा स्वस्तिवाचन गराउँदै भगवान्‌को स्वागतका लागि गए। शङ्ख, तुरही आदि बाजाहरू बज्न लागे, वेदध्वनि हुन थाल्यो। ती सबै अत्यन्त हर्षित भएर रथमाथि चढेर भगवान्‌को स्वागतका लागि गए।

**वारमुख्याश्च शतशो यानैस्तद्दर्शनोत्सुकाः।**
**लसत्कुण्डलनिर्भातकपोलवदनश्रियः॥ १९॥**

**नटनर्तकगन्धर्वाः सूतमागधवन्दिनः।**
**गायन्ति चोत्तमश्लोकचरितान्यद्भुतानि च॥ २०॥**

**पदार्थ—**

**तद्दर्शनोत्सुकाः** = भगवान् श्रीकृष्णको दर्शन गर्ने इच्छाले
**शतशः** = सयौँ
**वारमुख्याः** = वाराङ्गनाहरू
**च** = पनि
**लसत्कुण्डलनिर्भातकपोलवदनश्रियः** = चमचम गर्ने कुण्डलहरूको कान्ति गालामा पर्नाले जसका मुखहरू अत्यन्त शोभित देखिन्थे
**यानैः** = यानद्वारा आइरहेका थिए
**नटनर्तकगन्धर्वाः** = नट, नाच्ने र गाउनेहरू
**सूतमागधवन्दिनः** = सूत, मागध र वन्दना गर्नेहरूले
**च** = पनि
**अद्भुतानि** = अद्भुत
**उत्तमश्लोकचरितानि** = भगवान् श्रीकृष्णका चरित्रहरूलाई
**गायन्ति** = गाइरहेका थिए

**वाक्यार्थ—** साथै भगवान् श्रीकृष्णको दर्शनका लागि उत्सुक चमचम गर्ने कुण्डलहरूको कान्ति गालामा पर्नाले मुखमण्डल अत्यन्त सुशोभित भएका सैकडौँ श्रेष्ठ वाराङ्गनाहरू पालकीमाथि चढेर भगवान्को स्वागतका लागि पुगे। यस्तै नाच्नेहरू, गाउनेहरू, स्तुतिपाठक, मागध र वन्दना गर्नेहरूले भगवान् श्रीकृष्णको अद्भुत चरित्रको गान गरिरहेका थिए।

**भगवांस्तत्र बन्धूनां पौराणामनुवर्तिनाम्।**
**यथाविध्युपसङ्गम्य सर्वेषां मानमादधे॥ २१॥**

**पदार्थ—**

**तत्र** = त्यहाँ
**भगवान्** = भगवान् श्रीकृष्णले
**बन्धूनां** = बन्धु-बान्धवहरूको
**पौराणाम्** = नागरिकहरूको
**अनुवर्तिनाम्** = अनुसेवकहरूको
**यथाविधि** = उनीहरूको योग्यताको अनुसार
**उपसङ्गम्य** = अलग अलग भेट गरेर
**सर्वेषां** = सबैको
**मानम्** = सत्कार
**आदधे** = गर्नुभयो

**वाक्यार्थ—** भगवान् श्रीकृष्णले बन्धु, बान्धव, नागरिक र सेवकहरूलाई उनीहरूको योग्यताअनुसार अलग-अलग भेट गरेर सम्मान गर्नुभयो।

**प्रह्वाभिवादनाश्लेषकरस्पर्शस्मितेक्षणैः।**
**आश्वास्य चाश्वपाकेभ्यो वरैश्चाभिमतैर्विभुः॥ २२॥**
**स्वयं च गुरुभिर्विप्रैः सदारैः स्थविरैरपि।**
**आशीर्भिर्युज्यमानोऽन्यैर्वन्दिभिश्चाविशत्पुरम्॥ २३॥**

**पदार्थ—**

**प्रह्वाभिवादनाश्लेषकरस्पर्शस्मितेक्षणैः** = कसैलाई शिर झुकाएर प्रणाम, कसैलाई

वाणीले अभिवादन, कसैलाई छाती मिलाएर आलिङ्गन, कसैतिर मुसुक्क हाँसेर, कसैलाई प्रेमपूर्ण दृष्टि हेरेर
**आश्वास्य** = कसैलाई उनीहरूको इच्छाअनुसार वर प्रदान गरेर
**च** = र
**अश्वपाकेभ्यः** = चाण्डालपर्यन्त सम्पूर्ण नगरवासीहरूलाई
**अभिमतैः** = उनीहरूले इच्छा गरेको
**वरैः** = वरदान दिएर
**स्वयं** = आफू
**च** = र
**सदारैः** = पत्नीसहित
**विप्रैः** = ब्राह्मणहरूद्वारा
**स्थविरैः** = वृद्ध
**गुरुभिः** = गुरु
**अन्यैः** = अरूहरूको
**आशीर्भिः** = आशीर्वादलाई
**अपि** = पनि
**युज्यमानः** = ग्रहण गर्दै
**वन्दिभिः** = वन्दना गर्नेहरूको स्तुतिपाठलाई श्रवण गर्दै सबका साथ
**विभुः** = भगवान् श्रीकृष्ण
**पुरम्** = द्वारकापुरीमा
**आविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** कसैलाई वाणीले अभिवादन गर्नुभयो, कसैलाई छाती मिलाउनुभयो, कसैसँग हात मिलाउनुभयो, कसैतिर हेरेर मुसुक्क हाँसिदिनुभयो र कसैलाई खालि प्रेमपूर्ण दृष्टिले मात्र हेर्नुभयो। यसप्रकार चाण्डालपर्यन्त सबैलाई सन्तुष्ट गरेर गुरुजन, सपत्नीक ब्राह्मण, बृद्ध एवं अरुहरूबाट आशीर्वाद ग्रहण गर्दै उनीहरूको प्रशंसा सुन्दै सबका साथ भगवान् श्रीकृष्ण द्वारकामा पुग्नुभयो।

**राजमार्गं गते कृष्णे द्वारकायाः कुलस्त्रियः।**
**हर्म्याण्यारुरुहुर्विप्र तदीक्षणमहोत्सवाः॥ २४॥**

पदार्थ–

**विप्र** = हे शौनकजी
**कृष्णे** = भगवान् श्रीकृष्ण
**राजमार्गं** = राजमार्गबाट
**गते** = जान लाग्दा
**द्वारकायाः** = द्वारकाका
**कुलस्त्रियः** = कुलस्त्रीहरू
**तदीक्षणमहोत्सवाः** = भगवान्को दर्शनलाई महोत्सव ठानेर
**हर्म्याणि** = घरको छतमा
**आरुरुहुः** = चढे

**वाक्यार्थ–** शौनकजी ! भगवान् श्रीकृष्ण राजमार्गबाट जान लाग्दा द्वारकाका कुलस्त्रीहरू भगवान् श्रीकृष्णको दर्शनलाई परम महोत्सव मान्दै आ–आफ्नो घरको छतमाथि चढेर भगवान्को दर्शन गर्न लागे।

**नित्यं निरीक्षमाणानां यदपि द्वारकौकसाम्।**
**न वितृप्यन्ति हि दृशः श्रियो धामाङ्गमच्युतम्॥ २५॥**

पदार्थ–

**यदपि** = यद्यपि
**नित्यं** = सधैं
**श्रियः धामाङ्गम्** = जसका प्रत्येक अङ्गहरू शोभाका आश्रय छन् यस्ता
**अच्युतम्** = भगवान् श्रीकृष्णलाई
**निरीक्षमाणानां** = हेरिरहेका
**द्वारकौकसाम्** =

द्वारकावासीहरूको
**दृशः** = नेत्रहरू
**हि** = निश्चय नै
**न वितृप्यन्ति** = तृप्त हुँदैनन्

**वाक्यार्थ—** जसका प्रत्येक अङ्गहरू शोभाका आश्रय छन् यस्ता भगवान् श्रीकृष्णलाई हेरिरहेका द्वारकावासीहरूका नेत्रहरू कहिल्यै तृप्त हुँदैनन्।

**श्रियो निवासो यस्योरः पानपात्रं मुखं दृशाम्।**
**बाहवो लोकपालानां सारङ्गाणां पदाम्बुजम्॥ २६॥**

**पदार्थ—**

**यस्य** = जुन भगवान् श्रीकृष्णको
**उरः** = वक्षःस्थल
**श्रियः** = लक्ष्मीको
**निवासः** = निवासस्थान छ
**मुखं** = जसको मुखारविन्द
**दृशाम्** = नेत्रहरूको
**पानपात्रं** = सौन्दर्य सुधाले भरिएको पानपात्रजस्तो छ
**बाहवः** = भुजाहरू
**लोकपालानां** = लोकपालहरूको निवासस्थान छ
**पदाम्बुजम्** = चरणकमल
**सारङ्गाणां** = भ्रमरजस्ता परम विवेकी भक्तहरूको निवासस्थान छ

**वाक्यार्थ—** भगवान्को वक्षःस्थल मूर्तिमान् सौन्दर्यलक्ष्मीको निवासस्थान हो। उहाँको मुखारविन्द नेत्रद्वारा पान गर्न योग्य सौन्दर्यसुधाले भरिएको पानपात्र हो। उहाँका भुजाहरू लोकपालहरूको निवासस्थान हो। उहाँका चरणकमलहरू परमहंसका लागि आश्रय हुन्। उहाँको प्रत्येक अङ्ग शोभाको धाम हो।

**सितातपत्रव्यजनैरुपस्कृतः**
**प्रसूनवर्षैरभिवर्षितः पथि।**
**पिशङ्गवासा वनमालया बभौ**
**घनो यथार्कोडुपचापवैद्युतैः॥ २७॥**

**पदार्थ—**

**सितातपत्रव्यजनैः** = सेतो छाता र चमरद्वारा
**उपस्कृतः** = अलङ्कृत हुनुभएका
**पथि** = बाटोमा
**प्रसूनवर्षैः** = फूलको वर्षाले
**अभिवर्षितः** = चारैतिर वर्षा गरिनुभएका
**पिशङ्गवासा** = पीताम्बरधारी
**वनमालया** = वनमालाद्वारा भगवान् श्रीकृष्ण
**बभौ** = त्यसै गरी सुशोभित हुनुभयो
**यथा** = जसरी
**घनः** = मेघ
**अर्कोडुपचापवैद्युतैः** = सूर्य, नक्षत्र, चन्द्रमा, धनु र विजुलीबाट सुशोभित हुन्छ

**वाक्यार्थ—** द्वारकाको राजमार्गमा भगवान् श्रीकृष्णले प्रस्थान गर्दा उहाँको शिरमाथि सेतो वर्णको छाता ओढाइएको थियो र सेतो चमर डोलाइएको थियो। चारैतिरबाट उहाँमाथि पुष्पवृष्टि गरिएको

थियो। उहाँले पीताम्बर र वनमाला धारण गर्नुभएको थियो। त्यस समय उहाँ श्याम, मेघ एकै साथ सूर्य, चन्द्रमा, इन्द्रधनुष र बिजुलीद्वारा शोभायमान भएझैँ शोभायमान हुनुभयो।

**प्रविष्टस्तु गृहं पित्रोः परिष्वक्तः स्वमातृभिः।**
**ववन्दे शिरसा सप्त देवकीप्रमुखा मुदा॥ २८॥**

**पदार्थ–**

**पित्रोः** = माता र पिताको
**गृहं** = घरमा
**प्रविष्टः** = प्रवेश गरेर
**मुदा** = आनन्दपूर्वक
**देवकीप्रमुखाः** = देवकी आदि
**सप्त** = सात माताहरूलाई
**शिरसा** = शिर झुकाएर
**ववन्दे** = नमस्कार गर्नुभयो
**तु** = र
**स्वमातृभिः** = आमाहरूले
**परिष्वक्तः** = उहाँलाई आलिङ्गन गरे

**वाक्यार्थ–** सबभन्दा पहिले भगवान् आफ्नो मातापिताको घर प्रवेश गर्नुभयो। त्यहाँ उहाँले अत्यन्त नम्रता र श्रद्धाका साथ देवकी आदि सात माताहरूको चरणकमलमा शिर झुकाएर प्रणाम गर्नुभयो।

**ताः पुत्रमङ्कमारोप्य स्नेहस्नुतपयोधराः।**
**हर्षविह्वलितात्मानः सिषिचुर्नेत्रजैर्जलैः॥ २९॥**

**पदार्थ–**

**स्नेहस्नुतपयोधराः** = स्नेहको कारणले स्तनबाट दुध निक्लेका
**हर्षविह्वलितात्मानः** = अतिशय हर्षको कारणले हृदय विह्वल भएका
**ताः** = ती देवकी आदि माताले
**पुत्रम्** = भगवान् श्रीकृष्णलाई
**अङ्कम्** = काखमा
**आरोप्य** = राखेर
**नेत्रजैः** = आँखाबाट निक्लेका
**जलैः** = जल अथवा हर्षको आँसुद्वारा
**सिषिचुः** = सेचन गरे

**वाक्यार्थ–** माताहरूले पनि पुत्रलाई आफ्नो काखमा राख्नुभयो। स्नेहको कारण उहाँहरूको स्तनबाट दुधको धारा बग्न लाग्यो। उहाँहरूको हृदय हर्षले विह्वल भयो। आनन्दको आँशुले उहाँहरूले भगवान् श्रीकृष्णको अभिषेक गर्नुभयो।

**अथाविशत् स्वभवनं सर्वकाममनुत्तमम्।**
**प्रासादा यत्र पत्नीनां सहस्राणि च षोडश॥ ३०॥**

**पदार्थ–**

**अथ** = त्यसपछि
**सर्वकामम्** = सम्पूर्ण भोग्य पदार्थले युक्त भएको
**च** = र
**अनुत्तमम्** = अत्यन्त उत्तम
**स्वभवनं** = आफ्नो दरबारमा
**आविशत्** = प्रवेश गर्नुभयो
**यत्र** = जहाँ
**पत्नीनां** = भगवान् श्रीकृष्णका

पत्नीहरूका
**षोडश सहस्राणि** = सोह्र हजार
**प्रासादाः** = दरबारहरू थिए

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण माताहरूको आज्ञा लिएर सम्पूर्ण भोग्य सामग्रीले सम्पन्न सर्वश्रेष्ठ दरबारमा जानुभयो। त्यहाँ भगवान् श्रीकृष्णका सोह्र हजार पत्नीका अलग-अलग दरबारहरू थिए।

**पत्न्यः पतिं प्रोष्य गृहानुपागतं**
**विलोक्य सञ्जातमनोमहोत्सवाः।**
**उत्तस्थुरारात्सहसाऽऽसनाशयात्**
**साकं व्रतैर्व्रीडितलोचनाननाः॥ ३१॥**

**पदार्थ–**

**पत्न्यः** = भगवान् श्रीकृष्णकी पत्नीहरू
**प्रोष्य** = धेरै दिनसम्म बाहिर बसेर
**गृहान्** = घरमा
**उपागतं** = आउनुभएको
**पतिं** = पति भगवान् श्रीकृष्णलाई
**विलोक्य** = देखेर
**सञ्जातमनोमहोत्सवाः** = मनमा ठुलो हर्षको अनुभव गर्ने
**व्रीडितलोचनाननाः** = लजालु मुख र आँखाले युक्त भएका
**व्रतैः** = व्रत समाप्तिका
**साकं** = साथ
**सहसा** = तुरुन्त
**आसनाशयात्** = आसन र नियमहरूको परित्याग गरी
**आरात्** = एकाएक
**उत्तस्थुः** = उठे

**वाक्यार्थ–** आफ्नो प्राणनाथ भगवान् श्रीकृष्ण धेरै दिनसम्म बाहिर बसेर घरमा आएको देखेर रानीहरूको हृदयमा ठुलो आनन्द भयो। भगवान्लाई आफ्नो नजिक देखेर एकाएक ध्यानलाई छोडेर उहाँहरूले आसनको मात्र परित्याग होइन अपितु नियमहरूको पनि परित्याग गर्नुभयो।

**तमात्मजैर्दृष्टिभिरन्तरात्मना**
**दुरन्तभावाः परिरेभिरे पतिम्।**
**निरुद्धमप्यास्रवदम्बु नेत्रयो-**
**र्विलज्जतीनां भृगुवर्य वैक्लवात्॥ ३२॥**

**पदार्थ–**

**भृगुवर्य** = हे शौनकजी
**दुरन्तभावाः** = भगवान् श्रीकृष्णप्रति गम्भीर भाव भएका रुक्मिणी आदि पत्नीहरूले
**तम्** = ती
**पतिम्** = आफ्ना पति भगवान् श्रीकृष्णलाई
**अन्तरात्मना** = मनमनैले
**दृष्टिभिः** = दृष्टिको नजिक आइसकेपछि
**आत्मजैः** = छोराहरूको माध्यमले

| | | |
|---|---|---|
| **परिरेभिरे** = आलिङ्गन गर्नुभयो | **अम्बु** = आँसु | **अस्रवत्** = अलिकति |
| **विलज्जतीनां** = लज्जावश | **अपि** = पनि | खसिहाल्यो |
| **नेत्रयोः** = आँखामा | **वैक्लवात्** = विवशताको | |
| **निरुद्धम्** = रोकिएका | कारणले | |

**वाक्यार्थ**—भगवान्प्रति उहाँहरूको भाव अत्यन्त गम्भीर थियो। उहाँहरूले पनि मनैमन फेरि नेत्रद्वारा पुत्रको बहानाले र शरीरले पनि भगवान् श्रीकृष्णको आलिङ्गन गर्नुभयो। त्यस समयमा उहाँहरूको नेत्रबाट जुन प्रेमका आँसुहरू निक्लन लागेका थिए तिनलाई लज्जावश रोक्ने प्रयास गरे तापनि विवशतावश केही थोपा आँसुहरू भूमिमा खसिहाले।

**यद्यप्यसौ पार्श्वगतो रहोगत-**
**स्तथापि तस्याङ्घ्रियुगं नवं नवम्।**
**पदे पदे का विरमेत तत्पदा-**
**च्चलापि यच्छ्रीर्न जहाति कर्हिचित्॥ ३३॥**

पदार्थ—

| | | |
|---|---|---|
| **यद्यपि** = यद्यपि | **अङ्घ्रियुगं** = चरणयुगल | चरणकमललाई |
| **असौ** = यी श्रीकृष्ण | **पदे पदे** = प्रतिक्षण | **चला** = चञ्चल स्वभाव भएकी |
| **पार्श्वगतः** = सधै उहाँहरूको | **नवं नवम्** = नयाँ-नयाँ प्रतीत | **श्रीः** = लक्ष्मी |
| नजिक रहनुहुन्छ त्यसमाथि पनि | हुन्थे त्यसकारण | **अपि** = पनि |
| **रहोगतः** = उहाँसँग एकान्तमा | **तत्पदात्** = उहाँको चरणलाई | **कर्हिचित्** = कहिल्यै |
| रहनुहुन्छ | **का** = कसले | **न जहाति** = छोड्दिनन् |
| **तथापि** = तर पनि | **विरमेत** = छोड्न सक्ला | |
| **तस्य** = भगवान् श्रीकृष्णका | **यत्** = भगवान्को जुन | |

**वाक्यार्थ**— यद्यपि भगवान् श्रीकृष्ण एकान्तमा सधैं उनीहरूसँग बस्नुहुन्थ्यो तथापि भगवान् श्रीकृष्णका चरणकमल उहाँहरूका लागि प्रतिक्षण नयाँनयाँ प्रतीत हुन्थे। स्वभावले नै चञ्चल लक्ष्मी जसको चरणकमललाई एकछिन पनि छोड्दिनन् त्यस्ता भगवान् श्रीकृष्णको सन्निधिले कुन स्त्रीलाई तृप्ति हुन सक्ला ?

**एवं नृपाणां क्षितिभारजन्मनाम्**
**अक्षौहिणीभिः परिवृत्ततेजसाम्।**
**विधाय वैरं श्वसनो यथानलं**
**मिथो वधेनोपरतो निरायुधः॥ ३४॥**

पदार्थ–

**एवं** = यसप्रकार
**क्षितिभारजन्मनाम्** = पृथिवीको भार भएका
**परिवृत्ततेजसाम्** = प्रभावशाली
**नृपाणां** = राजाहरूमा
**अक्षौहिणीभिः** = अक्षौहिणी सेनाका साथ
**मिथः** = परस्पर
**वैरं** = वैरभाव
**विधाय** = गराएर
**श्वसनः** = वायु
**यथा** = जसरी बाँसहरूको परस्पर सङ्घर्षले
**अनलं** = आगालाई उत्पन्न गरेर बाँसहरूको वनलाई नष्ट गराइदिन्छ
**तथा** = त्यसरी
**निरायुधः** = अस्त्र ग्रहण नगरीकन
**वधेन** = ती शक्तिशाली राजाहरूका बधबाट
**उपरतः** = निवृत्त हुनुभयो

**वाक्यार्थ–** जसरी वायु बाँसहरूको सङ्घर्षद्वारा अग्नि उत्पन्न गरी ती सम्पूर्ण बाँसहरूलाई नष्ट गरिदिन्छ त्यसै गरी भगवान् श्रीकृष्णले पनि पृथिवीका भारभूत शक्तिशाली राजाहरूमा परस्परमा वैरभाव प्रकट गराएर आफूले शस्त्र ग्रहण नगरीकन अक्षौहिणी सेनासहित तीं राजाहरूको वध गराएर त्यसपछि आफू उपरत हुनुभयो।

**स एष नरलोकेऽस्मिन्नवतीर्णः स्वमायया।**
**रेमे स्त्रीरत्नकूटस्थो भगवान् प्राकृतो यथा॥ ३५॥**

पदार्थ–

**सः** = उनै
**एषः** = यी साक्षात् परमेश्वर
**भगवान्** = भगवान् श्रीकृष्ण
**स्वमायया** = आफ्नो मायालीलाद्वारा
**अवतीर्णः** = मनुष्यरूपमा अवतार लिएर
**स्त्रीरत्नकूटस्थः** = स्त्रीरत्नको समुदायमा रहेर
**प्राकृतः** = स्त्रीको वशमा रहेको मनुष्य
**यथा** = जसरी
**अस्मिन्** = यस
**नरलोके** = मर्त्यलोकमा
**रेमे** = रमाउनुभयो

**वाक्यार्थ–** साक्षात् परमेश्वर नै आफ्नो लीलाद्वारा मनुष्यलोकमा अवतीर्ण हुनुभएको थियो। हजारौं स्त्रीरत्नको समुदायमा रहेर उहाँले साधारण मनुष्यको जस्तो क्रीडा गर्नुभयो।

**उद्दामभावपिशुनामलवल्गुहास**
**व्रीडावलोकनिहतो मदनोऽपि यासाम्।**
**सम्मुह्य चापमजहात्प्रमदोत्तमास्ता**
**यस्येन्द्रियं विमथितुं कुहकैर्न शेकुः॥ ३६॥**

पदार्थ–

**यासाम्** = जुन कमनीय कामिनीहरूको
**उद्दामभावपिशुनामलवल्गुहास व्रीडावलोकनिहतः** = आफूभित्रको गम्भीर भावको सङ्केत गर्ने उहाँहरूको प्रेमपूर्वक

हेराइले घायल भएको
**मदनः** = कामदेवले
**सम्मुह्य** = मूर्च्छित भएर
**अपि** = पनि
**चापम्** = आफ्नो धनुलाई
**अजहात्** = परित्याग गरिदिएको
थियो
**ताः** = त्यस्ता
**प्रमदोत्तमाः** = स्त्रीरत्नहरूले
**यस्य** = जुन भगवान् श्रीकृष्णको
**इन्द्रियं** = इन्द्रियलाई
**कुहकैः** = मधुर हाँसो र कटाक्षद्वारा
**विमथितुं** = क्षुब्ध गर्न
**नशेकुः** = समर्थ भएनन्

**वाक्यार्थ—** जसको निर्मल र मधुर हँसी उनको हृदयको निर्मल भावलाई सूचित गर्दथ्यो, जसको दृष्टिको चोटले घायल भएर कामदेवले आफ्नो धनुषको परित्याग गरेको थियो त्यस्ता कमनीय कामिनीहरूले आफ्नो कामविलासद्वारा भगवान् श्रीकृष्णको मनमा अलिकति पनि क्षोभ उत्पन्न गर्न सकेनन्।

**तमयं मन्यते लोको ह्यसङ्गमपि सङ्गिनम्।**
**आत्मौपम्येन मनुजं व्यापृण्वानं यतोऽबुधः॥ ३७॥**

पदार्थ—

**असङ्गम्** = स्त्रीपुत्रादि विषयमा अनासक्त
**अपि** = र
**व्यापृण्वानं** = मनुष्यको जस्तो चेष्टा गर्ने
**तम्** = ती भगवान् श्रीकृष्णलाई
**अयं** = यो अज्ञानी
**लोकः** = जीवसमुदाय
**आत्मौपम्येन** = आफ्नो दृष्टान्त-द्वारा
**सङ्गिनम्** = स्त्री पुत्रादि विषयमा आसक्त
**मनुजं** = मनुष्य
**मन्यते** = ठान्दछ
**यतः** = किनभने
**हि** = निश्चय नै
**अबुधः** = यो अज्ञानी जीव समुदाय भगवान्को तत्त्वको विषयमा अनभिज्ञ छ

**वाक्यार्थ—** त्यस्ता असङ्ग भगवान् श्रीकृष्णलाई संसारी मनुष्यहरू आफूले जस्तै कर्म गरेको देखेर आसक्त मनुष्यझैं ठान्दछन् किनभने उनीहरू अज्ञानी छन्।

**एतदीशनमीशस्य प्रकृतिस्थोऽपि तद्गुणैः।**
**न युज्यते सदात्मस्थैर्यथा बुद्धिस्तदाश्रया॥ ३८॥**
**तं मेनिरेऽबला मूढाः स्त्रैणं चानुव्रतं रहः।**
**अप्रमाणविदो भर्तुरीश्वरं मतयो यथा॥ ३९॥**

पदार्थ—

**एतत्** = यही नै
**ईशस्य** = ईश्वरको
**ईशनम्** = ईश्वरत्व हो कि
**प्रकृतिस्थः** = प्रकृतिमा रहेर
**अपि** = पनि
**तद्गुणैः** = प्रकृतिका गुण राग, लोभ, मोह, दुःख, सुख आदिद्वारा
**सदा** = सधैं

**न युज्यते** = लिप्त हुनुहुन्न
**यथा** = जसरी
**आत्मस्थैः** = आत्माको सत्ता र प्रकाशरूप धर्मद्वारा
**तदाश्रया** = आत्माको अधीनमा रहने
**बुद्धिः** = बुद्धि (लिप्त हुन्छ)

**यथा** = जसरी
**मतयः** = अहङ्कारका वृत्तिहरूले
**ईश्वरं** = ईश्वरलाई आफ्नो धर्मले युक्त भएको मान्दछन् त्यसै गरी
**भर्तुः** = भगवान् श्रीकृष्णको
**अप्रमाणविदः** = तत्त्वलाई नजान्ने
**मूढाः** = अज्ञानी
**च** = र
**अबलाः** = भगवान्‌का पत्नीहरूले
**तं** = भगवान् श्रीकृष्णलाई
**स्त्रैणं** = स्त्रीमा आसक्त
**रहः** = एकान्तमा
**अनुव्रतं** = आफ्नो वशमा रहेको
**मेनिरे** = ठान्दथे

**वाक्यार्थ–** यही नै भगवान्‌को भगवत्ता हो कि उहाँ प्रकृतिमा रहेर पनि प्रकृतिका गुणद्वारा कहिल्यै पनि लिप्त हुनुहुन्न। आत्माको सत्ता र प्रकाशरूप धर्मद्वारा त्यसको अधीनमा रहेको बुद्धि लिप्त भएजस्तो भगवान् प्रकृतिका गुणद्वारा लिप्त हुनुहुन्न। जसरी अहङ्कारका वृत्तिहरू ईश्वरलाई आफ्नो धर्मले युक्त मान्दछन् त्यस्तै भगवान्‌को वास्तविक तत्त्व नजान्ने ती मूढ स्त्रीहरू पनि भगवान् कृष्णलाई आफ्नो एकान्तसेवी स्त्रीमा आसक्त पुरुष नै ठान्दथे।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां प्रथमस्कन्धे**

**नैमिषीयोपाख्याने कृष्णद्वारकाप्रवेशो नामैकादशोऽध्यायः॥ ११ ॥**

# अथ द्वादशोऽध्यायः

## परीक्षित्‌को जन्म

**शौनक उवाच** (शौनकजीले भन्नुभयो)

**अश्वत्थाम्नोपसृष्टेन ब्रह्मशीर्ष्णोरुतेजसा ।**

**उत्तराया हतो गर्भ ईशेनाजीवितः पुनः ॥ १ ॥**

पदार्थ—

| | | |
|---|---|---|
| **अश्वत्थाम्ना** = अश्वत्थामाद्वारा | **उत्तरायाः** = उत्तराको | **ईशेन** = भगवान् कृष्णद्वारा |
| **उपसृष्टेन** = छोडिएको | **गर्भः** = गर्भ | **आजीवितः** = बचाइएको थियो |
| **उरुतेजसा** = ठुलो प्रभाव भएको | **हतः** = नष्ट गरिएको र | |
| **ब्रह्मशीर्ष्णा** = ब्रह्मास्त्रद्वारा | **पुनः** = फेरि | |

**वाक्यार्थ—** अश्वत्थामाले प्रहार गरेको अत्यन्त तेजस्वी ब्रह्मास्त्रबाट उत्तराको गर्भ नष्ट भएको थियो परन्तु भगवान्‌ले उसलाई पुनः जीवित गराइदिनुभयो ।

**तस्य जन्म महाबुद्धेः कर्माणि च महात्मनः ।**

**निधनं च यथैवासीत्स प्रेत्य गतवान् यथा ॥ २ ॥**

**तदिदं श्रोतुमिच्छामो गदितुं यदि मन्यसे ।**

**ब्रूहि नः श्रद्दधानानां यस्य ज्ञानमदाच्छुकः ॥ ३ ॥**

पदार्थ—

| | | |
|---|---|---|
| **यस्य** = जुन राजा परीक्षित्‌लाई | **कर्माणि** = कर्महरू | **श्रोतुम्** = सुन्न |
| **शुकः** = भगवान् शुकदेवजीले | **निधनं** = निधन | **इच्छामः** = चाहन्छौ |
| **ज्ञानम्** = ज्ञान | **च** = र | **यदि** = यदि |
| **अदात्** = प्रदान गर्नुभएको थियो | **प्रेत्य** = शरीरलाई छोडेर | **गदितुं** = सुनाउन |
| **महाबुद्धेः** = महाज्ञानी | **सः** = ती राजा परीक्षित् | **मन्यसे** = योग्य ठान्नुहुन्छ भने |
| **महात्मनः** = महात्मा | **यथा एव** = जसरी | **श्रद्दधानानां** = श्रद्धा गर्ने |
| **तस्य** = ती राजा परीक्षित्‌को | **गतवान्** = जुन गतिलाई प्राप्त गर्नुभयो | **नः** = हामीहरूलाई |
| **जन्म** = जन्म | | **ब्रूहि** = भन्नुहोस् |
| **आसीत्** = भयो | **तत् इदं** = यी सम्पूर्ण कुराहरू | |

**वाक्यार्थ—** त्यस गर्भबाट उत्पन्न भएका महाज्ञानी महात्मा परीक्षित् जसलाई शुकदेवजीले ज्ञानको उपदेश गर्नुभएको थियो, उनको जन्म, कर्म, मृत्यु र त्यसपछि उनलाई जुन गति प्राप्त

भयो, यी विषयहरूमा हामी ठुलो श्रद्धाका साथ श्रवण गर्न चाहन्छौं। यदि तपाईं हामीलाई उक्त विषयहरूमा श्रवण गर्न योग्य ठान्नुहुन्छ भने हामीलाई बताउनुहोस्।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**अपीपलद् धर्मराजः पितृवद् रञ्जयन् प्रजाः।**

**निःस्पृहः सर्वकामेभ्यः कृष्णपादाब्जसेवया॥ ४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **कृष्णपादाब्जसेवया** = भगवान् | भोगहरूबाट | **रञ्जयन्** = प्रसन्न राख्दै |
| श्रीकृष्णको चरणकमलको | **निःस्पृहः** = स्पृहारहित हुनुभएका | **पितृवत्** = पिताले झैं |
| सेवाले | **धर्मराजः** = धर्मराज युधिष्ठिरले | **अपीपलत्** = पालन गर्नुभयो |
| **सर्वकामेभ्यः** = सम्पूर्ण | **प्रजाः** = प्रजाहरूलाई | |

**वाक्यार्थ–** धर्मराज युधिष्ठिर आफ्ना प्रजाहरूलाई प्रसन्न राख्दै पितृवत् उनीहरूको पालना गर्न लाग्नुभयो। भगवान् श्रीकृष्णको चरणकमलको सेवाबाट उहाँ सम्पूर्ण भोग्य पदार्थबाट निःस्पृह हुनुभएको थियो।

**सम्पदः क्रतवो लोका महिषी भ्रातरो मही।**

**जम्बूद्वीपाधिपत्यं च यशश्च त्रिदिवं गतम्॥ ५॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सम्पदः** = राजा युधिष्ठिरसँग | **भ्रातरः** = आज्ञाकारीभाइहरू | **गतम्** = पुगेको |
| प्रशस्त सम्पत्ति थियो | **मही** = सम्पूर्ण पृथिवी | **यशः** = कीर्ति |
| **क्रतवः** = उहाँले धेरै ठुला-ठुला | **जम्बूद्वीपाधिपत्यं** = जम्बूद्वीपको | **च** = पनि |
| यज्ञहरू गर्नुभएको थियो | राज्य | थियो |
| **लोकाः** = प्रजा | **च** = र | |
| **महिषी** = अनुकूल रानी | **त्रिदिवं** = स्वर्गसम्म | |

**वाक्यार्थ–** महाराज युधिष्ठिरसँग अतुल सम्पत्ति थियो। यज्ञानुष्ठानको फलस्वरूप उहाँले श्रेष्ठ लोकहरूलाई प्राप्त गर्ने अधिकार प्राप्त गर्नुभएको थियो। उहाँका रानीहरू र भाइहरू अनुकूल थिए। उहाँ जम्बूद्वीपको स्वामी हुनुहुन्थ्यो र उहाँको कीर्ति स्वर्गसम्म फैलिएको थियो।

**किं ते कामाः सुरस्पार्हा मुकुन्दमनसो द्विजाः।**

**अधिजह्रुर्मुदं राज्ञः क्षुधितस्य यथेतरे॥ ६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **द्विजाः** = हे शौनकादि ऋषिहरू | **सुरस्पार्हाः** = देवताहरूद्वारा पनि | अभिलषित |

**ते** = ती
**कामाः** = भोग्य पदार्थहरूले
**यथा** = जसरी
**क्षुधितस्य** = भोकाएको मनुष्यलाई
**इतरे** = अरू पदार्थहरूले आनन्द दिन सक्दैनन्
**मुकुन्दमनसः** = भगवान् श्रीकृष्णका भक्त
**राज्ञः** = राजा युधिष्ठिरलाई
**किं** = के
**मुदं** = आनन्द
**अधिजह्रुः** = प्रदान गर्न सक्थे

**वाक्यार्थ–** उहाँसँग भोगका यस्ता सामग्रीहरू थिए जसको प्राप्तिका लागि देवताहरू पनि लालायित हुन्थे। तर जसरी भोकाएको मानिसलाई भोजनदेखि बाहेक अरू कुरा मन पर्दैन त्यसै गरी उहाँलाई पनि भगवान्देखि बाहेकका अरू वस्तुले सुख दिन सकेनन्।

**मातुर्गर्भगतो वीरः स तदा भृगुनन्दन।**
**ददर्श पुरुषं कञ्चिद् दह्यमानोऽस्त्रतेजसा॥ ७॥**

पदार्थ–

**भृगुनन्दन** = हे भृगुपुत्र शौनकजी
**मातुः** = आमा उत्तराको
**गर्भगतः** = गर्भस्थित
**सः** = ती
**वीरः** = वीर शिशु परीक्षित् जब
**अस्त्रतेजसा** = ब्रह्मास्त्रको तेजबाट
**दह्यमानः** = जलिरहेका थिए
**तदा** = त्यस वेला
**कञ्चित्** = कुनै
**पुरुषं** = ज्योतिर्मय पुरुषलाई
**ददर्श** = देखे

**वाक्यार्थ–** शौनकजी! उत्तराको गर्भमा स्थित त्यो वीर शिशु परीक्षित् जब अश्वत्थामाको ब्रह्मास्त्रको तेजबाट जल्न लागेको थियो त्यतिखेर त्यस बालकले आफ्नो अगाडि एउटा ज्योतिर्मय पुरुष देख्यो।

**अङ्गुष्ठमात्रममलं स्फुरत्पुरटमौलिनम्।**
**अपीच्यदर्शनं श्यामं तडिद्वाससमच्युतम्॥ ८॥**
**श्रीमद्दीर्घचतुर्बाहुं तप्तकाञ्चनकुण्डलम्।**
**क्षतजाक्षं गदापाणिमात्मनः सर्वतो दिशम्॥**
**परिभ्रमन्तमुल्काभां भ्रामयन्तं गदां मुहुः॥ ९॥**
**अस्त्रतेजः स्वगदया नीहारमिव गोपतिः।**
**विधमन्तं सन्निकर्षे पर्यैक्षत क इत्यसौ॥ १०॥**

पदार्थ–

(त्यो पुरुष)
**अङ्गुष्ठमात्रम्** = अङ्गुष्ठमात्र परिमाणवाला

**अमलं** = निर्मल
**स्फुरत्पुरटमौलिनम्** = शिरमा सुनको मुकुट चम्किरहेको
**अपीच्यदर्शनं** = अति सुन्दर
**श्यामं** = श्याम रूपवाला
**तडिद्वाससम्** = विजुलीजस्तै चमचम चम्कने पीताम्बर धारण गरेका
**अच्युतम्** = अच्युत
**श्रीमद्दीर्घचतुर्बाहुं** = अत्यन्त सुन्दर लामा चार हात भएका
**तप्तकाञ्चनकुण्डलम्** = कानमा सुनका अत्यन्त सुन्दर कुण्डलहरू लगाएका
**क्षतजाक्षं** = रगतजस्तो राता आँखा भएका
**गदापाणिम्** = गदा हातमा लिएका
**आत्मनः** = आफ्नो रक्षाको लागि
**सर्वतः** = चारै
**दिशम्** = दिशातर्फ
**मुहुः** = बारम्बार
**परिभ्रमन्तम्** = घुमिरहेका र
**उल्काभां** = अगुल्टोजस्तो
**गदां** = गदालाई
**सर्वतः** = दिशातर्फ
**दिशम्** = चारैतिर
**मुहुः** = बारम्बार
**भ्रामयन्तं** = घुमाइरहेका
**गोपतिः** = भगवान् सूर्यले आफ्ना किरणद्वारा
**नीहारम्** = कुहिरालाई हटाए
**इव** = झैँ
**स्वगदया** = आफ्नो गदाद्वारा
**अस्त्रतेजः** = ब्रह्मास्त्रको तेजलाई **विधमन्तं** = नाश गरिरहेका यस्तो कुनै अलौकिक पुरुषलाई
**सन्निकर्षे** = आफ्नो आँखा अगाडि
**पर्यैक्षत** = देखे यसपछि
**असौ** = यो पुरुष
**कः** = को होला
**इति** = भनेर त्यस बालकले मनमनै विचार गर्न लाग्यो

**वाक्यार्थ–** त्यो पुरुष देख्नमा अङ्गुष्ठमात्र परिमाण भए पनि उसको स्वरूप अत्यन्त निर्मल थियो। उसले विजुलीजस्तो चमचम गर्ने पीताम्बर धारण गर्नुका साथै शिरमा सुनको मुकुट चम्किइरहेका एक दिव्य पुरुषलाई देख्यो। त्यस निर्विकार पुरुषका सुन्दर लाामा हातहरू थिए। कानमा सुनका सुन्दर कुण्डलहरू थिए। आँखाहरू राता थिए। हातमा अगुल्टोजस्तो गदा लिएर बारम्बार आफ्नो चारैतिर घुमाइरहेको देख्यो। जसरी सूर्यले आफ्नो किरणद्वारा कुहिरालाई भगाउँछन् त्यसै गरी त्यो ज्योतिर्मय पुरुषले ब्रह्मास्त्रको तेजलाई हटाइरहेको थियो। त्यस पुरुषलाई आफ्नो नजिकै देखेर यो पुरुष को होला भनेर त्यो बालक मनमनै विचार गर्नलाग्यो।

**विधूय तदमेयात्मा भगवान् धर्मगुब्विभुः।**
**मिषतो दशमासस्य तत्रैवान्तर्दधे हरिः॥ ११॥**

पदार्थ–

**अमेयात्मा** = अचिन्त्य रूप
**धर्मगुप्** = धर्मरक्षक
**विभुः** = व्यापक
**भगवान्** = भगवान्
**हरिः** = हरि
**तत्** = ब्रह्मास्त्रको तेजलाई
**विधूय** = हटाएर
**दशमासस्य** = दश महिना पुगेको बालकले
**मिषतः** = हेर्दाहेर्दै
**तत्र** = त्यही गर्भमा
**एव** = नै
**अन्तर्दधे** = अन्तर्धान हुनुभयो

**वाक्यार्थ–** यसप्रकार धर्मरक्षक अचिन्त्यरूप भगवान् श्रीकृष्ण दश महिनाको गर्भस्थ शिशुको

अगाडि ब्रह्मास्त्रको तेजलाई शान्त गरेर अन्तर्धान हुनुभयो।

**ततः सर्वगुणोदर्के सानुकूलग्रहोदये।**
**जज्ञे वंशधरः पाण्डोर्भूयः पाण्डुरिवौजसा॥ १२॥**

पदार्थ–

**ततः** = त्यसपछि
**सानुकूलग्रहोदये** = अनुकूल ग्रहहरूको उदयले युक्त
**सर्वगुणोदर्के** = समस्त सद्गुणहरूलाई विकसित गर्ने लग्नमा
**पाण्डोः** = पाण्डुको
**वंशधरः** = वंशधर
**ओजसा** = तेजले
**भूयः** = फेरि
**पाण्डुः** = पाण्डु
**इव** = झैं
**जज्ञे** = जन्मिए

**वाक्यार्थ–** त्यसपछि अनुकूल ग्रहको उदयले युक्त समस्त सद्गुणलाई विकसित गर्ने शुभ समयमा पाण्डुका वंशधर परीक्षित्‌को जन्म भयो। जन्मको समयमा त्यस बालकको तेज देख्दा पाण्डु नै फेरि अर्को जन्म लिएर आएजस्तो प्रतीति हुन्थ्यो।

**तस्य प्रीतमना राजा विप्रैर्धौम्यकृपादिभिः।**
**जातकं कारयामास वाचयित्वा च मङ्गलम्॥ १३॥**

पदार्थ–

**प्रीतमना** = नाति जन्मेको खबर सुनेर प्रसन्न भएका
**राजा** = राजा युधिष्ठिरले
**धौम्यकृपादिभिः** = धौम्य, कृपाचार्य आदि
**विप्रैः** = ब्राह्मणहरूद्वारा
**मङ्गलम्** = मङ्गल
**वाचयित्वा** = वाचन गराएर
**तस्य** = ती बालकको
**जातकं** = जातकर्म संस्कार
**च** = पनि
**कारयामास** = गराउनुभयो

**वाक्यार्थ–** नातिको जन्मको समाचार सुन्दा युधिष्ठिर अत्यन्त प्रसन्न हुनुभयो। उहाँले धौम्य, कृपाचार्य आदि ब्राह्मणद्वारा ती बालकको जातकर्म संस्कार गराउनुभयो।

**हिरण्यं गां महीं ग्रामान् हस्त्यश्वान् नृपतिर्वरान्।**
**प्रादात् स्वन्नं च विप्रेभ्यः प्रजातीर्थे स तीर्थवित्॥ १४॥**

पदार्थ–

**तीर्थवित्** = दानको योग्य समयलाई जान्ने
**सः** = ती
**नृपतिः** = राजा युधिष्ठिरले
**प्रजातीर्थे** = प्रजातीर्थ कालमा अर्थात् नाल काट्नुभन्दा पहिलेको समयमा
**विप्रेभ्यः** = ब्राह्मणहरूलाई
**हिरण्यं** = सुन
**गां** = गाई
**महीं** = पृथिवी
**ग्रामान्** = गाउँहरू
**वरान्** = उत्तम
**हस्त्यश्वान्** = हात्ती र घोडाहरू
**स्वन्नं** = उत्तम अन्नहरू

**च** = पनि
**प्रादात्** = प्रदान गरे

**वाक्यार्थ–** महाराज युधिष्ठिर दानको योग्य समयलाई जान्नुहुन्थ्यो। उहाँले प्रजातीर्थनामक कालमा अर्थात् बालकको नाल काट्नुभन्दा पहिले ब्राह्मणलाई सुवर्ण, गाई, पृथिवी, गाउँ, उत्तम जातका घोडा र अन्नहरूको दान गर्नुभयो।

**तमूचुर्ब्राह्मणास्तुष्टा राजानं प्रश्रयान्वितम्।**
**एष ह्यस्मिन् प्रजातन्तौ पुरूणां पौरवर्षभ ॥ १५ ॥**
**दैवेनाप्रतिघातेन शुक्ले संस्थामुपेयुषि।**
**रातो वोऽनुग्रहार्थाय विष्णुना प्रभविष्णुना ॥ १६ ॥**
**तस्मान्नाम्ना विष्णुरात इति लोके बृहच्छ्रवाः।**
**भविष्यति न सन्देहो महाभागवतो महान्॥ १७ ॥**

**पदार्थ–**

**तुष्टाः** = सन्तुष्ट भएका
**ब्राह्मणाः** = ब्राह्मणहरूले
**प्रश्रयान्वितम्** = नम्रताले युक्त भएका
**तम्** = ती
**राजानं** = राजालाई
**ऊचुः** = भने
**पौरवर्षभ** = हे पुरुवंश शिरोमणि
**पुरूणां** = पुरु वंशीहरूको
**अस्मिन्** = यस
**शुक्ले** = शुद्ध
**प्रजातन्तौ** = वंशपरम्परामा
**अप्रतिघातेन** = दुर्निवार
**दैवेन** = काल गतिले
**संस्थाम्** = नाश
**उपेयुषि** = हुन लागेको समयमा
**वः** = तपाईंहरूमाथि
**अनुग्रहार्थाय** = अनुग्रह गर्नका लागि
**प्रभविष्णुना** = सर्वशक्तिसम्पन्न
**विष्णुना** = विष्णुले
**एषः** = यो बालक
**हि** = निश्चय नै
**रातः** = प्रदान गर्नुभयो
**तस्मात्** = त्यसकारण
**विष्णुरातः** = विष्णुरात
**इति** = यो
**नाम्ना** = नामले
**लोके** = लोकमा प्रसिद्ध हुनेछ भन्ने कुरामा
**महाभागवतः** = भगवान्को परम भक्त र
**बृहच्छ्रवाः** = परम यशस्वी
**महान्** = महापुरुष
**भविष्यति** = हुनेछ भन्ने कुरामा
**न सन्देहः** = सन्देह छैन

**वाक्यार्थ–** सन्तुष्ट भएका ब्राह्मणहरूले विनयी राजा युधिष्ठिरसँग भने– हे पुरुवंश शिरामणि !, कालको दुर्निवार गतिले यो पवित्र पुरुवंश करिब-करिब नष्ट हुन लागिसकेको थियो। परन्तु तपाईंहरूमाथि कृपा गरेर भगवान् विष्णुले यस बालकलाई प्रदान गरेर यस वंशको रक्षा गर्नुभयो। त्यसकारण यस बालकको नाम विष्णुरात हुनेछ। निःसन्देह यो बालक संसारमा ठुलो यशस्वी, भगवान्को परम भक्त र महापुरुष हुनेछ।

**राजोवाच** (राजा युधिष्ठिरले भन्नुभयो)

**अप्येष वंश्यान् राजर्षीन् पुण्यश्लोकान् महात्मनः।**

**अनुवर्तिता स्विद् यशसा साधुवादेन सत्तमाः ॥ १८ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सत्तमाः** = महात्माहरू | **यशसा** = कीर्तिले | **वंश्यान्** = हाम्रो वंशमा भएका |
| **अपि स्वित्** = के | **पुण्यश्लोकान्** = पवित्र कीर्ति भएका | **राजर्षीन्** = राजर्षिहरूको |
| **एषः** = यस बालकले | **महात्मनः** = सज्जन | **अनुवर्तिता** = अनुसरण गर्ला |
| **साधुवादेन** = उज्वल | | |

**वाक्यार्थ–** महात्माहरू ! के यस बालकले हाम्रो वंशमा उत्पन्न भएका उज्ज्वल कीर्ति भएका सज्जन राजर्षिहरूको अनुसरण गर्ला त ?

**ब्राह्मणा ऊचुः** (ब्राह्मणहरूले भने)

**पार्थ प्रजाविता साक्षादिक्ष्वाकुरिव मानवः।**

**ब्रह्मण्यः सत्यसन्धश्च रामो दाशरथिर्यथा ॥ १९ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **पार्थ** = हे धर्मराज (यो बालक पछि गएर) | **इव** = झैं | **ब्रह्मण्यः** = ब्राह्मणभक्त र |
| **साक्षात्** = साक्षात् | **प्रजाविता** = प्रजाको रक्षक हुनेछ | **सत्यसन्धः** = सत्यप्रतिज्ञ |
| **मानवः** = मनुपुत्र | **दाशरथिः** = दशरथनन्दन | **च** = पनि हुनेछ |
| **इक्ष्वाकुः** = इक्ष्वाकु | **रामः** = राम | |
| | **यथा** = झैं | |

**वाक्यार्थ–** मनुपुत्र इक्ष्वाकुको समान यसले आफ्ना प्रजाहरूको पालन गर्नेछ, दशरथनन्दन भगवान् श्रीरामझैं ब्राह्मणभक्त र सत्यप्रतिज्ञ हुनेछ।

**एष दाता शरण्यश्च यथा ह्यौशीनरः शिबिः।**

**यशो वितनिता स्वानां दौष्यन्तिरिव यज्वनाम् ॥ २० ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **एषः** = यो बालक | **दाता** = दाता र | **इव** = समान |
| **हि** = निश्चय नै | **शरण्यः** = शरणागतवत्सल हुनेछ | **स्वानां** = आफ्नो वंशको |
| **औशीनरः** = उशीनर नरेश | **च** = र | **यशः** = कीर्तिलाई |
| **शिबिः** = शिवि | **यज्वनाम्** = याज्ञिकहरूमध्ये | **वितनिता** = फैलाउनेछ |
| **यथा** = झैं | **दौष्यन्तिः** = दुष्यन्तपुत्र भरत | |

**वाक्यार्थ–** यो बालक उशीनर नरेश शिबिझैँ दाता र शरणागतवत्सल हुनेछ। याज्ञिकहरूमा दुष्यन्तपुत्र भरतझैँ आफ्नो वंशको यश फैलाउनेछ।

**धन्विनामग्रणीरेष तुल्यश्चार्जुनयोर्द्वयोः।**

**हुताश इव दुर्धर्षः समुद्र इव दुस्तरः॥ २१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **एषः** = यो बालक | **अग्रणीः** = अग्रगण्य हुनेछ | **च** = पनि |
| **धन्विनाम्** = धनुर्धारीहरूमा | **हुताशः** = अग्नि | **दुस्तरः** = दुस्तर |
| **द्वयोः** = दुई | **इव** = झैँ | **च** = पनि हुनेछ |
| **अर्जुनयोः** = अर्जुनमा सहस्रबाहु अर्जुन र अर्जुन | **दुर्धर्षः** = दुर्धर्ष र | |
| **तुल्यः** = समान | **समुद्रः** = समुद्र | |
| | **इव** = झैँ | |

**वाक्यार्थ–** यो बालक धनुर्धरहरूमा सहस्रबाहु अर्जुन र आफ्नो पितामह अर्जुन समान अग्रगण्य हुनेछ अनि यो बालक अग्निझैँ दुर्धर्ष र समद्रसमान दुस्तर हुनेछ।

**मृगेन्द्र इव विक्रान्तो निषेव्यो हिमवानिव।**

**तितिक्षुर्वसुधेवासौ सहिष्णुः पितराविव॥ २२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **असौ** = यो बालक | **हिमवान्** = हिमालय | **इव** = झैँ |
| **मृगेन्द्रः** = सिंह | **इव** = झै | **तितिक्षुः** = क्षमाशील |
| **इव** = झैँ | **निषेव्यः** = आश्रय लिन योग्य | **पितरौ इव** = माता पिताझैँ |
| **विक्रान्तः** = पराक्रमी | **वसुधा** = पृथिवी | **सहिष्णुः** = सहनशील हुनेछ |

**वाक्यार्थ–** यो बालक सिंहसमान पराक्रमी, हिमालयझैँ आश्रय लिन योग्य, पृथिवीसमान तितिक्षु र मातापिता समान सहनशील हुनेछ।

**पितामहसमः साम्ये प्रसादे गिरिशोपमः।**

**आश्रयः सर्वभूतानां यथा देवो रमाश्रयः॥ २३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **साम्ये** = समानतामा | **रमाश्रयः** = लक्ष्मीपति | प्राणीहरूका लागि |
| **पितामहसमः** = ब्रह्माजी बराबर | **देवः** = भगवान् विष्णु | **आश्रयः** = आश्रयदाता हुनेछ |
| **प्रसादे** = कृपामा | **यथा** = जस्तै | |
| **गिरिशोपमः** = भगवान् शङ्करझैँ | **सर्वभूतानां** = सम्पूर्ण | |

**वाक्यार्थ–** यो बालक समानतामा पितामह ब्रह्माजीको समान हुनेछ। भगवान् शङ्करझैँ कृपालु

हुनेछ, सम्पूर्ण प्राणीहरूलाई आश्रय दिनमा लक्ष्मीपति भगवान् विष्णुसमान हुनेछ।

**सर्वसद्गुणमाहात्म्ये एष कृष्णमनुव्रतः।**
**रन्तिदेव इवोदारो ययातिरिव धार्मिकः॥ २४॥**

**पदार्थ—**

**एषः** = यो बालक
**सर्वसद्गुणमाहात्म्ये** = सम्पूर्ण सद्गुणको महिमा धारण गर्नमा
**कृष्णम्** = श्रीकृष्णको
**अनुव्रतः** = अनुयायी हुनेछ
**रन्तिदेवः** = रन्तिदेव
**इव** = झैँ
**उदारः** = उदार
**ययातिः** = ययाति
**इव** = झैँ
**धार्मिकः** = धार्मिक हुनेछ

**वाक्यार्थ—** समस्त सद्गुणको महिमा धारण गर्नमा यो बालक श्रीकृष्णको अनुयायी हुनेछ अनि रन्तिदेवसमान उदार र ययातिसमान धार्मिक हुनेछ।

**धृत्या बलिसमः कृष्णे प्रह्लाद इव सद्ग्रहः।**
**आहर्तैषोऽश्वमेधानां वृद्धानां पर्युपासकः॥ २५॥**

**पदार्थ—**

**धृत्या** = धैर्यमा
**बलिसमः** = बलिसमान
**प्रह्लादः** = प्रह्लाद
**इव** = झैँ
**कृष्णे** = भगवान् श्रीकृष्णमा
**सद्ग्रहः** = दृढ निष्ठा
**एषः** = यो बालक
**अश्वमेधानां** = अश्वमेध यज्ञ
**आहर्ता** = गर्नेवाला
**वृद्धानां** = वृद्धहरूको
**पर्युपासकः** = सेवक हुनेछ

**वाक्यार्थ—** धैर्यमा बलिसमान र भगवान् श्रीकृष्णप्रतिको दृढ निष्ठामा प्रह्लादसमान हुनेछ। यसबाट धेरै अश्वमेध यज्ञ हुनेछन्। यो बालक वृद्धहरूको सेवक हुनेछ।

**राजर्षीणां जनयिता शास्ता चोत्पथगामिनाम्।**
**निग्रहीता कलेरेष भुवो धर्मस्य कारणात्॥ २६॥**

**पदार्थ—**

**एषः** = यो बालक
**राजर्षीणां** = राजर्षिहरूका
**जनयिता** = पिता बन्नेछ
**उत्पथगामिनाम्** = मर्यादाको उल्लङ्घन गर्नेहरूलाई
**शास्ता** = दण्ड दिने
**भुवः** = पृथिवी माता
**च** = र
**धर्मस्य** = धर्मको
**कारणात्** = कारणले
**कलेः** = कलियुगलाई
**निग्रहीता** = निग्रह गर्नेछ

**वाक्यार्थ—** यसका छोराहरू राजर्षि हुनेछन्। मर्यादाको उल्लङ्घन गर्नेहरूलाई यसले दण्ड दिनेछ। पृथिवी माता र धर्मको रक्षाको लागि यस बालकले कलियुगको दमन गर्नेछ।

**तक्षकादात्मनो मृत्युं द्विजपुत्रोपसर्जितात्।**
**प्रपत्स्यत उपश्रुत्य मुक्तसङ्गः पदं हरेः॥ २७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **द्विजपुत्रोपसर्जितात्** = ब्राह्मण पुत्रको शापद्वारा नियोजित | **मृत्युं** = मृत्यु | **पदं** = पदलाई |
| **तक्षकात्** = तक्षकद्वारा | **उपश्रुत्य** = सुनेर | **प्रपत्स्यते** = प्राप्त गर्नेछ |
| **आत्मनः** = आफ्नो | **मुक्तसङ्गः** = आसक्तिलाई छोडेर | |
| | **हरेः** = भगवान् विष्णुको | |

**वाक्यार्थ–** ब्राह्मण कुमारको शापको कारणले तक्षकद्वारा आफ्नो मृत्यु हुने कुरा सुनेर यो बालक राज्यप्रतिको आसक्तिलाई छोडेर भगवान्को शरणमा जानेछ।

**जिज्ञासितात्मयाथार्थ्यो मुनेर्व्यासंसुतादसौ।**
**हित्वेदं नृप गङ्गायां यास्यत्यद्धाकुतोभयम्॥ २८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **नृप** = हे राजा | **जिज्ञासितात्मयाथार्थ्यः** = आत्माको यथार्थ ज्ञानलाई प्राप्त गरेर | **अद्धा** = निश्चय नै |
| **असौ** = यी राजा परीक्षित् | **इदं** = यो शरीरलाई | **अकुतोभयम्** = सम्पूर्ण भयनाशक भगवान् नारायणलाई |
| **व्यासंसुतात्** = व्यासपुत्र | **गङ्गायां** = गङ्गामा | **यास्यति** = प्राप्त गर्नेछ |
| **मुनेः** = शुकदेव मुनिबाट | **हित्वा** = छोडेर | |

**वाक्यार्थ–** व्यासनन्दन श्रीशुकदेव मुनिबाट आत्माको यथार्थ ज्ञानलाई प्राप्त गरेर यस बालकले गङ्गातटमा आफ्नो पाञ्चभौतिक शरीरको परित्याग गरेर अभयपद अर्थात् मोक्षलाई प्राप्त गर्नेछ।

**इति राज्ञ उपादिश्य विप्रा जातककोविदाः।**
**लब्धापचितयः सर्वे प्रतिजग्मुः स्वकान् गृहान्॥ २९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **विप्राः** = हे शौनक आदि ब्राह्मणहरू | **इति** = यसप्रकार | **स्वकान्** = आआफ्नो |
| **सर्वे** = सबै | **राज्ञः** = राजा युधिष्ठिरलाई | **गृहान्** = घर |
| **जातककोविदाः** = ज्योतिष शास्त्रका विशेषज्ञहरूले | **उपादिश्य** = उपदेश गरेर | **प्रतिजग्मुः** = गए |
| | **लब्धापचितयः** = उपहार, पूजा आदिलाई स्वीकार गरेर | |

**वाक्यार्थ–** ज्योतिष शास्त्रका विशेषज्ञहरूले राजा युधिष्ठिरलाई यसप्रकारको बालकको जन्मलग्नको फल बताएर राजाले दिएको उपहार, पूजा आदि स्वीकार गरेर आ-आफ्नो घरतिर लागे।

**स एष लोके विख्यातः परीक्षिदिति यत्प्रभुः।**
**पूर्वं दृष्टमनुध्यायन् परीक्षेत नरेष्विह ॥ ३० ॥**

पदार्थ—

| | | |
|---|---|---|
| **सः** = त्यही | **यत्** = किनभने | **इह** = यस लोकमा |
| **एषः** = यो बालक | **प्रभुः** = त्यो समर्थ बालक | **नरेषु** = मनुष्यहरूमा |
| **परीक्षित्** = परीक्षित् | **पूर्वं** = पहिले | **परीक्षेत** = मैले गर्भमा देखेको |
| **इति** = यो नामले | **दृष्टम्** = देखेकालाई | मनुष्य कुन चाहिँ होला भन्ने |
| **लोके** = लोकमा | **अनुध्यायन्** = गर्भमा देखेको | परीक्षण गर्दै हिँड्दथे |
| **विख्यातः** = प्रसिद्ध भयो | पुरुषको ध्यान गर्दै | |

**वाक्यार्थ—** त्यही बालक पछि गएर संसारमा परीक्षित् भन्ने नामले प्रसिद्ध भयो। त्यो समर्थ बालकले गर्भमा जुन पुरुषको दर्शन प्राप्त गरेको थियो निरन्तर त्यही पुरुषको स्मरण गर्दै यी मनुष्यहरूमा त्यो पुरुष कुनचाहिँ होला भन्दै परीक्षा गरिरहने हुनाले उनी परीक्षित् यस नामले प्रसिद्ध भएका हुन्।

**स राजपुत्रो ववृधे आशु शुक्ल इवोडुपः।**
**आपूर्यमाणः पितृभिः काष्ठाभिरिव सोऽन्वहम्॥ ३१ ॥**

पदार्थ—

| | | |
|---|---|---|
| **सः** = ती | साथ | **इव** = झैँ |
| **राजपुत्रः** = राजपुत्र | **आपूर्यमाणः** = पूर्ण हुँदै | **आशु** = चाँडै |
| **पितृभिः** = पितृ युधिष्ठिर | **अन्वहम्** = प्रतिदिन | **ववृधे** = बढ्न लागे |
| आदिका साथ र | **शुक्ले** = शुक्ल पक्षमा | |
| **काष्ठाभिः** = चौसठ्ठी कलाका | **उडुपः** = चन्द्रमा बढेको | |

**वाक्यार्थ—** जसरी शुक्ल पक्षमा चन्द्रमा दिनप्रतिदिन आफ्ना कलाहरूले पूर्ण हुँदै बढ्दछन् त्यसै गरी ती राजकुमार पनि गुरुजनको लालन–पालन र चौसठ्ठी कलाको शिक्षाद्वारा प्रतिदिन बढ्दै गए।

**यक्ष्यमाणोऽश्वमेधेन ज्ञातिद्रोहजिहासया।**
**राजा लब्धधनो दध्यौ नान्यत्र करदण्डयोः॥ ३२ ॥**

पदार्थ—

| | | |
|---|---|---|
| **ज्ञातिद्रोहजिहासया** = | इच्छाले | **यक्ष्यमाणः** = भगवान्को पूजा |
| स्वजनबधको प्रायश्चित्त गर्ने | **अश्वमेधेन** = अश्वमेध यज्ञद्वारा | गर्न इच्छुक |

| | | |
|---|---|---|
| **राजा** = राजा युधिष्ठिर | धनदेखि | **न लब्धधनः** = धन नहुनाले |
| **करदण्डयोः** = कर र दण्डको | **अन्यत्र** = अतिरिक्त | **दध्यौ** = चिन्तामग्न हुनुभयो |

**वाक्यार्थ–** यसै समयमा स्वजनबधबाट उत्पन्न पापको प्रायश्चित्त गर्नको लागि राजा युधिष्ठिरले अश्वमेध यज्ञद्वारा भगवान्‌को पूजा गर्ने विचार गर्नुभयो। परन्तु प्रजाबाट असुल गरेको कर र दण्ड गरेको रकमदेखि अतिरिक्त धन आफूसँग नहुनाले राजा युधिष्ठिर चिन्तामग्न हुनुभयो।

**तदभिप्रेतमालक्ष्य भ्रातरोऽच्युतचोदिताः।**
**धनं प्रहीणमाजह्रुरुदीच्यां दिशि भूरिशः॥ ३३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **तदभिप्रेतम्** = युधिष्ठिरको त्यो अभिप्रायलाई | **भ्रातरः** = अर्जुन आदि युधिष्ठिरका भाइले | **भूरिशः** = धेरै |
| **आलक्ष्य** = जानेर | **उदीच्यां** = उत्तर | **धनं** = धन |
| **अच्युतचोदिताः** = भगवान्‌बाट प्रेरणा प्राप्त गरेका | **दिशि** = दिशामा | **आजह्रुः** = ल्याए |
| | **प्रहीणम्** = छोडेको | |

**वाक्यार्थ–** उनको अभिप्रायलाई जानेर भगवान् श्रीकृष्णको प्रेरणाले उनका भाइहरूले उत्तर दिशामा राजा मरुत् ब्राह्मणले छोडेको प्रशस्त धन लिएर आए।

**तेन सम्भृतसम्भारो धर्मपुत्रो युधिष्ठिरः।**
**वाजिमेधैस्त्रिभिर्भीतो यज्ञैः समयजद्धरिम्॥ ३४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **तेन** = त्यस धनद्वारा | पापबाट डराएका | **वाजिमेधैः** = अश्वमेध |
| **सम्भृतसम्भारः** = सामग्री एकत्रित गरेका | **धर्मपुत्रः** = धर्मपुत्र | **यज्ञैः** = यज्ञद्वारा |
| | **युधिष्ठिरः** = राजा युधिष्ठिर | **हरिम्** = भगवान् नारायणको |
| **भीतः** = बान्धवहरूको हत्याको | **त्रिभिः** = तीनओटा | **समयजत्** = पूजा गर्नुभयो |

**वाक्यार्थ–** त्यही धनबाट यज्ञको सामग्री तयार गरेर बान्धवहरूको हत्याको पापबाट डराएका राजा युधिष्ठिरले तीन अश्वमेध यज्ञहरूद्वारा भगवान्‌को पूजा गर्नुभयो।

**आहूतो भगवान् राज्ञा याजयित्वा द्विजैर्नृपम्।**
**उवास कतिचिन्मासान् सुहृदां प्रियकाम्यया॥ ३५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **राज्ञा** = राजा युधिष्ठिरद्वारा | **भगवान्** = भगवान् श्रीकृष्णले | **नृपम्** = राजा युधिष्ठिरको |
| **आहूतः** = बोलाइनुभएका | **द्विजैः** = ब्राह्मणहरूद्वारा | **याजयित्वा** = यज्ञलाई सम्पन्न |

| | | |
|---|---|---|
| गराएर | **प्रियकाम्यया** = प्रसन्नताको लागि | **मासान्** = महिनासम्म |
| **सुहृदां** = आफ्ना सुहृत् पाण्डवहरूको | **कतिचित्** = केही | **उवास** = बस्नुभयो |

**वाक्यार्थ–** युधिष्ठिरको निमन्त्रणामा आउनुभएका भगवान् श्रीकृष्ण ब्राह्मणहरूद्वारा उहाँको यज्ञलाई सम्पन्न गराएर आफ्ना सुहृद् पाण्डवहरूको प्रसन्नताका लागि केही महिनासम्म हस्तिनापुरमैं बस्नुभयो।

**ततो राज्ञाभ्यनुज्ञातः कृष्णया सह बन्धुभिः।**
**ययौ द्वारवतीं ब्रह्मन् सार्जुनो यदुभिर्वृतः॥ ३६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **ब्रह्मन्** = हे शौनकजी | **कृष्णया** = द्रौपदीबाट | श्रीकृष्ण |
| **ततः** = त्यसपछि | **अभ्यनुज्ञातः** = अनुमति लिएर | **सार्जुनः** = अर्जुनका साथ |
| **बन्धुभिः सह** = भाइहरूसहित | **यदुभिः** = यदुवंशीद्वारा | **द्वारवतीं** = द्वारका |
| **राज्ञा** = राजा युधिष्ठिर र | **वृतः** = घेरिएका भगवान् | **ययौ** = जानुभयो |

**वाक्यार्थ–** त्यसपछि भाइहरूसहित राजा युधिष्ठिर र द्रौपदीबाट अनुमति लिएर यदुवंशीद्वारा घेरिएका भगवान् श्रीकृष्ण अर्जुनका साथ द्वारका जानुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां प्रथमस्कन्धे**
**नैमिषीयोपाख्याने परीक्षिज्जन्माद्युत्कर्षो नाम द्वादशोऽध्यायः॥ १२॥**

# अथ त्रयोदशोऽध्यायः

## विदुरको उपदेशअनुसार धृतराष्ट्र र गान्धारीको वनगमन

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**विदुरस्तीर्थयात्रायां मैत्रेयादात्मनो गतिम्।**
**ज्ञात्वागाद्धास्तिनपुरं तयावाप्तविवित्सितः॥ १॥**

**पदार्थ—**

**विदुरः** = विदुर
**तीर्थयात्रायां** = तीर्थयात्रामा
**मैत्रेयात्** = मैत्रेय ऋषिबाट
**आत्मनः** = आत्माको
**गतिम्** = यथार्थ स्वरूपलाई
**ज्ञात्वा** = जानेर
**तया** = त्यो ज्ञानद्वारा
**अवाप्तविवित्सितः** = आफ्नो जिज्ञासा शान्त गरेर
**हास्तिनपुरं** = हस्तिनापुरमा
**अगात्** = जानुभयो

**वाक्यार्थ—** विदुरजी तीर्थयात्रामा गएको वेला महर्षि मैत्रेयबाट आत्माको ज्ञान प्राप्त गरेर आफ्नो जिज्ञासा शान्त गरेर हस्तिनापुरमा फर्केर आउनुभयो।

**यावतः कृतवान् प्रश्नान् क्षत्ता कौषारवाग्रतः।**
**जातैकभक्तिर्गोविन्दे तेभ्यश्चोपरराम ह॥ २॥**

**पदार्थ—**

**क्षत्ता** = विदुरजीले
**कौषारवाग्रतः** = मैत्रेयजीको अगाडि
**यावतः** = जति
**प्रश्नान्** = प्रश्नहरू
**कृतवान्** = गर्नुभयो ती सम्पूर्ण प्रश्नहरूको उत्तर सुन्नुभन्दा पहिले नै
**गोविन्दे** = भगवान् श्रीकृष्णमा
**जातैकभक्तिः** = अव्यभिचारिणी भक्ति लागेको हुनाले
**तेभ्यः** = अवशिष्ट अन्य प्रश्नबाट
**च** = पनि
**ह** = निश्चय नै
**उपरराम** = उपरत हुनुभयो

**वाक्यार्थ—** विदुरजीले मैत्रेय ऋषिसँग जति प्रश्न गर्नुभएको थियो ती प्रश्नको उत्तर सुन्नुभन्दा पहिले नै भगवान् श्रीकृष्णमा अनन्य भक्तिको उदय भएको हुनाले उहाँ अररू बाँकी प्रश्नहरूको उत्तर सुन्नबाट उपरत हुनुभयो। उहाँका प्रश्नहरूको उत्तरको फल हो— भगवान्मा भक्ति लाग्नु। भगवान्मा पहिले नै भक्ति लागेकाले अरू प्रश्नको उत्तर विदुरजीले सुन्न चाहनुभएन।

**तं बन्धुमागतं दृष्ट्वा धर्मपुत्रः सहानुजः।**
**धृतराष्ट्रो युयुत्सुश्च सूतः शारद्वतः पृथा॥ ३॥**

**गान्धारी द्रौपदी ब्रह्मन् सुभद्रा चोत्तरा कृपी ।**
**अन्याश्च जामयः पाण्डोर्ज्ञातयः ससुताः स्त्रियः ॥ ४ ॥**
**प्रत्युज्जग्मुः प्रहर्षेण प्राणं तन्व इवागतम् ।**
**अभिसङ्गम्य विधिवत् परिष्वङ्गाभिवादनैः ॥ ५ ॥**
**मुमुचुः प्रेमबाष्पौघं विरहौत्कण्ठ्यकातराः ।**
**राजा तमर्हयां चक्रे कृतासनपरिग्रहम् ॥ ६ ॥**

**पदार्थ–**

**ब्रह्मन्** = हे शौनकजी
**तं** = ती
**बन्धुम्** = काका विदुरजी
**आगतं** = आएको
**दृष्ट्वा** = देखेर
**सहानुजः** = भाइहरूसहित
**धर्मपुत्रः** = धर्मपुत्र युधिष्ठिर
**धृतराष्ट्रः** = धृतराष्ट्र
**युयुत्सुः** = युयुत्सु
**सूतः** = सञ्जय
**शारद्वतः** = कृपाचार्य
**पृथा** = कुन्ती
**च** = पनि
**गान्धारी** = गान्धारी
**द्रौपदी** = द्रौपदी
**सुभद्रा** = सुभद्रा
**च** = तथा
**उत्तरा** = उत्तरा
**कृपी** = द्रोणचार्यकी पत्नी कृपी
**अन्याः** = अन्य
**पाण्डोः** = पाण्डुका
**जामयः** = पत्नीहरू
**च** = तथा
**ससुताः** = छोराहरूले सहित
**ज्ञातयः** = दाजुभाइहरू
**स्त्रियः** = अरू स्त्रीहरू
**प्राणं** = प्राण
**आगतम्** = आएको
**तन्वः** = शरीर
**इव** = जस्तै (प्राण आए पछि शरीर क्रियाशील भएजस्तै)
**प्रहर्षेण** = हर्षका साथ
**प्रत्युज्जग्मुः** = विदुर भएको ठाउँमा आए
**विधिवत्** = यथायोग्य
**परिष्वङ्गाभिवादनैः** = आलिङ्गन र प्रणाम आदिद्वारा
**अभिसङ्गम्य** = विदुरसँग भेट गरेर
**विरहौत्कण्ठ्यकातराः** = विरहजनित उत्कण्ठाले कातर भएर
**प्रेमबाष्पौघं** = प्रेमको आँसु
**मुमुचुः** = बगाए
**राजा** = राजा युधिष्ठिरले
**कृतासनपरिग्रहम्** = आसनमा बसेका
**तम्** = उहाँलाई
**अर्हयांचक्रे** = सत्कार गर्नुभयो

**वाक्यार्थ–** आफ्ना काका विदुरजी आएको देखेर उहाँका चार भाइ, धृतराष्ट्र, युयुत्सु, सञ्जय, कृपाचार्य, कुन्ती, गान्धारी, द्रौपदी, सुभद्रा, उत्तरा, कृपी र आफ्ना पुत्रहरूसहित अरू स्त्रीहरू अत्यन्त प्रसन्नताका साथ शरीरमा प्राणको सञ्चार हुँदा शरीरका सम्पूर्ण अवयवहरू क्रियाशील भएजैँ विदुरको स्वागतका लागि सक्रिय भए। यथायोग्य आलिङ्गन र प्रणाम आदिद्वारा सबले उहाँसँग भेट गरे। विरहजनित उत्कण्ठाबाट कातर भएर सबैले प्रेमको आँसु बगाए। युधिष्ठिरले उहाँलाई आसनमा बसाएर उहाँको यथोचित सत्कार गर्नुभयो।

**तं भुक्तवन्तं विश्रान्तमासीनं सुखमासने।**
**प्रश्रयावनतो राजा प्राह तेषां च शृण्वताम्॥ ७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **भुक्तवन्तं** = भोजन गरिसकेका | **सुखम्** = सुखपूर्वक | **राजा** = राजा युधिष्ठिरले |
| **विश्रान्तम्** = विश्राम गरिसकेका | **आसीनं** = बसेका | **शृण्वताम्** = सुन्दै गरेका |
| **च** = र | **तं** = ती विदुरजीलाई | **तेषां** = ती सबैको अगाडि |
| **आसने** = आसनमा | **प्रश्रयावनतः** = नम्रतापूर्वक | **प्राह** = भन्नुभयो |

**वाक्यार्थ–** भोजन र विश्राम गरेर सुखपूर्वक आसनमा बस्नुभएका विदुजीसँग युधिष्ठिरले नम्र भएर सबैको अगाडि भन्नुभयो।

**युधिष्ठिर उवाच** (युधिष्ठिरले भन्नुभयो)

**अपि स्मरथ नो युष्मत्पक्षच्छायासमेधितान्।**
**विपद्गणाद् विषाग्न्यादेर्मोचिता यत्समातृकाः॥ ८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **युष्मत्पक्षच्छायासमेधितान्** = आफ्नो छत्रछायामा पालन पोषण गरिएका | **स्मरथ** = सम्झनुहुन्छ | लाक्षागृहको दाह आदि |
| **नः** = हामीहरूलाई | **समातृकाः** = आमा कुन्तीले सहित हामीहरूलाई | **विपद्गणात्** = विपत्तिबाट |
| **अपि** = कहिले काँही | **यत्** = जुन | **मोचिताः** = तपाईंले हामीलाई बचाउनुभएको थियो। |
| | **विषाग्न्यादेः** = विष र | |

**वाक्यार्थ–** के कहिलेकाहीँ तपाईंहरू हाम्रो पनि स्मरण गर्नुहुन्छ? जसरी पक्षी आफ्ना फुलहरूलाई आफ्ना प्वाँखहरूको छायामा राखेर उसको संरक्षण गर्दछ त्यसै गरी तपाईंले पनि अत्यन्त बात्सल्यका साथ हाम्रो पालन पोषण गर्नुभएको थियो। तपाईंले बारम्बार हामीलाई र हाम्री आमालाई विष र लाक्षागृहको दाह आदि विपत्तिबाट बचाउनुभएको थियो।

**कया वृत्त्या वर्तितं वश्चरद्भिः क्षितिमण्डलम्।**
**तीर्थानि क्षेत्रमुख्यानि सेवितानीह भूतले॥ ९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **क्षितिमण्डलम्** = पृथिवीमा | **वर्तितं** = जीवन निर्वाह गर्नुभयो | **क्षेत्रमुख्यानि** = कुन-कुन मुख्य क्षेत्रहरूको |
| **चरद्भिः** = विचरण गर्ने | **इह** = यस | **सेवितानि** = दर्शन गर्नुभयो |
| **वः** = तपाईंले | **भूतले** = पृथिवी तलमा | |
| **कया** = कुन | **तीर्थानि** = कुन कुन मुख्य तीर्थहरू र | |
| **वृत्त्या** = वृत्तिले | | |

**वाक्यार्थ–** पृथिवीका विभिन्न ठाउँमा विचरण गर्ने तपाईंले विचरण गर्दा कसरी जीवननिर्वाह गर्नुभयो र कुन-कुन तीर्थ र मुख्य क्षेत्रहरूको दर्शन गर्नुभयो ?

**भवद्विधा भागवतास्तीर्थभूताः स्वयं विभो ।**

**तीर्थीकुर्वन्ति तीर्थानि स्वान्तःस्थेन गदाभृता ॥ १० ॥**

**पदार्थ–**

**विभो** = हे प्रभो
**भवद्विधाः** = तपाईंजस्ता
**भागवताः** = भगवान्का भक्तहरू
**स्वयं** = आफैँ
**तीर्थभूताः** = तीर्थस्वरूप भएर
**स्वान्तःस्थेन** = मनमा स्थित
**गदाभृता** = गदा हातमा लिने भगवान्का कारणले
**तीर्थानि** = तीर्थहरूलाई
**तीर्थीकुर्वन्ति** = महातीर्थ बनाउनुहुन्छ

**वाक्यार्थ–** तपाईंजस्ता भगवान्का प्रियभक्त स्वयं तीर्थरूप हुनुहुन्छ र आफ्नो हृदयमा विराजमान भगवान्द्वारा तीर्थहरूलाई पनि महातीर्थ बनाउँदै विचरण गर्नुहुन्छ।

**अपि नः सुहृदस्तात बान्धवाः कृष्णदेवताः ।**

**दृष्टाः श्रुता वा यदवः स्वपुर्यां सुखमासते ॥ ११ ॥**

**पदार्थ–**

**तात** = हे काका
**कृष्णदेवताः** = भगवान् श्रीकृष्णलाई नै आफ्नो आराध्यदेव मान्ने
**नः** = हामीहरूका
**सुहृदः** = सुहृद्हरू
**अपि** = र
**बान्धवाः** = भाइबन्धुहरू
**यदवः** = यादवहरू
**स्वपुर्यां** = आफ्नो द्वारका पुरीमा
**सुखम्** = सुखपूर्वक
**आसते** = निवास गर्दछन्
उहाँहरूलाई
**दृष्टाः** = देख्नुभयो
**वा** = अथवा
**श्रुताः** = उहाँहरूको बारेमा सुन्नुभयो

**वाक्यार्थ–** हे काका, तपाईं तीर्थयात्रा गर्दै द्वारका पनि अवश्य जानुभयो होला ? त्यहाँ हाम्रा सुहृद् एवं भाइबन्धु, जसका एकमात्र आराध्यदेव भगवान् श्रीकृष्ण हुनुहुन्छ, उहाँहरू आफ्नो नगरीमा सुखपूर्वक हुनुहुन्छ ? द्वारकामा गएर नदेखे पनि उहाँहरूको विषयमा तपाईंले अवश्य पनि सुन्नुभएको त होला ?

**इत्युक्तो धर्मराजेन सर्वं तत्समवर्णयत् ।**

**यथानुभूतं क्रमशो विना यदुकुलक्षयम् ॥ १२ ॥**

**पदार्थ–**

**धर्मराजेन** = धर्मराज युधिष्ठिरद्वारा
**इति** = यसप्रकार
**उक्तः** = सोधिएका विदुरजीले
**क्रमशः** = क्रमैले
**यथा** = जस्तो

| | | |
|---|---|---|
| **अनुभूतं** = देखेर, सुनेर अनुभव गर्नुभयो | **विना** = बाहेक | **समवर्णयत्** = वर्णन गर्नुभयो |
| **यदुकुलक्षयम्** = यदुकुलको नाश | **तत्** = त्यो | |
| | **सर्वं** = सबै | |

**वाक्यार्थ–** राजा युधिष्ठिरले यसप्रकार सोधेपछि विदुरजीले तीर्थ एवं यदुवंशीको सम्बन्धमा जुन जुन-कुरा देख्नुभएको थियो, सुन्नुभएको थियो र अनि अनुभव गर्नुभएको थियो, क्रमशः सबै कुरा बताउनुभयो। तर उहाँले यदुवंशको विनाशको खबर सुनाउनुभएन।

**नन्वप्रियं दुर्विषहं नृणां स्वयमुपस्थितम्।**

**नावेदयत् सकरुणो दुःखितान् द्रष्टुमक्षमः ॥ १३ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **नृणां** = मनुष्यका लागि | यदुकुलको नाशको घटना | **सकरुणः** = करुण हृदय भएका विदुरजीले |
| **स्वयम्** = आफैं प्रारब्धबश | **दुःखितान्** = दुःखी भएका पाण्डवहरू | **न आवेदयत्** = सुनाउन चाहनुभएन |
| **उपस्थितम्** = प्राप्त भएको | **द्रष्टुम्** = देख्न | |
| **अप्रियं** = अप्रिय | **अक्षमः** = असमर्थ | |
| **दुर्विषहं** = सहन गर्न नसकिने | | |

**वाक्यार्थ–** करुणहृदय भएका विदुरजीले मनुष्यका लागि आफैं प्रारब्धवश प्राप्त भएको त्यो असह्य र अप्रिय घटना सुनाएर पाण्डवहरूलाई दुःखी बनाउन चाहनुभएन।

**कञ्चित्कालमथावात्सीत् सत्कृतो देववत् सुखम्।**

**भ्रातुर्ज्येष्ठस्य श्रेयस्कृत् सर्वेषां प्रीतिमावहन्॥ १४ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अथ** = त्यसपछि (पाण्डवहरूद्वारा) | **भ्रातुः** = दाजु धृतराष्ट्रको | **कञ्चित्** = केही |
| **देववत्** = देवताझैं | **श्रेयस्कृत्** = कल्याणको कामनाले | **कालम्** = समय |
| **सत्कृतः** = सत्कार गरिएका विदुरजी | **सर्वेषां** = सबैलाई | **सुखम्** = सुखपूर्वक |
| **ज्येष्ठस्य** = जेठा | **प्रीतिम्** = प्रसन्न | **अवात्सीत्** = बस्नुभयो |
| | **आवहन्** = गराउँदै | |

**वाक्यार्थ–** पाण्डवहरूले विदुरजीलाई देवताझैं मानेर उहाँको सेवा एवं सत्कार गर्दथे। उहाँ केही दिनसम्म आफ्ना जेठा दाजु धृतराष्ट्रको कल्याणको कामनाले सबैलाई प्रसन्न गर्दै सुखपूर्वक हस्तिनापुरमैं बस्नुभयो।

**अबिभ्रदर्यमा दण्डं यथावदघकारिषु।**

**यावद् दधार शूद्रत्वं शापाद् वर्षशतं यमः॥ १५॥**

**पदार्थ–**

**शापात्** = माण्डव्य ऋषिको शापको कारणले
**यमः** = यमराज
**वर्षशतं यावत्** = एक सय वर्षका लागि
**शूद्रत्वं** = शूद्र योनि
**दधार** = लिए त्यतिवेला
**अर्यमा** = पितृका राजा अर्यमाले
**अघकारिषु** = पापीहरूमा
**यथावत्** = यथोचित
**दण्डं** = दण्ड
**अबिभ्रत्** = दिन्थे

**वाक्यार्थ–** विदुरजी साक्षात् धर्मराज हुनुहुन्थ्यो। माण्डव्य ऋषिको श्रापको कारणले सय वर्षको लागि उहाँ शूद्र बन्नुभएको थियो। यति समयका लागि यमराजको पदमा पितृदेव अर्यमा हुनुहुन्थ्यो। उहाँ नै पापीहरूलाई दण्ड दिनुहुन्थ्यो।

**टिप्पणी–** कुनै समयमा एकजना राजाका सिपाहीहरूले केही चोरहरूलाई माण्डव्य ऋषिको आश्रममा समाते। ऋषि पनि चोरहरूमा सामेल छन् भन्ने उनीहरूलाई लाग्यो र उनीहरूले ऋषिलाई पनि समाते। त्यसपछि राजाको आज्ञाअनुसार उनीहरूले चोरहरूका साथमा माण्डव्य ऋषिलाई पनि शूलीमा चढाए। तर तत्काल राजालाई यी व्यक्ति त साधु जस्ता छन् भन्ने लाग्यो र शूलीबाट ओरालेर राजाले उहाँसँग क्षमा मागे।

त्यसपछि माण्डव्य ऋषिले यमराजकहाँ गएर 'मलाई कुन पापको फलस्वरूप यस्तो दण्ड दिइयो ?' भनी प्रश्न गर्नुभयो। यमराजले भन्नुभयो– 'तपाईंले बालक हुँदा एउटा हुटिट्याउँलाई कुशको टुप्पाले घोचिदिनुभएको थियो, त्यसै अपराधको दण्डस्वरूप यस्तो भएको हो। त्यसपछि ऋषिले भन्नुभयो– 'मैले अज्ञानवश यस्तो गरैं होला। तर त्यति सानो अपराधको लागि तिमीले यति ठुलो दण्ड दियौ। यस्तो अनुचित दण्ड दिने तिमी अब सय वर्षसम्म शूद्रको जुनी लिएर बस्नेछौ।' यसरी माण्डव्य ऋषिको श्रापले गर्दा यमराजले विदुरको रूपमा अवतार लिनुपरेको थियो।

**युधिष्ठिरो लब्धराज्यो दृष्ट्वा पौत्रं कुलन्धरम्।**
**भ्रातृभिर्लोकपालाभैर्मुमुदे परया श्रिया॥ १६॥**

**पदार्थ–**

**लब्धराज्यः** = आफ्नो राज्यलाई प्राप्त गरेका
**युधिष्ठिरः** = युधिष्ठिरले
**कुलन्धरम्** = वंशधर
**पौत्रं** = नाति परीक्षित्लाई
**दृष्ट्वा** = देखेर
**लोकपालाभैः** = इन्द्रादि लोकपालबराबर
**भ्रातृभिः** = भाइहरूका साथ
**परया** = अतुल
**श्रिया** = सम्पत्तिको कारण
**मुमुदे** = आनन्दपूर्वक जीवन व्यतीत गर्न लाग्नुभयो

**वाक्यार्थ–** राज्य प्राप्त भएपछि इन्द्रादि लोकपाल जस्ता बलशाली भाइहरूका साथ राजा युधिष्ठिर वंशधर परीक्षित्लाई देखेर आफ्नो अतुल सम्पत्तिका साथ आनन्दपूर्वक जीवन व्यतीत गर्न लाग्नुभयो।

प्रिय सुतजी ! जो मनुष्यहरू मोक्ष चाहन्छन् परन्तु अल्पायु हुनाले मृत्युद्वारा ग्रस्त छन् उनीहरूको कल्याणको लागि भगवान् यमको आवाहन गरेर उनलाई यहाँ शान्ति कर्ममा नियुक्त गरिएको छ।

**न कश्चिन्म्रियते तावद् यावदास्त इहान्तकः।**
**एतदर्थं हि भगवानाहूतः परमर्षिभिः॥**
**अहो नृलोके पीयेत हरिलीलामृतं वचः॥ ८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **इह** = यस कर्ममा | **न म्रियते** = मर्दैन | **वचः** = वचन |
| **यावत्** = जबसम्म | **हि** = निश्चय नै | **पीयेत** = पान गर्न पाइन्छ |
| **अन्तकः** = यमराज | **नृलोके** = मनुष्य लोकमा | **एतदर्थं** = यही कार्यका लागि |
| **आस्ते** = बस्नुहुन्छ | **अहो** = आश्चर्यले युक्त | **परमर्षिभिः** = ऋषिहरूले |
| **तावत्** = त्यहाँसम्म | **हरिलीलामृतं** = हरिलीलारूपी | **भगवान्** = भगवान् मृत्युलाई |
| **कश्चित्** = कोही पनि | अमृतले युक्त भएको | **आहूतः** = यहाँ बोलाइएको छ |

**वाक्यार्थ–** जबसम्म यमराज यस कर्ममा नियुक्त हुन्छन् तबसम्म यस मृत्युलोकमा कसैको पनि मृत्यु सम्भव छैन। मृत्युबाट ग्रस्त मनुष्यलोकका जीवहरूले पनि अमृततुल्य लीलाकथाको पान गर्न सकून् भनेर महर्षिहरूले भगवान् यमलाई यहाँ बोलाएका हुन्।

**मन्दस्य मन्दप्रज्ञस्य वयो मन्दायुषश्च वै।**
**निद्रया ह्रियते नक्तं दिवा च व्यर्थकर्मभिः॥ ९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **मन्दप्रज्ञस्य** = मन्दबुद्धि भएका | **वयः** = आयु निरर्थक भएर | **च** = चाहिँ |
| **मन्दायुषः** = कम आयु भएका | बितिरहेको हुन्छ | **व्यर्थकर्मभिः** = व्यर्थ कामहरू |
| **च** = र | **नक्तं** = रात | गरेर |
| **मन्दस्य** = मन्दभाग्य भएका | **निद्रया** = निद्राद्वारा | **वै** = निश्चय नै |
| व्यक्तिको | **दिवा** = दिउँसो | **ह्रियते** = बितिरहेको हुन्छ |

**वाक्यार्थ–** पहिले आयु थोरै त्यसमाथि पनि मन्दबुद्धि हुनाले मन्दभाग्य भएका विषयी पुरुषहरूको आयु रातमा निद्रा र दिनमा व्यर्थ कार्यहरू गरेर त्यसै बितिरहन्छ।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**यदा परीक्षित् कुरुजाङ्गलेऽवसत्**
**कलिं प्रविष्टं निजचक्रवर्तिते।**

**निशम्य वार्तामनतिप्रियां ततः**
**शरासनं संयुगशौण्डिराददे ॥ १० ॥**

पदार्थ–
**यदा** = जुन समयमा **परीक्षित्** = राजा परीक्षित् **कुरुजाङ्गले** = कुरुजाङ्गल देशको राजधानी हस्तिनापुरमा **अवसत्** = निवास गर्नुभएको थियो **संयुगशौण्डिः** = युद्धमा शूर **निजचक्रवर्तिते** = आफ्नो सेनाद्वारा पालित कुरुजाङ्गलमा **कलिं** = कलियुगले **प्रविष्टं** = प्रवेश गरेको कुरा सुन्नुभयो **ततः** = त्यस समयमा **अनतिप्रियां** = अप्रिय **वार्ताम्** = कुरा **निशम्य** = सुनेर **शरासनं** = धनु **आददे** = लिनुभयो

**वाक्यार्थ–** कुरुजाङ्गल देशमा सम्राट्को रूपमा रहँदा राजा परीक्षित्ले सुन्नुभयो कि उहाँको सेनाद्वारा सुरक्षित साम्राज्यमा कलियुगले प्रवेश गरेको छ। यो अप्रिय समाचार सुनेर युद्धवीर राजा परीक्षित्ले हातमा धनुष लिनुभयो।

**स्वलङ्कृतं श्यामतुरङ्गयोजितं**
**रथं मृगेन्द्रध्वजमाश्रितः पुरात्।**
**वृतो रथाश्वद्विपपत्तियुक्तया**
**स्वसेनया दिग्विजयाय निर्गतः ॥ ११ ॥**

पदार्थ–
**श्यामतुरङ्गयोजितं** = श्याम वर्णका घोडाहरूद्वारा तानिएको **स्वलङ्कृतं** = सुसज्जित **मृगेन्द्रध्वजम्** = सिंहको आकारले अङ्कित ध्वजा भएको **रथं** = रथमा **आश्रितः** = बसेर **रथाश्वद्विपपत्तियुक्तया** = रथ, घोडा, हात्ती, पैदल सेनाले युक्त **स्वसेनया** = आफ्ना सेनाले **वृतः** = युक्त भएर **दिग्विजयाय** = दिग्विजयका लागि **पुरात्** = नगरबाट **निर्गतः** = निक्लनुभयो

**वाक्यार्थ–** यसपछि उहाँ श्यामवर्णका घोडाहरूद्वारा तानिएको, सिंहको आकारले अङ्कित ध्वजा भएको, सुसज्जित रथमाथि चढेर रथ, हात्ती, घोडा र पैदल सेना साथमा लिएर दिग्विजयका लागि नगरबाट बाहिर निक्लनुभयो।

**भद्राश्वं केतुमालं च भारतं चोत्तरान् कुरून्।**
**किम्पुरुषादीनि वर्षाणि विजित्य जगृहे बलिम् ॥ १२ ॥**

पदार्थ–
(राजा परीक्षित्ले) **भद्राश्वं** = भद्राश्व, **केतुमालं** = केतुमाल

**भारतं** = भारत
**उत्तरान्** = उत्तर
**कुरून्** = कुरु
**च** = र
**किम्पुरुषादीनि** = किम्पुरुष आदि
**वर्षाणि** = सबै भूखण्डहरूलाई
**च** = पनि
**विजित्य** = जितेर
**बलिम्** = उपहार
**च** = पनि
**जगृहे** = लिनुभयो

**वाक्यार्थ–** उहाँले भद्राश्व, केतुमाल, भारत, उत्तर कुरु र किम्पुरुष आदि सम्पूर्ण भूखण्डहरूलाई जितेर त्यहाँका राजाहरूबाट उपहार प्राप्त गर्नुभयो।

**तत्र तत्रोपश्रृण्वानः स्वपूर्वेषां महात्मनाम्।**
**प्रगीयमाणं च यशः कृष्णमाहात्म्यसूचकम्॥ १३॥**
**आत्मानं च परित्रातमश्वत्थाम्नोऽस्त्रतेजसः।**
**स्नेहं च वृष्णिपार्थानां तेषां भक्तिं च केशवे॥ १४॥**
**तेभ्यः परमसन्तुष्टः प्रीत्युज्जृम्भितलोचनः।**
**महाधनानि वासांसि ददौ हारान् महामनाः॥ १५॥**

पदार्थ–
**तत्र तत्र** = ती ती देशहरूमा
**प्रगीयमाणं** = गाइएको
**स्वपूर्वेषां** = आफ्ना पूर्वजहरूको
**च** = र
**महात्मनाम्** = अरू महात्माहरूको
**कृष्णमाहात्म्यसूचकम्** = भगवान् श्रीकृष्णको महत्त्वलाई सूचित गर्ने
**यशः** = कीर्ति
**उपश्रृण्वानः** = सुन्दै
**अश्वत्थाम्नः** = अश्वत्थामाको
**अस्त्रतेजसः** = ब्रह्मास्त्रको तेजबाट
**आत्मानं** = आफूलाई
**परित्रातम्** = भगवान् श्रीकृष्णबाट रक्षा गरिएको कुरा सुन्दै
**वृष्णिपार्थानां** = यादवहरूको र पाण्डवहरूको
**स्नेहं** = परस्परको स्नेह
**च** = र
**तेषां** = तिनीहरूको
**केशवे** = भगवान् श्रीकृष्णमा
**भक्तिं** = भक्तिको कुरा सुनेर
**च** = पनि
**परमसन्तुष्टः** = ज्यादै सन्तुष्ट भएर
**प्रीत्युज्जृम्भितलोचनः** = प्रेमले चम्किला आँखा भएका
**महामनाः** = उदार चित्त भएका राजा परीक्षित्‌ले
**तेभ्यः** = पूर्वोक्त यश सुनाउने ती मनुष्यहरूलाई
**महाधनानि** = बहुमूल्य द्रव्यहरू
**वासांसि** = कपडाहरू
**हारान्** = हारहरू
**ददौ** = दिनुभयो

**वाक्यार्थ–** परीक्षित्‌ले ती देशहरूमा सर्वत्र आफ्ना पूर्वज महात्माहरूको कीर्तिको गान गरेको सुन्नुभयो। कीर्तिको गानमा पदपदमा भगवान् श्रीकृष्णको महिमा प्रकट हुन्थ्यो। साथै उहाँले के कुरा सुन्नुभयो भने भगवान् श्रीकृष्णले अश्वत्थामाको ब्रह्मास्त्रको तेजबाट कसरी उहाँको रक्षागर्नु भएको थियो एवं यदुवंशी र पाण्डवहरूमा परस्पर कस्तो प्रेम थियो र पाण्डवहरूको भगवान्

श्रीकृष्णमा कस्तो भक्ति थियो। जो मनुष्यहरूले उहाँलाई आफ्ना पूर्वजहरूको र भगवान् श्रीकृष्णको चरित्र सुनाउँथे। राजा परीक्षित् उनीहरूमाथि ज्यादै प्रसन्न हुनुहुन्थ्यो। उहाँका नेत्रहरू प्रेमले चम्किन्थे र उहाँ उनीहरूलाई बहुमूल्य वस्त्र र हारहरू उपहारका रूपमा दिनुहुन्थ्यो।

**सारथ्यपारषदसेवनसख्यदौत्य-**
**वीरासनानुगमनस्तवनप्रणामान्।**
**स्निग्धेषु पाण्डुषु जगत्प्रणतिं च विष्णो-**
**र्भक्तिं करोति नृपतिश्चरणारविन्दे॥ १६॥**

**पदार्थ—**

**स्निग्धेषु** = प्रिय
**पाण्डुषु** = पाण्डुहरूमा
**सारथ्यपारषदसेवनसख्यदौत्य-**
**वीरासनानुगमनस्तवनप्रणामान्** =
सारथिको काम गरेको,
उनीहरूको सभासद् बनेको,
पाण्डवहरूको मनोनुकूल काम
गरेको, साथी बनेको, दूत
बनेको, पाण्डवहरूको रक्षाको
लागि राति शस्त्र ग्रहण गरेर
वीरासनमा बसेको, उनीहरूको
पछि–पछि हिँडेको, स्तुति गरेको,
प्रणाम गरेको
**च** = र
**जगत्प्रणतिं** = पाण्डवहरूको
चरणमा संसारलाई झुकाएको
कुरा सुनेर
**नृपतिः** = राजा परीक्षित्
**विष्णोः** = भगवान् श्रीकृष्णको
**चरणारविन्दे** = चरणकमलमा
**भक्तिं** = अरु बढ्ता भक्ति
**करोति** = गर्नुहुन्थ्यो

**वाक्यार्थ—** उहाँले यो कुरा पनि सुन्नुभयो कि भगवान् श्रीकृष्णले प्रेमको वशीभूत भएर पाण्डवहरूको सारथिको काम गर्नुभयो, उनीहरूको सभासद् बन्नुभयो, उनीहरूको इच्छाअनुसार काम गरेर उनीहरूको सेवा गर्नुभयो। उहाँ उनीहरूको साथी त हुनुहुन्थ्यो नै साथै दूतसमेत बन्नुभयो। उहाँ रातको समयमा शस्त्रग्रहण गरेर वीरासनमा बसेर शिबिरको पहरा दिनुहुन्थ्यो, उनीहरूको पछि–पछि हिँड्नुहुन्थ्यो, स्तुति गर्नुहुन्थ्यो, प्रणाम गर्नुहुन्थ्यो। यतिमात्र नभएर आफ्ना प्रेमी पाण्डवहरूको चरणमा उहाँले सम्पूर्ण संसारलाई झुकाउनुभएको थियो। यी कुराहरू सुन्दा राजा परीक्षित्को भक्ति भगवान् श्रीकृष्णका चरणकमलमा बढ्दैगयो।

**तस्यैवं वर्तमानस्य पूर्वेषां वृत्तिमन्वहम्।**
**नातिदूरे किलाश्चर्यं यदासीत् तन्निबोध मे॥ १७॥**

**पदार्थ—**

**अन्वहम्** = प्रत्येक दिन
**पूर्वेषां** = पाण्डवहरूको
**वृत्तिम्** = आचरणको अनुसरण
गरेर
**एवं** = यसप्रकार
**वर्तमानस्य** = दिग्विजय
गरिरहेका
**तस्य** = ती परीक्षित्ले
**न अतिदूरे** = शिबिरको नजिकै
**किल** = निश्चय
**यत्** = जुन
**आश्चर्यं** = आश्चर्यजनक घटना

| | |
|---|---|
| **आसीत्** = घटेको थियो | **मे** = मबाट |
| **तत्** = त्यो घटना | **निबोध** = सुन्नुहोस् |

**वाक्यार्थ–** यसप्रकार उहाँ प्रतिदिन पाण्डवहरूको आचरणको अनुसरण गर्दै दिग्विजय गरिहनुभएको थियो। त्यस समयमा राजा परीक्षित्को शिबिरदेखि केही टाढा जुन आश्चर्यजनक घटना घट्यो त्यो म तपाईंलाई सुनाउँछु।

**धर्मः पदैकेन चरन् विच्छायामुपलभ्य गाम्।**
**पृच्छति स्माश्रुवदनां विवत्सामिव मातरम्॥ १८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **धर्मः** = साँढेको रूपलाई धारण गरेको धर्म | **विच्छायाम्** = कान्तिले रहित भएकी | निकालेर रोइरहेकी |
| **एकेन** = एउटा | **विवत्साम्** = छोरो मरेकी | **गाम्** = पृथिवीको रूपलाई धारण गरेकी गाईलाई |
| **पदा** = खुट्टाले | **मातरम्** = आमा | **उपलभ्य** = प्राप्त गरेर |
| **चरन्** = हिँडिरहेको थियो | **इव** = जस्तै | **पृच्छति स्म** = सोधे |
| एक ठाउँमा | **अश्रुवदनां** = आँखाबाट आँसु | |

**वाक्यार्थ–** धर्म साँढेको रूप धारण गरेर एउटा खुट्टाले हिँडिरहेका थिए। एक ठाउँमा उनले गाईको रूपमा पृथिवीलाई भेटे। छोराको मृत्युले दुःखी भएर उसकी आमा रोएझैं ती गाई रोइरहेकी थिइन्। उनको आँखाबाट आँसु निक्लिरहेका थिए। उनको शरीरमा कुनै कान्ति थिएन। तिनीसँग धर्मले प्रश्न गरे।

**धर्म उवाच** (धर्मले भन्नुभयो)

**कच्चिद् भद्रेऽनामयमात्मनस्ते**
**विच्छायासि म्लायतेषन्मुखेन।**
**आलक्षये भवतीमन्तराधिं**
**दूरे बन्धुं शोचसि कञ्चनाम्ब॥ १९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **भद्रे** = हे कल्याणी | **ईषत्** = केही | **असि** = देखिनुहुन्छ यसकारण |
| **ते** = तपाईंको | **म्लायता** = मलिन देखिएका | **भवतीम्** = तपाईंको |
| **आत्मनः** = शरीरमा | **मुखेन** = मुखले | **अन्तराधिं** = मनमा कष्ट छ भन्ने |
| **कच्चित्** = के | **विच्छाया** = श्रीहीन अथवा कान्तिहीन | |
| **अनामयम्** = आरोग्य छ | | **आलक्षये** = अनुमान गर्दछु |

**अम्ब** = हे माताजी
**दूरे** = टाढा रहेको
**कञ्चन** = कुनै
**बन्धुं** = बन्धुको बारेमा
**शोचसि** = शोक गर्दैगर्दै हुनुहुन्छ कि

**वाक्यार्थ–** कल्याणी तपाईं कुशल त हुनुहुन्छ ? तपाईंको मुख मलिन र श्रीहीन देखिन्छ। यसर्थ तपाईंको हृदयमा दुःख अवश्य छ। के तपाईंको सम्बन्धी दूर देशमा गएकाले उसका लागि तपाईं यत्रो शोक गर्दै हुनुहुन्छ ?

**पादैर्न्यूनं शोचसि मैकपाद-**
**मात्मानं वा वृषलैर्भोक्ष्यमाणम्।**
**आहो सुरादीन् हृतयज्ञभागान्**
**प्रजा उत स्विन्मघवत्यवर्षति॥ २०॥**

**पदार्थ–**

**पादैः** = अरू तीन पाउले
**न्यूनं** = रहित भएकाले
**एकपादम्** = एक पाउमात्र भएको
**मा** = मेरो विषयमा
**शोचसि** = शोक गरिरहनुभएको छ
**उत** = कि
**वा** = अथवा
**आत्मानं** = आफूलाई देखेर शोक गरिहेकी
**वृषलैः** = शूद्रप्राय राजाहरूले
**भोक्ष्यमाणम्** = भोग गर्न लागेको
**आहो स्वित्** = अथवा
**मघवति** = इन्द्रले
**अवर्षति** = वर्षा नगराएकाले
**प्रजाः** = दुर्भिक्षपीडित प्रजाहरूको विषयमा शोक गरिरहनुभएको छ
**हृतयज्ञभागान्** = यज्ञका भाग हरिएका
**सुरादीन्** = देवताहरूको विषयमा शोक गरिरहनुभएको छ

**वाक्यार्थ–** आफ्ना तीन पाउद्वारा खण्डित भएको हुनाले के तपाईंले मेरो लागि शोक गरेको त होइन ? अथवा अब देवताहरूलाई यज्ञमा आहुति दिइँदैन भनेर के देवताका लागि शोक गरेको त होइन ? अब शूद्रहरूले ममाथि शासन गर्नेछन् भनेर तपाईंले आफ्नै लागि शोक गरेको त होइन ? अथवा के तपाईंले ती प्रजाहरूको लागि शोक गर्नुभएको हो जो वर्षाको अभावको कारणले अकाल र दुर्भिक्षबाट पीडित छन्।

**अरक्ष्यमाणाः स्त्रिय उर्वि बालान्**
**शोचस्यथो पुरुषादैरिवार्तान्।**
**वाचं देवीं ब्रह्मकुले कुकर्म-**
**ण्यब्रह्मण्ये राजकुले कुलाग्र्यान्॥ २१॥**

**पदार्थ–**

**उर्वि** = हे पृथिवी
**अथ** = यसपछि
**अरक्ष्यमाणाः** = पतिपुत्र आदिद्वारा रक्षा नगरिएका
**स्त्रियः** = स्त्रीहरूको विषयमा शोक गरिरहनुभएको छ
**बालान्** = बाबु आमाद्वारा रक्षा नगरिएका बालकहरूको विषयमा
**शोचसि** = शोक गरिरहनुभएको छ अथवा
**पुरुषादैः** = राक्षसतुल्य मनुष्यहरूद्वारा
**आर्तान्** = पीडित व्यक्तिहरूको शोक गरिरहनुभएको छ
**कुकर्मणि** = कुत्सित कर्म गर्ने
**ब्रह्मकुले** = ब्राह्मण कुलमा रहेकी
**वाचं** = बोलीकी
**देवीं** = देवी सरस्वतीको विषयमा शोक गरिरहनुभएको छ
**इव** = यस्तै
**अब्रह्मण्ये** = ब्राह्मणभक्तिले रहित भएको
**राजकुले** = राजकुलमा रहेका
**कुलाग्रयान्** = कुलीन ब्राह्मणहरूको विषयमा शोक गरिरहनुभएको छ

**वाक्यार्थ–** हे देवी ! अथवा के तपाईं राक्षसजस्ता मनुष्यहरूद्वारा सताइएका अरक्षित स्त्रीहरू र आर्त बालकहरूका लागि शोक गरिहनुभएको छ ? अथवा विद्या अब कुकर्मी ब्राह्मणको अधीनमा गयो र ब्राह्मण विप्रद्रोही राजाको सेवा गर्न लागे भनेर तपाईं दुःखी हुनुभएको त होइन ?

**किं क्षत्रबन्धून् कलिनोपसृष्टान्**
**राष्ट्राणि वा तैरवरोपितानि ।**
**इतस्ततो वाशनपानवासः**
**स्नानव्यवायोन्मुखजीवलोकम् ॥ २२ ॥**

**पदार्थ–**

**वा** = अथवा
**कलिना** = कलियुगद्वारा
**उपसृष्टान्** = व्याप्त भएका
**क्षत्रबन्धून्** = दुष्ट राजाहरूको विषयमा शोक गरिरहनुभएको छ
**तैः** = ती दुष्ट राजाहरूद्वारा
**अवरोपितानि** = नष्ट, भ्रष्ट गरिएका
**राष्ट्राणि** = राष्ट्रहरूको विषयमा शोक गरिरहनुभएको छ
**किं वा** = अथवा
**इतस्ततः** = निषिद्ध देशहरूमा
**अशनपानवासःस्नान-व्यवायोन्मुखजीवलोकम्** = खान, पान, वस्त्र, स्नान,स्त्री सहवास आदिमा शास्त्रीय नियमहरूको पालन नगर्ने स्वेच्छाचारी मनुष्यहरूलाई देखेर शोक गरिरहनुभएको छ

**वाक्यार्थ–** अथवा आजका नाममात्रका राजा सर्वथा कलियुगी भएका छन् र देशमाथि शासन गर्ने बहानाले देशहरूलाई नै नष्टभ्रष्ट गरेका छन् भनेर तपाईंले शोक गर्नुभएको त होइन ? अथवा आजका मानिस खानपान, वास, स्नान र स्त्रीसहवास आदिमा शास्त्रीय नियमको पालन नगरी स्वेच्छाचारी भइरहेका छन् भनेर त तपाईले शोक गर्नुभएको त होइन ?

**यद्वाम्ब ते भूरिभरावतार**
**कृतावतारस्य हरेर्धरित्रि ।**
**अन्तर्हितस्य स्मरती विसृष्टा**
**कर्माणि निर्वाणविलम्बितानि ॥ २३ ॥**

**पदार्थ–**

**यद्वा** = अथवा
**अम्ब** = हे माता
**धरित्रि** = धरित्री
**ते** = तपाईंको
**भूरिभरावतारकृतावतारस्य** = भारलाई हरण गर्नका लागि अवतार ग्रहण गरेर
**अन्तर्हितस्य** = अहिले अन्तर्धान हुनुभएका
**हरेः** = भगवान् श्रीकृष्णका
**निर्वाणविलम्बितानि** = जीवहरूलाई मोक्ष प्रदान गर्ने
**कर्माणि** = कर्महरू
**स्मरती** = स्मरण गर्दै
**विसृष्टा** = भगवान्ले छोड्नुभएकाले शोक गर्नुभएको हो

**वाक्यार्थ–** हे पृथिवी ! जुन भगवान्ले तपाईंको भारलाई हटाउनका लागि अवतार लिनुभएको थियो र अवतार लिएर मोक्ष प्रदान गर्ने खालका विभिन्न लीलाहरू गर्नुभएको थियो। अब आफ्ना लीलाको संवरण गरेर अहिले उहाँले तपाईंको परित्याग गर्नु भएको छ। उहाँ भगवान् श्रीकृष्णको सम्झना आएको हुनाले शोक गर्नुभएको त होइन ?

**इदं ममाचक्ष्व तवाधिमूलं**
**वसुन्धरे येन विकर्शितासि ।**
**कालेन वा ते बलिनां बलीयसा**
**सुरार्चितं किं हृतमम्ब सौभगम् ॥ २४ ॥**

**पदार्थ–**

**वसुन्धरे** = हे पृथिवी
**बलिनां** = बलवान्हरूलाई पनि पराजित गर्ने
**बलीयसा** = शक्तिशाली
**कालेन** = कालले
**सुरार्चितं** = देवताहरूद्वारा पनि वन्दनीय
**ते** = तपाईंको
**सौभगम्** = सौभाग्यलाई अहिले
**हृतम्** = अपहरण गरिएकाले
**किं वा** = कि
**येन** = जुन दुःखको कारणले
**विकर्शिता असि** = दुब्ली हुनुहुन्छ
**अम्ब** = हे माताजी
**तव** = तपाईंको
**इदं** = यो
**आधिमूलं** = मानसिक पीडाको कारण
**मम** = मलाई
**आचक्ष्व** = भन्नुहोस्

**वाक्यार्थ–** हे देवी ! तपाईं रत्नहरूकी खानी हुनुहुन्छ। जुन कारणले तपाईं यति दुर्बल हुनुभएको छ त्यो कारण मलाई बताउनुहोस्। बलबान्भन्दा बलवान्हरूलाई पराजित गर्ने कालले

देवताहरूद्वारा पनि वन्दनीय तपाईंको सौभाग्यलाई अपहरण गरेको हुनाले तपाईं यति दुःखी हुनुहुन्छ भनेजस्तो मलाई लाग्दछ।

**धरण्युवाच** (पृथ्वीले भन्नुभयो)

**भवान् हि वेद तत्सर्वं यन्मां धर्मानुपृच्छसि।**

**चतुर्भिर्वर्तसे येन पादैर्लोकसुखावहैः॥ २५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **धर्म** = हे धर्म | **सर्वं** = सबै कुरा | लोकहरूलाई सुख प्रदान गर्ने |
| **भवान्** = तपाईंले | **हि** = निश्चय नै | **चतुर्भिः** = चारओटा |
| **यत्** = जुन कुरा | **वेद** = जान्नुहुन्छ | **पादैः** = पाउहरूले युक्त भएर |
| **मां** = मलाई | **येन** = जुन भगवान्को कारणले | **वर्तसे** = रहनुभयो |
| **अनुपृच्छसि** = सोध्दै हुनुहुन्छ | तपाईं | |
| **तत्** = त्यो | **लोकसुखावहैः** = सम्पूर्ण | |

**वाक्यार्थ–** हे धर्म! तपाईं मलाई जुन कुरा सोध्दै हुनुहुन्छ, त्यो कुरा तपाईं पहिलेदेखि नै जान्नुहुन्छ। भगवान्को कृपाप्रसादलाई प्राप्त गरेर तपाईं सम्पूर्ण संसारलाई सुख प्रदान गर्ने आफ्ना चार पाउहरूले युक्त हुनुहुन्थ्यो।

**सत्यं शौचं दया क्षान्तिस्त्यागः सन्तोष आर्जवम्।**

**शमो दमस्तपः साम्यं तितिक्षोपरतिः श्रुतम्॥ २६॥**

**ज्ञानं विरक्तिरैश्वर्यं शौर्यं तेजो बलं स्मृतिः।**

**स्वातन्त्र्यं कौशलं कान्तिर्धैर्यं मार्दवमेव च॥ २७॥**

**प्रागल्भ्यं प्रश्रयः शीलं सह ओजो बलं भगः।**

**गाम्भीर्यं स्थैर्यमास्तिक्यं कीर्तिर्मानोऽनहङ्कृतिः॥ २८॥**

**एते चान्ये च भगवन् नित्या यत्र महागुणाः।**

**प्रार्थ्या महत्त्वमिच्छद्भिर्न वियन्ति स्म कर्हिचित्॥ २९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सत्यं** = सत्य बोल्नु | **क्षान्तिः** = क्षमा | **आर्जवम्** = सरलता |
| **शौचं** = पवित्रता | **त्यागः** = दान | **शमः** = मनो निग्रह |
| **दया** = दया | **सन्तोषः** = सन्तोष | **दमः** = बाह्य इन्द्रियनिग्रह |

**तपः** = तपस्या
**साम्यं** = समता
**तितिक्षा** = तितिक्षा
**उपरतिः** = उपरति
**श्रुतम्** = शास्त्रविचार
**ज्ञानं** = ज्ञान
**विरक्तिः** = वैराग्य
**ऐश्वर्यं** = ऐश्वर्य
**शौर्यं** = वीरता
**तेजः** = तेज
**बलं** = शरीरसामर्थ्य
**स्मृतिः** = स्मृति
**स्वातन्त्र्यं** = स्वतन्त्रता
**कौशलं** = कुशलता
**कान्तिः** = कान्ति
**धैर्यं** = धैर्य
**मार्दवम्** = कोमलता
**च एव** = पनि
**प्रागल्भ्यं** = निर्भीकता
**प्रश्रयः** = विनय
**शीलं** = शील
**सहः** = बल
**ओजः** = साहस
**बलं** = ज्ञानेन्द्रिय र कर्मेन्द्रियको सामर्थ्य
**भगः** = ऐश्वर्य
**गाम्भीर्यं** = गाम्भीर्य
**स्थैर्यम्** = स्थिरता
**आस्तिक्यं** = आस्तिकता
**कीर्तिः** = कीर्ति
**मानः** = गौरव
**अनहङ्कृतिः** = निरहङ्कार
**एते** = यी पूर्वोक्त उनन्चालीस गुण
**च** = र
**अन्ये** = अन्य शरणत्व, भक्तवत्सलत्व आदि
**च** = पनि
**महत्त्वम्** = महत्त्व
**इच्छद्भिः** = राख्न चाहने मनुष्यहरूले
**प्रार्थ्या** = पार्थना गरिने
**नित्या** = स्वाभाविक
**भगवन्** = हे धर्म
**महागुणाः** = भगवान्देखि अभिन्न सत्, चित्, आनन्द आदि स्वरूपभूत गुणहरू
**यत्र कर्हिचित्** = महाप्रलयको समयमा पनि
**न वियन्ति स्म** = नष्ट हुँदैनन्

**वाक्यार्थ–** भगवान् श्रीकृष्णमा सत्य, पवित्रता, दया, क्षमा, त्याग, सन्तोष, सरलता, शम, दम, तप, समता, तितिक्षा, उपरति, शास्त्रविचार, ज्ञान, वैराग्य, ऐश्वर्य, वीरता, तेज, बल, स्मृति, स्वतन्त्रता, कौशल, कान्ति, धैर्य, कोमलता, निर्भीकता, विनय, शील, साहस, उत्साह, बल, सौभाग्य, गम्भीरता, स्थिरता, आस्तिकता, कीर्ति, गौरव र निरहङ्कारता यी उनन्चालीसओटा अप्राकृत गुण तथा महत्त्वाकाङ्क्षी पुरुषद्वारा वाञ्छनीय शरणागतवत्सलता आदि अरू महान् गुणहरू उहाँको सेवाका लागि नित्य-निरन्तर निवास गर्दैछन्। उक्त गुणहरूले एक क्षणका लागि पनि भगवान्लाई छोड्दैनन्।

**तेनाहं गुणपात्रेण श्रीनिवासेन साम्प्रतम्।**
**शोचामि रहितं लोकं पाप्मना कलिनेक्षितम्॥ ३०॥**

**पदार्थ–**

**गुणपात्रेण** = सम्पूर्ण गुणहरूका पात्र
**श्रीनिवासेन** = लक्ष्मीका आश्रय भएका भगवान् श्रीकृष्णले
**साम्प्रतम्** = अहिले
**रहितं** = रहित
**पाप्मना** = पापको कारण
**तेन** = त्यस
**कलिना** = कलियुगले
**ईक्षितम्** = व्याप्त भएको
**लोकं** = जनसमूहको विषयमा
**अहं** = म
**शोचामि** = शोक गरिरहेकी छु

**वाक्यार्थ–** त्यस्ता समस्त गुणहरूका आश्रय, सौन्दर्यधाम भगवान् श्रीकृष्णले यस समयमा यस

लोकबाट आफ्नो लीलालाई संवरण गर्नुभएको छ। अहिले यो संसार पापमय कलियुगको कुदृष्टिको शिकार बन्न पुगेको छ। यो देखेर मलाई ठुलो शोक भइरहेको छ।

**आत्मानं चानुशोचामि भवन्तं चामरोत्तमम्।**

**देवान् पितॄनृषीन् साधून् सर्वान् वर्णांस्तथाश्रमान्॥ ३१॥**

पदार्थ—

**आत्मानं** = आफ्नो विषयमा
**अमरोत्तमम्** = देवताहरूमा श्रेष्ठ
**भवन्तं** = तपाईंको विषयमा
**देवान्** = देवताहरूको लागि
**पितॄन्** = पितृहरूको लागि
**ऋषीन्** = ऋषिहरूको लागि
**साधून्** = साधूहरूको लागि
**सर्वान्** = सम्पूर्ण
**वर्णान्** = वर्ण र
**च तथा** = त्यस्तै
**आश्रमान्** = आश्रमहरूको लागि
**च** = पनि
**अनुशोचामि** = शोक गर्दछु

**वाक्यार्थ—** मैले आफ्नो विषयमा एवं देवताहरूमा श्रेष्ठ हुनुभएका तपाईंको विषयमा शोक गरिरहेकी छु। यस्तै अन्य देवता, पितृ, ऋषि, साधु समस्त वर्ण तथा आश्रमका मनुष्यका लागि पनि शोक गरिरहेकी छु।

**ब्रह्मादयो बहुतिथं यदपाङ्गमोक्ष**

**कामास्तपः समचरन् भगवत्प्रपन्नाः।**

**सा श्रीः स्ववासमरविन्दवनं विहाय**

**यत्पादसौभगमलं भजतेऽनुरक्ता॥ ३२॥**

**तस्याहमब्जकुलिशाङ्कुशकेतुकेतैः**

**श्रीमत्पदैर्भगवतः समलङ्कृताङ्गी।**

**त्रीनत्यरोच उपलभ्य ततो विभूतिं**

**लोकान् स मां व्यसृजदुत्स्मयतीं तदन्ते॥ ३३॥**

पदार्थ—

**यदपाङ्गमोक्षकामाः** = जुन लक्ष्मीजीको कृपाकटाक्षलाई प्राप्त गर्ने इच्छाले
**भगवत्प्रपन्नाः** = भगवान्का शरणमा गएर
**ब्रह्मादयः** = ब्रह्मा आदि देवताहरूले
**बहुतिथं** = धेरै कालसम्म
**तपः** = तपस्या
**समचरन्** = गरी
**सा** = ती
**श्रीः** = लक्ष्मी
**स्ववासम्** = आफ्नो वासस्थान
**अरविन्दवनं** = कमलवनलाई
**विहाय** = छोडेर
**अलं अनुरक्ता** = अत्यन्त प्रेमपूर्वक
**यत्पादसौभगम्** = जुन भगवान्को चरणसौन्दर्यको
**भजते** = सेवन गर्नुहुन्छ
**अहम्** = म पृथिवी

**तस्य** = ती
**भगवतः** = भगवान् श्रीकृष्णको
**अब्जकुलिशाङ्कुशकेतुकेतैः** = कमल, वज्र, अङ्कुश, ध्वजा आदि चिह्नले मुक्त भएका
**श्रीमत्पदैः** = शोभासम्पन्न चरणकमलद्वारा
**समलङ्कृताङ्गी** = सम्पूर्ण अङ्गहरू सुशोभित भएकी थिएँ
**ततः** = ती भगवान् श्रीकृष्णबाट
**विभूतिं** = सम्पूर्ण समृद्धिलाई
**उपलभ्य** = प्राप्त गरेर
**त्रीन्** = तीनै
**लोकान्** = लोकलाई
**अत्यरोचे** = अतिक्रमण गरेको थिएँ
**सः** = ती भगवान् श्रीकृष्णले
**उत्स्मयतीं** = तीन लोकमा म बराबर अरू कुनै पनि लोक छैन भने अहङ्कार गरेको हुनाले
**तदन्ते** = मेरो अहङ्कारको नाश गर्नको लागि
**मां** = मलाई
**व्यसृजत्** = छोडिदिनुभयो

**वाक्यार्थ–** जसको कृपाकटाक्ष प्राप्त गर्नका लागि ब्रह्मा आदि देवताहरू भगवान्‌को शरणागत भएर धेरै दिनसम्म तपस्या गर्दछन् ती लक्ष्मीजी आफ्नो निवासस्थान कमलको परित्याग गरेर अत्यन्त प्रेमपूर्वक जसको छत्रछायाको सेवन गर्नुहुन्छ। उनै भगवान्‌को कमल, वज्र, अङ्कुश, ध्वजा आदि चिह्नहरूले विभूषित भएकी हुनाले मलाई ठुलो वैभव प्राप्त भएको थियो। तीनै लोकमा म बराबर कुनै पनि थिएन। परन्तु मेरो सौभाग्यको अब अन्त भयो। भगवान्‌ले म अभागिनीलाई छोडिदिनुभयो। मलाई आफ्नो सौभाग्यको अहङ्कार भएको हुनाले मेरो अहङ्कारलाई नष्ट गर्नका लागि भगवान्‌ले मलाई छोडिदिनुभयो।

**यो वै ममातिभरमासुरवंशराज्ञाम्**
**अक्षौहिणीशतमपानुददात्मतन्त्रः।**
**त्वां दुःस्थमूनपदमात्मनि पौरुषेण**
**सम्पादयन्यदुषु रम्यमबिभ्रदङ्गम्॥ ३४॥**

**पदार्थ–**

**आत्मतन्त्रः** = स्वतन्त्र
**यः** = जो भगवान् श्रीकृष्णले
**वै** = निश्चय
**मम** = मेरो
**असुरवंशराज्ञाम्** = असुर वंशमा उत्पन्न भएका राजाहरूको
**अक्षौहिणीशतम्** = सयौँ अक्षौहिणी सेनाको
**अतिभरम्** = ठुलो भारलाई
**अपानुदत्** = हटाउनुभयो त्यसै गरी
**ऊनपदम्** = तीन पाउले रहित भएका
**आत्मनि** = मनमनैमा
**दुःस्थम्** = ठुलो कष्टको अनुभव गर्ने
**त्वां** = तपाईंलाई
**पौरुषेण** = सामर्थ्य
**सम्पादयन्** = सम्पादन गर्दै
**यदुषु** = यदुकुलमा
**रम्यम्** = अत्यन्त रमणीय
**अङ्गम्** = अङ्गलाई
**अबिभ्रत्** = धारण गर्नुभयो

**वाक्यार्थ–** तपाईं आफ्ना तीन पादद्वारा हीन हुनाले मनमनै दुःखी हुनुहुन्थ्यो त्यसैले तपाईंलाई सम्पूर्ण अङ्गहरूले पूर्ण एवं स्वस्थ बनाउनका लागि उहाँ अत्यन्त रमणीय श्यामसुन्दर विग्रहले युक्त भएर यदुवंशमा प्रकट हुनुभयो र असुरवंशी राजाहरूको सैकडौँ अक्षौहिणीको रूपमा रहेको मेरो ठुलो भाइलाई हटाउनुभयो किनभने उहाँ परमस्वतन्त्र हुनुहुन्थ्यो।

**का वा सहेत विरहं पुरुषोत्तमस्य**
**प्रेमावलोकरुचिरस्मितवल्गुजल्पैः ।**
**स्थैर्यं समानमहरन्मधुमानिनीनां**
**रोमोत्सवो मम यदङ्घ्रिविटङ्किताया: ॥ ३५ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| (भगवान् श्रीकृष्णले) | **समानम्** = मानका साथ | हुन्थे त्यस्ता |
| **प्रेमावलोकरुचिरस्मितवल्गु-** | **स्थैर्यं** = धैर्यलाई | **पुरुषोत्तमस्य** = भगवान् |
| **जल्पैः** = प्रेमपूर्वकको हेराइले | **अहरत्** = हरण गर्नुभएको थियो | श्रीकृष्णको |
| मनोहर मन्द मुस्कान र मिठा- | **यदङ्घ्रिविटङ्किताया:** = जसको | **विरहं** = विरहलाई |
| मिठा कुराहरूद्वारा | चरणकमलको स्पर्शले | **का** = कुन नारीले |
| **मधुमानिनीनां** = मधुमयी मानिनी | **मम** = मेरा अङ्गहरू | **वा** = अथवा |
| सत्यभामा आदिको | **रोमोत्सवः** = आनन्दपुलकित | **सहेत** = सहन गर्न सक्ली |

**वाक्यार्थ–** जसले आफ्नो प्रेमपूर्वकको हेराइ, मनोहर हाँसो र मिठामिठा कुराहरूद्वारा सत्यभामा आदि मधुमयी मानिनीहरूको गानका साथ उनीहरूको धैर्यलाई समेत नष्ट गर्नुभएको थियो जसको चरणकमलको स्पर्शले मेरा अङ्गहरू आनन्द पुलकित हुन्थे त्यस्ता पुरषोत्तम भगवान् श्रीकृष्णको विरहलाई म कसरी सहन गर्न सकूँ ?

**तयोरेवं कथयतोः पृथिवीधर्मयोस्तदा ।**
**परीक्षिन्नाम राजर्षिः प्राप्तः प्राचीं सरस्वतीम् ॥ ३६ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **एवं** = यसप्रकार | **तदा** = त्यस वेला | **सरस्वतीम्** = सरस्वतीको तटमा |
| **तयोः** = ती दुई | **परीक्षित्** = परीक्षित् | **प्राप्तः** = आइपुग्नुभयो |
| **पृथिवीधर्मयोः** = पृथिवी र धर्म | **नाम** = नाम गरेका | |
| **कथयतोः** = आपसमा कुरा | **राजर्षिः** = राजर्षि | |
| गरिरहेका थिए | **प्राचीं** = पूर्ववाहिनी | |

**वाक्यार्थ–** धर्म र पृथिवी यसप्रकार कुरा गरिरहँदा राजर्षि परीक्षित् पूर्ववाहिनी सरस्वती नदीको तटमा आइपुग्नुभयो ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां प्रथमस्कन्धे**
**पृथ्वीधर्मसंवादो नाम षोडशोऽध्यायः ॥ १६ ॥**

# अथ सप्तदशोऽध्यायः

## महाराज परीक्षित्द्वारा कलियुगको दमन

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**तत्र गोमिथुनं राजा हन्यमानमनाथवत् ।**

**दण्डहस्तं च वृषलं ददृशे नृपलाञ्छनम् ॥ १ ॥**

**पदार्थ–**

**तत्र** = त्यहाँ
**राजा** = राजा परीक्षित्ले
**अनाथवत्** = स्वामीले रहित कुनै व्यक्तिलाई झैं
**हन्यमानम्** = शूद्रद्वारा पिटिइरहेका
**गोमिथुनं** = गाई र साँढेको जोडालाई
**नृपलाञ्छनम्** = राजभेषधारी
**दण्डहस्तं** = हातमा दण्ड लिएको
**वृषलं** = शूद्रलाई
**च** = पनि
**ददृशे** = देखे

**वाक्यार्थ–** शौनकजी ! त्यहाँ पुगेर राजा परीक्षित्ले एउटा राजभेषधारी शूद्रले हातमा लठ्ठी लिएर गाई र साँढेको एक जोडालाई पिटिरहेको देख्नुभयो। त्यो दृश्य देख्दा यस्तो लाग्दथ्यो कि तिनीहरूको रक्षा गर्ने कोही छैन।

**वृषं मृणालधवलं मेहन्तमिव बिभ्यतम् ।**

**वेपमानं पदैकेन सीदन्तं शूद्रताडितम् ॥ २ ॥**

**पदार्थ–**

**मृणालधवलं** = कमलको तन्तुझैं सेतो वर्ण भएका
**बिभ्यतम्** = भयभीत भएर
**मेहन्तम्** = मूत्रत्याग गरिहेका
**इव** = झैं
**एकेन** = एउटा
**पदा** = पाउले खडा भएर
**वेपमानं** = थर्थर काँपिरहेको
**शूद्रताडितम्** = शूद्रको ताडनाले
**सीदन्तं** = पीडित
**वृषं** = साँढेको रूपलाई धारण गरेका (धर्मलाई पनि देख्नुभयो)

**वाक्यार्थ–** यस्तै राजा परीक्षित्ले त्यहाँ कमलको डाँठजस्ता सेता, भयभीत भएर मूत्रत्याग गरिरहेका, एउटा खुट्टाले उभिएर काँपिरहेका एवं शूद्रको ताडनाले अत्यन्त दुःखी भएको साँढेको रूप धारण गरेका धर्मलाई पनि देख्नुभयो।

**गां च धर्मदुघां दीनां भृशं शूद्रपदाहताम् ।**

**विवत्सामाश्रुवदनां क्षामां यवसमिच्छतीम् ॥ ३ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **धर्मदुघां** = यज्ञादि सामग्रीको सम्पादक हुनाले धर्मको कारण भएकी<br>**शूद्रपदा** = शूद्रको लात्ताले<br>**हताम्** = हानिएकी<br>**भृशं** = अत्यन्त<br>**दीनां** = दुःखी भइरहेकी | **विवत्साम्** = बाच्छाले रहित भएकी<br>**गां** = गाईँझैं<br>**साश्रुवदनां** = आँखाबाट आँसु निकालिरहेकी<br>**क्षामां** = दुर्बल<br>**च** = र | **यवसम्** = घाँस खान<br>**इच्छतीम्** = इच्छा गरिरहेकी (अथवा पृथिवी पक्षमा यज्ञ भागको इच्छा गर्ने गाईको रूपलाई धारण गर्ने पृथिवीलाई देखे) |

**वाक्यार्थ–** धर्मोपयोगी दुध, घिऊ आदि हविष्य पदार्थलाई दिने ती गाई शूद्रले लात्ताले हानेको हुनाले अत्यन्त दुःखी भएकी थिइन्। उनी दुब्ली र बाच्छोरहित थिइन्। उनलाई भोक लागेको थियो र आँखाबाट आँसु बगिरहेका थिए।

**पप्रच्छ रथमारूढः कार्तस्वरपरिच्छदम्।**
**मेघगम्भीरया वाचा समारोपितकार्मुकः॥ ४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **कार्तस्वरपरिच्छदम्** = स्वर्णजडित<br>**रथम्** = रथमा<br>**आरूढः** = चढेर | **समारोपितकार्मुकः** = धनुषमा ताँदो चढाएर<br>**मेघगम्भीरया** = मेघसमान गम्भीर | **वाचा** = वाणीले<br>**पप्रच्छ** = सोधे |

**वाक्यार्थ–** स्वर्णजडित रथमा चढेका राजाले धनुषमा ताँदो चढाएर मेघजस्ता गम्भीर वाणीले उसलाई यसप्रकार सोध्नुभयो।

**कस्त्वं मच्छरणे लोके बलाद्धंस्यबलान्बली।**
**नरदेवोऽसि वेषेण नटवत् कर्मणाद्विजः॥ ५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **मच्छरणे** = म रक्षक भएको<br>**लोके** = लोकमा<br>**बली** = बलवान् भएर<br>**अबलान्** = दुर्बलहरूलाई<br>**बलात्** = बलपूर्वक | **हंसि** = पिट्छस्<br>**त्वं** = तँ<br>**कः** = को होस्<br>**नटवत्** = नटझैं<br>**वेषेण** = भेषले मात्र | **नरदेवः** = राजाजस्तो देखिन्छस् परन्तु<br>**कर्मणा** = कर्मले<br>**अद्विजः** = शूद्र<br>**असि** = होस् |

**वाक्यार्थ–** अरे त को होस्? तँ आफू बलवान् भएर मेरा राज्यका यी दुर्बल प्राणीलाई पिटिरहेको छस्। तैंले कुनै नटले झैं भेषचाहिँ राजाको बनाएको छस्, परन्तु तेरो कर्म भने शूद्रको जस्तो छ।

**यस्त्वं कृष्णे गते दूरं सहगाण्डीवधन्वना ।**
**शोच्योऽस्यशोच्यान् रहसि प्रहरन् वधमर्हसि ॥ ६ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **गाण्डीवधन्वना** = अर्जुनका | **अशोच्यान्** = निरपराध | **असि** = छस् |
| **सह** = साथ | प्राणीलाई | त्यसकारण |
| **कृष्णे** = भगवान् श्रीकृष्ण | **प्रहरन्** = प्रहार गर्ने | **वधम्** = वध गर्न |
| **दूरं** = आफ्नो धाममा | **यः** = जो | **अर्हसि** = योग्य छस् |
| **गते** = गएपछि | **त्वं** = तँ | |
| **रहसि** = निर्जन ठाउँमा | **शोच्यः** = अपराधी | |

**वाक्यार्थ–** मेरा पितामह अर्थात् हजुरबाका साथ भगवान् श्रीकृष्ण परमधाम भएपछि यसप्रकार निर्जन ठाउँमा निरपराधीहरूमाथि प्रहार गर्ने तँ अपराधी होस् र यसर्थ तँ मारिन योग्य छस्।

**त्वं वा मृणालधवलः पादैर्न्यूनः पदा चरन् ।**
**वृषरूपेण किं कश्चिद्देवो नः परिखेदयन् ॥ ७ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **मृणालधवलः** = कमलनालझैँ | दशा देखता | **किं** = के |
| श्वेत वर्ण हुनुभएका | **नः** = मलाई | **वा** = अथवा |
| **पादैः** = अरू तीन पाउहरूले | **परिखेदयन्** = ठुलो कष्ट भएको | **कश्चित्** = कुनै |
| **न्यूनः** = रहित भएर पनि | छ | **देवः** = देवता हुनुहुन्छ |
| **पदा** = एक पाउले | **वृषरूपेण** = वृषभको रूपमा | |
| **चरन्** = हिँड्नु हुने तपाईंको यो | **त्वं** = तपाईं | |

**वाक्यार्थ–** त्यसपछि उहाँले धर्मसँग सोध्नुभयो– तपाईंको वर्ण कमलको डाँठझैँ सेतो छ। अरू तीनओटा पाउहरू नहुँदा तपाईं आफ्नो एउटै पाउले हिँडडुल गरिरहनुभएको छ, यो देख्दा मलाई ठुलो कष्ट भइरहेको छ। मलाई भन्नुहोस्, के तपाईं साँढेको रूपमा कुनै देवता हुनुहुन्छ ?

**न जातु पौरवेन्द्राणां दोर्दण्डपरिरम्भिते ।**
**भूतलेऽनुपतन्त्यस्मिन् विना ते प्राणिनां शुचः ॥ ८ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **पौरवेन्द्राणां** = पुरुवंशी | सुरक्षित | **ते** = तपाईंलाई |
| नरपतिहरूको | **अस्मिन्** = यस | **विना** = छाडेर |
| **दोर्दण्डपरिरम्भिते** = बाहुबलद्वारा | **भूतले** = भूमण्डलमा | **जातु** = कहिल्यै पनि |

| | |
|---|---|
| **प्राणिनां** = प्राणीहरूको | **न अनुपतन्ति** = खसेको |
| **शुचः** = शोकको आँसुहरू | देखिएका छैनन् |

**वाक्यार्थ–** यो अहिले भूमण्डल पुरुवंशी नरपतिहरूको बाहुबाट सुरक्षित छ। मैले अहिलेसम्म तपाईंलाई छोडेर अरू कुनै पनि प्राणीलाई आँखाबाट शोकको आँसु बगाएको दखेको छैन।

**मा सौरभेयात्र शुचो व्येतु ते वृषलाद्भयम्।**
**मा रोदीरम्ब भद्रं ते खलानां मयि शास्तरि॥ ९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सौरभेय** = हे धेनुपुत्र | **व्येतु** = हटोस् | **खलानां** = दुष्टहरूको |
| **मा शुचः** = शोक नगर्नुहोस् | **अम्ब** = हे माताजी | **शास्तरि** = शासक |
| **वृषलाद्** = शूद्रबाट | **ते** = तपाईंलाई | **मयि** = म रहेसम्म |
| **ते** = तपाईंको | **भद्रं** = सुख होस् | **मा रोदीः** = तपाईंलाई रुनुपर्ने |
| **भयम्** = भय | **अत्र** = यस लोकमा | छैन |

**वाक्यार्थ–** धेनुपुत्र ! अब तपाईं शोक नगर्नुहोस्। अब तपाईं यो शूद्रबाट निर्भय हुनुहोस्। यस लोकमा दुष्टहरूलाई दण्ड दिने शासक म रहेसम्म तपाईं रुनुपर्दैन।

**यस्य राष्ट्रे प्रजाः सर्वास्त्रस्यन्ते साध्व्यसाधुभिः।**
**तस्य मत्तस्य नश्यन्ति कीर्तिरायुर्भगो गतिः॥ १०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **साध्वि** = हे साध्वी | **प्रजाः** = प्रजाहरू | **आयुः** = आयु |
| **यस्य** = जुन राजाको | **त्रस्यन्ते** = पीडित हुन्छन् | **भगः** = भाग्य |
| **राष्ट्रे** = राष्ट्रमा | **मत्तस्य** = कर्तव्यशून्य | **गतिः** = पुण्यलोकको प्राप्ति यी |
| **असाधुभिः** = दुष्टहरूद्वारा | **तस्य** = त्यस राजाको | कुराहरू |
| **सर्वाः** = सम्पूर्ण | **कीर्तिः** = यश | **नश्यन्ति** = नष्ट हुन्छन् |

**वाक्यार्थ–** हे साध्वी ! जुन राजाको राज्यमा दुष्टहरूको उप्रद्रवद्वारा प्रजाहरू सन्त्रस्त हुन्छन् त्यस्ता प्रमादी राजाको कीर्ति, आयु, ऐश्वर्य र परलोक पनि भ्रष्ट हुन्छ।

**एष राज्ञां परो धर्मो ह्यार्तानामार्तिनिग्रहः।**
**अत एनं वधिष्यामि भूतद्रुहमसत्तमम्॥ ११॥**

पदार्थ–

| | | |
|---|---|---|
| **हि** = किनभने | **आर्तानाम्** = दुःखीहरूको | नै |
| **एषः** = यो | **आर्तिनिग्रहः** = दुःखलाई हटाउनु | **राज्ञां** = राजाहरूको |

| | | |
|---|---|---|
| **परः** = ठुलो | **भूतद्रुहम्** = प्राणीहरूलाई | **एनं** = यसलाई |
| **धर्मः** = धर्म हो | दुःखदिने | **वधिष्यामि** = मार्नेछु |
| **अतः** = यसकारण | **असत्तमम्** = अत्यन्त दुष्ट | |

**वाक्यार्थ–** दुःखीहरूको दुःखलाई दूर गर्नु नै राजाहरूको परम धर्म हो। प्राणीहरूलाई पीडा दिने यो शूद्र महादुष्ट हो। यसकारण म यसलाई अहिले नै मार्दछु।

**कोऽवृश्चत् तव पादांस्त्रीन् सौरभेय चतुष्पद।**
**मा भूवंस्त्वादृशा राष्ट्रे राज्ञां कृष्णानुवर्तिनाम्॥ १२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **चतुष्पद** = चार पाउ हुने | **पादान्** = पाउहरूलाई | **राज्ञां** = राजाहरूको |
| **सौरभेय** = हे धेनुपुत्र | **कः** = कसले | **राष्ट्रे** = राष्ट्रमा |
| **तव** = तपाईंका | **अवृश्चत्** = काट्यो | **त्वादृशाः** = तपाईं जस्ता दुःखी |
| **त्रीन्** = तीन | **कृष्णानुवर्तिनाम्** = कृष्णभक्त | **मा भूवन्** = न होऊन् |

**वाक्यार्थ–** हे धेनुपुत्र ! तपाईं त चारपाउवाला जीव हुनुहुन्छ। तपाईंका अरू तीनओटा पाउहरू कसले काट्यो ? श्रीकृष्णको अनुयायी राजाहरूको राज्यमा कहिल्यै पनि कोही पनि तपाईंजस्ता दुःखी हुनेछैनन्।

**आख्याहि वृष भद्रं वः साधूनामकृतागसाम्।**
**आत्मवैरूप्यकर्तारं पार्थानां कीर्तिदूषणम्॥ १३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **वृष** = वृषभ | **साधूनाम्** = साधुहरूको | त्यो कुन व्यक्ति हो |
| **वः** = तपाईंको | **आत्मवैरूप्यकर्तारं** = अङ्गभङ्ग | **आख्याहि** = त्यसको विषयमा |
| **भद्रं** = कल्याण होस् | गरेर | मलाई भन्नुहोस् |
| **अकृतागसाम्** = तपाईं जस्ता | **पार्थानां** = पाण्डवहरूको कुलमा | |
| निरपराध | **कीर्तिदूषणम्** = कलङ्क लगाउने | |

**वाक्यार्थ–** वृषभ ! तपाईंको कल्याण होस्। भन्नुहोस् तपाईंजस्ता निरपराध साधुको अङ्गभङ्ग गरेर कुन दुष्टले पाण्डवहरूको कीर्तिमा कलङ्क लगाएको हो ?

**जनेऽनागस्यघं युञ्जन् सर्वतोऽस्य च मद्भयम्।**
**साधूनां भद्रमेव स्यादसाधुदमने कृते॥ १४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अनागसि** = निरपराध | **जने** = व्यक्तिमा | **अघं** = दुःख |

| | | |
|---|---|---|
| **युञ्जन्** = दिने व्यक्ति | **च** = अनि | **भद्रम्** = कल्याण |
| **सर्वतः** = सबैतिर | **असाधुदमने** = दुष्टहरूको दमन | **एव** = नै |
| **अस्य** = त्यस व्यक्तिका लागि | **कृते** = गरेपछि | **स्यात्** = होस् |
| **मद्भयम्** = मेरो भय रहनेछ | **साधूनां** = साधुहरूको | |

**वाक्यार्थ–** जो कुनै पनि निरपराध प्राणीलाई सताउँछ, चाहे त्यो जो कोही व्यक्ति होस्, ऊ मबाट अवश्य पनि भयभीत रहनेछ। दुष्टहरूको दमन गर्नाले नै साधुहरूको कल्याण हुन्छ।

**अनागस्स्विह भूतेषु य आगस्कृन्निरङ्कुशः।**

**आहर्तास्मि भुजं साक्षादमर्त्यस्यापि साङ्गदम्॥ १५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यः** = जुन व्यक्ति | **आगस्कृत्** = द्रोह गर्दछ | **अपि** = पनि |
| **इह** = यस लोकमा | **साक्षात्** = त्यो साक्षात् | **आहर्ता** = काटिदिने |
| **निरङ्कुशः** = निर्भय भएर | **अमर्त्यस्य** = देवता नै भए पनि | **अस्मि** = छु |
| **अनागस्सु** = निरपराध | **साङ्गदम्** = मूल सहित | |
| **भूतेषु** = प्राणीहरूमा | **भुजं** = उसको हात | |

**वाक्यार्थ–** जो उद्दण्ड व्यक्ति निरपराध प्राणीलाई दुःख दिन्छ, त्यो साक्षात् देवता नै किन नहोस्, मूलसहित त्यस व्यक्तिको हात काट्नेछु।

**राज्ञो हि परमो धर्मः स्वधर्मस्थानुपालनम्।**

**शासतोऽन्यान् यथाशास्त्रमनापद्युत्पथानिह॥ १६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **इह** = यहाँ | **यथाशास्त्रम्** = शास्त्रको | मनुष्यहरूको पालन गर्नु |
| **अनापदि** = आपत्तिकालदेखि | अनुकूल | **राज्ञः** = राजाको |
| अतिरिक्त समयमा पनि | **शासतः** = दण्ड दिने र | **हि** = निश्चय |
| **उत्पथान्** = धर्म त्याग गर्ने | **स्वधर्मस्थानुपालनम्** = आफ्नो | **परमः** = परम |
| **अन्यान्** = असाधु पुरुषलाई | धर्मको आचरण गर्ने | **धर्मः** = धर्म हो |

**वाक्यार्थ–** आपत्तिकाललाई छोडेर मर्यादा उल्लङ्घन गर्नेहरूलाई शास्त्रानुसार दण्ड दिँदै आफ्नो धर्ममा स्थित प्रजाहरूको पालन गर्नु राजाहरूको परम धर्म हो।

**धर्म उवाच** (धर्मले भन्नुभयो)

**एतद् वः पाण्डवेयानां युक्तमार्ताभयं वचः।**

**येषां गुणगणैः कृष्णो दौत्यादौ भगवान् कृतः॥ १७॥**

**पदार्थ–**

**पाण्डवेयानां** = पाण्डु वंशमा उत्पन्न हुनुभएका
**वः** = तपाईंको
**एतत्** = यो
**आर्ताभयं** = आर्तहरूलाई अभय प्रदान गर्ने
**वचः** = वचन
**युक्तम्** = युक्तियुक्त नै छ
**येषां** = जुन पाण्डवहरूको
**गुणगणैः** = गुणगणहरूले
**भगवान्** = भगवान्
**कृष्णः** = कृष्ण
**दौत्यादौ** = दूत, सारथि आदि
**कृतः** = बन्ने काम गर्नुभयो

**वाक्यार्थ–** पाण्डु वंशमा उत्पन्न हुनुभएका तपाईंको यो आर्तहरूलाई अभय प्रदान गर्ने वचन युक्तियुक्त नै छ जुन पाण्डवहरूको गुणगणहरूको भगवान् कृष्ण दूत, सारथि आदि बन्नुभयो।

**न वयं क्लेशबीजानि यतः स्युः पुरुषर्षभ।**
**पुरुषं तं विजानीमो वाक्यभेदविमोहिताः॥ १८॥**

**पदार्थ–**

**पुरुषर्षभ** = हे नरेन्द्र
**वाक्यभेदविमोहिताः** = शास्त्रका विभिन्न वचनहरूबाट मोहित भएकाले
**वयं** = हामीहरू
**तं** = त्यो
**पुरुषं** = पुरुषलाई
**न विजानीमः** = जान्दैनौं
**यतः** = जसबाट
**क्लेशबीजानि** = दुःखका कारणहरू उत्पन्न
**स्युः** = उत्पन्न हुन्छन्

**वाक्यार्थ–** नरेन्द्र ! शास्त्रका विभिन्न वचनहरूद्वारा मोहित भएको हुनाले हामी त्यस पुरुषलाई जान्न सक्दैनौं जसबाट क्लेशका कारणहरू उत्पन्न हुन्छन्।

**केचिद्विकल्पवसना आहुरात्मानमात्मनः।**
**दैवमन्ये परे कर्म स्वभावमपरे प्रभुम्॥ १९॥**

**पदार्थ–**

**विकल्पवसनाः** = कुनै पनि द्वैतलाई स्वीकार नगर्ने
**केचित्** = केही भोगीहरू
**आत्मनः** = आफ्नो सुख र दुःखको कारण
**आत्मानम्** = आफू नै हो भनेर
**आहुः** = भन्दछन्
**अन्ये** = अरू ज्योतिषीहरू
**दैवम्** = ग्रह आदिलाई आफ्ना सुख र दुःखको कारण मान्दछन्
**परे** = अन्य पूर्वमीमांसकहरू
**कर्म** = प्रारब्ध कर्मलाई सुख र दुःखको कारण मान्दछन्
**अपरे** = चार्वाकहरू
**स्वभावम्** = स्वभावलाई नै सुख र दुःखको कारण मान्दछन् (यस्तै केही मानिसहरू)
**प्रभुम्** = ईश्वरलाई (दुःख र सुखको कारण मान्दछन्)

**वाक्यार्थ–** जो मनुष्यहरू कुनै पनि प्रकारको द्वैतलाई स्विकार्दैनन् उनीहरू आफूलाई नै आफ्नो दुःखको कारण बताउँछन्। ज्योतिषीहरू ग्रहलाई दुःखको कारण बताउँछन्। मीमांसकहरू प्रारब्ध कर्मलाई र चार्वाकहरू स्वभावलाई दुःखको कारण बताउँछन्।

**अप्रतर्क्यादनिर्देश्यादिति केष्वपि निश्चयः ।**
**अत्रानुरूपं राजर्षे विमृश स्वमनीषया ॥ २० ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **केषु** = कसैको | **अनिर्देश्यात्** = वाणीको विषय | **राजर्षे** = हे राजा |
| **इति अपि** = यस्तो पनि | नभएको कर्महरूको फल प्रदान | **अत्र** = यस विषयमा |
| **निश्चयः** = निश्चय छ कि | गर्ने परमात्माबाट नै | **अनुरूपं** = योग्य पक्षलाई |
| **अप्रतर्क्यात्** = मनद्वारा तर्क गर्न | प्राणीहरूलाई सुख अथवा दुःख | **स्वमनीषया** = आफ्नो बुद्धिद्वारा |
| नसकिने | मिल्दछ | **विमृश** = विचार गर्नुहोस् |

**वाक्यार्थ–** कतिपय विद्वान्हरूको यस्तो निश्चय छ कि दुःखको कारण न तर्कद्वारा जान्न सकिन्छ, न त वाणीद्वारा नै बताउन सकिन्छ। राजर्षि ! यी पहिले बताइएका विभिन्न मतहरूमध्ये कुनचाहिँ मत ठिक हुन सक्दछ, तपाईं नै आफ्नो बुद्धिद्वारा विचार गर्नुहोस्।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**एवं धर्मे प्रवदति स सम्राड् द्विजसत्तम ।**
**समाहितेन मनसा विखेदः पर्यचष्ट तम् ॥ २१ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **द्विजसत्तमाः** = हे ऋषिश्रेष्ठ | **प्रवदति** = भनेपछि | **समाहितेन** = सावधान |
| शौनकजी | **सः** = ती प्रसिद्ध | **मनसा** = मनले |
| **एवं** = यसप्रकार | **सम्राट्** = राजा परीक्षित्ले | **तम्** = ती धर्मलाई |
| **धर्मे** = धर्मले | **विखेदः** = भ्रमले रहित भएर | **पर्यचष्ट** = भन्नुभयो |

**वाक्यार्थ–** हे ऋषिश्रेष्ठ शौनकजी ! धर्मको यो प्रवचन सुनेर सम्राट् परीक्षित् ज्यादै प्रसन्न हुनुभयो। उहाँको खेद मेटियो। उहाँले शान्तचित्त भएर धर्मसँग भन्नुभयो।

**राजोवाच** (राजाले भन्नुभयो)

**धर्मं ब्रवीषि धर्मज्ञ धर्मोऽसि वृषरूपधृक् ।**
**यदधर्मकृतः स्थानं सूचकस्यापि तद्भवेत् ॥ २२ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **धर्मज्ञ** = धर्मज्ञ | **असि** = हुनुहुन्छ यसकारण | मनुष्यलाई |
| **वृषरूपधृक्** = वृषभको रूपलाई | **धर्मं** = धर्मको | **यत्** = जुन |
| धारण गर्ने | **ब्रवीषि** = उपदेश गर्नुहुन्छ | **स्थानं** = स्थान नरकादिको |
| **धर्मः** = तपाईं धर्म | **अधर्मकृतः** = अधर्म गर्ने | प्राप्ति हुन्छ |

**तत्** = त्यही स्थान
**सूचकस्य** = पैशुन्य वृत्ति गर्ने
मनुष्यको
**अपि** = पनि
**भवेत्** = हुन्छ

**वाक्यार्थ–** धर्मको तत्त्व जान्नेवाला हे वृषभदेव ! तपाईं धर्मको उपदेश गरिरहनुभएको छ। अवश्य पनि तपाईं वृषभको रूपमा स्वयं धर्म हुनुहुन्छ। तपाईंले आफूलाई दुःख दिनेवालाको नाम यसकारणले नभन्नुभएको हो कि अधर्म गर्ने मनुष्यहरूलाई जुन नरकादिको प्राप्ति हुन्छ, पैशुन्य वृत्ति गर्नेवाला मनुष्यलाई पनि त्यही नरकादिको प्राप्ति हुन्छ।

**अथवा देवमायाया नूनं गतिरगोचरा।**
**चेतसो वचसश्चापि भूतानामिति निश्चयः॥ २३॥**

पदार्थ–
**अथवा** = अथवा
**नूनं** = निश्चय
**देवमायायाः** = परमात्माको मायाको
**गतिः** = स्वरूप
**भूतानाम्** = प्राणीहरूको
**चेतसः** = मनको र
**वचसः** = वाणीको
**अगोचरा** = विषय हुन सक्दैन भन्ने
**इति** = यस्तो
**च अपि** = पनि
**निश्चयः** = निश्चय

**वाक्यार्थ–** अथवा यो सिद्धान्त निश्चित छ कि प्राणीहरूको मन र वाणीले पनि परमेश्वरको मायाको स्वरूपको निरूपण हुन सक्दैन।

**तपः शौचं दया सत्यमिति पादाः कृते कृताः।**
**अधर्मांशैस्त्रयो भग्नाः स्मयसङ्गमदैस्तव॥ २४॥**

पदार्थ–
**कृते** = सत्य युगमा
**तपः** = तपस्या
**शौचं** = पवित्रता
**दया** = दया
**सत्यम्** = सत्य
**इति** = यी चार
**पादाः** = पाउहरू तपाईंका थिए (यस समयमा)
**अधर्मांशैः** = अधर्मका अंश
**स्मयसङ्गमदैः** = गर्व, आसक्ति र मदद्वारा
**तव** = तपाईंका
**त्रयः** = तप, शौच र दया
**भग्नाः** = नष्ट
**कृताः** = भए

**वाक्यार्थ–** धर्मदेव ! सत्ययुगमा तप, पवित्रता, दया र सत्य यी तपाईंका चारओटा पाउहरू थिए, परन्तु यस समयमा अधर्मको अंश, गर्व, आसक्ति र मदले तीन चरणहरू नष्ट भएका छन्।

**इदानीं धर्म पादस्ते सत्यं निर्वर्तयेद् यतः।**
**तं जिघृक्षत्यधर्मोऽयमनृतेनैधितः कलिः॥ २५॥**

पदार्थ–
**इदानीं** = अहिले
**धर्म** = हे धर्म
**ते** = तपाईंको

**पादः** = एक पाउ
**सत्यं** = सत्यमात्र अवशिष्ट छ
**यतः** = जुन चतुर्थ पाउ सत्यको आधारमा
**निर्वर्तयेत्** = यहाँले आफूलाई
कुनै प्रकारले धारण गर्नुभएको छ
**तं** = तपाईंको चतुर्थ पाद सत्यलाई पनि
**अनृतेन** = असत्यद्वारा
**एधितः** = बढेको
**अयम्** = यो
**कलिः** = कलिरूप
**अधर्मः** = अधर्म
**जिघृक्षति** = खान खोज्दैछ

**वाक्यार्थ–** अब तपाईंको चतुर्थ चरण केवल सत्यमात्र बाँकी छ। त्यसकै बलमा तपाईं बाँचिरहनुभएको छ। असत्यले पुष्ट भएको यो अधर्मरूप कलि त्यो चतुर्थ पाउलाई पनि खान खोजिरहेको छ।

**इयं च भूमिर्भगवता न्यासितोरुभरा सती ।**
**श्रीमद्भिस्तत्पदन्यासैः सर्वतः कृतकौतुका ॥ २६ ॥**

**पदार्थ–**

**इयं** = यी
**भूमिः** = पृथिवी
**च** = पनि
**भगवता** = भगवान् श्रीकृष्णद्वारा
**न्यासितोरुभरा** = यिनको ठुलो भागलाई हटाएपछि
**श्रीमद्भिः** = कमल, अङ्कुश वज्र आदि शोभाले युक्त
**तत्पदन्यासैः** = भगवान् श्रीकृष्णका पाउहरूद्वारा
**सर्वतः** = चारैतिर
**कृतकौतुका** = मङ्गलमयी भएकी
**सती** = थिइन्

**वाक्यार्थ–** यी गौमाता साक्षात् पृथिवी हुनुहुन्छ। भगवान्ले यिनको भारलाई हरण गर्नुभएको थियो। वज्र, अङ्कुश आदि भगवान् श्रीकृष्णका चरणका चिह्नले युक्त भएर यिनी मङ्गलमयी भएकी थिइन्।

**शोचत्यश्रुकला साध्वी दुर्भगेवोज्झिताधुना ।**
**अब्रह्मण्या नृपव्याजाः शूद्रा भोक्ष्यन्ति मामिति ॥ २७ ॥**

**पदार्थ–**

**अधुना** = अहिले भगवान् श्रीकृष्णद्वारा
**उज्झिता** = रहित भएकी
**अश्रुकला** = आँखाबाट आँशु निकाल्दै
**अब्रह्मण्या** = ब्राह्मणभक्तिले हीन भएका
**नृपव्याजाः** = राजाहरूको भेष धारण गर्ने
**शूद्राः** = शूद्रहरूले
**माम्** = मलाई
**भोक्ष्यन्ति** = भोग गर्नेछन्
**इति** = भनेर
**साध्वी** = पतिव्रता
**दुर्भगा** = भाग्यहीन
**इव** = जस्तो भएर
**शोचति** = शोक गर्दैछिन्

**वाक्यार्थ–**अहिले यी पृथ्वी भगवान् श्रीकृष्णबाट रहित भएकी हुनाले राजाको स्वाँग बनाएर ब्राह्मणद्रोही शूद्रहरूले मलाई भोग गर्ने भए भनेर साध्वी, अभागिनीझैं आँखाबाट आँसु खसालेर चिन्ता गरिरहेकी छिन्।

**इति धर्मं महीं चैव सान्त्वयित्वा महारथः ।**
**निशातमाददे खड्गं कलयेऽधर्महेतवे ॥ २८ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **इति** = यसप्रकार | **महारथः** = महाराजा परीक्षित्ले | **एव** = नै |
| **धर्मं** = धर्मलाई र | **अधर्महेतवे** = अधर्मको कारण | **निशातम्** = धारिलो |
| **महीं** = पृथिवीलाई | भएको | **खड्गं** = तारबार |
| **च** = पनि | **कलये** = कलिलाई मार्नको | **आददे** = उठाउनुभयो |
| **सान्त्वयित्वा** = सान्त्वना दिएर | लागि | |

**वाक्यार्थ–** महाराज परीक्षित्ले यसप्रकार धर्म र पृथिवीलाई सान्त्वना दिनुभयो, फेरि उहाँले अधर्मको कारण भएको कलियुगलाई मार्नका लागि धारिलो तरबार उठाउनुभयो।

**तं जिघांसुमभिप्रेत्य विहाय नृपलाञ्छनम् ।**
**तत्पादमूलं शिरसा समगाद् भयविह्वलः ॥ २९ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **तं** = ती राजा परीक्षित्लाई | किरीट आदिलाई | **तत्पादमूलं** = राजा परीक्षित्को |
| **जिघांसुम्** = मार्न आँटेको | **भयविह्वलः** = डरले थर्थर काँप्दै | पाउमा |
| **अभिप्रेत्य** = जानेर | **विहाय** = छोडेर | **समगात्** = पऱ्यो |
| **नृपलाञ्छनम्** = राजाको चिह्न | **शिरसा** = शिरले | |

**वाक्यार्थ–** अब यिनले मलाई मार्न आँटे भन्ने थाहा पाएर आफ्ना किरीट आदि राजचिह्नहरूलाई फ्याँकेर कलि राजा परीक्षित्को पाउमा पऱ्यो।

**पतितं पादयोर्वीरः कृपया दीनवत्सलः ।**
**शरण्यो नावधीच्छ्लोक्य आह चेदं हसन्निव ॥ ३० ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **पादयोः** = पाउमा | **च** = र | **हसन् इव** = हाँस्दै |
| **पतितं** = परेको कलिलाई देखेर | **दीनवत्सलः** = दीनवत्सल राजा | **कृपया** = कृपा गरेर |
| **शरण्यः** = शरणागत रक्षक | परीक्षित्ले | **इदं** = यो |
| **वीरः** = वीर | **न अवधीत्** = कलिलाई | **आह** = भन्नुभयो |
| **श्लोक्यः** = कीर्तिशाली | मार्नुभएन | |

**वाक्यार्थ–** राजा परीक्षित् वीर, कीर्तिशाली दीनवत्सल र शरणागतरक्षक हुनुहुन्थ्यो त्यसैले उहाँले कलिलाई शरणमा आएको देखेर कृपा गरेर उसलाई मार्नुभएन। हाँस्दै उसलाई भन्नुभयो।

**राजोवाच** (राजाले भन्नुभयो)

**न ते गुडाकेशयशोधराणां**
**बद्धाञ्जलेर्वै भयमस्ति किञ्चित्।**
**न वर्तितव्यं भवता कथञ्चन**
**क्षेत्रे मदीये त्वमधर्मबन्धुः॥ ३१॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **गुडाकेशयशोधराणां** = अर्जुनको कीर्ति धारण गर्ने हाम्रो अगाडि | **किञ्चित्** = केही | **भवता** = तिमीले |
| **बद्धाञ्जलेः** = हात जोडेर शरणमा पर्ने | **भयम्** = डर | **मदीये** = मेरो |
| **ते** = तिम्रा लागि | **न अस्ति** = छैन | **क्षेत्रे** = क्षेत्रमा |
| **वै** = निश्चय नै | **त्वम्** = तिमी | **कथञ्चन** = कुनै पनि परिस्थितिमा |
| | **अधर्मबन्धुः** = अधर्मका सहायक हुनाले | **न वर्तितव्यं** = बस्नुहुँदैन |

**वाक्यार्थ–** तिमी हात जोडेर मेरो शरणमा पर्‍यौ। अब तिमीलाई अर्जुनको यशस्वी वंशमा उत्पन्न भएको कुनै वीरबाट डर हुनेछैन। परन्तु तिमी अधर्मको सहायक भएको हुनाले तिमीले मेरो राज्यमा कुनै पनि परिस्थितिमा बस्नुहुँदैन।

**त्वां वर्तमानं नरदेवदेहे-**
**ष्वनुप्रवृत्तोऽयमधर्मपूगः।**
**लोभोऽनृतं चौर्यमनार्यमंहो**
**ज्येष्ठा च माया कलहश्च दम्भः॥ ३२॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **नरदेवदेहेषु** = राजाहरूको शरीरमा | **चौर्यम्** = चोरी | **च** = र |
| **त्वां** = तिमीले | **अनार्यम्** = दुष्टता | **दम्भः** = अहङ्कार |
| **वर्तमानं** = प्रवेश गरेर बस्न लागेपछि | **अंहः** = पापाचरण | **च** = पनि |
| **लोभः** = लोभ | **ज्येष्ठा** = अलक्ष्मी अर्थात् दरिद्रता | **अयम्** = यो |
| **अनृतं** = असत्यता | **माया** = कपट | **अधर्मपूगः** = पापको समूह |
| | **कलहः** = झगडा | **अनुप्रवृत्तः** = बढेको छ |

**वाक्यार्थ–** तिमीले राजाहरूको शरीरमा निवास गरेको हुनाले लोभ, असत्यता, चोरी, दुष्टता, पापाचरण, दरिद्रता, कपट, झगडा, अहङ्कार र अरू पापहरूको वृद्धि भइरहेको छ।

**न वर्तितव्यं तदधर्मबन्धो**
**धर्मेण सत्येन च वर्तितव्ये।**
**ब्रह्मावर्ते यत्र यजन्ति यज्ञै-**
**र्यज्ञेश्वरं यज्ञवितानविज्ञाः॥ ३३॥**

पदार्थ—

**धर्मेण** = धर्म र
**सत्येन** = सत्यको
**वर्तितव्ये** = निवासस्थान भएको
**ब्रह्मावर्ते** = यस ब्रह्मावर्तमा
**तत्** = त्यो
**अधर्मबन्धो** = अधर्मको साथी भएको तिमीले (एक क्षणका लागि)
**च** = पनि
**न वर्तितव्यं** = बस्नुहुँदैन
**यत्र** = जहाँ
**यज्ञवितानविज्ञाः** = यज्ञानुष्ठानमा कुशल मनुष्यहरू
**यज्ञैः** = यज्ञद्वारा
**यज्ञेश्वरं** = यज्ञेश्वर भगवान्को
**यजन्ति** = पूजा गर्दछन्

**वाक्यार्थ—** अधर्मको साथी हुनाले तिमीले यस ब्रह्मावर्तमा एक क्षणका लागि पनि बस्नुहुँदैन किनभने यो धर्म र त्यसको निवासस्थान हो। यहाँ यज्ञविधिलाई राम्रोसँग जान्ने महात्माहरू यज्ञद्वारा यज्ञपुरुष भगवान्को आराधना गर्दछन्।

**यस्मिन् हरिर्भगवानिज्यमान**
**इज्यात्ममूर्तिर्यजतां शं तनोति।**
**कामानमोघान् स्थिरजङ्गमाना-**
**मन्तर्बहिर्वायुरिवैष आत्मा॥ ३४॥**

पदार्थ—

**यस्मिन्** = जुन देशमा
**इज्यात्ममूर्तिः** = यज्ञमूर्ति
**वायुः** = वायु (प्राणरूपले भित्र र बाहिर पनि रहेको)
**इव** = झैं
**स्थिरजङ्गमानाम्** = समस्त चराचर जगत्को
**अन्तर्बहिः** = भित्र अन्तःकरण र बाहिर अरू दृश्य पदार्थले अधिष्ठानरूपले व्याप्त भएर
**एषः** = यी
**भगवान्** = भगवान्
**हरिः** = हरि
**आत्मा** = आत्मरूपले सर्वत्र विद्यमान
**इज्यमानः** = यज्ञद्वारा पूजा गरेपछि
**यजतां** = यज्ञ गर्ने (मुमुक्षुहरूलाई)
**शं** = आत्मसुख
**तनोति** = प्रदान गर्नुहुन्छ र (सकामीहरूका लागि)
**अमोघान्** = उत्तम
**कामान्** = विषयहरू प्रदान गर्नुहुन्छ

**वाक्यार्थ—** यस देशमा भगवान् श्रीहरि यज्ञको रूपमा निवास गर्नुहुन्छ। यज्ञद्वारा उहाँको पूजा

हुन्छ। उहाँले यज्ञ गर्नेवालाको कल्याण गर्नुहुन्छ। ती सर्वात्मा भगवान् प्राणवायुरूपले भित्र र बाहिर सर्वत्र व्याप्त भएझैं समस्त चराचरको भित्र र बाहिर एकरस स्थित भएर यज्ञ गर्नेहरूलाई आत्मसुख प्रदान गर्नुहुन्छ र उनीहरूका कामनाहरूको पूर्ति गर्नुहुन्छ।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**परीक्षितैवमादिष्टः स कलिर्जातवेपथुः।**

**तमुद्यतासिमाहेदं दण्डपाणिमिवोद्यतम्॥ ३५॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **एवम्** = यसप्रकार | **जातवेपथुः** = थर्थर काँप्दै | **उद्यतम्** = आफूलाई मार्नका |
| **परीक्षिता** = राजा परीक्षित्ले | **दण्डपाणिम्** = यमराज | लागि उद्यत |
| **आदिष्टः** = आदेश दिएपछि | **इव** = झैं | **तम्** = ती राजा परीक्षित्लाई |
| **सः** = ती | **उद्यतासिम्** = हातमा खड्ग | **इदं** = यो कुरा |
| **कलिः** = कलिले | लिएर | **आह** = भन्यो |

**वाक्यार्थ—** परीक्षित्को यो आज्ञालाई सुनेर डराएको कलिले थर्थर काँप्दै, यमराजझैं मार्नका लागि उद्यत हातमा तलबार लिएका राजा परीक्षित्सँग भन्यो।

**कलिरुवाच** (कलिले भन्यो)

**यत्र क्व वाथ वत्स्यामि सार्वभौम तवाज्ञया।**

**लक्षये तत्र तत्रापि त्वामात्तेषुशरासनम्॥ ३६॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **अथ** = यसपछि | **अपि** = पनि | बाण चढाएर बसेको |
| **सार्वभौम** = सार्वभौम | **वत्स्यामि** = बस्नेछु | **त्वाम्** = तपाईं (हुनुहुन्छ भन्ने) |
| **तव** = तपाईंको | **तत्र** = त्यहाँ | **लक्षये** = ठान्दछु |
| **आज्ञया** = आज्ञाले | **तत्र** = त्यहाँ | |
| **यत्र क्व वा** = जहाँकहीं | **आत्तेषुशरासनम्** = धनुषमाथि | |

**वाक्यार्थ—** हे सार्वभौम! तपाईंले जहाँ भन्नुहुन्छ म त्यहीं बस्तु। जहाँ बसे पनि म तपाईंलाई धनुषमाथि बाण चढाएर उभिएर बस्नुभएको देख्दछु।

**तन्मे धर्मभृतां श्रेष्ठ स्थानं निर्देष्टुमर्हसि।**

**यत्रैव नियतो वत्स्य आतिष्ठंस्तेऽनुशासनम्॥ ३७॥**

**पदार्थ–**

**धर्मभृतां** = धार्मिकहरूमा
**श्रेष्ठ** = शिरोमणि
**मे** = मलाई
**तत्** = त्यो
**स्थानं** = स्थान
**निर्देष्टुम्** = देखाउन
**अर्हसि** = समर्थ हुनुहुन्छ
**यत्र** = जहाँ
**एव** = नै
**ते** = तपाईंको
**अनुशासनम्** = अनुशासनलाई
**आतिष्ठन्** = पालन गर्दै
**नियतः** = स्थिर भएर
**वत्स्ये** = बस्नेछु

**वाक्यार्थ–** धार्मिक शिरोमणि ! तपाईंले मलाई त्यो स्थान बताउनुहोस् जहाँ म तपाईंको आज्ञालाई पालन गर्दै स्थिर भएर बस्न सकूँ।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**अभ्यर्थितस्तदा तस्मै स्थानानि कलये ददौ।**
**द्यूतं पानं स्त्रियः सूना यत्राधर्मश्चतुर्विधः॥ ३८॥**

**पदार्थ–**

**तदा** = त्यस वेला
**अभ्यर्थितः** = कलियुगको प्रार्थनालाई स्वीकार गरेर राजा परीक्षित्ले
**तस्मै** = त्यस
**कलये** = कलियुगलाई
**द्यूतं** = जुवा
**पानं** = मद्यपान
**स्त्रियः** = स्त्रीसङ्ग
**सूना** = हिंसा
**यत्र** = जहाँ
**चतुर्विधः** = असत्य, मद, आसक्ति र निर्दयता यी चार प्रकारका
**अधर्मः** = अधर्मले निवास गर्दछन्
**स्थानानि** = ती स्थान
**ददौ** = दिए

**वाक्यार्थ–** कलियुगको प्रार्थनालाई स्वीकार गरेर राजा परीक्षित्ले उसलाई बस्नको लागि जुवा, मद्यपान, स्त्रीप्रसङ्ग र हिंसा गरी चार ठाउँ दिनुभयो। यी ठाउँहरूमा क्रमशः असत्य, मद, आसक्ति र निर्दयता यी चार प्रकारका अधर्म निवास गर्दछन्।

**पुनश्च याचमानाय जातरूपमदात् प्रभुः।**
**ततोऽनृतं मदं कामं रजो वैरं च पञ्चमम्॥ ३९॥**
**अमूनि पञ्च स्थानानि ह्यधर्मप्रभवः कलिः।**
**औत्तरेयेण दत्तानि न्यवसत् तन्निदेशकृत्॥ ४०॥**

**पदार्थ–**

**पुनः च** = फेरि
**याचमानाय** = कलिले अर्को ठाउँ मागेपछि
**प्रभुः** = ती राजा परीक्षित्ले
**जातरूपम्** = सुवर्ण
**अदात्** = दिनुभयो

# अथ द्वितीयोऽध्यायः

## भगवान्‌का स्थूल एवं सूक्ष्म रूप र क्रममुक्ति एवं सद्योमुक्तिको वर्णन

**श्रीशुक उवाच** (श्रीशुकदेवजीले भन्नुभयो)

**एवं पुरा धारणयाऽऽत्मयोनि-**
**र्नष्टां स्मृतिं प्रत्यवरुध्य तुष्टात्।**
**तथा ससर्जेदममोघदृष्टि-**
**र्यथाप्ययात् प्राग्व्यवसायबुद्धिः ॥ १ ॥**

पदार्थ—

**एवं** = यसप्रकारको जुनधारणा बताइयो
**धारणया** = त्यस धारणाबाट
**तुष्टात्** = प्रसन्न हुनुभएका नारायणबाट
**पुरा** = प्रलयकालमा
**नष्टां** = नष्ट भएको
**स्मृतिं** = स्मृतिलाई
**प्रत्यवरुध्य** = प्राप्त गरेर
**व्यवसायबुद्धिः** = निश्चयात्मिका बुद्धिलाई प्राप्त गरेका
**अमोघदृष्टिः** = उक्त धारणाद्वारा अमोघ दृष्टिलाई प्राप्त गरेका
**आत्मयोनिः** = ब्रह्माजीले
**आप्ययात्** = प्रलयहुनुभन्दा
**प्राक्** = पहिले
**इदम्** = यो विश्व
**यथा** = जसरी थियो त्यसै गरी
**ससर्ज** = सृष्टि गर्नुभयो

**वाक्यार्थ—** सृष्टिको प्रारम्भमा ब्रह्माजीले यही धारणाद्वारा प्रसन्न भएका भगवान्‌बाट सृष्टिविषयक स्मृतिलाई प्राप्त गर्नुभएको थियो जुन पहिले प्रलयकालमा लुप्त भएको थियो। यसबाट उहाँको दृष्टि अमोघ र बुद्धि निश्चयात्मिका भयो। त्यसपछि उहाँले यस जगत्‌लाई त्यसै गरी रचना गर्नुभयो जसरी यो प्रलयभन्दा पहिले थियो।

**शाब्दस्य हि ब्रह्मण एष पन्था**
**यन्नामभिर्ध्यायति धीरपार्थैः।**
**परिभ्रमंस्तत्र न विन्दतेऽर्थान्**
**मायामये वासनया शयानः ॥ २ ॥**

पदार्थ—

**शाब्दस्य** = शब्दमय
**ब्रह्मणः** = वेदको
**एषः** = यो
**पन्था** = कर्मफललाई बताउने प्रकार हो
**यत्** = जसलाई
**धीः** = कर्मको फल सत्य हो भनी शब्दहरूद्वारा मनुष्यको बुद्धि

**अपार्थैः**= निरर्थक
**नामभिः**= नामहरूद्वारा
**ध्यायति** = तत्तत् फलको इच्छा गर्न लाग्दछ
**मायामये** = मायामय स्वर्गादिको बाटोमा (सुख छ भन्ने)
**वासनया** = वासनाद्वारा
**शयानः** = सुतेर स्वप्न देखेझैं
**परिभ्रमन्** = भ्रमण गर्दै
**तत्र** = त्यहाँ
**हि** = निश्चय नै
**अर्थान्**= कर्मद्वारा प्राप्त हुने ती लोकहरू नाशवान् हुने हुनाले निरतिशय सुख
**न विन्दते** = प्राप्त गर्दैन

**वाक्यार्थ—** वेदहरूको वर्णन शैलीद्वारा मनुष्यहरूको बुद्धि स्वर्ग आदि निरर्थक नामहरूको चक्करमा फस्दछ। जीव त्यही सुखको वासनाले स्वप्न देखेझैं भट्कन लाग्दछ, परन्तु ती मायामयलोकमा कहीं पनि उसलाई वास्तविक सुखको प्राप्ति हुन सक्दैन।

**अतः कविर्नामसु यावदर्थः**
**स्यादप्रमत्तो व्यवसायबुद्धिः।**
**सिद्धेऽन्यथार्थे न यतेत तत्र**
**परिश्रमं तत्र समीक्षमाणः॥ ३॥**

पदार्थ—
**अतः** = स्वर्गादिमा नित्य सुख प्राप्त नहुने हुनाले
**नामसु** = नाममात्रका भोग्यवस्तुहरूमा
**यावदर्थः स्यात्** = जति वस्तुहरूको सङ्ग्रह गर्दा देह निर्वाह हुन्छ
**अप्रमत्तः** = त्यतिमात्रमा आसक्त भएर
**व्यवसायबुद्धिः** = निश्चयात्मक बुद्धि भएको
**कविः** = बुद्धिमान् साधक
**अन्यथा** = प्रयास नगरिकन
**अर्थे** = देह निर्वाह आदि प्रयोजन
**सिद्धे** = सिद्ध हुन्छ भने
**तत्र** = त्यो यत्नमा
**परिश्रमं** = परिश्रमरूप फल
**समीक्षमाणः** = विचार गरेर (त्यो भन्दा धेरै लाभको लागि)
**न यतेत** = प्रयास नगरोस्

**वाक्यार्थ—** स्वर्गादिमा नित्य सुख प्राप्त नहुने हुनाले विद्वान् पुरुषले संसारका पदार्थहरूसँग त्यति नै सम्बन्ध राख्नुपर्दछ जसद्वारा उसको व्यवहार चल्न सकोस्। संसारका पदार्थहरू सारहीन छन् भन्ने कुरा सधैं मनमा राखिरहनु पर्दछ। जीवननिर्वाहका लागि आवश्यक हुनेभन्दा बढी प्राप्त गर्नका लागि प्रयास गर्नुहुँदैन।

**सत्यां क्षितौ किं कशिपोः प्रयासै-**
**र्बाहौ स्वसिद्धे ह्युपबर्हणैः किम्।**
**सत्यञ्जलौ किं पुरुधान्नपात्र्या**

## दिग्वल्कलादौ सति किं दुकूलैः ॥ ४ ॥

**पदार्थ—**

**क्षितौ** = पृथिवी
**सत्यां** = हुँदाहुँदै
**कशिपोः**= शय्याको
**प्रयासैः**= प्रयास
**किं** = किन गर्ने
**बाहौ**= दुईओटा हात
**स्वसिद्धे सति** = जब परमात्माको कृपाद्वारा आफूलाई स्वतः प्राप्त छन् भने
**हि** = निश्चय नै
**उपबर्हणैः किम्** = फेरि तकियाको के आवश्यकता
**सत्यञ्जलौ** = अञ्जलिबाट काम चल्न सक्दछ भने
**पुरुधान्नपात्र्या** = विभिन्न प्रकारका धेरै भाँडाहरू सङ्ग्रह गर्ने
**किं** = के आवश्यकता
**दिग्वल्कलादौ** = नाङ्गै रहेर अथवा वृक्षहरूको बोक्राको कपडा लगाएर पनि आफ्नो व्यवहार चल्न सक्दछ भने
**दुकूलैः** = फेरि आफ्नो शरीरलाई ढाक्नका लागि वस्त्रहरूको
**किं** = के आवश्यकता ?

**वाक्यार्थ—** यदि संसारका पदार्थहरू प्रारब्धवश विना परिश्रम नै प्राप्त हुन्छन् भने ती पदार्थहरूलाई प्राप्त गर्नका लागि प्रयास गर्नु उचित होइन। जब भुइँमा सुतेर नै काम चल्दछ भने शय्याका लागि प्रयास गर्नु आवश्यक छैन। जब भगवान्‌का कृपाले हामीलाई हातहरू मिलेका छन् भने तकियाको के आवश्यकता ? जब अञ्जलिद्वारा काम चल्न सक्छ भने धेरै भाँडाहरूको सङ्ग्रह किन गर्ने ? रुखहरूको बोक्रा लगाएर अथवा नाङ्गो रहेर काम चल्दछ भने वस्त्रहरूको के आवश्यकता ?

## चीराणि किं पथि न सन्ति दिशन्ति भिक्षां
## नैवाङ्घ्रिपाः परभृतः सरितोऽप्यशुष्यन्।
## रुद्धा गुहाः किमजितोऽवति नोपसन्नान्
## कस्माद् भजन्ति कवयो धनदुर्मदान्धान्॥ ५॥

**पदार्थ—**

**पथि** = बाटोमा
**चीराणि** = पुराना कपडाहरू
**किं** = के
**न सन्ति** = छैनन् र ? (भोक लागेको समयमा)
**परभृतः** = अर्काको उपकार गर्ने
**अङ्घ्रिपाः** = वृक्षहरू
**किं**= के
**भिक्षां** = भिक्षा
**न दिशन्ति** = दिंदैनन् र ? (जल चाहने मनुष्यहरूका लागि)
**सरितः** = नदीहरू
**अशुष्यन्** = विलकुल सुकेका छन् र ? (साधकहरूलाई बस्नका लागि)
**किं** = के
**गुहाः** = पहाडका गुफाहरू
**रुद्धाः** = बन्द गरिएका छन् र ? (यी उपर्युक्त वस्तुहरूमध्ये अरू केही नभए तापनि)
**अजितः** = भगवान् नारायणले
**उपसन्नान्** = आफ्ना शरणमा आएका भक्तहरूलाई
**किम्** = के

**न अवति** = रक्षा गर्नुहुन्न र ? (यस्तो परिस्थिति हुँदा हुँदै पनि)
**कवयः** = बुद्धिमान् मनुष्यहरू
**धनदुर्मदान्धान्** = धनको मदले चूर भएका धनीहरूको
**एव** = नै
**कस्माद्** = फेरि किन
**भजन्ति** = चाकरी गर्दछन् ?

**वाक्यार्थ—** लगाउनका लागि बाटामा मिल्काइएका पुराना कपडाहरू छैनन् र ? भोक लागेमा अर्काका लागि शरीर धारण गर्ने वृक्षहरूले के फलफूलको भिक्षा दिदैनन् र ? तिर्खा लागेको समयमा पानी चाहियो भने नदीहरू के बिल्कुल सुकेका छन् र ? बस्नका लागि पहाडका गुफाहरू के बन्द गरिएका छन् र ? अरू केही नभए पनि भगवान्ले आफ्ना शरणागतको रक्षा गर्नुहुन्न र ? यस्तो परिस्थितिमा बुद्धिमान् मनुष्यहरू धनको नशाले घमण्डी धनीहरूको चाकडीचाप्लुसी किन गर्दछन् ?

**एवं स्वचित्ते स्वत एव सिद्ध**
**आत्मा प्रियोऽर्थो भगवाननन्तः ।**
**तं निर्वृतो नियतार्थो भजेत**
**संसारहेतूपरमश्च यत्र ॥ ६ ॥**

पदार्थ—

**एवं** = साधक यसप्रकार विरक्त भएपछि
**स्वचित्ते** = आफ्नो चित्तमा
**स्वतः एव** = स्वतः नै
**सिद्धः** = सिद्ध
**आत्मा** = आत्मस्वरूप
**प्रियः** = प्रिय
**अर्थः** = सत्य
**भगवान्** = भगवान्
**अनन्तः** = देश, काल र वस्तुद्वारा अपरिच्छिन्न रूपले रहनुभएको छ
**यत्र** = जुन हेतुभूत अविद्याको सधैं निवृत्ति छ
**तं** = त्यस्ता भगवान्लाई
**निर्वृतः** = भजनानन्दमा निमग्न भएर
**च** = र
**नियतार्थः** = भगवद्रूपी अर्थमा निश्चित भएर
**भजेत** = भजन गरोस् (यसबाट)
**संसारहेतूपरमः** = जन्म र मृत्युको कारण भएको अज्ञानको नाश हुन्छ

**वाक्यार्थ—** यसप्रकार विरक्त भएको खण्डमा आफ्नो हृदयमा नित्य विराजमान स्वतःसिद्ध आत्मस्वरूप परमप्रियतम परमसत्य जो अनन्त भगवान् हुनुहुन्छ, प्रेम र आनन्दले दृढ निश्चय गरेर उहाँकै भजन गर्नुपर्दछ। उहाँको भजन गर्नाले जन्म र मृत्युको कारण भएको अज्ञानको नाश हुन्छ।

**कस्तां त्वनादृत्य परानुचिन्ता-**
**मृते पशूनसतीं नाम युञ्ज्यात् ।**
**पश्यञ्जनं पतितं वैतरण्यां**

**स्वकर्मजान् परितापाञ्जुषाणम् ॥ ७ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **वैतरण्यां** =वैतरणीजस्तो संसारमा | **जनं** = मनुष्यलाई | **परानुचिन्ताम्**=भगवत चिन्तनलाई |
| **पतितं** = खसेको र (त्यहाँ) | **पश्यन्** = देखेर | **अनादृत्य** = छोडेर |
| **स्वकर्मजान्** =आफ्ना कर्मबाट उत्पन्न भएका | **पशून्** = पशुहरूलाई | **असतीं** = विषयचिन्तन |
| **परितापान्** = कष्टहरूलाई | **ऋते** = छाडेर | **युञ्ज्यात्** = गर्ला |
| **जुषाणम्** = भोग गरिरहेको | **कः नाम** = कुन मनुष्य | |
| | **तां** = त्यो | |

**वाक्यार्थ–** पशुहरूको कुरा भिन्नै हो, परन्तु मनुष्यहरूमा त्यस्तो कुन मनुष्य होला, जो संसारका प्राणीहरूलाई यो संसाररूप वैतरणी नदीमा परेर आफ्नो कर्मजन्य दुःखलाई भोगिरहेको देख्दादेख्दै पनि भगवान्को मङ्गलमय चिन्तनलाई छाडेर कसले विषयचिन्तन गर्ला ?

**केचित् स्वदेहान्तर्हृदयावकाशे**
**प्रादेशमात्रं पुरुषं वसन्तम् ।**
**चतुर्भुजं कञ्जरथाङ्गशङ्ख-**
**गदाधरं धारणया स्मरन्ति ॥ ८ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **केचित्** = कुनै साधकहरू | **वसन्तम्** = अवस्थित हुनुभएका | **धारणया** = स्थिर अन्तःकरणद्वारा |
| **स्वदेहान्तर्हृदयावकाशे** = आफ्नो शरीरभित्रको हृदयरूपी आकाशमा | **चतुर्भुजं** = चतुर्बाहु भएका | **स्मरन्ति** = ध्यान गर्दछन् |
| **प्रादेशमात्रं** = प्रादेश परिमाणमा | **कञ्जरथाङ्गशङ्खगदाधरं** = पद्म, चक्र, शङ्ख र गदा धारण गर्नुहुने | |
| | **पुरुषं** = भगवान्लाई | |

**वाक्यार्थ–** कोहीकोही साधक आफ्नो शरीरभित्र हृदयाकाशमा विराजमान भगवान्को प्रादेशमात्र स्वरूपको धारणा गर्दछन्। उनीहरू चार हातमा पद्म, चक्र, शङ्ख र गदा धारण गर्नुभएका भगवान्को स्थिर अन्तःकरणद्वारा ध्यान गर्दछन्।

**प्रसन्नवक्त्रं नलिनायतेक्षणं**
**कदम्बकिञ्जल्कपिशङ्गवाससम् ।**
**लसन्महारत्नहिरण्मयाङ्गदं**
**स्फुरन्महारत्नकिरीटकुण्डलम् ॥ ९ ॥**

**उन्निद्रहृत्पङ्कजकर्णिकालये**
**योगेश्वरास्थापितपादपल्लवम् ।**
**श्रीलक्षणं कौस्तुभरत्नकन्धर-**
**मम्लानलक्ष्म्या वनमालयाऽऽचितम् ॥ १० ॥**
**विभूषितं मेखलयाङ्गुलीयकै-**
**र्महाधनैर्नूपुरकङ्कणादिभिः ।**
**स्निग्धामलाकुञ्चितनीलकुन्तलै-**
**र्विरोचमानाननहासपेशलम् ॥ ११ ॥**
**अदीनलीलाहसितेक्षणोल्लसद्-**
**भ्रूभङ्गसंसूचितभूर्यनुग्रहम् ।**
**ईक्षेत चिन्तामयमेनमीश्वरं**
**यावन्मनो धारणयावतिष्ठते ॥ १२ ॥**

**पदार्थ—**

**प्रसन्नवक्त्रं** = हँसिलो अनुहार हुनुभएका
**नलिनायतेक्षणं** = कमलजस्तो सुन्दर र विशाल नेत्र हुनुभएका
**कदम्बकिञ्जल्कपिशङ्गवाससम्** = कदम फूलको केशरजस्तो पहँलो वस्त्र धारण गर्नुहुने
**लसन्महारत्नहिरण्मयाङ्गदं** = रत्नजडित सुनका बालाहरूले सुशोभित
**स्फुरन्महारत्नकिरीटकुण्डलम्** = रत्नहरूले जगमगाइरहेको मुकुट र कुण्डल लगाउनुहुने
**उन्निद्रहृत्पङ्कजकर्णिकालये** = आफ्नो फक्रेको हृदयकमलको मध्यभागमा
**योगेश्वरास्थापितपादपल्लवम्** = योगेश्वरहरूले आफ्नो हृदयमा धारण गरेका चरणकमलवाला
**श्रीलक्षणं** = श्रीवत्सचिह्नयुक्त
**कौस्तुभरत्नकन्धरम्** = गलामा कौस्तुभमणिले सुशोभित
**अम्लानलक्ष्म्या** = कहिल्यै न ओइलाउने
**वनमालया** = सुगन्धित पुष्पहरूको दिव्यमालाद्वारा
**आचितम्** = ढाकिएका
**महाधनैः** = बहुमूल्य
**नूपुरकङ्कणादिभिः** = हात र गोडाका विभिन्न आभूषणहरूद्वारा
**मेखलयाङ्गुलीयकैः** = कमरबन्ध मेखलाद्वारा र औँठीहरूद्वारा पनि
**विभूषितं** = शोभित हुनुभएका (यसै गरी)
**स्निग्धामलाकुञ्चितनीलकुन्तलैः** = चिल्ला सफा र घुङ्ग्रिएका केशहरूद्वारा
**विरोचमानाननहासपेशलम्** = मन्दस्मित अनुहारको शोभालाई बढाइरहनुभएका (भगवान्को स्मरण गर्दछन्)

**अदीनलीलाहसितेक्षणोल्लसद्भ्रूभङ्गसंसूचितभूर्यनुग्रहम्** = उन्मुक्त लीलामय हाँसो अनि मधुर अवलोकनले सम्मिलित भ्रूभङ्गहरूद्वारा भक्तहरूमाथि अनन्त अनुग्रहको वर्षा गर्ने
**चिन्तामयम्** = भावनाद्वारा नै ग्रहण गरिने
**एनम्** = यस्ता
**ईश्वरं** = कृपालु परमात्मालाई
**ईक्षेत** = देख्ने कोसिस गरिरहनुपर्दछ
**यावत्** = जबसम्म
**धारणया** = पूर्वोक्त भगवत्स्वरूप धारणाद्वारा
**मनः** = भक्तहरूको मन
**अवतिष्ठते** = स्थिर हुँदैन

**वाक्यार्थ—** उहाँको मुखमा प्रसन्नता झल्किरहेको छ। कमलझैं विशाल र कोमल नेत्रहरू छन्। उहाँले कदम फूलको केशरजस्तो पहेँलो वस्त्र धारण गर्नुभएको छ। भुजाहरूमा श्रेष्ठ रत्न जडिएका सुनका बालाहरू शोभायमान छन्। शिरमा सुन्दर मुकुट र कानमा कुण्डलहरू छन्, जसमा जडिएका बहुमूल्य रत्नहरू जगमगाइरहेका छन्। उहाँका चरणकमलहरू योगेश्वरहरूको हृदयकमलमा विराजमान छन्। उहाँको हृदयमा श्रीवत्सको चिह्न छ। घाँटीमा कौस्तुभमणि छ। वक्षस्थल कहिल्यै पनि न ओइलाउने वनमाला सुशोभित छ। उहाँले कमरमा मेखला, हातका औँलाहरूमा बहुमूल्य औंठीहरू, पाउमा पाउजेब, हातमा बाला आदि आभूषणहरूलाई धारण गर्नुभएको छ। चिल्ला, सफा र घुँङ्ग्रिएका काला केशहरूद्वारा मन्दस्मित अनुहारको शोभालाई झन् बढाइरहनुभएको भगवान्‌को स्मरण गर्नुपर्छ। लीलापूर्ण उन्मुक्त हास्य र शोभायमान आँखिभौँद्वारा वर्षा गर्ने भगवान्‌को धारणाद्वारा मन स्थिर नभएसम्म बारम्बार चिन्तन गरिरहनुपर्दछ।

**एकैकशोऽङ्गानि धियानुभावयेत्**
**पादादि यावद्धसितं गदाभृतः।**
**जितं जितं स्थानमपोह्य धारयेत्**
**परं परं शुद्ध्यति धीर्यथा यथा॥ १३॥**

**पदार्थ—**

**गदाभृतः** = गदाधारी भगवान्‌को
**पादादि** = चरणकमलदेखि
**यावद्धसितं** = मुस्कानयुक्त मुखमण्डलसम्म
**अङ्गानि** = प्रत्येक अङ्गहरू
**एकैकशः** = एकएक गरेर
**धिया अनुभावयेत्** = चित्तवृत्तिद्वारा चिन्तन गरोस्
**जितं जितं** = अयत्नले नै स्फुरित हुन थालेको
**स्थानम्** = अङ्गलाई
**अपोह्य** = नाघ्दै
**धारयेत्** = अन्य अङ्गहरूको ध्यान गर्नुपर्दछ
**यथा यथा** = जसरी जसरी
**धीः** = बुद्धि
**परं परं** = झन् झन्
**शुद्ध्यति** = निश्चल भएर भगवान्‌मा लाग्दछ

**वाक्यार्थ–** भगवान्‌को चरणकमलदेखि लिएर मन्दहास्ययुक्त मुखकमलपर्यन्त समस्त अङ्गहरूको एक एक गरेर चित्तवृत्तिद्वारा चिन्तन गर्नुपर्दछ। यस क्रममा जतिजति बुद्धि शुद्ध हुँदै जान्छ त्यतित्यति चित्त स्थिर हुँदैजान्छ।

**यावन्न जायेत परावरेऽस्मिन्**
**विश्वेश्वरे द्रष्टरि भक्तियोगः।**
**तावत् स्थवीयः पुरुषस्य रूपं**
**क्रियावसाने प्रयतः स्मरेत ॥ १४ ॥**

**पदार्थ–**

**यावत्** = जबसम्म
**परावरे** = सगुण र निर्गुणस्वरूप भएका
**विश्वेश्वरे** = जगत्‌का स्वामी
**द्रष्टरि** = द्रष्टास्वरूप
**अस्मिन्** = यी सर्वात्मा भगवान्‌मा
**भक्तियोगः** = निष्काम भक्ति
**न जायेत** = हुँदैन
**तावत्** = त्यो समयसम्म
**पुरुषस्य** = विराट्‌पुरुषको
**स्थवीयः** = पूर्वोक्त स्थूलतम अनि विश्वात्मक
**रूपं** = रूपलाई
**क्रियावसाने** = नित्य नैमित्त कर्मको अन्त्यमा
**प्रयतः** = एकाग्रचित्तपूर्वक
**स्मरेत** = स्मरण गरोस्

**वाक्यार्थ–** जबसम्म सगुण र निर्गुण दुबै किसिमका स्वरूप भएका जगत्‌का स्वामी द्रष्टास्वरूप सर्वात्मा भगवान्‌मा निष्काम भक्तियोग हुँदैन तबसम्म साधकले नित्य र नैमित्तिक कर्म गरिसकेपछि एकाग्रतापूर्वक भगवान्‌को पूर्वोक्त स्थूलतम एवं विश्वात्मक रूपको स्मरण गर्नुपर्दछ।

**स्थिरं सुखं चासनमास्थितो यति-**
**र्यदा जिहासुरिममङ्ग लोकम्।**
**काले च देशे च मनो न सज्जयेत्**
**प्राणान् नियच्छेन्मनसा जितासुः ॥ १५ ॥**

**पदार्थ–**

**अङ्ग** = हे प्रिय परीक्षित् !
**यतिः** = योगी पुरुष
**यदा** = जतिखेर
**इमम्** = यो रागद्वेषमय
**लोकम्** =मनुष्यलोकलाई
**जिहासुः** = छोड्न चाहला त्यस समयमा
**काले च** = काल र
**देशे च** = देशमा पनि
**मनः** = अन्तःकरणलाई
**न सज्जयेत्** = आसक्त नबनाओस्
**स्थिरं** = स्थिर भएर
**सुखं** = सुखपूर्वक बस्न सकिने
**आसनम्** = आसनलाई
**आस्थितः** = आश्रय बनाएर

| | |
|---|---|
| **जितासुः** = प्राण विजयपूर्वक | **प्राणान्** = इन्द्रियहरूलाई |
| **मनसा** = मनद्वारा | **नियच्छेत्** = संयमित गरोस् |

**वाक्यार्थ—** हे प्रिय परीक्षित् ! जब योगी पुरुष यो मनुष्यलोकलाई छोड्न चाहन्छ, तब देश र कालमा मनलाई आसक्त नगरोस्। सुखपूर्वक स्थिर आसनमा बसेर प्राणलाई जितेर मनद्वारा इन्द्रियहरूको संयम गर्नुपर्दछ।

**मनः स्वबुद्ध्यामलया नियम्य**
**क्षेत्रज्ञ एतां निनयेत्तमात्मनि।**
**आत्मानमात्मन्यवरुध्य धीरो**
**लब्धोपशान्तिर्विरमेत कृत्यात्॥ १६॥**

पदार्थ—

| | | |
|---|---|---|
| **अमलया** = निर्मल भएको | **तम्** = द्रष्टालाई पनि | **लब्धोपशान्तिः** = राग र द्वेषको खेलबाट शान्तिप्राप्त गरेको |
| **स्वबुद्ध्या** = आफ्नो बुद्धिद्वारा | **आत्मनि** = आत्मामा (लीन गराओस् त्यसै गरी) | **धीरः** = संयमी मनुष्य |
| **मनः** = चञ्चल मनलाई | **आत्मानम्** = आत्मालाई पनि | **कृत्यात्** = सबैथरि कामहरूबाट |
| **नियम्य** = नियन्त्रण गरेर | **आत्मनि** = निरुपाधिक पूर्ण ब्रह्मचेतनमा | **विरमेत** = निवृत्त गरोस् |
| **एतां** = मनसहित बुद्धिलाई | **अवरुध्य** = विलीन गरेर | |
| **क्षेत्रज्ञे** = बुद्धि आदि द्रष्टामा | | |
| **निनयेत्** = लीन गराओस् | | |

**वाक्यार्थ—** त्यसपछि आफ्नो निर्मल बुद्धिद्वारा मनलाई नियन्त्रण गरेर मन सहित बुद्धिलाई क्षेत्रज्ञमा लीन गरोस्। फेरि अन्तरात्मालाई परमात्मामा लीन गरेर धीर पुरुष परमशान्तिमय अवस्थामा स्थित होस्। त्यसपछि सम्पूर्ण कर्महरूबाट निवृत्त होस्।

**न यत्र कालोऽनिमिषां परः प्रभुः**
**कुतो नु देवा जगतां य ईशिरे।**
**न यत्र सत्त्वं न रजस्तमश्च**
**न वै विकारो न महान् प्रधानम्॥ १७॥**

पदार्थ—

| | | |
|---|---|---|
| **यत्र** = जुन स्थितिमा | **न प्रभुः** = सफल हुँदैन (त्यहाँ) | **ईशिरे** = स्वामी बनेका छन् तिनीहरूको प्रभाव |
| **अनिमिषां** = देवताहरूको | **ये** = जुन | **कुतः नु** = कहाँबाट हुन सक्छ र ? (किनभने) |
| **परः** = नियामक | **देवाः** =देवताहरू | |
| **कालः** = काल | **जगतां** = प्राणीहरूको | |

**यत्र** = यस अवस्थामा
**न सत्त्वं** = सत्त्वगुण छैन
**रजस्तमः च न** = रजोगुण र तमोगुण पनि छैन
**वै** = अनि
**न विकारः** = अहङ्कार छैन
**महान्** = महत्तत्त्व र
**प्रधानम्** = प्रधान प्रकृति पनि
**न** = छैन

**वाक्यार्थ–** यस अवस्थामा जब सत्त्वगुण पनि हुँदैन भने रजोगुण र तमोगुण हुने त प्रसङ्ग नै उठ्दैन। अहङ्कार, महत्तत्त्व र प्रकृतिको पनि उहाँ अस्तित्व छैन, त्यस परिस्थितिमा देवताहरूको नियामक काल पनि त्यहाँ हुँदैन भने देवता र उनीहरूको अधीनमा रहने प्राणीहरू त्यहाँ कसरी हुने ?

**परं पदं वैष्णवमामनन्ति तद्**
**यन्नेति नेतीत्यतदुत्सिसृक्षवः।**
**विसृज्य दौरात्म्यमनन्यसौहृदा**
**हृदोपगुह्यार्हपदं पदे पदे ॥ १८ ॥**

**पदार्थ–**

**यत्** = यो
**न इति** = होइन
**न इति** = होइन भन्दै
**उत्सिसृक्षवः** = परमात्मादेखि भिन्न पदार्थहरूको त्याग गर्न चाहने योगीहरू
**दौरात्म्यम्** =पदार्थहरूमा आत्मबुद्धिलाई
**विसृज्य** = त्याग गरेर
**अर्हपदं** = भगवान् विष्णुको पदलाई
**पदे पदे** = प्रतिक्षण
**अनन्यसौहृदा** = अनन्य प्रेमपूर्ण
**हृदा** = हृदयद्वारा
**परं** = परमपूज्य
**पदं** = स्वरूपलाई
**उपगुह्य** = आलिङ्गन गररे
**तद्**= त्यसलाई
**वैष्णवम्**= विष्णुको पद हो भनेर
**आमनन्ति** = मान्दछन्

**वाक्यार्थ–** योगीहरू यो होइन, यो होइन भन्दै परमात्मादेखि भिन्न पदार्थहरूको त्याग गर्न चाहन्छन्। शरीर र शरीरसम्बन्धी पदार्थहरूमा आत्मबुद्धिको त्याग गरेर हृदयद्वारा प्रतिक्षण भगवान्‌को परमपूज्य स्वरूपलाई आलिङ्गन गर्दै अनन्यप्रेमले परिपूर्ण रहन्छन्। त्यही नै भगवान् विष्णुको परमपद हो। यस विषयमा सम्पूर्ण शास्त्रहरूको सम्मति छ।

**इत्थं मुनिस्तूपरमेद् व्यवस्थितो**
**विज्ञानदृग्वीर्यसुरन्धिताशयः।**
**स्वपार्ष्णिनाऽऽपीड्य गुदं ततोऽनिलं**
**स्थानेषु षट्सून्नमयेज्जितक्लमः॥ १९॥**

पदार्थ–

**इत्थं** = यसरी
**व्यवस्थितः** = ब्रह्ममा अवस्थित रहेको
**विज्ञानदृग्वीर्यसुरन्धिताशयः** = शास्त्रजन्य अपरोक्षज्ञानको बलले हृदयका समस्त जन्मजन्मान्तरीय वासनाहरू नष्ट भएको
**मुनिः** = पुरुषले
**उपरमेद्** = संसारलाई छोडोस्
**स्वपार्ष्णिना** = आफ्ना कुर्कुच्चाद्वारा
**गुदं** = मूलाधारलाई
**आपीड्य** = दबाएर
**जितक्लमः** = निर्भय भई
**ततः** = मूलाधारबाट
**अनिलं** = सूक्ष्मतम प्राणलाई
**षट्सु स्थानेषु** = स्वाधिष्ठान आदि षट् चक्रहरूमा
**उन्नमयेत्** =ऊर्ध्वगामी बनाओस्

**वाक्यार्थ–** ज्ञानदृष्टिका बलले जसको चित्तको वासना नष्ट भएका ती ब्रह्मनिष्ठ योगीले यसप्रकार संसारको परित्याग गर्नुपर्दछ। आफ्ना कुर्कुच्चाद्वारा मूलाधारलाई दबाएर निर्भय भएर प्राणवायुलाई स्वाधिष्ठान आदि षट् चक्रहरूमा ऊर्ध्वगामी बनाउनुपर्छ।

**नाभ्यां स्थितं हृद्यधिरोप्य तस्माद्**
**उदानगत्योरसि तं नयेन्मुनिः।**
**ततोऽनुसन्धाय धिया मनस्वी**
**स्वतालुमूलं शनकैर्नयेत॥ २०॥**

पदार्थ–

**नाभ्यां** = नाभिचक्रमा
**स्थितं** = रहेको प्राणवायुलाई
**हृदि** = हृदयस्थ अनाहत चक्रमा
**अधिरोप्य** = पुऱ्याएर
**मुनिः** = मुनिले
**तं** = त्यो प्राणवायुलाई
**उदानगत्या** =उदानवायुद्वारा
**उरसि** = वक्षस्थलभन्दा माथिको विशुद्ध चक्रमा
**नयेत्** = पुऱ्याओस्
**ततः** = त्यसपछि
**मनस्वी** = बुद्धिमान् मनुष्यले
**धिया** = एकाग्रताद्वारा
**अनुसन्धाय** = सूक्ष्म प्राणवायुलाई सम्हालेर
**शनकैः**= बिस्तारै
**तस्माद्** = त्यसभन्दा माथि
**स्वतालुमूलं** = तालुमूलमा वा विशुद्ध चक्रको अग्रभागमा
**नयेत** = लैजाओस्

**वाक्यार्थ–**मनस्वी योगीले नाभिचक्रमा रहेको प्राणवायुलाई हृदयस्थ अनाहत चक्र र त्यहाँबाट उदानवायुद्वारा वक्षस्थलभन्दा माथि विशुद्ध चक्रमा, फेरि त्यस वायुलाई बिस्तारै बिस्तारै तालमूलमा अर्थात् विशुद्ध चक्रको अग्रभागमा चढाउनुपर्दछ।

**तस्माद् भ्रुवोरन्तरमुन्नयेत**
**निरुद्धसप्तायतनोऽनपेक्षः।**

**स्थित्वा मुहूर्तार्धमकुण्ठदृष्टि-**
**र्निर्भिद्य मूर्धन्विसृजेत्परं गतः ॥ २१ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **तस्माद्** = विशुद्ध चक्रबाट पनि **निरुद्धसप्तायतनः** = मुख आदि सात छिद्रहरूलाई रोकेर **भ्रुवोः अन्तरम्** = भ्रूमध्य आज्ञाचक्रमा **उन्नयेत** = उठाओस् | **अनपेक्षः** = लोकान्तरको अपेक्षा नगर्ने योगीले **मुहूर्तार्धम्** = आधा मुहूर्तसम्म **स्थित्वा** = त्यहीँ राखेर **अकुण्ठदृष्टिः** = स्थिर लक्ष्य बनाएर | **मूर्धन्** = सहस्रारको **निर्भिद्य** = भेदन गरेर **परं** = परमात्मामा **गतः** = स्थित हुँदै **विसृजेत्** = देहत्याग गरोस् |

**वाक्यार्थ–** त्यसपछि दुईओटा आँखा, दुईओटा कान, दुईओटा नाकका प्वालहरू र मुख यी सात छिद्रहरूलाई रोकेर विशुद्ध चक्रको आँखिभौँको बीच आज्ञाचक्रमा लैजानुपर्दछ। यदि कुनै लोकमा जाने इच्छा भएन भने आधाघडीसम्म त्यस वायुलाई त्यहीँ रोकेर स्थिर लक्ष्यका साथ सहस्रारमा लगेर परमात्मामा स्थित होओस्। यसपछि ब्रह्मरन्ध्रको भेदन गरेर देहत्याग गरोस्।

**यदि प्रयास्यन् नृप पारमेष्ठ्यं**
**वैहायसानामुत यद्विहारम्।**
**अष्टाधिपत्यं गुणसन्निवाये**
**सहैव गच्छेन्मनसेन्द्रियैश्च ॥ २२ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **नृप** = हे राजा **यदि** = ब्रह्मलोकादि लोकान्तर गमनको इच्छा भएको पक्षमा **पारमेष्ठ्यं** = ब्रह्मलोकमा **उत** = अथवा **गुणसन्निवाये** = त्रिगुणयुक्त ब्रह्माण्डका कुनै पनि ठाउँमा | **अष्टाधिपत्यं** = अष्टसिद्धिहरूको अधिपति भई **वैहायसानाम्** = आकाशगामी सिद्धहरूको **यत्** = जुन **विहारम्** = क्रीडास्थल छ (त्यहाँ) | **प्रयास्यत्** = जान इच्छा गर्ने हो भने **मनसा** = मनले र **इन्द्रियैः च** = इन्द्रियहरूले पनि **सह एव** = सहित भएर **गच्छेत्** = निस्कियोस् |

**वाक्यार्थ–** राजा ! यदि योगीलाई ब्रह्मलोकमा गएर आठ सिद्धिलाई प्राप्त गरेर आकाशचारी सिद्धहरूका साथ विहार गर्ने अथवा ब्रह्माण्डको कुनै पनि प्रदेशमा विचरण गर्ने इच्छा भयो भने उसले आफ्नो मन र इन्द्रियहरूलाई साथमैं लिएर शरीरबाट निक्लनुपर्दछ।

**योगेश्वराणां गतिमाहुरन्त-**

**र्बहिस्त्रिलोक्याः पवनान्तरात्मनाम्।**

**न कर्मभिस्तां गतिमाप्नुवन्ति**

**विद्यातपोयोगसमाधिभाजाम्॥ २३॥**

पदार्थ–

**विद्यातपोयोगसमाधिभाजाम्** = विद्या, तपस्या, अष्टाङ्गयोग र समाधिको सेवन गर्ने
**पवनान्तरात्मनाम्** = वायुझैं सूक्ष्म लिङ्ग शरीरवाला
**योगेश्वराणां** = योगीहरूको
**त्रिलोक्याः** = तीनै लोकभरि
**अन्तर्बहिः** = बाहिर र भित्र पनि
**गतिम्** = स्वच्छन्द विचरणको अधिकार छ भनेर
**आहुः** = भन्दछन्
**तां गतिम्** = स्वच्छन्दविचरणको गतिलाई
**कर्मभिः** = परिच्छिन्न फल भएका कर्महरूद्वारा
**न आप्नुवन्ति** = प्राप्त गर्न सकिँदैन

**वाक्यार्थ–** विद्या, तपस्या, अष्टाङ्गयोग र समाधिको सेवन गर्ने योगीहरूलाई तीनै लोकहरूको बाहिर र भित्र स्वच्छन्दरूपले विचरण गर्ने अधिकार हुन्छ। केवल कर्मको बलले यसप्रकार विचरण गर्ने अधिकार प्राप्त हुँदैन।

**वैश्वानरं याति विहायसा गतः**

**सुषुम्णया ब्रह्मपथेन शोचिषा।**

**विधूतकल्कोऽथ हरेरुदस्तात्**

**प्रयाति चक्रं नृप शैशुमारम्॥ २४॥**

पदार्थ–

**नृप** = हे राजा
**शोचिषा** = ज्योतिर्मय
**सुषुम्णया** = सुषुम्णाद्वारा
**ब्रह्मपथेन** = ब्रह्मलोकको लागि प्रस्थान गर्दछ (त्यस वेला)
**विहायसा** = आकाशमार्गद्वारा
**गतः** = गएको
**वैश्वानरं** = अग्निका अभिमानी देवतालाई
**याति** = प्राप्त गर्दछ
**अथ** = त्यसपछि
**विधूतकल्कः** = मलहीन भएको योगी
**उदस्तात्** = त्यसभन्दा माथि रहेको
**हरेः** = भगवान् श्रीहरिको
**शैशुमारम्** = शिशुमार नामक
**चक्रं** = ज्योतिर्मय धाममा
**प्रयाति** = पुग्दछ

**वाक्यार्थ–** हे परीक्षित्! योगी ज्योतिर्मय मार्ग सुषुम्णाद्वारा जब ब्रह्मलोकको लागि प्रस्थान गर्दछ, तब ऊ पहिले आकाशमार्गद्वारा अग्निलोकमा जान्छ। त्यहाँ उसका अवशिष्ट पापहरू जलेर भस्म हुन्छन्। यसपछि ऊ त्यहाँभन्दा माथि भगवान् श्रीहरिको शिशुमार नामक ज्योतिर्मय धाममा जान्छ।

**तद्विश्वनाभिं त्वतिवर्त्य विष्णो-**
**रणीयसा विरजेनात्मनैकः।**
**नमस्कृतं ब्रह्मविदामुपैति**
**कल्पायुषो यद्विबुधा रमन्ते॥ २५॥**

**पदार्थ—**

**विष्णोः** = भगवान् विष्णुको र
**तद्विश्वनाभिं** = शिशुमार चक्ररूप ब्रह्माण्डको केन्द्रबिन्दुलाई
**अतिवर्त्य** = नाघेर
**अणीयसा** = सूक्ष्मातिसूक्ष्म
**विरजेन** = मल रहित
**आत्मना**= लिङ्ग शरीरले
**एकः** =आफैँमात्र (कर्मीहरूद्वारा अप्राप्य भएकाले)
**यद्** = जहाँ
**कल्पायुषः** = कल्पसम्म बाँच्ने
**विबुधाः** = भृगु आदि महर्षिहरू
**रमन्ते** = रमण गर्दछन् त्यस्तो
**ब्रह्मविदाम्** = ब्रह्मिष्ठहरूद्वारा पनि
**नमस्कृतं** = आदर गरिएको ब्रह्मलोक
**उपैति** = प्राप्त गर्दछ

**वाक्यार्थ—** यो शिशुमार चक्र विश्वब्रह्माण्डको केन्द्र हो। त्यसको अतिक्रमण गरेर अत्यन्त सूक्ष्म एवं निर्मल शरीरले ऊ एक्लै महर्लोकमा जान्छ। त्यो लोक ब्रह्मवेत्ताद्वारा पनि वन्दित लोक हो। त्यस लोकमा कल्पपर्यन्त जीवित देवताहरू विहार गर्दछन्।

**अथो अनन्तस्य मुखानलेन**
**दन्दह्यमानं स निरीक्ष्य विश्वम्।**
**निर्याति सिद्धेश्वरजुष्टधिष्ण्यं**
**यद् द्वैपरार्ध्यं तदु पारमेष्ठ्यम्॥ २६॥**

**पदार्थ—**

**अथः** = त्यसपछि
**सः** = त्यो योगी
**अनन्तस्य** = शेष भगवान्को
**मुखानलेन** = मुखबाट निस्केको अग्निबाट
**दन्दह्यमानं** = डढिरहेको
**विश्वम्** = विश्वलाई
**निरीक्ष्य** = देखेर
**यद्** = जुन स्थान
**सिद्धेश्वरजुष्टधिष्ण्यं** = सिद्धहरू बस्ने विमानहरूले शोभित भएको र
**द्वैपरार्ध्यं** = द्विपरार्धसम्म रहनेवाला र
**उ** = निश्चय नै
**तद्** = त्यो
**पारमेष्ठ्यम्** = ब्रह्मलोक
**निर्याति** = प्राप्त गर्दछ

**वाक्यार्थ—** फेरि जब प्रलयको समय आउँछ तब तलतिरका लोकहरूलाई शेषनागको मुखबाट निक्लेको आगाले भस्म हुन लागेको देखेर त्यो योगी अन्य लोकभन्दा श्रेष्ठ छ र ठुलाठुला सिद्धहरू निवास गर्ने ब्रह्मलोकमा प्रवेश गर्दछ। त्यो ब्रह्मलोकको आयु ब्रह्माजीको समान दुई परार्धको हुन्छ।

**न यत्र शोको न जरा न मृत्यु-**
**र्नार्तिर्न चोद्वेग ऋते कुतश्चित् ।**
**यच्चित्ततोऽदः कृपयानिदंविदां**
**दुरन्तदुःखप्रभवानुदर्शनात् ॥ २७ ॥**

**पदार्थ—**

**अनिदंविदां** = संसारमा रहेर पनि भगवद्भक्ति र ज्ञान वैराग्यको सेवन नगर्नेहरूमाथि
**दुरन्तदुःखप्रभवानुदर्शनात्** = दुःखमय जन्म र मृत्युको निरन्तर प्रभावलाई देखेर
**कृपया** = कृपापरवश भई
**यच्चित्** = जुन असह्य दुःख हुन्छ
**ततः** = त्यसभन्दा बाहिर
**अदः** = प्राणीहरूको जन्म र मृत्युलाई देखेर भएको यस दुःखलाई
**ऋते** = छोडेर
**कुतश्चित्** = अरू कुनै कुराबाट पनि
**यत्र** = जुन बाह्यलोकमा
**न शोकः** = न शोक छ
**न जरा** = न बुढ्याइँ छ
**न मृत्युः** = न मृत्यु नै छ
**नार्तिः** = न रोग छ
**न च उद्वेगः** = न उद्वेग नै छ

**वाक्यार्थ—** त्यस ब्रह्मलोकमा न शोक छ, न दुःख छ, न वृद्धावस्था छ, न मृत्यु छ। त्यहाँ यो एउटै दुःख छ कि त्यस परमपदलाई नजान्ने मानिसहरूको जन्ममृत्युमय अत्यन्त घोर सङ्कटलाई देखेर दयाको कारणले गर्दा ती ब्रह्मलोकनिवासीहरूको मनमा ठुलो कष्टको अनुभव हुन्छ।

**ततो विशेषं प्रतिपद्य निर्भय-**
**स्तेनात्मनापोऽनलमूर्तिरत्वरन् ।**
**ज्योतिर्मयो वायुमुपेत्य काले**
**वाय्वात्मना खं बृहदात्मलिङ्गम् ॥ २८ ॥**

**पदार्थ—**

**ततः** = ब्रह्मलोकबाट पनि ब्रह्माण्ड भेदन गरेर भगवत्पदमा प्राप्त हुन चाहनेले लिङ्गशरीरद्वारा
**विशेषं** = पृथिवीलाई
**प्रतिपद्य** = प्राप्त गरेर
**निर्भयः** = भयरहित भई
**अत्वरन्** = बिस्तारै
**तेन आत्मना** = पृथ्वीरूपताबाट
**अनलमूर्तिः** = क्रमशः जलमयता र तेजोमयतामा लीन हुँदै
**ज्योतिर्मयः** = ज्योतिर्मय अवस्थामा पुगेको योगी
**काले** = भोगको अवसानको समय भइसकेपछि
**वायुम्** = वायुरूपतालाई
**उपेत्य** = प्राप्त गरेर
**वाय्वात्मना** = वायुरूपताबाट
**बृहदात्मलिङ्गम्** = परब्रह्मको असीमितताको सूचक
**खं** = आकाशलाई प्राप्त गर्दछ

**वाक्यार्थ–** सत्यलोकमा पुगेपछि त्यो योगी निर्भय भएर आफ्नो सूक्ष्म शरीरलाई पृथिवीमा मिलाइदिन्छ। फेरि धैर्यपूर्वक सात आवरणहरूको भेदन गर्दछ। पृथिवीरूपबाट जल, जलबाट अग्निमय आवरणलाई प्राप्त गर्दै ज्योतिरूपले वायुरूप आवरणमा आउँछ। त्यहाँबाट केही समयपछि उसले ब्रह्मको अनन्तताको बोध गराउने आकाशरूप आवरणलाई प्राप्त गर्दछ।

**घ्राणेन गन्धं रसनेन वै रसं**
**रूपं च दृष्ट्या श्वसनं त्वचैव।**
**श्रोत्रेण चोपेत्य नभोगुणत्वं**
**प्राणेन चाकूतिमुपैति योगी ॥ २९॥**

पदार्थ–
**योगी** = इन्द्रियहरूलाई पनि तत्तत् सूक्ष्म अधिष्ठानमा विलीन गराउन चाहने योगीले
**घ्राणेन** = घ्राणेन्द्रियद्वारा
**गन्धं** = गन्धरूपतालाई
**रसनेन** = जिब्रोद्वारा
**वै** = निश्चय नै
**रसं** = रसतन्मात्रालाई
**दृष्ट्या** = चक्षुरिन्द्रियद्वारा
**रूपं** = रूपतन्मात्रालाई
**त्वचा** = स्पर्शेन्द्रियद्वारा
**श्वसनं** = वायुगत स्पर्शतन्मात्रालाई
**श्रोत्रेण च** = श्रोत्रेन्द्रियद्वारा पनि
**नभोगुणत्वं** = शब्दतन्मात्रालाई
**उपेत्य** = अतिक्रमण गरेर
**प्राणेन च** = कर्मेन्द्रियहरूद्वारा
**आकूतिम्** = तत्तत् क्रियाशक्तिमा लीन गराएर स्थूल-सूक्ष्म आवरणलाई
**उपैति** = पार गर्दछ

**वाक्यार्थ–** इन्द्रियहरूलाई पनि तत्तत् सूक्ष्म अधिष्ठानमा विलीन गराउन चाहने योगीले घ्राणेन्द्रियद्वारा गन्धरूप तन्मात्रालाई, रसनेन्द्रियद्वारा रसतन्मात्रालाई, चक्षुरिन्द्रियद्वारा वायुगत स्पर्शतन्मात्रालाई, श्रोत्रेन्द्रियद्वारा शब्दतन्मात्रालाई अतिक्रमण गरी कर्मेन्द्रियहरूद्वारा तत्तत् क्रियाशक्तिमा लीन गराएर स्थूल-सूक्ष्म आवरणलाई पार गर्दछ।

**स भूतसूक्ष्मेन्द्रियसन्निकर्षं**
**मनोमयं देवमयं विकार्यम्।**
**संसाद्य गत्या सह तेन याति**
**विज्ञानतत्त्वं गुणसन्निरोधम् ॥ ३०॥**

पदार्थ–
**सः** = योगी
**भूतसूक्ष्मेन्द्रियसन्निकर्षं** = सूक्ष्म भूतहरूको र इन्द्रियहरूको लयस्थान क्रमशः तामस र राजस अहङ्कारलाई
**मनोमयं** = मनको कारणभूत र
**देवमयं** = तत्तत् इन्द्रियहरूका देवताहरूको पनि कारणभूत
**विकार्यम्** = सात्त्विक अहङ्कारलाई

**संसाद्य** = उत्तरोत्तर प्राप्त गर्दै
**गत्या** = क्रमशः लयरूप गतिद्वारा
**तेन सह** = अहङ्कार सहित
**गुणसन्निरोधम्** = समस्त गुणहरूको लयस्थान
**विज्ञानतत्त्वं** = महत्तत्त्वलाई
**याति** = प्राप्त गर्दछ (अथवा अहङ्कारलाई महत्तत्त्वमा विलीन गराउँछ)

**वाक्यार्थ–** यसप्रकार योगी पञ्चभूतको स्थूल र सूक्ष्म आवरणलाई पार गरेर अहङ्कारमा प्रवेश गर्दछ। त्यसपछि सूक्ष्मभूतलाई तामस अहङ्कारमा, इन्द्रियहरूलाई राजस अहङ्कारमा र मन एवं इन्द्रियहरूको अधिष्ठातृ देवताहरूलाई सात्त्विक अहङ्कारमा लीन गर्दछ।

**तेनाऽऽत्मनात्मानमुपैति शान्त-**
**मानन्दमानन्दमयोऽवसाने।**
**एतां गतिं भागवतीं गतो यः**
**स वै पुनर्नेह विषज्जतेऽङ्ग॥ ३१॥**

**पदार्थ–**

**अवसाने** = प्रकृतिरूप उपाधिको पनि क्षय भएपछि
**आनन्दमयः** = आनन्दमय अवस्थामा रहेको योगी
**तेन आत्मना** = सम्पूर्ण आवरणहरू नष्ट भएको स्वरूपले
**आनन्दम्** = आनन्दरूप
**शान्तम्** = शान्त
**आत्मानम्** = परमात्मालाई
**उपैति** = प्राप्त गर्दछ
**अङ्ग** = हे प्रिय परीक्षित्
**यः** = जुन मनुष्य
**एतां** = यस्तो प्रकारको
**भागवतीं** = भगवत्तत्त्वप्राप्तिरूप
**गतिं** = अवस्थितिलाई
**गतः** = प्राप्त गरेको
**सः** = त्यो योगी
**वै** = निश्चय नै
**पुनः** = फेरि
**इह** = यस संसारमा
**न विषज्जते** = फर्कदैन

**वाक्यार्थ–** यसपछि अहङ्कारसहित लयरूप गतिद्वारा महत्तत्त्वमा प्रवेश गरेर अन्त्यमा समस्त गुणहरूको लयस्थान प्रकृतिरूप आवरणमा मिल्दछ। हे पिय परीक्षित्! महाप्रलयको समय प्रकृतिरूप आवरणको पनि लय भएपछि त्यो योगी स्वयं आनन्दरूप भएर आनन्दस्वरूप शान्त परमात्मालाई प्राप्त गर्दछ। जुन योगीलाई यो भगवन्मयी गति प्राप्त हुन्छ, उसलाई फेरि यस संसारमा आउनुपर्दैन।

**एते सृती ते नृप वेदगीते**
**त्वयाभिपृष्टे च सनातने च।**
**ये वै पुरा ब्रह्मण आह तुष्ट**
**आराधितो भगवान् वासुदेवः॥ ३२॥**

पदार्थ—

**नृप** = हे राजा परीक्षित्
**त्वया** = तिमीले
**अभिपृष्टे** = सोधिएका
**सनातने** = अनादिकालदेखिका
**वेदगीते** = वेदले पनि प्रतिपादन गरेको
**एते** = यी दुई
**सृती** = सद्योमुक्ति र क्रममुक्तिका मार्ग
**ते** = तिमीलाई बताएँ
**आराधितः** = आराधना गरिएका र
**तुष्ट** = प्रसन्न भएका
**भगवान्** = भगवान्
**वासुदेवः** = श्रीहरिले
**पुरा** = पहिले
**ये** = जुन दुई मार्गको विषयमा
**ब्रह्मणे** = ब्रह्माजीका लागि
**आह** = बताउनुभएको थियो

**वाक्यार्थ—** हे राजा परीक्षित् ! तपाईंले जो सोध्नुभएको थियो, मैले वेदोक्त द्विविध सद्योमुक्ति र क्रममुक्तिको विषयमा तपाईंलाई बताएँ। पहिले ब्रह्माजीले भगवान् वासुदेवको आराधना गरेर जब उहाँले भगवान्सँग प्रश्न गर्नुभएको थियो, त्यसको उत्तरमा उहाँले ब्रह्माजीलाई यी दुई मार्गहरूका विषयमा बताउनुभएको थियो।

**न ह्यतोऽन्यः शिवः पन्था विशतः संसृताविह।**
**वासुदेवे भगवति भक्तियोगो यतो भवेत्॥ ३३॥**

पदार्थ—

**इह** = यस
**संसृतौ** = जन्म र मरणरूप संसारचक्रमा
**विशतः** = फसिरहेको प्राणीका लागि
**अतः** = यहाँ बताइएको बाटोलाई छाडेर
**अन्यः** =अरू कुनै
**शिवः** = कल्याणकारी
**पन्था** = बाटो
**न** = छैन
**यतः** = जुन मार्गको आश्रयले
**भगवति** = भगवान्
**वासुदेवे** = वासुदेवमा
**हि** = निश्चय नै
**भक्तियोगः** = भक्तियोग
**भवेत्** = प्राप्त हुन्छ

**वाक्यार्थ—** संसारचक्रमा परेका मनुष्यहरूका लागि भक्तियोग भगवान् श्रीकृष्ण प्राप्त गर्नका लागि हुन्छ। यहाँ बताइएको बाटोलाई छाडेर अरू कुनै पनि कल्याणकारी मार्ग छैन।

**भगवान् ब्रह्म कार्त्स्न्येन त्रिरन्वीक्ष्य मनीषया।**
**तदध्यवस्यत् कूटस्थो रतिरात्मन् यतो भवेत्॥ ३४॥**

पदार्थ—

**भगवान्** = ब्रह्माजीले
**कूटस्थः** = निर्विकार र एकाग्रचित्त भएर
**मनीषया** = आफ्नो बुद्धिद्वारा
**कार्त्स्न्येन** = पूर्णरूपले
**ब्रह्म** = वेदलाई
**त्रिः** = तीन पटक
**अन्वीक्ष्य** = विचार गरेर
**यतः** = जुन उपायद्वारा
**आत्मनि** = भगवान्मा
**रतिः** = भक्ति
**भवेत्** = हुन्छ

**तद्** = त्यो उपाय | **अध्यवस्यत्** = निश्चित गर्नुभयो |

**वाक्यार्थ—** भगवान् ब्रह्माले एकाग्रचित्तले सम्पूर्ण वेदहरूको तीन पटक अनुशीलन गरी आफ्नो बुद्धिले यही निश्चय गर्नुभएको थियो कि जुन कर्म गर्नाले सर्वात्मा भगवान् श्रीकृष्णप्रति अनन्य प्रेम हुन्छ, त्यही नै सर्वश्रेष्ठ धर्म हो।

**भगवान् सर्वभूतेषु लक्षितः स्वात्मना हरिः।**

**दृश्यैर्बुद्ध्यादिभिर्द्रष्टा लक्षणैरनुमापकैः॥ ३५॥**

पदार्थ—

**दृश्यैः** = दृश्यपदार्थभित्र पर्ने
**अनुमापकैः** = भगवत्तत्त्वको अनुमान गराउने
**बुद्ध्यादिभिः** = बुद्धि आदि
**लक्षणैः** =लक्षणहरूद्वारा
**सर्वभूतेषु** = सम्पूर्ण प्राणीहरूभित्र
**स्वात्मना** = अन्तर्यामीरूपले
**द्रष्टा** = कार्यकारणमय संसारको प्रकाशक
**भगवान्** = भगवान्
**हरिः** = श्रीहरि
**लक्षितः** = लक्षित हुनुहुन्छ

**वाक्यार्थ—** आत्मरूपले भगवान् श्रीकृष्ण नै सम्पूर्ण प्राणीहरूभित्र लक्षित हुनुहुन्छ किनभने बुद्धि आदि दृश्य पदार्थ भगवान्को अनुमान गराउने लक्षण हुन्। भगवान् श्रीहरिमात्र साक्षी या द्रष्टा हुनुहुन्छ।

**तस्मात्सर्वात्मना राजन् हरिः सर्वत्र सर्वदा।**

**श्रोतव्यः कीर्तितव्यश्च स्मर्तव्यो भगवान् नृणाम्॥ ३६॥**

पदार्थ—

**राजन्** = हे परीक्षित्
**तस्मात्** = त्यसकारण
**नृणाम्** = मृत्युभयाक्रान्त मुमुक्षु मनुष्यहरूका लागि
**भगवान्** = सर्वात्मा भगवान्
**हरिः** = हरि
**सर्वात्मना** = सम्पूर्ण शक्तिद्वारा
**सर्वदा** = जहिले पनि र
**सर्वत्र** = जस्तोसुकै स्थानमा पनि
**श्रोतव्यः** = श्रवणीय
**कीर्तितव्यः** = कीर्तनीय
**स्मर्तव्यः च** = स्मरणीय पनि हुनुहुन्छ

वाक्यार्थ— हे परीक्षित्! त्यसकारण मृत्युभयाक्रान्त मुमुक्षु मनुष्यहरूका लागि सर्वात्मा भगवान् हरि सम्पूर्ण शक्तिद्वारा जहिले पनि र जस्तोसुकै स्थानमा पनि श्रवणीय, कीर्तनीय र स्मरणीय पनि हुनुहुन्छ।

**पिबन्ति ये भगवत आत्मनः सतां**

**कथामृतं श्रवणपुटेषु सम्भृतम्।**

**पुनन्ति ते विषयविदूषिताशयं**

**व्रजन्ति तच्चरणसरोरुहान्तिकम्॥ ३७॥**

पद्यार्थ—

| | | |
|---|---|---|
| **ये** = जो भाग्यशाली मनुष्यहरू | **कथामृतं** = भगवान्को कथारूपी अमृतलाई | **पुनन्ति** = पवित्र गर्दछन् र |
| **आत्मनः** = आफ्नै आत्मस्वरूप | **पिबन्ति** = पान गर्दछन् | **तच्चरणसरोरुहान्तिकम्** = भगवत् चरणकमलको नजिकैमा |
| **भगवत** = भगवान्को | **ते** = ती मनुष्यहरू | **व्रजन्ति** = पुग्दछन् |
| **श्रवणपुटेषु** = कानरूपी दुनामा | **विषयविदूषिताशयं** = विषयवासनाले मलिन र दूषित भएको अन्तःकरणलाई | |
| **सम्भृतम्** = परिरहेको | | |
| **सतां** = सज्जनहरूद्वारा गाइएको | | |

**वाक्यार्थ—** जो व्यक्तिहरू सज्जनहरूद्वारा गाइएको कथारूप अमृतलाई आफ्नो कानरूपी दुनामा राखेर पान पनि गर्दछन्। उनीहरूको हृदयबाट विषयरूपी विषको प्रभाव निक्लन्छ। त्यो हृदय शुद्ध हुन्छ र उनीहरू भगवान् श्रीकृष्णको चरणकमलको समाधिलाई प्राप्त गर्न समर्थ हुन्छन्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां द्वितीयस्कन्धे**

**पुरुषसंस्थानुवर्णनं नाम द्वितीयोऽध्यायः॥ २॥**

# अथ तृतीयोऽध्यायः

## कामनाअनुसार विभिन्न देवताहरूको उपासना तथा भगवद्भक्तिको प्राधान्य

**श्रीशुक उवाच** (श्रीशुकदेवजीले भन्नुभयो)

**एवमेतन्निगदितं पृष्टवान् यद्भवान् मम।**
**नृणां यन्म्रियमाणानां मनुष्येषु मनीषिणाम्॥ १॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **मनुष्येषु** = मनुष्यहरूमा | **यत्** = जुन कर्तव्य हो | **पृष्टवान्** = सोध्नुभएको थियो |
| **मनीषिणाम्** = बुद्धिशाली | **तत्** = त्यसको विषयमा | **एवम्** = यसप्रकार (ती साधकहरूका लागि) |
| **म्रियमाणानां** = मरणकाल नजिक भएका | **यद्** = जुन कुरा | **निगदितं** = भनेँ |
| **नृणां** = मनुष्यहरूका लागि | **भवान्** = तपाईंले | |
| | **मम** = मलाई | |

**वाक्यार्थ–** मनुष्यहरूमा म्रियमाण विवेकी मनुष्यहरूले गर्नुपर्ने कर्तव्यका विषयमा तपाईंले जुन कुरा मलाई सोध्नुभएको थियो त्यसको उत्तर शास्त्रहरूमा बताएअनुसार मैले तपाईंलाई दिएँ।

**ब्रह्मवर्चसकामस्तु यजेत ब्रह्मणः पतिम्।**
**इन्द्रमिन्द्रियकामस्तु प्रजाकामः प्रजापतीन्॥ २॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **ब्रह्मवर्चसकामः** = वेदाध्ययनबाट उत्पन्न भएको तेजलाई प्राप्त गर्न चाहने मनुष्यले | **इन्द्रियकामः** = इन्द्रियहरूमा सामर्थ्य प्राप्त गर्न चाहने मनुष्यले | **प्रजाकामः** = सन्तानलाई प्राप्त गर्न चाहनेले |
| **ब्रह्मणस्पतिम्** = ब्रह्माजीको | **इन्द्रम्** = इन्द्रको उपासना गरोस् | **प्रजापतीन्** =दक्ष आदि प्रजापतिहरूको उपासना गरोस् |
| **यजेत** = उपासना गरोस् | | |

**वाक्यार्थ–** ब्रह्मतत्त्वलाई प्राप्त गर्न चाहने मनुष्यले ब्रह्माजीको उपासना गरोस्। इन्द्रियहरूमा सामर्थ्य प्राप्त गर्न चाहनेले इन्द्रको उपासना गरोस्। सन्तानलाई प्राप्त गर्न चाहनेले दक्ष आदि प्रजापतिहरूको उपासना गरोस्।

**देवीं मायां तु श्रीकामस्तेजस्कामो विभावसुम्।**
**वसुकामो वसून् रुद्रान्वीर्यकामोऽथ वीर्यवान्॥ ३॥**

**पदार्थ–**

**श्रीकामः** = सम्पत्तिलाई प्राप्त गर्न चाहने मनुष्यले
**मायां देवीं** = भगवती दुर्गाको
**यजेत** =उपासना गरोस्
**तेजस्कामः** = तेजलाई प्राप्त गर्न चाहने मनुष्यले
**विभावसुम्** = अग्निको उपासना गरोस्
**वसुकामः** = धन चाहने मनुष्यले
**वसून्** = वसुहरूको उपासना गरोस्
**वीर्यकामः** = प्रभाव चाहने मनुष्यले
**तु** = चाहिँ
**रुद्रान्** = रुद्रहरूको उपासना गरोस्
**अथ** = त्यसपछि
**वीर्यवान्** = प्रभावशाली हुन्छ

**वाक्यार्थ–** सम्पत्ति प्राप्त गर्न चाहनेले दुर्गादेवीको उपासना गरोस्। तेज प्राप्त गर्न चाहनेले अग्निको उपासना गरोस्। धर्म प्राप्त गर्न चाहनेले द्रोण आदि वसुहरूको उपासना गरोस्। प्रभाव चाहनेले रुद्रहरूको उपासना गरोस्।

**अन्नाद्यकामस्त्वदितिं स्वर्गकामोऽदितेः सुतान्।**
**विश्वान्देवान् राज्यकामः साध्यान् संसाधको विशाम्॥ ४॥**

**पदार्थ–**

**अन्नाद्यकामः** = अन्न आदि भोज्यपदार्थलाई प्राप्त गर्न चाहने मनुष्यले
**अदितिं** = अदितिको उपासना गरोस्
**स्वर्गकामः** = स्वर्गलाई प्राप्त गर्न चाहनेले
**अदितेः** = अदितिका
**सुतान्** = छोरा (द्वादश आदित्यहरूको उपासना गरोस्)
**राज्यकामः** = राज्यलाई प्राप्त गर्न चाहने मनुष्यले
**विश्वान् देवान्** = विश्वेदेवाहरूको उपासना गरोस्
**विशाम्** = प्रजाहरूमाथि
**संसाधकः** = आधिपत्य चाहने मनुष्यले
**साध्यान्** = साध्यहरूको उपासना गरोस्

**वाक्यार्थ–** अन्न आदि प्राप्त गर्न चाहनेले अदितिको उपासना गरोस्। स्वर्ग प्राप्त गर्न चाहनेले अदितिका छोरा द्वादशादित्यहरूको उपासना गरोस्। राजत्वलाई प्राप्त गर्न चाहनेले विश्वेदेवाहरूको उपासना गरोस्। प्रजाहरूमाथि स्वामित्व प्राप्त गर्न चाहनेले साध्यहरूको उपासना गरोस्।

**आयुष्कामोऽश्विनौ देवौ पुष्टिकाम इलां यजेत्।**
**प्रतिष्ठाकामः पुरुषो रोदसी लोकमातरौ॥ ५॥**

**पदार्थ–**

**आयुष्कामः** = आयुलाई प्राप्त गर्न चाहनेले
**अश्विनौ देवौ** = अश्विनीकुमारहरूको उपासना गरोस्
**पुष्टिकामः** = पुष्टि चाहनेले
**इलां** = पृथिवीको अभिमानी देवता इलाको

**यजेत्** = उपासना गरोस्
**प्रतिष्ठाकामः** = प्रतिष्ठालाई प्राप्त गर्न चाहने
**पुरुषः** = पुरुषले
**लोकमातरौ** = प्राणका आधारभूत लोकका मातापिता
**रोदसी** = स्वर्ग र पृथिवीको उपासना गरोस्

**वाक्यार्थ–** आयुको वृद्धि चाहने मनुष्यले अश्विनीकुमारहरूको उपासना गरोस्। पुष्टि चाहनेले पृथिवीको अभिमानी देवताको उपासना गरोस्। प्रतिष्ठा प्राप्त गर्न चाहने मनुष्यले प्राणका आधारभूत स्वर्ग र पृथिवीको उपासना गरोस्।

**रूपाभिकामो गन्धर्वान् स्त्रीकामोऽप्सर उर्वशीम्।**
**आधिपत्यकामः सर्वेषां यजेत परमेष्ठिनम्॥ ६॥**

**पदार्थ–**
**रूपाभिकामः** = सौन्दर्य प्राप्त गर्न चाहने मनुष्यले
**गन्धर्वान्** = गन्धर्वहरूको उपासना गरोस्
**स्त्रीकामः** = स्त्रीलाई प्राप्त गर्न चाहनेले
**अप्सरउर्वशीम्** = उर्वशी अप्सराको
**यजेत** =उपासना गरोस्
**सर्वेषां** = सबैमाथि
**आधिपत्यकामः** = सबको स्वामी बन्न चाहनेले
**परमेष्ठिनम्** = ब्रह्माजीको उपासना गरोस्

**वाक्यार्थ–** सौन्दर्यलाई चाहनेले गन्धर्वहरूको उपासना गरोस्। स्त्रीलाई प्राप्त गर्न चाहनेले उर्वशी अप्सराको उपासना गरोस्। सबैमाथि आधिपत्य प्राप्त गर्न चाहनेले ब्रह्माजीको उपासना गरोस्।

**यज्ञं यजेद् यशस्कामः कोशकामः प्रचेतसम्।**
**विद्याकामस्तु गिरिशं दाम्पत्यार्थ उमां सतीम्॥ ७॥**

**पदार्थ–**
**यशस्कामः** = कीर्ति चाहने मनुष्यले
**यज्ञं** = यज्ञपुरुष भगवान् विष्णुको
**यजेद्** =उपासना गरोस्
**कोशकामः** = सम्पत्ति प्राप्त गर्न चाहने मनुष्यले
**प्रचेतसम्** = वरुणको उपासना गरोस्
**विद्याकामः** = विद्यालाई प्राप्त गर्न चाहने मनुष्यले
**गिरिशं** = शिवजीको आराधना गरोस्
**दाम्पत्यार्थः** = पति र पत्नीमा परस्पर प्रेम चाहनेले
**तु** = चाहिँ
**सतीम् उमां** = सती उमाको उपासना गरोस्

**वाक्यार्थ–** कीर्ति प्राप्त गर्न चाहनेले यज्ञपुरुष भगवान् विष्णुको उपासना गरोस्। सम्पत्ति प्राप्त गर्न आहनेले वरुणको उपासना गरोस्। विद्या प्राप्त गर्न चाहनेले शिवजीको उपासना गरोस्। पति र पत्नीमा परस्पर प्रेम चाहनेले सती उमाको उपासना गरोस्।

**धर्मार्थ उत्तमश्लोकं तन्तुं तन्वन् पितॄन् यजेत्।**

**रक्षाकामः पुण्यजनानोजस्कामो मरुद्गणान्॥ ८॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **धर्मार्थे** = धर्मप्राप्तिका लागि | **पितॄन्** = पितृहरूको | **पुण्यजनान्** = यक्षहरूको र |
| **उत्तमश्लोकं** = भगवान् विष्णुको उपासना गरोस् | **यजेत्** = उपासना गरोस् | **ओजस्कामः** = बलप्राप्तिको लागि |
| **तन्तुं** = वंश परम्पराको | **रक्षाकामः** = विघ्न र बाधाहरूबाट आफ्नो रक्षाका लागि | **मरुद्गणान्** = मरुद्गणहरूको उपासना गरोस् |
| **तन्वन्** = विस्तारका लागि | | |

**वाक्यार्थ—** धर्म प्राप्त गर्न चाहनेले भगवान् विष्णुको उपासना गरोस्। वंशपरम्पराको विस्तारका लागि पितृहरूको उपासना गरोस्। विघ्नबाधाहरूबाट आफ्नो रक्षा चाहनेले यक्षहरूको उपासना गरोस्। बल प्राप्त गर्न चाहनेले मरुद्गणहरूको उपासना गरोस्।

**राज्यकामो मनून् देवान् निर्ऋतिं त्वभिचरन् यजेत्।**

**कामकामो यजेत् सोममकामः पुरुषं परम्॥ ९॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **राज्यकामः** = राज्यप्राप्तिका लागि | **निर्ऋतिं** = निर्ऋति राक्षसको | **अकामः** = निष्कामता प्राप्त गर्नको लागि |
| **मनून्** = मन्वन्तरका अधिपति | **यजेत्** = उपासना गरोस् | **परम् पुरुषं** = परमपुरुष नारायणको उपासना गरोस् |
| **देवान्** = देवताहरूको उपासना गरोस् | **कामकामः** = भोगप्राप्तिका लागि | |
| **अभिचरन्** = शत्रुमरण चाहनेले | **सोमम्** = चन्द्रमाको | |
| | **यजेत्** = उपासना गरोस् | |

**वाक्यार्थ—** राज्य चाहनेले मनुहरूको उपासना गरोस्। शत्रुमरण चाहनेले निर्ऋति राक्षसको उपासना गरोस्। विषयभोग चाहनेले चन्द्रमाको उपासना गरोस्। वैराग्य चाहनेले परमपुरुष नारायणको उपासना गरोस्।

**अकामः सर्वकामो वा मोक्षकाम उदारधीः।**

**तीव्रेण भक्तियोगेन यजेत पुरुषं परम्॥ १०॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **अकामः** = वैराग्य प्राप्त गर्न चाहनेले | **परम्** = परम | **पुरुषं** = पुरुष (नारायणको उपासना गरोस् ) |

**सर्वकामः** = उपर्युक्त सम्पूर्ण पदार्थहरूलाई प्राप्त गर्न चाहनेले
**वा** = अथवा
**मोक्षकामः** = मोक्षको प्राप्त गर्न चाहने
**उदारधीः** = उदार बुद्धि भएको साधकले
**तीव्रेण**= तीव्र
**भक्तियोगेन** = भक्तियोगद्वारा
**परम् पुरुषं** = निर्गुणनिराकार परब्रह्मको
**यजेत** = उपासना गरोस्

**वाक्यार्थ—** वैराग्य प्राप्त गर्न चाहने, उपर्युक्त सम्पूर्ण पदार्थ चाहने अथवा मोक्ष चाहने उदार बुद्धि भएको व्यक्तिले भक्तियोगद्वारा परमपुरुष परब्रह्मको उपासना गरोस्।

**एतावानेव यजतामिह निःश्रेयसोदयः।**
**भगवत्यचलो भावो यद्भागवतसङ्गतः॥ ११॥**

**पदार्थ—**
**इह** = यस संसारमा
**यजताम्** = सबै किसिमका उपासकहरूका लागि पनि
**यद्भागवतसङ्गतः** = भगवान्का भक्तहरूको सङ्गतद्वारा
**भगवति** = भगवान् नारायणमा
**अचलः** = अचल
**भावः** = भक्ति हुन्छ (जुन भक्तिबाट)
**एतावान् एव** = यही नै
**निःश्रेयसोदयः** =मुख्यलाभ हो

**वाक्यार्थ—** यस संसारमा जति किसिमका उपासक छन् ती सबैका लागि भगवान्का भक्तहरूको सङ्गतद्वारा भगवान्मा भक्तिको उदय हुनु नै मुख्य प्रयोजन हो। ती भिन्नभिन्न देवताहरूको आराधनाद्वारा प्राप्त हुने ती-ती भिन्न-भिन्न विषयहरूको प्राप्ति मुख्य फल होइन।

**ज्ञानं यदा प्रतिनिवृत्तगुणोर्मिचक्रम्**
**आत्मप्रसाद उत यत्र गुणेष्वसङ्गः।**
**कैवल्यसम्मतपथस्त्वथ भक्तियोगः**
**को निर्वृतो हरिकथासु रतिं न कुर्यात्॥ १२॥**

**पदार्थ—**
**हरिकथासु** = हरिकथामा
**यद्** = जुन
**ज्ञानं** = ज्ञान हुन्छ
**प्रतिनिवृत्तगुणोर्मिचक्रम्** = रागादि गुणहरूको समूह जहाँ सर्वथा नष्ट हुन्छ (त्यसपछि)
**आत्मप्रसादः** = चित्त निर्मल हुन्छ
**यत्र** = चित्त निर्मल भएपछि
**गुणेषु** = विषयहरूमा
**असङ्गः** = वैराग्य हुन्छ
**अथ** = यसपछि
**कैवल्यसम्मतपथः**=मोक्षलाई प्राप्त गराउने सर्वसम्मत मार्ग
**भक्तियोगः** = भक्तियोगको प्राप्ति हुन्छ
**निर्वृतः** = एक पटकमात्र भगवत्कथाको श्रवणसुखको अनुभव गर्ने
**कः** = कुन त्यस्तो साधक होला (जो)
**रतिं** = ती हरिकथाहरूमा प्रेम
**न कुर्यात्** = नगरोस्

**वाक्यार्थ—** ती हरिकथाहरूको श्रवण गर्नाले दुर्लभ ज्ञानको प्राप्ति हुन्छ। जसबाट संसारसागरको त्रिगुणमयी तरङ्गमालाहरू सधैँका लागि शान्त हुन्छन्। हृदय शुद्ध भएर आत्मानन्दको अनुभव हुन थाल्दछ। इन्द्रियहरूको विषय-आसक्ति हट्न लाग्दछ। कैवल्यमोक्षको सर्वसम्मत मार्ग भक्तियोगको प्राप्ति हुन्छ। भगवान्का त्यस्ता रसमय कथाहरूको चस्का लागेको कुन त्यस्तो मनुष्य होला, जो भगवान्को कथामा प्रेम नगर्ला ?

**शौनक उवाच (शौनकजीले भन्नुभयो)**

**इत्यभिव्याहृतं राजा निशम्य भरतर्षभः।**
**किमन्यत् पृष्टवान् भूयो वैयासकिमृषिं कविम्॥ १३॥**

**पदार्थ—**

**इति** = यसप्रकार
**अभिव्याहृतं** = भगवान् शुकदेवजीले भन्नुभएको
**निशम्य** = सुनेर
**भरतर्षभः** = भरतवंशीमा श्रेष्ठ
**राजा** = राजा परीक्षित्ले
**ऋषिं** = ऋषि
**कविम्** = शब्दब्रह्ममा निष्णात
**वैयासकिम्** = भगवान् शुकदेवजीलाई
**भूयः** = फेरि
**अन्यत्** = अरू
**किम्** = के
**पृष्टवान्** = सध्नुभयो

**वाक्यार्थ—** भरतवंशीमा श्रेष्ठ राजा परीक्षित्ले शुकदेवजीको कुरा सुनेर फेरि शब्दब्रह्ममा निष्णात ऋषि शुकदेवजीसँग राजा के सोध्नुभयो ?

**एतच्छुश्रूषतां विद्वन् सूत नोऽर्हसि भाषितुम्।**
**कथा हरिकथोदर्काः सतां स्युः सदसि ध्रुवम्॥ १४॥**

**पदार्थ—**

**विद्वन्** = हे विद्वान्
**सूत** = सुतजी
**एतत्** = शुकदेव र राजा परीक्षित्को यो संवाद
**शुश्रूषतां** = सुन्न चाहने
**नः** = हामीहरूका लागि
**भाषितुम्** = भन्न
**अर्हसि** = योग्य हुनुहुन्छ
**ध्रुवम्** = किनभने
**सतां** = सज्जनहरूको
**सदसि** =सभामा
**हरिकथोदर्काः** = भगवान्को रासमय लीलाकथाहरूमा पर्यवसित हुने
**कथाः** = कथाहरू
**स्युः** = हुन्छन्

**वाक्यार्थ—** हे विद्वान् सूतजी ! हामीहरू शुकदेव र राजा परीषित्को वार्तालाप प्रेमपूर्वक सुन्न चाहन्छौँ। तपाईंले कृपा गरेर हामीलाई सुनाउनुहोस् किनभने सन्तहरूको सभामा यस्ता कुराहरू हुन्छन् जसको पर्यवसान भगवान्को लीलामय कथाहरूमा हुन्छ।

**स वै भागवतो राजा पाण्डवेयो महारथः।**

**बालक्रीडनकैः क्रीडन् कृष्णक्रीडां य आददे ॥ १५ ॥**

पदार्थ—

**सः** = ती
**वै** = निश्चय
**पाण्डवेयः** = पाण्डुकुलमा उत्पन्न
**महारथः** = महारथि
**राजा** = राजा परीक्षित्
**भागवतः** = भगवान्का भक्त हुनुहुन्थ्यो
**बालक्रीडनकैः** = क्रीडाका साधनहरूद्वारा
**क्रीडन्** = खेल्दाखेरि
**यः** = जो राजा परीक्षित्
**कृष्णक्रीडां** = कृष्णलीलाकै रस
**आददे** = लिने गर्नुहुन्थ्यो

**वाक्यार्थ—** पाण्डुनन्दन महारथि राजा परीक्षित् भगवान्का त्यस्ता परमभक्त हुनुहुन्थ्यो जो बाल्यावस्थामा खेल्दाखेरि पनि श्रीकृष्णलीलाकै रस लिनुहुन्थ्यो।

**वैयासकिश्च भगवान् वासुदेवपरायणः।**
**उरुगायगुणोदाराः सतां स्युर्हि समागमे ॥ १६ ॥**

पदार्थ—

**भगवान्** = भगवान्
**वैयासकिः** = शुकदेवजी
**च** = पनि
**वासुदेवपरायणः** = भगवान्का परमभक्त हुनुहुन्थ्यो
(त्यसै गरी अरू भगवान्का भक्तहरू त्यहाँ उपस्थित थिए यसकारण)
**सतां** = सज्जनहरूको
**समागमे** = समागममा
**हि** = निश्चय नै
**उरुगायगुणोदाराः** = भगवान्का गुणहरूले श्रेष्ठ भएका कथाहरू
**स्युः** = भएहोलान्

**वाक्यार्थ—** भगवान् शुकदेवजी भगवान्का परम भक्त हुनुहुन्थ्यो। यस्तै त्यहाँ भगवान्का अन्य भक्तहरू पनि आएका थिए। यस्ता सन्तहरूको सत्सङ्गमा अवश्य पनि भगवान्का मङ्गलमय गुणहरूको दिव्यचर्चा भयो होला।

**आयुर्हरति वै पुंसामुद्यन्नस्तं च यन्नसौ।**
**तस्यर्ते यत्क्षणो नीत उत्तमश्लोकवार्तया ॥ १७ ॥**

पदार्थ—

**यत्** = जुन मनुष्यले
**असौ** = यी सूर्य भगवान्
**उद्यन्** = उदाउँदै
**अस्तं च** = अस्ताउँदै
**उत्तमश्लोकवार्तया** = भगवान्का कथा सुनेर अथवा सुनाएर
**क्षणः** = समय
**नीतः** = यापन गरेको छ
**तस्य** = त्यस व्यक्तिको
**आयुः** = आयुलाई
**ऋते** = छोडेर
**पुंसाम्** = अन्य व्यक्तिहरूको
**आयुः** = आयुलाई
**वै** = निश्चय नै
**हरति** = नष्ट गरिरहनुभएको छ

**वाक्यार्थ—** जसको समय भगवान् श्रीकृष्णको गुणको गान अथवा श्रवणमा व्यतीत हुन्छ त्यी व्यक्तिदेखि अतिरिक्त सबै मनुष्यहरूको आयु व्यर्थ बितिरहेको छ। भगवान् सूर्यले प्रतिदिन आफ्नो उदय र अस्तद्वारा उनीहरूको आयुलाई नष्ट गरिरहनुभएको छ।

**तरवः किं न जीवन्ति भस्त्राः किं न श्वसन्त्युत।**
**न खादन्ति न मेहन्ति किं ग्रामपशवोऽपरे॥ १८॥**

पदार्थ—

**तरवः** = रुखहरू
**किं** = के
**न जीवन्ति** = बाँच्दैनन् र ?
**भस्त्राः** = खलाँतीहरू
**किं** = के
**न श्वसन्ति** = सास फेर्दैनन् र ?
**उत** = अथवा
**अपरे** = अरू
**ग्रामपशवः** = गाउँमा पालिरहेका पशुहरू
**किं** = के
**न खादन्ति** = खाँदैनन् ?
**किं** = के
**न मेहन्ति** = बच्चा पैदा गर्दैनन् र ?

**वाक्यार्थ—** के वृक्षहरू बाँचेका छैनन् र ? के खलाँतीले सास लिँदैन र ? के गाउँमा पालिएका पशुहरूले पनि खाने र बच्चा उत्पन्न गर्ने काम गर्दैनन् र ?

**श्वविड्वराहोष्ट्रखरैः संस्तुतः पुरुषः पशुः।**
**न यत्कर्णपथोपेतो जातु नाम गदाग्रजः॥ १९॥**

पदार्थ—

**जातु** = कहिल्यै पनि
**गदाग्रजः** = श्रीकृष्ण भन्ने
**नाम** = नाम
**न यत्कर्णपथोपेतः** = जुन मनुष्यको कानमा एकपटक पनि परेको छैन (त्यो)
**पुरुषः** = पुरुषको आकारको
**पशुः** =पशु
**श्वविड्वराहोष्ट्रखरैः** = कुकुर, सुंगुर, उँट र गधा भन्दा पनि
**संस्तुतः** =गएगुज्रेको हो

**वाक्यार्थ—** जसले जीवनमा एकपटक पनि भगवान् श्रीकृष्णका लीलाकथाको श्रवण गरेको छैन, त्यो नरपशु, कुक्कुर, सुँगुर, उँट र गधाभन्दा पनि गएगुज्रेको हो।

**बिले बतोरुक्रमविक्रमान्ये**
**न शृण्वतः कर्णपुटे नरस्य।**
**जिह्वासती दार्दुरिकेव सूत**
**न चोपगायत्युरुगायगाथाः॥ २०॥**

पदार्थ—

**सूत** = हे सूतजी
**नरस्य** = जुन व्यक्तिको
**ये** = जुन
**कर्णपुटे** = दुई कानले
**उरुक्रमविक्रमान्** = भगवान् श्रीकृष्णको कथालाई
**न शृण्वतः** = श्रवण गर्दैनन्
**बत** = यो खेदको कुरा हो (ती कानहरू)
**बिले** = सर्पहरूले निवास गर्ने प्वालमात्र हुन् (कुनै पुरुषले)
**उरुगायगाथाः** = भगवान्को कथा
**न उपगायति** = गान गर्दैन भने (त्यो पुरुषको)
**दार्दुरिका** = भ्यागुतोको
**जिह्वा** = जिब्रोजस्तो कटुभाषी
**असती** = निरर्थक जिब्रो हो

**वाक्यार्थ—** जो मनुष्य भगवान् श्रीकृष्णको कथा कहिल्यै पनि सुन्दैन उसका कान सर्प बस्ने प्वाल जस्ता हुन्। जुन जिब्राले भगवान्को लीलाको गायन गर्दैन त्यो भ्यागुताको जिब्रोजस्तो कटुभाषी निरर्थक जिब्रो हो। त्यस्तो जिब्रो हुनुको सट्टा बरु जिब्रो नहुनु नै राम्रो हो।

**भारः परं पट्टकिरीटजुष्ट-**
**मप्युत्तमाङ्गं न नमेन्मुकुन्दम्।**
**शावौ करौ नो कुरुते सपर्यां**
**हरेर्लसत्काञ्चनकङ्कणौ वा॥ २१॥**

पदार्थ—
**पट्टकिरीटजुष्टम्** = रेशमी वस्त्र र मुकुटले युक्त भएको छ
**अपि** = तापनि
**उत्तमाङ्गं** = जुन शिर
**मुकुन्दम्** = भगवान्को चरणमा
**न नमेत्** = झुक्दैन भने
**परं** = केवल
**भारः** = भारमात्र हो
**वा** = अथवा
**लसत्काञ्चनकङ्कणौ** = सुनको बालाले युक्त भएका छन् तापनि
**करौ** = जुन हात
**हरेः** = भगवान् विष्णुको
**सपर्यां** = पूजा
**न कुरुते** = गर्दैनन् भने
**शावौ** = ती हात मुर्दाका हात जस्ता हुन्

**वाक्यार्थ—** जुन शिर कहिल्यै पनि भगवान् श्रीकृष्णको चरणमा झुक्दैन त्यो रेशमी वस्त्रद्वारा सुसज्जित र मुकुटले युक्त भए तापनि भारमात्र हो। जुन हातहरूले भगवान्को सेवापूजा गर्दैनन् ती हातहरू सुनका बालाहरूद्वारा भूषित भए तापनि मुर्दाका हातजस्ता हुन्।

**बर्हायिते ते नयने नराणां**
**लिङ्गानि विष्णोर्न निरीक्षतो ये।**
**पादौ नृणां तौ द्रुमजन्मभाजौ**
**क्षेत्राणि नानुव्रजतो हरेर्यौ॥ २२॥**

पदार्थ—

**नराणां** = मनुष्यहरूका
**ये** = जुन दुई
**नयने** = जुन आँखा
**विष्णोः** = भगवान् विष्णुका
**लिङ्गानि** = मूर्तिहरूलाई
**न निरीक्षतः** = हेर्दैनन् भने
**ते** = ती आँखा
**बर्हायिते** = मयूरका प्वाँखका आँखा बराबर हुन्
**नृणां** = मनुष्यहरूका लागि
**यौ** = जुन
**पादौ** = गोडाहरू
**हरेः** = भगवान्का
**क्षेत्राणि**= लीलास्थलीहरूको
**न अनुव्रजतः** = यात्रा गर्दैनन् भने
**तौ** = ती दुई गोडाहरू
**द्रुमजन्मभाजौ** = वृक्ष जस्ता हुन्

**वाक्यार्थ—** जुन आँखाहरू भगवान्लाई स्मरण गराउन मूर्ति, तीर्थ र नदी आदिको दर्शन गर्दैनन् ती मयूरका प्वाँखमा बनेका आँखाका चिह्नजस्ता निरर्थक हुन्। जुन गोडाले भगवान्का लीलास्थलीको यात्रा गर्दैनन् भने ती त कहिल्यै नहिँड्ने जड रूखहरू जस्ता हुन्।

**जीवञ्छवो भागवताङ्घ्रिरेणुं**
**न जातु मर्त्योऽभिलभेत यस्तु ।**
**श्रीविष्णुपद्या मनुजस्तुलस्याः**
**श्वसञ्छवो यस्तु न वेद गन्धम् ॥ २३ ॥**

पदार्थ—

**यः** = जो
**मर्त्यः** = मनुष्य
**तु** = चाहिँ
**भागवताङ्घ्रिरेणुं** = भगवान्का भक्तहरूको चरणहरूको धूलो
**जातु** = कहिल्यै पनि
**न अभिलभेत** = शरीरका सम्पूर्ण अङ्गहरूमा धारण गर्दैन भने
**जीवन् शवः** = बाँचे तापनि मरेतुल्य हो
**यः** = जो
**मनुजः** = मनुष्य
**श्रीविष्णुपद्याः** =भगवान्को चरणमा चढाइएको
**तुलस्याः** = तुलसीको
**गन्धम्** = गन्धलाई
**न वेद** = यदि सुँघेर प्रशंसा गर्दैन भने
**श्वसन् शवः** = बाँचेर पनि मरे बराबर हो

**वाक्यार्थ—** जुन मनुष्यले भगवत्प्रेमी सन्तको चरणको धूलो आफ्नो शरीरमा धारण गर्दैन त्यो बाँचे तापनि मरेतुल्य हो। जो मनुष्य भगवान्को चरणमा चढाएको तुलसीको सुगन्ध लिएर त्यसको प्रशंसा गर्दैन उसले सास फेरे तापनि ऊ श्वासरहित मुर्दाजस्तो हो।

**तदश्मसारं हृदयं बतेदं**
**यद्गृह्यमाणैर्हरिनामधेयैः ।**
**न विक्रियेताथ यदा विकारो**
**नेत्रे जलं गात्ररुहेषु हर्षः ॥ २४ ॥**

**रूपाणां तेजसां चक्षुर्दिवः सूर्यस्य चाक्षिणी।**

**कर्णौ दिशां च तीर्थानां श्रोत्रमाकाशशब्दयोः॥**

**तद्गात्रं वस्तुसाराणां सौभगस्य च भाजनम्॥ ३॥**

**पदार्थ—**

**चक्षुः** = विराट्को चक्षुरिन्द्रिय
**रूपाणां** = सेतो, कालो आदि रूपहरूको र
**तेजसां** = तेजको पनि जनक हो
**अक्षिणी** = नेत्रगोलक
**दिवः** = स्वर्गको र
**सूर्यस्य च** = सूर्यको पनि उत्पत्तिस्थान हो
**दिशां** = दिशाहरूको र
**तीर्थानां च** = तीर्थहरूको पनि उत्पत्तिस्थान
**कर्णौ** = कान हुन्
**आकाशशब्दयोः** = आकाश र शब्दहरूको
**श्रोत्रम्** = श्रोत्रेन्द्रिय उत्पत्तिस्थान हो
**तद्गात्रं** = विराट्को शरीर
**वस्तुसाराणां च** = वस्तुहरूको सारभागको र
**सौभगस्य** = सौन्दर्यको पनि
**भाजनम्** = एकमात्र आश्रय हो

**वाक्यार्थ—** उहाँको नेत्रेन्द्रिय तेजको जन्मभूमि हो। यस्तै नेत्रगोलक स्वर्ग र सूर्यको जन्मभूमि हो। समस्त दिशा र पवित्र गर्ने तीर्थहरू कानबाट तथा आकाश र शब्द श्रोत्रेन्द्रियबाट निक्लेका हुन्। उहाँको शरीर, संसारका सम्पूर्ण वस्तुहरूको सारभाग तथा सौन्दर्यको एकमात्र आश्रय हो।

**त्वगस्य स्पर्शवाय्वोश्च सर्वमेधस्य चैव हि।**

**रोमाण्युद्भिज्जजातीनां यैर्वा यज्ञस्तु सम्भृतः॥ ४॥**

**पदार्थ—**

**हि** = निश्चय नै
**अस्य** = विराट्को
**त्वक्** = त्वगिन्द्रिय
**स्पर्शवाय्वोः च** = स्पर्श र वायुको
**सर्वमेधस्य** = सबै थरी यज्ञहरूको जन्मस्थान हो
**उद्भिज्जजातीनां** = पृथिवीभेदन गरेर निक्लने वृक्ष, लता इत्यादिको
**वा** = अथवा
**यैः** = जुन
**यज्ञः** = यज्ञ
**सम्भृतः** = सञ्चालन हुन्छ (ती वस्तुहरूको जन्मस्थान)
**रोमाणि एव** = विराट् पुरुषको रौँहरू नै हुन्

**वाक्यार्थ—** सम्पूर्ण यज्ञ, स्पर्श र वायु उहाँका त्वगिन्द्रियबाट निक्लेका हुन्। उहाँका रौँहरू पृथिवीभेदन गरेर निक्लने वृक्ष, लता आदि पदार्थहरूका जन्मस्थान हुन् अथवा रौँहरू ती पदार्थहरूका जन्मस्थान हुन् जसबाट यज्ञहरू सम्पन्न हुन्छन्।

**केशश्मश्रुनखान्यस्य शिलालोहाभ्रविद्युताम्।**

**बाहवो लोकपालानां प्रायशः क्षेमकर्मणाम्॥ ५॥**

पदार्थ—

**अस्य** = यी विराट् पुरुषको
**केशश्मश्रुनखानि** = केश, दाह्री र नङहरू
**शिलालोहाभ्रविद्युताम्** = ढुङ्गा, फलाम, बादल, बिजुली आदि वस्तुहरूको जनक हुन्
**प्रायशः** = धेरैजसो
**क्षेमकर्मणाम्** = कल्याण गर्ने
**लोकपालानां** = लोकपाल देवताहरूको
**बाहवः** = बाहु नै उत्पत्तिस्थान हो

**वाक्यार्थ—** उहाँका केश, दाह्री, जुँगा र नङबाट ढुङ्गा, फलाम, बादल, बिजुली आदि वस्तुहरू तथा भुजाहरूबाट प्रायः संसारलाई रक्षा गर्ने लोकपालहरू प्रकट भए।

**विक्रमो भूर्भुवः स्वश्च क्षेमस्य शरणस्य च।**
**सर्वकामवरस्यापि हरेश्चरण आस्पदम्॥ ६॥**

पदार्थ—

**विक्रमः** = भगवान्को हिँडाइ
**भूः भुवः स्वः च** = भूः भुवः स्वर्लोकको आश्रय हो
**हरेः** = हरि भगवान्को
**चरणे** = चरण नै
**क्षेमस्य** = वस्तुको रक्षा
**शरणस्य** = भयबाट रक्षा
**सर्वकामवरस्य अपि** = सम्पूर्ण कामना पूर्तिको पनि
**आस्पदम्** = आश्रय हुन्

**वाक्यार्थ—** उहाँको हिँडाइ भूः भुवः स्वः पनि तीनै लोकहरूको आश्रय हो। उहाँको चरणकमलले वस्तुको रक्षा गर्दछन्, भयलाई भगाइदिन्छन् तथा समस्त कामनाको पूर्ति गर्दछन्।

**अपां वीर्यस्य सर्गस्य पर्जन्यस्य प्रजापतेः।**
**पुंसः शिश्न उपस्थस्तु प्रजात्यानन्दनिर्वृतेः॥ ७॥**

पदार्थ—

**पुंसः** = भगवान्को
**शिश्नः** = लिङ्ग
**अपां** = जलको
**सर्गस्य** = सृष्टिको
**पर्जन्यस्य** = बादलको
**वीर्यस्य** = शक्तिको
**प्रजापतेः** = प्रजापतिको
**उपस्थः** = जननेन्द्रिय चाहिँ
**प्रजात्यानन्दनिर्वृतेः** = मैथुनजनित आनन्दको उद्गमस्थल हो

**वाक्यार्थ—** विराट्पुरुषको लिङ्ग, जल, वीर्य, सृष्टि, मेघ एवं प्रजापतिको र उहाँको जननेन्द्रिय मैथुनजनित आनन्दको उद्गमस्थल हो।

**पायुर्यमस्य मित्रस्य परिमोक्षस्य नारद।**
**हिंसाया निर्ऋतेर्मृत्योर्निरयस्य गुदं स्मृतः॥ ८॥**

पदार्थ—

| | | |
|---|---|---|
| **नारद** = हे नारद | **पायुः** = गुद इन्द्रिय उत्पत्तिस्थान हो त्यसै गरी | **निरयस्य** = नरकको पनि |
| **यमस्य** = यमराजको | **हिंसायाः** = हिंसाको | **गुदं** = गुदद्वार |
| **मित्रस्य** = मित्र देवताको | **निर्ऋतेः** = अलक्ष्मीको | **स्मृतः** = उत्पत्तिस्थल मानिन्छ |
| **परिमोक्षस्य** = मलोत्सर्जनको पनि | **मृत्योः** = मृत्युको | |

**वाक्यार्थ—** हे नारदजी ! विराट् पुरुषको गुदइन्द्रिय, यम, मित्र, र मलत्यागको उत्पत्तिस्थल हो। यस्तै गुदद्वार, हिंसा, अलक्ष्मी, मृत्यु र नरकको उत्पत्तिस्थल हो।

**पराभूतेरधर्मस्य तमसश्चापि पश्चिमः।**
**नाड्यो नदनदीनां च गोत्राणामस्थिसंहतिः॥ ९॥**

पदार्थ—

| | | |
|---|---|---|
| **पश्चिमः** = पीठभाग | **च अपि** = पनि (उत्पत्तिस्थल हो) | **च** = र |
| **पराभूतेः** = पराजयको | **नदनदीनां** = नदीनालाहरूको | **गोत्राणाम्** = पर्वतहरूको उत्पत्ति स्थान |
| **अधर्मस्य** = अधर्मको र | **नाड्यः** = नाडीहरू हुन् | **अस्थिसंहतिः** = हड्डीहरू हुन् |
| **तमसः** = अज्ञानको | | |

**वाक्यार्थ—** उहाँको पीठबाट पराजय, अधर्म र अज्ञानको उत्पत्ति भयो भने नाडीहरूबाट नदनदी र हाडहरूबाट पर्वतहरूको उत्पत्ति भयो।

**अव्यक्तरससिन्धूनां भूतानां निधनस्य च।**
**उदरं विदितं पुंसो हृदयं मनसः पदम्॥ १०॥**

पदार्थ—

| | | |
|---|---|---|
| **अव्यक्तरससिन्धूनां** = मूलप्रकृति रस र समुद्रहरूको | **उदरं** = पुरुषको पेट नै उत्पत्तिस्थान हो | **मनसः** = सारा प्राणीभित्र रहने मनको |
| **भूतानां** = प्राणीहरूको अनि | **पुंसः** = भगवान्‌को | **पदम्** = उत्पत्तिस्थानका रूपमा |
| **निधनस्य च** = मृत्युको पनि | **हृदयं** = हृदय नै | **विदितं** = जानिएको छ |

**वाक्यार्थ—** उहाँको उदर नै मूल प्रकृति, रस नामको धातु, समुद्र, समस्त प्राणीहरू र तिनीहरूको मृत्युको पनि उत्पत्तिस्थान हो। उहाँको हृदय मनको उत्पत्तिस्थान हो।

**धर्मस्य मम तुभ्यं च कुमाराणां भवस्य च।**
**विज्ञानस्य च सत्त्वस्य परस्यात्मा परायणम्॥ ११॥**

पदार्थ—

**मम** = म ब्रह्माको
**तुभ्यं** = तिमी नारदको
**धर्मस्य** = धर्मको
**कुमाराणां** = सनक आदि कुमारहरूको
**भवस्य च** = शङ्करजीको पनि त्यसै गरी
**विज्ञानस्य** = विशेष ज्ञानको
**सत्त्वस्य च** = अन्तःकरणको पनि
**परस्य** = परमपुरुष भगवान्को
**परायणम्** = एकमात्र आश्रय
**आत्मा** = आत्मा नै हो

**वाक्यार्थ–** हे नारद ! म, तिमी, धर्म, सनकादि, शङ्कर, विज्ञान, अन्तःकरण र परमपुरुष भगवान् सबैको आश्रय आत्मा नै हो।

**अहं भवान् भवश्चैव त इमे मुनयोऽग्रजाः।**
**सुरासुरनरा नागाः खगा मृगसरीसृपाः ॥ १२ ॥**
**गन्धर्वाप्सरसो यक्षा रक्षोभूतगणोरगाः।**
**पशवः पितरः सिद्धा विद्याध्राश्चारणा द्रुमाः ॥ १३ ॥**
**अन्ये च विविधा जीवा जलस्थलनभौकसः।**
**ग्रहर्क्षकेतवस्तारास्तडितः स्तनयित्नवः ॥ १४ ॥**
**सर्वं पुरुष एवेदं भूतं भव्यं भवच्च यत्।**
**तेनेदमावृतं विश्वं वितस्तिमधितिष्ठति ॥ १५ ॥**

**पदार्थ–**
**अहं** = म
**भवान्** = तिमी नारद
**भवः च** = शङ्करजी र
**ते** = तिम्रा
**अग्रजाः** = अग्रजहरू
**इमे मुनयः** = यी सनक आदि मुनिहरू (त्यसै गरी)
**सुरासुरनराः** = मान्छे, देवता, दैत्य
**नागाः** = नागहरू
**खगाः** = चराहरू
**मृगसरीसृपाः** = मृग र अन्य घस्रिने प्राणीहरू
**गन्धर्वाप्सरसः** = गन्धर्व रअप्सराहरू
**यक्षाः** = यक्षहरू
**रक्षोभूतगणोरगाः** = राक्षस, भूत, प्रेत र सर्पहरू
**पशवः** = पशुहरू
**पितरः** = पितृहरू
**सिद्धाः** = सिद्धहरू
**विद्याध्राः** = विद्याधरहरू
**चारणाः** = चरणहरू र
**द्रुमाः** = वृक्षप्रजातिहरू
**विविधाः** = धेरै प्रकारका
**अन्ये** = यीभन्दा अरू
**जीवाः च** = प्राणीहरू पनि
**जलस्थलनभौकसः** = जलचर स्थलचर र गगनगामी प्राणीहरू
**ग्रहर्क्षकेतवः** = ग्रह, नक्षत्र अनि धूमकेतुहरू
**ताराः** = ताराहरू
**तडितः** = बिजुलीहरू र
**स्तनयित्नवः** = बादलसमूह पनि (केवल विराट्मात्र हुन्)
**यत्** = जुन
**भूतं** = भइसक्यो
**भवत्** = हुँदैछ
**भव्यं** = हुनेवाला छ

**इदं** = यी
**सर्वं** = सम्पूर्ण वस्तुहरू
**पुरुष एव** = केवल विराट् पुरुष नै हुन्
**तेन** = त्यही परमपुरुषद्वारा
**इदम्** = यो
**विश्वं** = विश्व
**आवृतं** = व्याप्त भएको छ
**वितस्तिम्** = अझै व्यापक भएर हृदयदेशमा
**अधितिष्ठति** = बसेको छ

**वाक्यार्थ–** म, तिमी, दाइ सनकादि, शङ्कर, देवता, दैत्य, मनुष्य, नाग, पक्षी, मृग, गन्धर्व, अप्सरा, यक्ष, राक्षस, भूत, प्रेत, सर्प, पशु, पितृ, सिद्ध, विद्याधर, चारण, वृक्ष, नानाप्रकारका जीव, ग्रह, नक्षत्र, पुच्छ्रेतारा, तारा, विजुली र बादल, यी सब विराट्पुरुष नै हुन्। यो सम्पूर्ण विश्व जुन पहिले थियो, जुन अहिले छ र पछि हुनेवाला छ, उहाँ विराट्पुरुषद्वारा व्याप्त छ र अझैं व्यापक भएर हृदयमा बसेको छ।

**स्वधिष्ण्यं प्रतपन् प्राणो बहिश्च प्रतपत्यसौ।**
**एवं विराजं प्रतपंस्तपत्यन्तर्बहिः पुमान्॥ १६॥**

पदार्थ–
**असौ** = यो
**प्राणः** = सूर्य
**स्वधिष्ण्यं** = आफ्नो मण्डललाई
**प्रतपन्** = प्रकाशित गर्दै
**बहिः च** = बाह्यसंसारलाई पनि
**प्रतपति** = प्रकाशित गर्दछ
**एवं** = त्यसै गरी
**पुमान्** = परमपुरुष भगवान् पनि
**विराजं** = सम्पूर्ण विराट् विश्वविग्रहलाई
**प्रतपन्** = प्रकाशित गराउँदै
**अन्तर्बहिः** = भित्र र बाहिर
**प्रतपति** = प्रकाशित भइरहनुभएको छ

**वाक्यार्थ–** जसरी सूर्यले आफ्नो मण्डललाई प्रकाशित गर्दै बाह्य संसारलाई पनि प्रकाशित गर्छ र पनि प्रकाश फैलाउँछ त्यसै गरी पुराणपुरुष परमात्माले सम्पूर्ण विराट् विग्रहलाई प्रकाशित गर्दै भित्र, बाहिर सबैतिर प्रकाशित गर्दछ।

**सोऽमृतस्याभयस्येशो मर्त्यमन्नं यदत्यगात्।**
**महिमैष ततो ब्रह्मन् पुरुषस्य दुरत्ययः॥ १७॥**

पदार्थ–
**ब्रह्मन्** = हे नारद !
**सः** = उहाँ भगवान्
**अमृतस्य** = अमृतको र
**अभयस्य** = अभयप्रद मोक्षको पनि
**ईशः** = स्वामी हुनुहुन्छ
**यद्** = किनभने उहाँले
**मर्त्यम्** = क्षणिक र नाशवान्
**अन्नं** = कर्मफललाई
**अत्यगात्** = अतिक्रमण गर्नुभएको छ
**ततः** = त्यसै भएर
**पुरुषस्य** = भगवान्को
**एषः** = यो (विश्वात्मक भए तापनि संसारसँग सम्बन्धित नहुने खालको)
**दुरत्ययः** = पार पाउन र बुझ्न नसकिने
**महिमा** = महत्त्व रहेको छ

**वाक्यार्थ–** हे नारद ! उहाँ भगवान् केवल सर्वात्मकमात्र होइन अपितु अमृत र अभयप्रद मोक्षको पनि स्वामी हुनुहुन्छ किनभने उहाँले क्षणिक र नाशवान् कर्मफललाई अतिक्रमण गर्नुभएको छ। त्यसै भएर उहाँको विश्वात्मक भए तापनि संसारसँग सम्बन्धित नहुने खालको पार पाउन र बुझ्न नसकिने महत्त्व रहेको छ।

**पादेषु सर्वभूतानि पुंसः स्थितिपदो विदुः।**
**अमृतं क्षेममभयं त्रिमूर्ध्नोऽधायि मूर्धसु ॥ १८ ॥**

**पदार्थ–**

**स्थितिपदः** = सम्पूर्ण संसार जसको एकपाउजस्तो सानो अंशमात्र हो, त्यस्तो
**पुंसः** = परमपुरुष भगवान्को
**पादेषु** = अंशभूत लोकहरूमा
**सर्वभूतानि** = सम्पूर्ण प्राणीहरू
**विदुः** = रहेको बताइन्छ
**त्रिमूर्ध्नः** = शिर प्रदेशका मुख निधार र मस्तकमा क्रमशः जन, तप र सत्यलोक धारण गर्ने भगवान्का
**मूर्धसु** = मूर्धास्थानका तीन लोकहरूमा क्रमशः
**अमृतं** = जनलोकमा अमृत
**क्षेमम्** = तपोलोकमा कल्याण
**अभयं** = सत्यलोकमा अभय
**अधायि** = प्रतिष्ठित छ

**वाक्यार्थ–** सम्पूर्ण लोक भगवान्को एक अंशमा मात्र छ, ती अंशमात्र लोकहरूमा सम्पूर्ण प्राणीहरू निवास गर्दछन्। भूर्लोक, भुवर्लोक र स्वर्लोकभन्दा माथि महर्लोक छ, त्योभन्दा पनि माथि जन, तप र सत्यलोक छन्, ती लोकहरूमा क्रमशः अमृत, क्षेम एवं अभयको नित्य निवास छ।

**पादास्त्रयो बहिश्चासन्नप्रजानां य आश्रमाः।**
**अन्तस्त्रिलोक्यास्त्वपरो गृहमेधोऽबृहद्व्रतः ॥ १९ ॥**

**पदार्थ–**

**ये** = जुन
**त्रयः पादाः** = भगवान्का ब्रह्मचारी वानप्रस्थ र संन्यासरूप तीन पाउजस्ता
**अप्रजानां** = पुत्र परिवारले रहित
**आश्रमाः** = आश्रमहरू छन् ती आश्रमहरू
**बहिः च** = संसारको भूःभुव र स्वर्गको त्रिविध गतिभन्दा बाहिर क्रमशः जन, तप र सत्यलोकमा र
**आसन्** = हन्छन्
**अपरः** = चौथो पाउस्वरूप
**अबृहद्व्रतः** = ब्रह्मचर्यको त्यति पालन नगर्ने
**गृहमेधः** = गृहस्थ
**तु** = चाहिँ
**अन्तः त्रिलोक्याः** = भूः, भुव र स्वर्गको त्रिलोकीमा घुमिरहन्छ

**वाक्यार्थ–** जन, तप र सत्य यी तीन लोकहरूमा ब्रह्मचारी, वानप्रस्थ र संन्यासी निवास गर्दछन्। दीर्घकालीन ब्रह्मचर्यले रहित गृहस्थहरू चाहिँ भूर्लोक, भुवर्लोक र स्वर्लोक भित्र नै निवास गर्दछन्।

**सृती विचक्रमे विश्वङ् साशनानशने उभे।**

**यदविद्या च विद्या च पुरुषस्तूभयाश्रयः॥ २०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **विश्वङ्** = जीवात्मा | **विचक्रमे** = आश्रय लिन्छ | **पुरुषः तु** = भगवान्‌चाहिँ |
| **साशनानशने** = भोग र | **यत्** = जुन दुईथरी बाटोमध्ये | **उभयाश्रयः** =यी दुबै बाटोहरूका |
| अपवर्गको प्राप्ति साधन भनिने | **अविद्या** = अविद्यामार्ग | आश्रय हुनुहुन्छ |
| **उभे** = दुईथरी | **विद्या च** = उपासनाप्राप्य | |
| **सृती** = बाटोहरूलाई | विद्यामार्ग भनिन्छ | |

**वाक्यार्थ–** शास्त्रमा दुई प्रकारका बाटाहरू बताइएका छन्- एक अविद्यारूप कर्ममार्ग जुन सकाम पुरुषका लागि हो। अर्को उपासनारूप विद्याको मार्ग जुन निष्काम पुरुषका लागि हो। मुनष्य यी दुइटा मार्गमध्ये कुनै एउटा मार्गको आश्रय लिएर भोगप्राप्त गराउने अथवा मोक्ष प्राप्त गराउने मार्गबाट यात्रा गर्दछ। किन्तु पुरुषोत्तम भगवान् दुबै मार्गका आधार हुनुहुन्छ।

**यस्मादण्डं विराड् जज्ञे भूतेन्द्रियगुणात्मकः।**

**तद् द्रव्यमत्यगाद्विश्वं गोभिः सूर्य इवातपन्॥ २१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सूर्यः** = भगवान् नारायणले | **अण्डं** = ब्रह्माण्ड र | अनि उहाँ भगवान्‌ले |
| **गोभिः** = आफ्ना किरणहरूद्वारा | **भूतेन्द्रियगुणात्मकः** = | **तद्** = त्यो |
| **विश्वं** = संसारलाई | पञ्चमहाभूत अनि तत्सम्बन्धी | **द्रव्यम्** = द्रव्यमय विराट् देहलाई |
| **आतपन् इव** = संसारभन्दा पृथक् | इन्द्रिय र गुणले युक्त | **अत्यगात्** = अतिक्रमण गर्नुभयो |
| रहेर पनि प्रकाशित गरेझैँ | **विराट्** = विराट् देह पनि | अथवा स्थूल संसार भन्दा पृथक् |
| **यस्मात्** = जुन परमपुरुषबाट | **जज्ञे** = जन्मियो | रहनुभयो |

**वाक्यार्थ–** जसरी सूर्य आफ्नो किरणले सबलाई प्रकाशित गर्दै सब पदार्थहरूबाट अलग हुनुहुन्छ, त्यसै गरी जुन परमात्माबाट यो अण्डको, पञ्चभूत, एकादश इन्द्रिय र गुणमय विराट्‌को उत्पत्ति भयो, ती परमात्मा आफूबाट बनेका ती सम्पूर्ण वस्तुहरूभित्र र ती वस्तुहरूको रूपमा रहेर पनि उहाँ ती वस्तुहरूदेखि सर्वथा पृथक् हुनुहुन्छ।

**यदास्य नाभ्यान्नलिनादहमासं महात्मनः।**

**नाविदं यज्ञसम्भारान् पुरुषावयवादृते॥ २२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यदा**= जुन समयमा | **अस्य** = विराट्‌पुरुषको | **नलिनात्** = कमलबाट |
| **महात्मनः** = विश्वात्मा | **नाभ्यात्** = नाभिमा उत्पन्न | **अहम्** = म |

**आसं** = जन्मैं (त्यस समयमा)
**पुरुषावयवात् ऋते** = विराट्‌कै शारीरिक अवयवभन्दा भिन्न
**यज्ञसम्भारान्** = यज्ञसम्बन्धी द्रव्यहरू
**न अविदं** = जान्न सकिनँ

**वाक्यार्थ–** जुन समयमा यस विराट्‌पुरुषको नाभिकमलबाट मेरो जन्म भएको थियो त्यस समयमा विराट् पुरुषको अङ्गदेखि अतिरिक्त मलाई कुनै पनि यज्ञको सामग्री मिलेन।

**तेषु यज्ञस्य पशवः सवनस्पतयः कुशाः।**
**इदं च देवयजनं कालश्चोरुगुणान्वितः॥ २३॥**

पदार्थ–

**तेषु** = ती अङ्गहरूमा नै
**यज्ञस्य** = यज्ञका
**पशवः** = आहवनीय पशुहरू
**सवनस्पतयः** = पशुलाई बाँध्ने खयरको वृक्षबाट बनेका यूपस्तम्भहरू (अनि)
**कुशाः** = कुशहरू त्यसै गरी
**इदं** = यो
**देवयजनं च** = यज्ञभूमि र
**उरुगुणान्वितः** = उत्तम गुणहरूले युक्त भएको
**कालः च** = समय पनि मैले कल्पना गरैँ

**वाक्यार्थ–** तब मैले उहाँको अङ्गमा नै यज्ञको पशु, पशुलाई बाँध्ने यूपस्तम्भ, कुश, यज्ञभूमि र यज्ञयोग्य उत्तमकालको कल्पना गरैँ।

**वस्तून्योषधयः स्नेहा रसलोहमृदो जलम्।**
**ऋचो यजूंषि सामानि चातुर्होत्रं च सत्तम॥ २४॥**
**नामधेयानि मन्त्राश्च दक्षिणाश्च व्रतानि च।**
**देवतानुक्रमः कल्पः सङ्कल्पस्तन्त्रमेव च॥ २५॥**
**गतयो मतयः श्रद्धा प्रायश्चित्तं समर्पणम्।**
**पुरुषावयवैरेते सम्भाराः सम्भृता मया॥ २६॥**

पदार्थ–

**सत्तम** = हे नारद !
**वस्तूनि**= यज्ञमा आवश्यक भाँडाकुँडा
**ओषधयः** = जौ आदि विशेष द्रव्यहरू
**स्नेहाः** = घ्यू, दुध आदि तरल पदार्थ
**रसलोहमृदः** = छ थरी रस, फलाम र माटो
**जलम्** = पानी (त्यसै गरी)
**ऋचः** = अध्वर्युको ऋग्वेद
**यजूंषि** = होताको यजुर्वेद
**सामानि** = उद्‌गाताको सामवेद
**चातुर्होत्रं** = आचार्य, अध्वर्यु उद्‌गाता र होताद्वारा गरिने कर्मात्मक यज्ञहरूको
**च** = पनि
**नामधेयानि** = ज्योष्टिोम आदि यज्ञका नाम

**मन्त्राः** = स्वाहाकार आदि मन्त्रहरू
**दक्षिणाः** = दक्षिणा
**व्रतानि** = व्रत
**देवतानुक्रमः** = देवताका नाम
**कल्पः** = कर्मपद्धति ग्रन्थ
**सङ्कल्पः** = सङ्कल्प
**च** = र
**तन्त्रम्** = तन्त्र
**गतयः** = यज्ञभित्र पर्ने अवान्तर विधानहरू
**मतयः** = देवताका ध्यानहरू
**प्रायश्चित्तं** = प्रायश्चित्त कर्म
**समर्पणम्** = कर्मसमर्पण समेत
**एते** = यी पूर्वोक्त
**सम्भाराः** = यज्ञमा आवश्यक वस्तुहरू
**मया** = मैले
**पुरुषावयवैः** =विराट् पुरुषको अङ्गबाट
**एव** = नै
**सम्भृताः** = बनाएँ

**वाक्यार्थ—** ऋषिश्रेष्ठ ! यज्ञका लागि आवश्यक पात्र आदि वस्तुहरू जौ, चामल,आदि औषधिहरू घृत आदि स्नेहपदार्थ, छ रस, फलाम, माटो, जल, ऋक्, यजु, साम, चतुर्होत्र, यज्ञका नाम, मन्त्रहरू, दक्षिणा, व्रत, देवताका नाम, पद्धतिग्रन्थ, सङ्कल्प, तन्त्र, गति, मति, श्रद्धा, प्रायश्चित्त र समर्पण यी समस्त यज्ञसामग्री मैले विराट् पुरुषकै अङ्गबाट एकत्रित गरेँ।

**इति सम्भृतसम्भारः पुरुषावयवैरहम्।**
**तमेव पुरुषं यज्ञं तेनैवायजमीश्वरम्॥ २७॥**

पदार्थ—

**इति** = यसरी
**सम्भृतसम्भारः** = यज्ञसामग्रीहरूको कल्पना गर्ने
**पुरुषावयवैः** = विराट्का अङ्गहरूबाट
**अहम्** = मैले
**तेन एव**= ती सामग्रीहरूद्वारा नै
**तम्** = उही
**यज्ञपुरुषं** = यज्ञस्वरूप हुनुभएका
**ईश्वरम् एव** = भगवान्लाई नै
**अयजम्** = यज्ञद्वारा पूजा गरेँ

**वाक्यार्थ—** यसप्रकार विराट् पुरुषकै अङ्गबाट सम्पूर्ण सामग्री सङ्ग्रह गरेर मैले तिनै सामग्रीद्वारा ती यज्ञस्वरूप परमात्माको यज्ञद्वारा पूजा गरेँ।

**ततस्ते भ्रातर इमे प्रजानां पतयो नव।**
**अयजन् व्यक्तमव्यक्तं पुरुषं सुसमाहिताः॥ २८॥**

पदार्थ—

**ततः** = त्यसपछि
**ते** = तिमी नारदका
**इमे** = यी
**प्रजानां** = प्रजाहरूका
**पतयः** = पति भएका
**नव** = नौजना
**भ्रातरः** =भाइहरूले
**सुसमाहिताः** = संयमित भएर
**व्यक्तम्** = विराट्को रूपमा व्यक्त र
**अव्यक्तं** = अन्तर्यामी रूपमा अव्यक्त
**पुरुषं** = भगवान्को
**अयजन्** = यज्ञ गरे

**वाक्यार्थ—** त्यसपछि तिम्रा यी नौभाइ प्रजापतिहरूले आफ्नो चित्तलाई पूर्णरूपले समाहित गरेर विराट् एवं अन्तर्यामी रूपले स्थित ती पुरुषको आराधना गरे।

**ततश्च मनवः काले ईजिरे ऋषयोऽपरे।**
**पितरो विबुधा दैत्या मनुष्याः क्रतुभिर्विभुम्॥ २९॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **ततः च** = त्यसपछि | **पितरः** = पितृहरूले | **विभुम्** = सर्वव्यापक |
| **काले** = समय-समयमा | **विबुधाः** = देवताहरूले | परमात्मालाई उद्देश्य बनाई |
| **मनवः** = मनुहरूले | **दैत्याः** = दैत्यहरूले | **ईजिरे** = यज्ञ गरे |
| **अपरे** = अरू पनि | **मनुष्याः** = मनुष्यहरूले पनि | |
| **ऋषयः** = ऋषिहरूले | **क्रतुभिः** = यज्ञहरूद्वारा | |

**वाक्यार्थ—** यसपछि समयसमयमा मनु, ऋषि, पितृ, देवता, दैत्य र मनुष्यहरूले यज्ञद्वारा भगवान्को आराधना गरे।

**नारायणे भगवति तदिदं विश्वमाहितम्।**
**गृहीतमायोरुगुणः सर्गादावगुणः स्वतः॥ ३०॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **तत्** = त्यसै भएर (हे नारद) | **सर्गादौ**= सृष्टि आदि गर्दा | **नारायणे** = नारायणमा |
| **स्वतः** = आफूमात्रै हुँदा | **गृहीतमायोरुगुणः** = मायाका धेरै | **इदं** = यो सम्पूर्ण |
| **अगुणः** = गुणरहित हुने | गुणहरू स्वीकार गर्ने | **विश्वम्** = चराचर जगत् |
| | **भगवति** = भगवान् | **अहितम्** = अडिएको छ |

**वाक्यार्थ—** हे नारद ! आफूमात्रै हुँदा गुणरहित हुने सृष्टि आदि गर्दा मायाका धेरै गुणहरू स्वीकार गर्ने भगवान् नारायणमा यो सम्पूर्ण चराचर जगत् अडिएको छ।

**सृजामि तन्नियुक्तोऽहं हरो हरति तद्वशः।**
**विश्वं पुरुषरूपेण परिपाति त्रिशक्तिधृक्॥ ३१॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **अहं** = म ब्रह्मा | **हरः** = रुद्र पनि | **पुरुषरूपेण** = विष्णुको रूपमा |
| **तन्नियुक्तः** = भगवान्कै | **हरति** = संहार गर्नुहुन्छ | **विश्वं** = संसारलाई |
| प्रेरणानुसार | **त्रिशक्तिधृक्** = सृष्टि, स्थिति र | **परिपाति** = पालन गर्नुहुन्छ |
| **सृजामि** = सृष्टि गर्दछु | संहारका तीन शक्तिहरू धारण | |
| **तद्वशः** = उहाँकै प्रेरणानुसार | गर्ने भगवान् नै | |

**वाक्यार्थ–** उहाँकै प्रेरणाले म यो संसारको रचना गर्दछु। उहाँकै अधीन भएर रुद्र यसको संहार गर्नुहुन्छ अनि सृष्टि, स्थिति र संहारका तीन शक्तिहरू धारण गर्ने भगवान् नै विष्णुको रूपमा संसारलाई पालन गर्नुहुन्छ।

**इति तेऽभिहितं तात यथेदमनुपृच्छसि ।**

**नान्यद् भगवतः किञ्चिद् भाव्यं सदसदात्मकम् ॥ ३२ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **तात** = हे बाबु नारद | **ते** = तिमीलाई | **सदसदात्मकम्** = सत्य या असत्यस्वरूप |
| **यथा** = जुन-जुन | **अभिहितं** = बताएँ | **किञ्चित्** = कुनै पनि वस्तु |
| **इदम्** = यी प्रश्नहरू | **भगवत ः** = भगवान्‌देखि बाहेक | **न भाव्यं** = हुनै सक्दैन |
| **अनुपृच्छसि** = सोध्दथ्यौ तिनका | **अन्यत्** = अरू | |
| **इति** = यी उत्तरहरू | | |

**वाक्यार्थ–** हे बाबु नारद ! तिमीले मसँग जुन कुरा सोधेका थियौ त्यसको उत्तर मैले तिमीलाई दिएँ। कुनै पनि वस्तु चाहे त्यो भावरूप होस्, चाहे अभावरूप होस्, त्यो वस्तु भगवान्‌देखि भिन्न हुनै सक्दैन।

**न भारती मेऽङ्ग मृषोपलक्ष्यते**

**न वै क्वचिन्मे मनसो मृषा गतिः ।**

**न मे हृषीकाणि पतन्त्यसत्पथे**

**यन्मे हृदौत्कण्ठ्यवता धृतो हरिः ॥ ३३ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अङ्ग** = हे बाबु | **क्वचित्** = कहीं पनि | **न पतन्ति** = प्रवृत्त हुँदैनन् अनि |
| **मे** = मेरो | **मृषा** = व्यर्थमा | **औत्कण्ठ्यवता** = उत्कण्ठाले युक्त भएको |
| **भारती** = वचन | **गतिः** = प्रवृत्ति हुँदैहुँदैन | **हृदा** = हृदयले |
| **मृषा** = असत्य | **मे** = मेरा | **हरिः** = भगवान् नारायणलाई |
| **न उपलक्ष्यते** = हुन सक्दैन | **हृषीकाणि** = यन्द्रियहरू | **धृतः** = धारण गरिएको छ |
| **मे** = मेरो | **असत्पथे** = असत् मार्गमा | |
| **मनसः** = मनको | **वै** = निश्चय नै | |

**वाक्यार्थ–** प्रिय नारद ! म प्रेमपूर्ण एवं उत्कण्ठित हृदयले सधैँ भगवान्‌को ध्यानमा मग्न रहन्छु, त्यसकारण मेरो वाणी कहिल्यै पनि असत्य हुन सक्दैन, मेरो मनले कहिल्यै पनि असत्य सङ्कल्प गर्दैन, मेरा इन्द्रियहरू कहिल्यै पनि मर्यादाको उल्लङ्घन गरेर कुमार्गमा जाँदैनन्।

**सोऽहं समाम्नायमयस्तपोमयः**
**प्रजापतीनामभिवन्दितः पतिः।**
**आस्थाय योगं निपुणं समाहित-**
**स्तं नाध्यगच्छं यत आत्मसम्भवः॥ ३४॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **सः अहं** = त्यस्तो खालको म | **पतिः** = स्वामी हूँ तथापि | **यतः** = जहाँबाट |
| **समाम्नायमयः** = वेदस्वरूप | **निपुणं** = निष्ठापूर्वक | **आत्मसम्भवः** = म जन्मेँ |
| **तपोमयः** = तपस्यामय र | **समाहितः** = एकचित्त भएर | **तं** = त्यो परमात्मालाई |
| **प्रजापतीनाम्**= प्रजापतिहरूमध्ये | **योगं** = योगको | **न अध्यगच्छं** = जान्न सकिन |
| **अभिवन्दितः** = सर्वश्रेष्ठ | **आस्थाय** = अनुष्ठान गरेर पनि | |

**वाक्यार्थ—** म वेदमूर्ति छु। मेरो जीवन तपस्यामय छ। ठुलाठुला प्रजापतिहरू मेरो वन्दना गर्दछन्। म उनीहरूको स्वामी हुँ। मैले पहिले निष्ठापूर्वक योगको अनुष्ठान गरेको थिएँ। तर पनि मैले आफ्नो मूलकारण परमात्माको स्वरूपलाई जान्न सकिनँ।

**नतोऽस्म्यहं तच्चरणं समीयुषां**
**भवच्छिदं स्वस्त्ययनं सुमङ्गलम्।**
**यो ह्यात्ममायाविभवं स्म पर्यगाद्**
**यथा नभः स्वान्तमथापरे कुतः॥ ३५॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **अहं** = म ब्रह्मा | **तच्चरणं** = भगवान्को चरणलाई | **आत्ममायाविभवं** = आफ्नो महिमाको विस्तारलाई |
| **समीयुषां** = शरणागतहरूको | **नतः अस्मि** = नमस्कार गर्दछु | **हि** = निश्चय नै |
| **भवच्छिदं** = जन्म र मृत्युको चक्कर छुटाइदिने | **यः** = जुन भगवान्ले | **पर्यगात् स्म** = जान्न सक्नुभएन |
| **स्वस्त्ययनं** = कल्याणमय | **यथा** = जसरी | **अथ** = भने |
| **सुमङ्गलम्** = सेवा गर्न योग्य | **नभः** = आकाशले | **अपरे** = अरू देवताहरूले |
| | **स्वान्तम्** = आफ्नो अन्त्यलाई (त्यसै गरी) | **कुतः** = कसरी जानून् |

**वाक्यार्थ—** म त परममङ्गलमय एवं शरण आएका भक्तहरूलाई जन्म र मृत्युबाट छुटाइदिने परमकल्याणमय भगवान्को चरणमा नै नमस्कार गर्दछु। उहाँको मायाको शक्ति अपार छ। जसरी

आकाशले आफ्नो अन्तलाई जान्दैन त्यसै गरी उहाँ पनि आफ्नो महिमाको विस्तारलाई जान्नुहुन्न। यस परिस्थितिमा अरूहरूले उहाँको महिमाको पार कसरी पाउने ?

**नाहं न यूयं यदृतां गतिं विदु-**
**र्न वामदेवः किमुतापरे सुराः।**
**तन्मायया मोहितबुद्धयस्त्विदं**
**विनिर्मितं चात्मसमं विचक्ष्महे॥ ३६॥**

पदार्थ—

| | | |
|---|---|---|
| **यदृतां** = जुन भगवान्को पारमार्थिक सद्रूपतायुक्त | **अपरे** = अरू | **मोहितबुद्धयः** = बुद्धि भ्रान्त भएका हामीहरू |
| **गतिं** = स्वरूपलाई | **सुराः** = देवताहरू | **विनिर्मितं** = परमात्माले बनाएको |
| **न अहं** = न मैले जान्दछु | **किम् उत** = के गरी | **इदं** = यस संसारलाई |
| **न यूयं** = न तिमीहरू जान्दछौ | **विदुः** = बुझ्नन् | **आत्मसमं** = आफ्नो क्षमता-अनुरूप |
| **न वामदेवः** = न वामदेव (शङ्करजी) बुझ्दछन् भने | **तन्मायया** = त्यही भगवान्को मायाले | **विचक्ष्महे** = अड्कल लगाउँछौँ |

**वाक्यार्थ—** म, मेरा छोरा तिमीहरू र भगवान् शङ्करजी पनि उहाँको सत्यस्वरूपलाई जान्न सक्दैनन् भने अरू देवताहरूले उहाँलाई कसरी जान्न सक्ने ? हामीहरू सबै यसप्रकार मोहित भइरहेका छौँ कि उहाँको मायाद्वारा बनेको जगत्लाई ठीकसँग बुझ्न सक्दैनौँ। आ-आफ्नो बुद्धिको अनुसार केवल अनुमानमात्र गर्दछौँ।

**यस्यावतारकर्माणि गायन्ति ह्यस्मदादयः।**
**न यं विदन्ति तत्त्वेन तस्मै भगवते नमः॥ ३७॥**

पदार्थ—

| | | |
|---|---|---|
| **अस्मदादयः** = हामीहरूजस्ता | **गायन्ति** = गाउँदछन् (तथापि) | **भगवते** = भगवान्लाई |
| **हि** = केवल | **यं** = जुन भगवान्लाई | **नमः** = नमस्कार छ |
| **यस्य** = जुन भगवान्को | **तत्त्वेन** = यथार्थरूपमा | |
| **अवतारकर्माणि** = अवतार चरित्रहरू | **न विदन्ति** = जान्दैनन् | |
| | **तस्मै** = त्यस्ता | |

**वाक्यार्थ—** हामीहरू केवल जसको अवतारको लीलाहरूको गान गर्दछौँ, उहाँको तत्त्वलाई जान्न सक्दैनौँ। त्यस्ता भगवान्को श्रीचरणमा म नमस्कार गर्दछु।

**स एष आद्यः पुरुषः कल्पे कल्पे सृजत्यजः।**

**आत्मात्मन्यात्मनात्मानं स संयच्छति पाति च॥ ३८॥**

पदार्थ—

| | | |
|---|---|---|
| **अजः** = नजन्मने | **कल्पे कल्पे** = हरेक कल्पहरूमा | **पाति** = रक्षा गर्नुहुन्छ र |
| **आत्मा** = आत्मस्वरूप | **आत्मनि** = आफूमा | **संयच्छति च** = संहार पनि गर्नुहुन्छ |
| **सः एषः** = त्यस्ता अज्ञेय | **आत्मना** = आफूद्वारा | |
| **आद्यः** = आदि | **आत्मानं** = आफैंलाई | |
| **पुरुषः** = पुरुष परमात्माले | **सृजति** = बनाउनुहुन्छ | |

**वाक्यार्थ—** उहाँ अजन्मा एवं पुरुषोत्तम हुनुहुन्छ। प्रत्येक कल्पमा उहाँ स्वयं आफूमा आफ्नै सृष्टि गर्नुहुन्छ, रक्षा गर्नुहुन्छ र संहार पनि गर्नुहुन्छ।

**विशुद्धं केवलं ज्ञानं प्रत्यक् सम्यगवस्थितम्।**
**सत्यं पूर्णमनाद्यन्तं निर्गुणं नित्यमद्वयम्॥ ३९॥**

पदार्थ—

| | | |
|---|---|---|
| **विशुद्धं** = मायालेश रहित | **अवस्थितम्** = बस्ने | **नित्यम्** = सनातन (स्वगत-सजातीय विजातीयभेदशून्य भगवान् हुनुहुन्छ) |
| **केवलं** = केवल | **सत्यं** = सत्यस्वरूप | |
| **अद्वयम्** = अद्वैत | **पूर्णम्** = आफैंमा पूर्ण | |
| **ज्ञानं** = स्वप्रकाश ज्ञानस्वरूप | **अनाद्यन्तं** = आदि र अन्त्य नभएका | |
| **प्रत्यक्सम्यक्** = अन्तरात्माको रूपमा राम्रोसँग | **निर्गुणं** = गुणरहित अनि | |

**वाक्यार्थ—** उहाँ मायाको लेशले रहित केवल ज्ञानस्वरूप हुनुहुन्छ र अन्तरात्माको रूपमा एकरस स्थित हुनुहुन्छ। उहाँ तीनै कालमा सत्य र परिपूर्ण हुनुहुन्छ। उहाँको आदि र अन्त छैन। उहाँ तीनै गुणहरूले रहित, सनातन एवं अद्वितीय हुनुहुन्छ।

**ऋषे विदन्ति मुनयः प्रशान्तात्मेन्द्रियाशयाः।**
**यदा तदेवासत्तर्कैस्तिरोधीयेत विप्लुतम्॥ ४०॥**

पदार्थ—

| | | |
|---|---|---|
| **ऋषे** = हे नारद ऋषि | **विदन्ति** = यस्तो भगवान्को स्वरूपलाई जान्दछन् तर | **असत्तर्कैः** = कुतर्कहरूबाट |
| **प्रशान्तात्मेन्द्रियाशयाः** = शरीर, इन्द्रिय र मनलाई संयमित गर्ने | **यदा** = जुन समयमा | **विप्लुतम्** = ढाकिन्छ भने |
| **मुनयः** = मुनिहरूले | **तत् एव**= त्यही आत्मतत्त्व | **तिरोधीयेत** = हराउँछ |

**वाक्यार्थ—** नारद ! महात्माहरू जुनसमय आफ्नो अन्तःकरण, इन्द्रिय र शरीरलाई शान्त गर्नुहुन्छ, त्यस समयमा उहाँहरू परमात्माको साक्षात्कार गर्नुहुन्छ। परन्तु जब असत् पुरुषहरू कुतर्कहरूद्वारा भगवान्लाई ढाकिदिन्छन् त्यस समयमा उहाँको दर्शन हुन सक्दैन।

**आद्योऽवतारः पुरुषः परस्य**
**कालः स्वभावः सदसन्मनश्च ।**
**द्रव्यं विकारो गुण इन्द्रियाणि**
**विराट् स्वराट् स्थास्नु चरिष्णु भूम्नः ॥ ४१ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **परस्य** = परमात्माको | **सदसत्** = कार्यकारणात्मिका प्रकृति | **विराट्**= ब्रह्माण्ड शरीर |
| **आद्यः** = पहिलो | **मनः च** = मन पनि | **स्वराट्** = ब्रह्माण्डको अभिमानी |
| **अवतारः** = अवतार | **द्रव्यं** = पञ्चमहाभूत | **स्थास्नु** = स्थावर र |
| **पुरुषः** = विराट् पुरुष हो (त्यसै गरी) | **विकारः** = अहङ्कार | **चरिष्णु** = जङ्गम प्राणीहरू पनि |
| **कालः** = काल | **गुणः** = सत्त्व आदि तीन गुण | **भूम्नः** = सर्वव्यापक भगवान्कै अनन्तरूप हुन् |
| **स्वभावः** = स्वभाव | **इन्द्रियाणि** = इन्द्रियहरू | |

**वाक्यार्थ–** परमात्माको पहिलो अवतार विराट् पुरुष हो, त्यसदेखि अतिरिक्त कालस्वभाव, कार्य, कारण, मन, पञ्चभूत, अहङ्कार, तीन गुण, इन्द्रियहरू, ब्रह्माण्ड शरीर, उसको अभिमानी स्वराट्, स्थावर र जङ्गम जीव यी सबै अनन्त भगवान्कै रूप हुन्।

**अहं भवो यज्ञ इमे प्रजेशा**
**दक्षादयो ये भवदादयश्च ।**
**स्वर्लोकपालाः खगलोकपाला**
**नृलोकपालास्तललोकपालाः ॥ ४२ ॥**
**गन्धर्वविद्याधरचारणेशा**
**ये यक्षरक्षोरगनागनाथाः ।**
**ये वा ऋषीणामृषभाः पितॄणां**
**दैत्येन्द्रसिद्धेश्वरदानवेन्द्राः ॥**
**अन्ये च ये प्रेतपिशाचभूत**
**कूष्माण्डयादोमृगपक्ष्यधीशाः ॥ ४३ ॥**
**यत्किञ्च लोके भगवन्महस्व–**

**दोजःसहस्वद्बलवत्क्षमावत् ।**

**श्रीह्रीविभूत्यात्मवदद्भुतार्णं**

**तत्त्वं परं रूपवदस्वरूपम् ॥ ४४ ॥**

**पदार्थ–**

**अहं** = म ब्रह्मा
**भवः** = शङ्करजी
**यज्ञः** = विष्णुजी
**इमे** = यी
**दक्षादयः** = दक्ष आदि
**प्रजेशाः** = प्रजापतिहरू
**भवदादयः** = तिमीहरू
**ये च** = तिमीहरूजस्ता अरू पनि
**स्वर्लोकपालाः** = स्वर्गलोकका स्वामीहरू
**खगलोकपालाः** = पक्षिराजहरू
**नृलोकपालाः** = पृथिवीका राजाहरू
**तललोकपालाः** = तल आदि लोकका राजाहरू
**गन्धर्वविद्याधरचारणेशाः** = गन्धर्व, विद्याधर र चारणका स्वामीहरू
**ये** = जो
**यक्षरक्षोरगनागनाथाः** = यक्ष, राक्षस, सर्प र नागका पनि मालिक छन्
**वा** = अथवा
**ये** = जो
**ऋषीणाम्** = ऋषिहरूका र
**पितृणां** = पितृहरूका
**ऋषभाः** = अधिपतिहरू अनि
**दैत्येन्द्रसिद्धेश्वरदानवेन्द्राः** = दैत्य, दानव र सिद्धका अधिनायकहरू तथा
**अन्ये च** = अरू पनि
**ये** = जो
**प्रेतपिशाचभूतकूष्माण्डयादोमृग-पक्ष्यधीशाः** = प्रेत, पिशाच, भूत, कुष्माण्ड, जलजन्तु, मृग र पक्षीका स्वामीहरू समेत भगवद्रूप नै हुन्
**लोके** = संसारमा
**यत्किम् च** = जुनसुकै कुरा पनि
**भगवत्** = ऐश्वर्यशाली
**महस्वत्** = कान्तियुक्त
**ओजःसहस्वबद्** = इन्द्रिय तथा मानसबलयुक्त
**बलवत्** = शारीरिक बलशाली
**क्षमावत्** = क्षमावान्
**श्रीह्रीविभूत्यात्मवत्** = सौन्दर्य, लज्जा, विभूतियुक्त
**अद्भुतार्णं** = अद्भुत वर्णवाला अनि
**रूपवद्** = रूपयुक्त
**अस्वरूपम्** = रूपहीन पनि समस्त प्राणीहरू
**परं तत्त्वं** = भगवत्स्वरूप नै हुन्

**वाक्यार्थ–** म, शङ्कर, विष्णु, दक्ष आदि यी प्रजातिहरू तिमी र तिमीजस्ता अन्य भक्तजन, स्वर्गलोकका रक्षक, पक्षीहरूका राजा, मनुष्यलोकका राजा, तलतिरका लोकहरूका राजा, गन्धर्व, विद्याधर, चारणका स्वामीहरू, यक्ष, राक्षस, सर्प, नागका स्वामी, महर्षि, पितृपति, दैत्येन्द्र, सिद्धेश्वर, दानवराज अरू पनि पिशाच, प्रेत, भूत, कुष्माण्ड, जलजन्तु, मृग र पक्षीहरूका स्वामी एवं संसारका अरू पनि वस्तुहरू, ऐश्वर्य, तेज, इन्द्रियबल, शरीरबल र क्षमाले युक्त छन् अथवा अरू जुन वस्तुहरू विशेष सौन्दर्य, लज्जा, वैभव र विभूतिले युक्त छन् अनि अरू जति पनि पदार्थहरू अद्भुत वर्णयुक्त रूपवान् अथवा अरूप छन् ती सम्पूर्ण वस्तुहरू परमतत्त्वमय भगवत्स्वरूप हुन्।

**प्राधान्यतो यानृष आमनन्ति**

लीलावतारान् पुरुषस्य भूम्नः ।
आपीयतां कर्णकषायशोषा-
ननुक्रमिष्ये त इमान् सुपेशान् ॥ ४५ ॥

पदार्थ–

**भूम्नः** = सर्वव्यापक
**पुरुषस्य** = परमात्माको
**यान्** = जुन
**लीलावतारान्** = अवतार चरित्रहरू
**प्राधान्यतः** = प्रमुख रूपमा
**आमनन्ति** = बनाउँदछन्
**ॠषे** = हे नारद !
**ते** = तिम्रो लागि
**कर्णकषायशोषान्** = कानका कुसंस्कारहरूलाई नाश गर्ने
**सुपेशान्** = सुमधुर
**इमान्** = यी भगवत् चरित्रहरू
**अनुक्रमिष्ये** = क्रमैसँग सुनाउँछु
**आपीयतां** = सावधान भएर पान गर

**वाक्यार्थ–** हे नारद ! यसदेखि अतिरिक्त परमपुरुष परमात्माको परमपवित्र एवं प्रधान लीलावतार शास्त्रमा वर्णित छन् तिनको म क्रमशः वर्णन गर्दछु, ती चरित्रहरू सुन्नमा अत्यन्त मधुर र कानका दोषहरूलाई दूर गर्ने खालका छन् तिमी सावधान भएर सुन।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां द्वितीयस्कन्धे**

**षष्ठोऽध्यायः ॥ ६ ॥**

# अथ सप्तमोऽध्यायः

## भगवान्का लीलावतारहरूको कथा

**ब्रह्मोवाच** (ब्रह्माजीले भन्नुभयो)

**यत्रोद्यतः क्षितितलोद्धरणाय बिभ्रत्**
**क्रौडीं तनुं सकलयज्ञमयीमनन्तः।**
**अन्तर्महार्णव उपागतमादिदैत्यं**
**तं दंष्ट्रयाद्रिमिव वज्रधरो ददार ॥ १ ॥**

**पदार्थ—**

**यत्र** = जुन अगाध जलराशिभित्र
**सकलयज्ञमयीम्** = समस्त यज्ञमय
**क्रौडीं** = वराहको
**तनुं** =शरीरलाई
**बिभ्रत्** = धारण गरेर
**क्षितितलोद्धरणाय** = पृथिवीको उद्धारको लागि
**उद्यतः** = तत्पर हुनुभएका
**अनन्तः** = अनन्त भगवान्ले
**अन्तर्महार्णव** = प्रलयको त्यही अगाध जलराशिमा
**उपागतम्** = लड्न आएको
**तं** = त्यो
**आदिदैत्यं** = आदिदैत्य हिरण्याक्षलाई
**वज्रधरः** = इन्द्रले
**अद्रिम् इव** = पहाडलाईझैं
**दंष्ट्रया** = दाराद्वारा
**ददार** = टुक्रा टुक्रा गर्नुभयो

**वाक्यार्थ—** अनन्त भगवान्ले प्रलयको जलमा डुबेकी पृथ्वीको उद्धारका लगि समस्त यज्ञमय बराह शरीरलाई ग्रहण गर्नुभएको थियो। आदिदैत्य हिरण्याक्ष जलभित्र युद्ध गर्नका लागि उहाँको अगाडि आयो। जसरी इन्द्रले आफ्नो वज्रले पर्वतहरूको प्वाँखलाई काट्नुभएको थियो त्यसै गरी बराह भगवान्ले पनि आफ्ना दाराले उसलाई टुक्रा टुक्रा गरिदिनुभयो।

**जातो रुचेरजनयत्सुयमान् सुयज्ञ**
**आकूतिसूनुरमरानथ दक्षिणायाम्।**
**लोकत्रयस्य महतीमहरद्यदार्तिं**
**स्वायम्भुवेन मनुना हरिरित्यनूक्तः ॥ २ ॥**

**पदार्थ—**

**अथ** = भगवान्को अर्को अवतारमा
**रुचेः** = रुचि प्रजापतिकी पत्नी
**आकूतिसूनुः** = आकुतिका पुत्र भएर
**सुयज्ञे** = यज्ञहरूमा
**जातः** = जन्मिनुभयो अनि
**दक्षिणायाम्** = आफ्नी पत्नी दक्षिणामा

**सुयमान्** = सुयम आदि नामवाला
**अमरान्** = देवताहरू
**अजनयत्** = जन्माउनुभयो (जुन समयमा)
**लोकत्रयस्य** = तीनै लोकको
**महतीम्** = ठुलो
**यदार्तिं** = जुन कष्टलाई हरण
**अहरद्** = गर्नुभयो त्यस समयमा
**स्वायम्भुवेन मनुना** = स्वायम्भुव मनुद्वारा
**हरिः इति** = हरि भनेर
**अनूक्तः** = सम्बोधन गरिनुभयो

**वाक्यार्थ—** फेरी उनै प्रभुले रूचि नामक प्रजापतिको आकूतिको गर्भबाट सुयशको रूपमा अवतार ग्रहण गर्नुभयो। त्यस अवतारमा उहाँले दक्षिणा नामककी पत्नीमा सुयम नामका देवताहरूलाई उत्पन्न गर्नुभयो र तीनै लोकका ठुला-ठुला सङ्कटहरूलाई हरण गर्नुभयो। यसै कारण उहाँ स्वायम्भुव मनुद्वारा हरि भनेर सम्बोधन गरिनुभयो।

**जज्ञे च कर्दमगृहे द्विज देवहूत्यां**
**स्त्रीभिः समं नवभिरात्मगतिं स्वमात्रे।**
**ऊचे ययात्मशमलं गुणसङ्गपङ्कम्**
**अस्मिन् विधूय कपिलस्य गतिं प्रपेदे ॥ ३ ॥**

पदार्थ—
**द्विज** = हे नारद
**अस्मिन्** = यस
**कर्दमगृहे** = कर्दम मुनिको घरमा
**देवहूत्यां** = देवहूतिबाट
**नवभिः** = नौवटी
**स्त्रीभिः** = बहिनीहरूले
**समं** = युक्त भई
**जज्ञे** = जन्मनुभयो अनि
**स्वमात्रे** = आफ्नो आमालाई
**आत्मगतिं** = आत्मज्ञान
**ऊचे** = बताउनुभयो
**यया** = जुन आत्मज्ञानले (देवहूतिले)
**गुणसङ्गपङ्कम्** = तीन गुणको आसक्तिरूपी मैलो
**आत्मशमलं** = हृदयको मल
**विधूय** = पखालेर
**कपिलस्य** = कपिल मुनिको
**गतिं** = वास्तविक सत्यस्वरूपलाई
**प्रपेदे** = प्राप्त गर्नुभयो

**वाक्यार्थ—** हे नारद! कर्दम प्रजापतिको घरमा देवहूतिको गर्भबाट नौ बहिनीहरूका साथ भगवान्‌ले कपिल रूपमा अवतार ग्रहण गर्नुभयो। उहाँले आफ्नी आमालाई त्यो आत्मज्ञानको उपदेश गर्नुभयो जसबाट उहाँले यसै जन्ममा आफ्ना हृदयबाट सम्पूर्ण आसक्तिलाई परित्याग गरेर वास्तविक सत्यस्वरूपलाई प्राप्त गर्नुभयो।

**अत्रेरपत्यमभिकाङ्क्षत आह तुष्टो**
**दत्तो मयाहमिति यद्भगवान् स दत्तः।**
**यत्पादपङ्कजपरागपवित्रदेहा**

**योगर्द्धिमापुरुभयीं यदुहैहयाद्याः ॥ ४ ॥**

**पदार्थ–**

**अपत्यम्** = सन्तति
**अभिकाङ्क्षतः** = चाहने
**अत्रेः** = अत्रिको इच्छानुसार
**तुष्टः** = खुसी हुनुभएका
**भगवान्** = प्रभुले
**मया**= मद्वारा
**अहम्** = म नै
**दत्तः** = तिम्रो लागि अर्पित भएँ
**इति** = यस्तो
**यत्** = जुन कुरा
**आह** = भन्नुभयो
**सः** = उहाँ भगवान्
**दत्तः** = दत्तात्रेय अवतारधारी बन्नुभयो
**यत्पादपङ्कजपरागपवित्रदेहाः** = जुन भगवच्चरणारविन्दको परागको सेवनले शरीर पवित्र भएका
**यदुहैहयाद्याः** = यदु र सहस्रार्जुन आदि राजाहरूले
**उभयीं** = भोग र मोक्षरूपी दुबै
**योगर्द्धिम्** = योगसिद्धिलाई
**आपुः** = प्राप्त गर्नुभयो

**वाक्यार्थ–** महर्षि अत्रि भगवान्लाई पुत्ररूपमा प्राप्त गर्न चाहनुहुन्थ्यो। यसर्थ प्रसन्न भएर भगवान्ले उहाँसँग भन्नुभयो। 'मैले स्वयं आफूलाई नै तपाईंलाई दिएँ' यसै कारण अवतार लिएपछि भगवान्को नाम पुत्र अथवा दत्तात्रेय पर्न गएको हो। उहाँको चरणकमलको परागबाट आफ्नो शरीरलाई पवित्र गरेर राजा यदु र सहस्रार्जुन आदिले योगको अनि भोग र मोक्ष दुबैको सिद्धिलाई प्राप्त गर्नुभयो।

**तप्तं तपो विविधलोकसिसृक्षया मे**
**आदौ सनात् स्वतपसः स चतुःसनोऽभूत्।**
**प्राक्कल्पसम्प्लवविनष्टमिहात्मतत्त्वं**
**सम्यग् जगाद मुनयो यदचक्षतात्मन्॥ ५॥**

**पदार्थ–**

**मे** = मैले
**विविधलोकसिसृक्षया** = संसारको सृष्टिको लागि
**आदौ** = पहिले
**तपः** = तपस्या
**तप्तं** = गरेँ
**सनात्** = अखण्डित
**स्वतपसः** = मरो तपस्याबाट खुसी भई
**सः** = उहाँ भगवान्
**चतुःसनः** = सनक, सनन्दन आदि चार जनाको रूपमा
**अभूत्** = प्रकट हुनुभयो अनि
**प्राक्कल्पसम्प्लवविनष्टम्** = पहिलो प्रलयमा नष्ट भएको
**आत्मतत्त्वं** = आत्मज्ञान
**इह** = यहाँ
**सम्यक्** = राम्ररी
**जगाद** = बताउनुभयो
**यद्** = जुन आत्मज्ञान सुनेर
**मुनयः** = मुनिहरूले
**आत्मन्** = आफूभित्र
**अचक्षत** = परमतत्त्वको दर्शन गरे

**वाक्यार्थ–** सृष्टिको प्रारम्भमा मैले विभिन्न लोकहरूको रचना गर्ने इच्छाले तपस्या गरेँ। मेरो त्यो अखण्ड तपस्याबाट प्रसन्न भएर उहाँले 'तप' अर्थवाला 'सन' नामले युक्त भएर सनक,

सनन्दन, सनातन र सनत्कुमारको रूपमा अवतार ग्रहण गर्नुभयो, यस अवतारमा उहाँले प्रलयको कारण पहिले कल्पमा बिर्सिएको आत्मज्ञानको यथावत् उपदेश ऋषिहरूलाई गर्नुभयो जसबाट उहाँहरूले तत्काल नै आफ्नो हृदयमा आत्मतत्त्वको साक्षात्कार गर्नुभयो।

**धर्मस्य दक्षदुहितर्यजनिष्ट मूर्त्यां**
**नारायणो नर इति स्वतपःप्रभावः।**
**दृष्ट्वात्मनो भगवतो नियमावलोपं**
**देव्यस्त्वनङ्गपृतना घटितुं न शेकुः॥ ६॥**

पदार्थ—

| | | |
|---|---|---|
| **दक्षदुहितरि** = दक्षकी पुत्री | **अजनिष्ट** = जन्मिनुभयो | **नियमावलोपं** = तपस्याको विनाश |
| **धर्मस्य** = धर्मकी पत्नी | **भगवतः** = जुन भगवान्को अङ्गबाट | **घटितुं** = गराउन |
| **मूर्त्यां** = मूर्तिको गर्भमा | **आत्मनः** = आफूजस्तै | **न शेकुः** = सकेनन् |
| **स्वतपःप्रभावः** = तपस्याको असाधारण प्रभाव हुनुभएका | **अनङ्गपृतनाः** = कामदेवका सेना | |
| **नारायणः नर इति** = नरनारायण भगवान् | **देव्यः** = उर्वशी आदि स्त्रीहरू | |
| | **दृष्ट्वा** = देखेर | |

**वाक्यार्थ—** धर्मकी पत्नी यक्षकन्या मूर्तिको गर्भबाट उहाँ नरनारायणको रूपमा प्रकट हुनुभयो। नरनारायणको तपस्याको प्रभाव भगवान्कै बराबर थियो। इन्द्रले पठाएका कामका सेना अप्सराहरू उहाँको अगाडि पुग्नेवित्तिकै आफू र आफ्नो स्वभावलाई नै बिर्से। उनीहरूले आफ्नो हाउभाउद्वारा आत्मस्वरूप भगवान्को तपस्यामा कुनै पनि विघ्न उत्पन्न गर्न सकेनन्।

**कामं दहन्ति कृतिनो ननु रोषदृष्ट्या**
**रोषं दहन्तमुत ते न दहन्त्यसह्यम्।**
**सोऽयं यदन्तरमलं प्रविशन् बिभेति**
**कामः कथं नु पुनरस्य मनः श्रयेत॥ ७॥**

पदार्थ—

| | | |
|---|---|---|
| **ननु** = निश्चय नै | **दहन्ति** = नष्ट गर्दछन् | **असह्यम्** = असह्य |
| **कृतिनः** = ठूला पराक्रमी शङ्करजी आदि | **उत** = परन्तु | **रोषं** = क्रोधलाई |
| **रोषदृष्ट्या** = क्रोधपूर्ण नजरले | **ते** = तिनीहरू | **न दहन्ति** = नाश गर्दैनन् |
| **कामं** = कामदेवलाई | **दहन्तम्** = आफैंलाई जलाइरहेका | **सः अयं** = त्यस्तो अपराजेय क्रोध पनि |

| | | |
|---|---|---|
| **यद्** = जुन भगवान्को | **बिभेति** = डराउँछ भने | **कामः** = काम भावना |
| **अमलं** = निर्मल | **पुनः** = फेरि | **कथं नु** = कसरी |
| **अन्तरम्** = मनभित्र | **अस्य** = भगवान्को | **श्रयेत** = निवास गर्न सक्छ |
| **प्रविशन्** = प्रवेश गर्न | **मनः** = मनमा | |

**वाक्यार्थ–** ठुला पराक्रमशाली शङ्कर आफ्नो रोषपूर्ण दृष्टिले कामदेवलाई त भस्मगर्नुहुन्छ परन्तु आफैंलाई जलाउने असह्य क्रोधलाई भने जलाउन सक्दैनन्। त्यो क्रोध नै नर र नारायणको हृदयमा प्रवेश गर्नुभन्दा पहिले काँप्न थाल्दछ। फेरि उहाँको हृदयमा कामको प्रवेश नै कसरी हुन्छ र ?

**विद्धः सपत्न्युदितपत्रिभिरन्ति राज्ञो**
**बालोऽपि सन्नुपगतस्तपसे वनानि।**
**तस्मा अदाद् ध्रुवगतिं गृणते प्रसन्नो**
**दिव्याः स्तुवन्ति मुनयो यदुपर्यधस्तात्॥ ८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **राज्ञः** = उत्तानपादको | **तपसे** = तपस्याको लागि | **अधस्तात्** = तल (घुमेर) |
| **अन्ति** = नजिकैमा | **वनानि** = वनमा | **दिव्याः** = अलौकिक |
| **सपत्न्युदितपत्रिभिः** = सौतेनी आमाको वचनबाणहरूद्वारा | **उपगतः** = गए | **मुनयः** = मुनिहरू |
| | **गृणते** = स्तुति गर्ने | **स्तुवन्ति** = स्तुति गर्दछन् (यस्तो) |
| **विद्धः** = घायल भएका ध्रुव | **तस्मै** = ध्रुवलाई | |
| **बालः** = साना बच्चा | **प्रसन्नः** = खुसी भएर | **ध्रुवगतिं** = नित्य ध्रुवलोक |
| **सन् अपि** = भए तापनि | **यदुपरि** =जुन लोकको माथि | **अदात्** = दिनुभयो |

**वाक्यार्थ–** आफ्ना पिता राजा उत्तानपादको नजीकमा बसेका पाँच वर्षका बालक ध्रवलाई उनकी सौताने आमा सुरुचिले आफ्ना वाग्बाणले प्रहार गरिन्। यति सानै अवस्थामा पनि उक्त दुःखको कारणले तपस्याका लागि उनी वन गए। उनको प्रार्थनाले प्रसन्न भएर भगवान् प्रकट हुनुभयो। उहाँले ध्रुवलाई ध्रुवपदको वरदान दिनुभयो। आज पनि ध्रुवको तल र माथि प्रदक्षिणा गर्दै दिव्य महर्षिहरू उहाँको स्तुति गर्दछन्।

**यद्वेनमुत्पथगतं द्विजवाक्यवज्र–**
**विप्लुष्टपौरुषभगं निरये पतन्तम्।**
**त्रात्वार्थितो जगति पुत्रपदं च लेभे**
**दुग्धा वसूनि वसुधा सकलानि येन॥ ९॥**

पदार्थ–

**येन** = जुन भगवान्‌ले
**अर्थितः** = ऋषिहरूको प्रार्थनालाई स्वीकार गरेर
**उत्पथगतं** = पाखण्डमार्गमा अग्रसर
**द्विजवाक्यवज्रविप्लुष्टपौरुषभगं** = ब्रह्मश्रापरूपी बज्रले ऐश्वर्य र पुरुषार्थ नष्ट भएको
**निरये** = नरकमा
**पतन्तम्** = खसिरहेको
**वेनम्** = वेन राजालाई
**त्रात्वा** = नरकबाट बचाएर
**पुत्रपदं** = वेनपुत्रको संज्ञा
**च** = पनि
**लेभे** = प्राप्त गर्नुभयो
**जगति** = जगत्‌मा आवश्ययक
**सकलानि** = सम्पूर्ण
**वसूनि** = औषधिहरूको लागि
**वसुधा** = पृथिवीको
**दुग्धा** = दोहन गर्नुभयो

**वाक्यार्थ–** कुमार्गगामी वेनको ऐश्वर्य र पौरुष ब्राह्मणहरूको हुङ्काररूपी बज्रबाट जलेर भस्म भई नरकमा पुगेको थियो। ऋषिहरूको प्रार्थनाले भगवान्‌ले उसको शरीरको मन्थनबाट पृथुको रूपमा अवतार ग्रहण गरेर उसलाई नरकबाट बचाउनुभयो। यसप्रकार 'पुत्र' शब्दलाई चरितार्थ गर्नुभयो। यसै अवतारमा भगवान्‌लेपृथिवीलाई गाई बनाएर जगत्‌को कल्याणको लागि समस्त औषधिहरूको दोहन गर्नुभयो।

**नाभेरसावृषभ आस सुदेविसूनु-**
**र्यो वै चचार समदृग्जडयोगचर्याम्।**
**यत् पारमहंस्यमृषयः पदमामनन्ति**
**स्वस्थः प्रशान्तकरणः परिमुक्तसङ्गः॥ १० ॥**

पदार्थ–

**असौ** = उहाँ भगवान् नै (अर्को अवतारमा)
**नाभेः** = नाभिराजाकी पत्नी
**सुदेविसूनुः** = सुदेवीको पुत्र
**ऋषभः** = ऋषभरूपमा
**आस** = प्रकट हुनुभयो
**समदृक्** = समान दृष्टि राख्ने
**स्वस्थः** = आत्मामा स्थित
**प्रशान्तकरणः** = मन र इन्द्रियलाई शान्त बनाउने
**परिमुक्तसङ्गः** = आसक्तिलाई छोड्नुभएका
**यः** = जुन भगवान्‌ले
**जडयोगचर्याम्** = अखण्ड समाधिको कारणले सधैँ जडजस्तो बनेर योगमय चरित्रलाई
**चचार** = प्रस्तुत गर्नुभयो
**यत् पदम्** = जुन स्थितिलाई
**ऋषयः** = महर्षिहरू
**पारमहंस्यम्** = परमहंस स्थिति भनेर
**वै** = निश्चय नै
**आमनन्ति** = बताउँछन्

**वाक्यार्थ–** राजा नाभिकी पत्नी सुदेवीको गर्भबाट भगवान्‌ले ऋषभको रूपमा अवतार लिनुभयो। यस अवतारमा उहाँले समस्त आसक्तिले रहित भएर आफ्नै इन्द्रिय र मनलाई अत्यन्त

शान्त गरेर आफ्नो स्वरूपमा स्थित भएर योगचर्याको आचरण गर्नुभयो। यही स्थितिलाई महर्षिहरू परमहंस अथवा अवधूत चर्चा भन्दछन्।

**सत्रे ममास भगवान् हयशीरषाथो**
**साक्षात् स यज्ञपुरुषस्तपनीयवर्णः।**
**छन्दोमयो मखमयोऽखिलदेवतात्मा**
**वाचो बभूवुरुशतीः श्वसतोऽस्य नस्तः॥ ११॥**

पदार्थ—

| | | |
|---|---|---|
| **मम** = म ब्रह्माको | **सः** = उहाँ | **नस्तः** = नासिकाबाट |
| **सत्रे** = यज्ञमा | **भगवान्** = यज्ञमूर्ति भगवान् | **उशतीः** = हितकारी |
| **तपनीयवर्णः** = स्वर्णसमान कान्ति हुनुभएका | **अथो** = यसपछि | **साक्षात्** = प्रत्यक्षतः |
| **छन्दोमयः** = वेदमय | **हयशीरषा** = हयग्रीवको स्वरूपद्वारा | **वाचः** = वाणीहरू |
| **मखमयः** = यज्ञमय | **आस** = प्रकट हुनुभयो | **बभूवुः** = प्रकट भए |
| **अखिलदेवतात्मा** = सर्वदेवमय | **अस्य** = भगवान्को | |
| **यज्ञपुरुषः** = यज्ञद्वारा आराध्य | **श्वसतः** = श्वासको कारणले | |

**वाक्यार्थ—** यसपछि उहाँ यज्ञपुरुष भगवान्ले मेरो यज्ञमा सुनको जस्तो कान्ति भएको, हयग्रीवको रूपमा अवतार ग्रहण गर्नुभयो। भगवान्को त्यो विग्रह वेदमय, यज्ञमय र सर्वदेवमय छ। उहाँकै नासिकाबाट श्वासको रूपमा वेदवाणी प्रकट भयो।

**मत्स्यो युगान्तसमये मनुनोपलब्धः**
**क्षोणीमयो निखिलजीवनिकायकेतः।**
**विस्रंसितानुरुभये सलिले मुखान्मे**
**आदाय तत्र विजहार ह वेदमार्गान्॥ १२॥**

पदार्थ—

| | | |
|---|---|---|
| **युगान्तसमये** = प्रलयको समयमा | **मत्स्यः** = मत्स्यको रूपमा | **मे** = मेरो |
| **क्षोणीमयः** = पृथिवीका एकमात्र आधार | **मनुना** = भावी मनु सत्यव्रतद्वारा | **मुखात्** =मुखबाट |
| **निखिलजीवनिकायकेतः** = सम्पूर्ण जीवहरूको आश्रय बन्ने भगवान् | **उपलब्धः** = भेटिनुभयो | **विस्रंसितान्** = प्रमादवश खसेका |
| | **ह** = आश्चर्य छ | **वेदमार्गान्** = वेदवाणीहरूलाई |
| | **उरुभये** = भयङ्कर | **आदाय** = लिएर |
| | **सलिले** = प्रलयजलमा | **तत्र** = त्यहीं जलमा |

**विजहार** = विहार गर्नुभयो

**वाक्यार्थ—** प्रलयको अन्तमा भावी मनु सत्यव्रतले मत्स्यरूपमा भगवान्‌लाई प्राप्त गर्नुभयो। त्यस समयमा पृथिवीरूप नौकाको आश्रय हुनाले उहाँ समस्त जीवहरूको आश्रय बन्नुभयो। प्रलयको त्यो भयङ्कर जलमा मेरो मुखबाट खसेको वेदलाई लिएर त्यही पृथिवीरूप नौकामा विहार गरिरहनुभएको थियो।

**क्षीरोदधावमरदानवयूथपानाम्**
**उन्मथ्नताममृतलब्धय आदिदेवः।**
**पृष्ठेन कच्छपवपुर्विदधार गोत्रं**
**निद्राक्षणोऽद्रिपरिवर्तकषाणकण्डूः॥ १३॥**

पदार्थ—

| | | |
|---|---|---|
| **अमृतलब्धये** = अमृत प्राप्तिको लागि | **आदिदेवः** = आदिदेव भगवान् | **निद्राक्षणः** = केही आनन्दको कारणले निदाउने भगवान्‌ले |
| **क्षीरोदधौ** = क्षीरसागरमा | **कच्छपवपुः** = कच्छपावतारी बन्नुभयो | **पृष्ठेन** = पिठिउँद्वारा |
| **उन्मथ्नताम्** = मन्थन गर्न खोज्ने | **अद्रिपरिवर्तकषाणकण्डूः** = मन्दराचल घुम्दाखेरि केही चिलाइमात्र मर्ने अनि | **गोत्रं** = मन्दराचललाई |
| **अमरदानवयूथपानाम्** = दैत्य र देवताहरूको मध्येमा | | **विदधार** = धारण गर्नुभयो |

**वाक्यार्थ—** जब मुख्य देवता र दानव अमृतप्राप्तिका लागि क्षीरसागरको मन्थन गरिरहेका थिए तब भगवान्‌ले कच्छपरूपमा आफ्नो पीठमा मन्दराचललाई धारण गरिएको थियो। त्यस समयमा पर्वत घुम्दा त्यसको रगडले उहाँको पिठ्युँको चिलाइ केही क्षणका लागि शान्त भएको थियो, जसबाट उहाँ केही क्षणसम्म सुखपूर्वक सुत्नुभएको थियो।

**त्रैविष्टपोरुभयहा स नृसिंहरूपं**
**कृत्वा भ्रमद्भ्रुकुटिदंष्ट्रकरालवक्त्रम्।**
**दैत्येन्द्रमाशु गदयाभिपतन्तमाराद्**
**ऊरौ निपात्य विददार नखैः स्फुरन्तम्॥ १४॥**

पदार्थ—

| | | |
|---|---|---|
| **त्रैपिष्टपोरुभयहा** = सधैं देवताहरूका ठूला दुःखहरू पनि नाश गरिरहने | **भ्रमद्भ्रुकुटिदंष्ट्रकरालवक्त्रम्** = फर्फराएको आँखीभौं र ती आँखाद्वारा डरलाग्दो मुख | **नृसिंहरूपं** = नृसिंह अवतार लिएर |
| | | **आराद्** = नजीकै |
| **सः** = भगवान्‌ले | **कृत्वा** = बनाएर | **स्फुरन्तम्** = चमचम गर्ने |

**गदया** = गदाद्वारा
**अभिपतन्तम्** = प्रहार गर्न पनि खोज्ने
**दैत्येन्द्रम्** = दानवराज हिरण्यकशिपुलाई
**ऊरौ** = जाँघमा
**निपात्य** = पछारेर
**नखैः** = तीखा नङद्वारा
**आशु** = छिट्टै नै
**विददार** = चिरिदिनुभयो

**वाक्यार्थ—** देवताहरूको महान् भयलाई हटाउनका लागि उहाँले नृसिंहको रूप धारण गर्नुभयो। फर्फराएको आँखीभौं र तीखा दाह्राहरूले उहाँको मुख अत्यन्त डरलाग्दो थियो। हिरण्यकशिपु उहाँलाई देख्नेवित्तिकै हातमा गदा लिएर उहाँमाथि जाइलाग्यो। भगवान् नृसिंहले टाढैबाट उसलाई पक्डेर आफ्नो जाँघमा लिनुभयो। ऊ छट्पटाइरहेको थियो। भगवान्ले आफ्ना नङ्हरूद्वारा उसलाई चिरिदिनुभयो।

**अन्तःसरस्युरुबलेन पदे गृहीतो**
**ग्राहेण यूथपतिरम्बुजहस्त आर्तः।**
**आहेदमादिपुरुषाखिललोकनाथ**
**तीर्थश्रवः श्रवणमङ्गलनामधेय ॥ १५ ॥**

पदार्थ—
**अन्तःसरसि**= तलाउको बीचमा
**उरुबलेन** = अति बलशाली
**ग्राहेण** = गोहीद्वारा
**पदे** = खुट्टामा
**गृहीतः** = समातिएका
**यूथपतिः** = हात्तीका राजा गजेन्द्रले
**आर्तः** = डराउँदै
**अम्बुजहस्तः** = सूँडमा कमलको फूल लिएर
**आदिपुरुष** = हे आदिपुरुष
**अखिललोकनाथ** = हे समस्त संसारका मालिक
**तीर्थश्रवः** = नाम पनि तीर्थजस्तो पवित्र हुनुहुने हे प्रभो
**श्रवणमङ्गलनामधेय** = सुन्नेवित्तिकै कल्याण गर्ने नाम हुनुभएका हे भगवान्
**इदम्** = यस्तो प्रार्थना
**आह** = भने (गरे)

**वाक्यार्थ—** ठुलो तलाउमा अति बलियो गोहीले गजेन्द्रको खुट्टा समात्यो, जब ऊ ज्यादै थाकेर विचलित भयो, उसले आफ्नो सूँडमा कमल लिएर हे आदिपुरुष ! हे समस्तलोकका स्वामी ! हे श्रवणमात्रले कल्याण गर्ने ! भनी भगवान्को प्रार्थना गऱ्यो।

**श्रुत्वा हरिस्तमरणार्थिनमप्रमेयश-**
**श्चक्रायुधः पतगराजभुजाधिरूढः।**
**चक्रेण नक्रवदनं विनिपाट्य तस्मा-**
**द्धस्ते प्रगृह्य भगवान् कृपयोज्जहार ॥ १६ ॥**

पद्वार्थ—

**हरिः** = हरि
**भगवान्** = भगवान्ले
**श्रुत्वा** = यस्तो प्रार्थनालाई सुनेर
**अप्रमेयशः** = जसको शक्तिको सीमा छैन त्यस्ता असीम अनि
**चक्रायुधः** = चक्र हातमा लिने प्रभुले
**पतगराजभुजाधिरूढः** = पक्षिराज गरुडको पीठमा बसेर
**चक्रेण** = चक्रद्वारा
**नक्रवदनं** = गोहीको मुखलाई
**विनिपाट्य** = च्यातिदिएर
**अरणार्थिनम्** = शरणार्थी
**तम्** = ती गजेन्द्रलाई
**तस्मात्** = त्यस्तो आपत्बाट (छुटाई)
**हस्ते** = सूँडमा
**प्रगृह्य** = समातेर
**कृपया** = कृपापूर्वक
**उज्जहार** = उद्धार गर्नुभयो

**वाक्यार्थ—** उसको प्रार्थनालाई सुनेर अनन्त शक्ति भगवान् चक्रपाणि गरुडको पिठ्युँमा चढेर त्यहाँ आउनुभयो। चक्रद्वारा गोहीको मुख च्यातिदिएर कृपापरवश भगवान्ले शरणागत गजेन्द्रको सूँडलाई पक्डेर उसलाई त्यो विपत्तिबाट बचाउनुभयो।

**ज्यायान् गुणैरवरजोऽप्यदितेः सुतानां**
**लोकान्विचक्रम इमान् यदथाधियज्ञः।**
**क्ष्मां वामनेन जगृहे त्रिपदच्छलेन**
**याच्ञामृते पथि चरन्प्रभुभिर्न चाल्यः॥ १७॥**

पद्वार्थ—

**अदितेः** = अदितिका
**सुतानां** = पुत्रहरूमध्ये
**अवरजः अपि** = पछि जन्मे तापनि
**गुणैः** = गुणहरूले
**ज्यायान्** = श्रेष्ठ हुनुहुन्थ्यो किनभने
**अधियज्ञः** = बलिको यज्ञमा पुग्नुभएका भगवान्ले
**अथ** = बलिले सङ्कल्प गर्नेबित्तिकै
**इमान्** = यो सम्पूर्ण
**लोकान्** = लोकलाई
**विचक्रमे** = नापिदिनुभयो
**वामनेन** = वामनको स्वरूपमा
**क्ष्मां** = समस्त संसारलाई
**त्रिपदच्छलेन** = तीन पाउ नाप्ने निहुँले
**जगृहे** = ग्रहण गर्नुभयो किनभने
**पथि** = स्वधर्ममा
**चरन्** = हिँडिरहेकोलाई
**प्रभुभिः** = हजुरजस्ता ठुलाठुलाहरूले पनि
**याच्ञाम् ऋते** = नमागीकन
**न चाल्यः** = ऐश्वर्यच्यूत गराउन सकिँदैन

**वाक्यार्थ—** भगवान् वामन अदितिपुत्रहरूमा सबभन्दा सानु हुनुहुन्थ्यो। परन्तु गुणको दृष्टिले उहाँ सबभन्दा ठुलो हुनुहुन्थ्यो। किनभने यज्ञपुरुष भगवान्ले यस अवतारमा बलिले सङ्कल्प गर्नेबित्तिकै सम्पूर्ण लोकहरूलाई आफ्नो चरणले नाप्नुभयो। वामन बनेर उहाँले तीन पाउ पृथिवीको बाहनामा बलिबाट सम्पूर्ण पृथिवीलाई लिनुभयो। यसबाट के कुराको शिक्षा मिल्दछ भने सन्मार्गमा चल्ने पुरुषलाई याचना नगरीकन अरू कुनै उपायले समर्थ पुरुषले ऐश्वर्यबाट च्युत गराउन सक्दैनन्।

नार्थो बलेरयमुरुक्रमपादशौचम्
आपः शिखाधृतवतो विबुधाधिपत्यम्।
यो वै प्रतिश्रुतमृते न चिकीर्षदन्यद्
आत्मानमङ्ग शिरसा हरयेऽभिमेने ॥ १८ ॥

पदार्थ–

| | | |
|---|---|---|
| **अङ्ग** = हे प्रिय नारद | **आत्मानम्** = आफूलाई | **आपः** = जललाई |
| **यः** = जुन बलिराजाले | **शिरसा** = शिरको माध्यमले | **शिखाधृतवतः** = मस्तकमा |
| **वै** = निश्चय नै | **हरये** = भगवान्प्रति | धारण गर्ने |
| **प्रतिश्रुतम् ऋते** = आफ्नो | **अभिमेने** = समर्पित गरिदिनुभयो | **बलेः** = बलिको लागि |
| प्रतिज्ञाभन्दा बाहिर | **अयम्**= यस्तो | **विबुधाधिपत्यम्** = देवराजपद |
| **अन्यत्** = अरू कुरा | **उरुक्रमपादशौचम्** = भगवच्चरण | **न अर्थः** = पुरुषार्थ हुँदैन |
| **न चिकीर्षत्** = गर्न नचाहेर | पखालेको | |

वाक्यार्थ– हे प्रिय नारद ! जुन बलिराजाले निश्चय नै आफ्नो प्रतिज्ञाभन्दा बाहिर अरू कुरा गर्न नचाहेर आफूलाई शिरको माध्यमले भगवान्प्रति समर्पित गरिदिनुभयो। यस्तो भगवच्चरण पखालेको जललाई मस्तकमा धारण गर्ने बलिको लागि देवराजपद पुरुषार्थ हुँदैन।

तुभ्यं च नारद भृशं भगवान् विवृद्ध-
भावेन साधु परितुष्ट उवाच योगम्।
ज्ञानं च भागवतमात्मसतत्त्वदीपं
यद्वासुदेवशरणा विदुरञ्जसैव ॥ १९ ॥

पदार्थ–

| | | |
|---|---|---|
| **नारद** = हे नारद ! | **योगम्** = योग | **यद्** = जुन कुरा |
| **भृशं** = अत्यन्त | **ज्ञानं** = ज्ञान र | **वासुदेवशरणाः** = भगवान्को |
| **विवृद्धभावेन** = प्रेमभावनाद्वारा | **आत्मसतत्त्वदीपं** = | चरणसेवक भक्तहरूले |
| **साधु** = राम्ररी | आत्मतत्त्वलाई प्रकाशित गर्ने | **अञ्जसा एव** = सहसा नै |
| **परितुष्टः** =प्रसन्न हुनुभएका | **भागवतम् च** = भागवत धर्म | **विदुः** = बुझ्दछन् |
| **भगवान्** = हंसावतारी भगवान्ले | पनि | |
| **तुभ्यं च** = तिम्रा लागि पनि | **उवाच** = बताउनुभयो | |

**वाक्यार्थ–** नारद ! तिम्रो अत्यन्त प्रेमभावनाद्वारा प्रसन्न भएर हाँसको रूपमा भगवान्ले तिमीलाई योग, ज्ञान र आत्मतत्त्वलाई प्रकाशित गर्ने भागवतधर्मको ज्ञान बताउनुभयो। यो केवल भगवान्का शरणागत भक्तलाई मात्र सुगम तरिकाले प्राप्त हुन्छ।

**चक्रं च दिक्ष्वविहतं दशसु स्वतेजो**
**मन्वन्तरेषु मनुवंशधरो बिभर्ति।**

**दुष्टेषु राजसु दमं व्यदधात् स्वकीर्तिं**
**सत्ये त्रिपृष्ठ उशतीं प्रथयंश्चरित्रैः॥ २०॥**

पदार्थ–

**मन्वन्तरेषु** = मन्वन्तरहरूमा
**मनुवंशधरः** = मनुको रूपमा अवतीर्ण भगवान्ले
**दशसु** = दसै
**दिक्षु** = दिशाहरूमा
**चक्रं** = सुदर्शनचक्र समान
**स्वतेजः** = आफ्नो तेजले
**अवविहतं** = निष्कण्टक राज
**बिभर्ति** = धारण गर्नुहुन्छ
**त्रिपृष्ठे** = तीन लोकभन्दा माथि
**सत्ये च** = सत्यलोकमा समेत
**चरित्रैः** = आफ्ना लोकोत्तर चरित्रहरूद्वारा
**उशतीं** = धेरै
**स्वकीर्तिं** = कीर्तिलाई
**प्रथयन्** = फिँजाउँदै
**दुष्टेषु** = दुष्ट
**राजसु** = राजाहरूमा
**दमं** = दमन
**व्यदधात्** = गर्नुभयो

**वाक्यार्थ–** उहाँ भगवान् नै स्वायम्भुव आदि मन्वन्तरमा मनुको रूपमा अवतार लिएर दसै दिशाहरूमा आफ्नो सुदर्शनचक्रको समान तेजले निष्कण्टक राज्य गर्नुहुन्छ। तीनै लोकहरूभन्दा माथि सत्यलोकसम्म उहाँको चरित्रको कीर्ति फैलिन्छ। त्यसै रूपमा उहाँले समयसमयमा पृथ्वीका भारभूत दुष्ट राजाहरूको दमन पनि गर्नुभयो।

**धन्वन्तरिश्च भगवान् स्वयमेव कीर्ति-**
**र्नाम्ना नृणां पुरुरुजां रुज आशु हन्ति।**
**यज्ञे च भागममृतायुरवावरुन्ध**
**आयुष्यवेदमनुशास्त्यवतीर्य लोके॥ २१॥**

पदार्थ–

**स्वयम् एव कीर्तिः** = स्वनाम धन्य
**धन्वन्तरिः** = धन्वन्तरि
**भगवान्** = प्रभुले पनि
**नाम्ना** = आफ्नो नाममात्रले
**आशु** = तत्काल
**पुरुरुजां** = ठुला रोगी
**नृणां** = मनुष्यहरूको
**रुजः** = रोगहरू
**हन्ति** = हरण गर्नुहुन्छ र
**यज्ञे** = यज्ञमा
**अमृतायुः** = अमरत्वसाधक

| | | |
|---|---|---|
| **भागम्** = दैत्यहरूद्वारा रोकिएको भागलाई | **अवावरुन्धे** = पुनः प्राप्त गराइदिनुहुन्छ | **आयुर्वेदम् च** = आयुर्वेदलाई समेत |
| **च** = पनि | **लोके** = संसारमा | **अनुशास्ति** = प्रवर्तन गराउनुहुन्छ |
| | **अवतीर्य** = आएर | |

**वाक्यार्थ—** स्वनामधन्य धन्वन्तरि आफ्नो नामले ठूला-ठूला रोगीहरूका रोगलाई तत्काल नष्ट गरिदिनुहुन्छ। उहाँले अमृत पिलाएर देवताहरूलाई अभय गरिदिनुभयो। दैत्यहरूले हरण गरेको यज्ञको भाग उनीहरूलाई फेरि फर्काइदिनुभयो। उहाँले अवतार लिएर संसारमा आयुर्वेदको प्रवर्तन गर्नुभयो।

**क्षत्रं क्षयाय विधिनोपभृतं महात्मा**
**ब्रह्मध्रुगुज्झितपथं नरकार्तिलिप्सु।**
**उद्धन्त्यसाववनिकण्टकमुग्रवीर्य-**
**स्त्रिःसप्तकृत्व उरुधारपरश्वधेन॥ २२॥**

पदार्थ—

| | | |
|---|---|---|
| **ब्रह्मध्रुग्** = ब्राह्मणसँग रिस गर्ने | **उपभृतं** = शक्तिशाली भई बढेको | **उग्रवीर्यः** = प्रबल पराक्रम हुने |
| **उज्झितपथं** = वेदमार्गको त्याग गर्ने | **अवनिकण्टकम्** = पृथ्वीको काँडाजस्तो | **असौ** = उहाँ |
| **नरकार्तिलिप्सु** = नरक जान योग्य (तर) | **क्षत्रं** = क्षत्रियकुलका दुष्टहरूलाई | **महात्मा** = परशुराम भगवान्ले |
| **विधिना** = दैववश नै | **क्षयाय** = नाश गर्नका लागि | **त्रिःसप्तकृत्व** = एक्काईसपटक |
| | | **उरुधारपरश्वधेन** = तीखो धारवाला बञ्चरोले |
| | | **उद्धन्ति** = नाश गर्नुहुन्छ |

**वाक्यार्थ—** जब संसारमा ब्राह्मणद्रोही वेदमर्यादाको उल्लङ्घन गर्ने नरक जान योग्य क्षत्रियहरू आफ्नै नाशको लागि दैववश बढेर पृथिवीको काँडो बन्दछन् तब भगवान् महापराक्रमी परशुरामको रूपमा अवतार लिएर एक्काईस पटकसम्म घुमेर आफ्नो तीखो धारवाला बञ्चरोले उनीहरूको संहार गर्नुहुन्छ।

**अस्मत्प्रसादसुमुखः कलया कलेश**
**इक्ष्वाकुवंश अवतीर्य गुरोर्निदेशे।**
**तिष्ठन् वनं सदयितानुज आविवेश**
**यस्मिन् विरुध्य दशकन्धर आर्तिमार्च्छत्॥ २३॥**

पदार्थ—

**कलेशः** = समस्त कलाका अधिपति भगवान्
**अस्मत्प्रसादसुमुखः** = हामीलाई अनुग्रह गर्नका लागि
**कलया** = लक्ष्मण, भरत इत्यादि कलाहरूद्वारा युक्त भई
**इक्ष्वाकुवंशे** = इक्ष्वाकुवंशमा
**अवतीर्य** = अवतीर्ण भएर
**गुरोः** = पिताको
**निदेशे** = आज्ञामा
**तिष्ठन्** = स्थित भई
**सदयितानुजः** = भाइ र स्त्रीसमेत
**वनं** = वनमा
**आविवेश** = जानुभयो
**यस्मिन्** = जुन भगवान्सँग
**विरुध्य** = विरोध गरेर
**दशकन्धरः** = दश शिर भएको रावणले
**आर्तिम्** = मृत्युलाई
**आर्च्छत्** = प्राप्त गऱ्यो

**वाक्यार्थ—** मायापति भगवान् हामीमाथि अनुग्रह गर्नका लागि आफ्ना कलाहरू भरत, शत्रुघ्न र लक्ष्मणका साथ श्रीरामका रूपमा इक्ष्वाकुवंशमा अवतीर्ण हुनुभयो। यस अवतारमा आफ्नो पिताको आज्ञालाई पालन गर्नका लागि आफ्नी पत्नी र भाइका साथ वन जानुभयो। त्यसै समयमा रावणले रामसँग विरोध गर्नाका कारणले उहाँको हातबाट उसको मृत्यु भयो।

**यस्मा अदादुदधिरूढभयाङ्गवेपो**
**मार्गं सपद्यरिपुरं हरवद्दिधक्षोः।**
**दूरे सुहृन्मथितरोषसुशोणदृष्ट्या**
**तातप्यमानमकरोरगनक्रचक्रः॥ २४॥**

पदार्थ—

**हरवत्** = भगवान् शङ्करले त्रिपुरलाई भस्म गरेझैं
**अरिपुरं** = रावणको लङ्कापुरीलाई
**सपदि** = चाँडै न
**दिधक्षोः** = डढाउन चाहने भगवान्को
**दूरे** = टाढा रहेकी
**सुहृन्मथितरोषसुशोणदृष्ट्या** = सीताको वियोगले गर्दा राता र क्रोध युक्त भएका आँखाद्वारा
**तातप्यमानमकरोरगनक्रचक्रः** = आफूभित्र बस्ने सबै गोही, सर्प आदि जीव जल्न अनि छट्पटाउन लागेको
**अधिरूढभयाङ्गवेपः** = समुद्रले डरले थर्थर कामेर
**यस्मै** = जुन भगवान्लाई
**मार्गं** = बाटो
**अदात्** = दियो

**वाक्यार्थ—** त्रिपुर विमानलाई जलाउन उद्यत शङ्करझैं जुन समय भगवान् राम शत्रुको नगरी लङ्कालाई भस्म गराउनका लागि समुद्रको तटमा पुग्नुभयो। त्यस समयमा सीताको वियोगको कारण बढेको कोपरूपी अग्निले उहाँका आँखा यति राता भएका थिए कि उहाँको दृष्टिले मगरमच्छ, सर्प र गोही आदि जीव जल्न थाले। यस समयमा समुद्रले डरले थर्थर काँप्दै उहाँलाई मार्ग दियो।

**वक्षःस्थलस्पर्शरुग्णमहेन्द्रवाह-**
**दन्तैर्विडम्बितककुब्जुष ऊढहासम्।**

**सद्योऽसुभिः सह विनेष्यति दारहर्तु-**
**र्विस्फूर्जितैर्धनुष उच्चरतोऽधिसैन्ये ॥ २५ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **वक्षःस्थलस्पर्शरुग्णमहेन्द्रवाह-दन्तैः** = आफ्नो छातीमा ठोकिँदा टुटेका ऐरावतका दाँतहरूद्वारा **विडम्बितककुब्जुषः** = सेतो बनेका दिशाहरूको मालिक अनि | **अधिसैन्ये** = सेनाले भरिएको युद्धभूमिमा **उच्चरतः** = विचरण गर्ने **दारहर्तुः** = पत्नीहरण गर्ने दुष्ट रावणको **ऊढहासम्** = गर्वयुक्त हाँसोलाई **धनुषः** = धनुको | **विस्फूर्जितैः** = टङ्कारहरूद्वारा **असुभिः सह** = प्राण सहित **सद्यः** = तत्काल **विनेष्यति** = नाश गराउनुहुन्छ |

**वाक्यार्थ–** जब रावणको कठोर छातीले ठक्कर खाएर इन्द्रको वाहन ऐरावतको दाँतहरू दसै दिशालाई सेताम्मे बनाउने गरी चूर्ण-चूर्ण हुन्छन् तब दिग्विजयी रावण घमण्डले फुलेर हाँस्न थाल्दथ्यो। त्यही रावण जब श्रीरामचन्द्रकी पत्नी सीताजीलाई चोरेर लैजान्छ र लडाइँको मैदानमा भगवान् श्रीरामसँग युद्ध गर्नका लागि गर्वपूर्वक आउँछ, तब भगवान् श्रीरामको धनुषको टङ्कारले उसको त्यो घमण्ड प्राणसहित तत्कालमा विलीन हुन्छ।

**भूमेः सुरेतरवरूथविमर्दितायाः**
**क्लेशव्ययाय कलया सितकृष्णकेशः।**
**जातः करिष्यति जनानुपलक्ष्यमार्गः**
**कर्माणि चात्ममहिमोपनिबन्धनानि ॥ २६ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **सुरेतरवरूथविमर्दितायाः** = असुर समूहबाट पीडित भएकी **भूमेः** = पृथिवीको **क्लेशव्ययाय** = दुःखनाशका लागि | **सितकृष्णकेशः** = सेता र काला केशबाट क्रमशः बलराम र कृष्ण बनी **कलया जातः** = कलावतार धारण गरेर **जनानुपलक्ष्यमार्गः** = संसारी जीवले रहस्य बुझ्न नसक्ने | **अत्ममहिमोपनिबन्धनानि** = आफ्नो महिमालाई प्रकट गर्ने **कर्माणि** = अद्‌भुत कर्महरू **च** = पनि **करिष्यति** = गर्नुहुनेछ |

**वाक्यार्थ–** जुन समयमा झुण्डका दैत्यसमूहहरू पृथिवीलाई पीडा दिन लाग्दछन् त्यस समयमा पृथिवीको भारलाई हटाउनका लागि भगवान् आफ्नो सेतो र कालो केश बलराम र कृष्णको

रूपमा कलावतार ग्रहण गर्नुहुनेछ। उहाँ संसारी जीवले रहस्य बुझ्न नसक्ने आफ्नो महिमालाई प्रकट गर्ने अद्भुत चरित्रहरू गर्नुहुनेछ।

**तोकेन जीवहरणं यदुलूकिकाया-**
**स्त्रैमासिकस्य च पदा शकटोऽपवृत्तः।**
**यद्रिङ्गतान्तरगतेन दिविस्पृशोर्वा**
**उन्मूलनं त्वितरथार्जुनयोर्न भाव्यम्॥ २७॥**

पदार्थ–

**तोकेन** = बालकद्वारा नै
**उलूकिकायाः** = पूतनाको
**यद् जीवहरणं** = जुन प्राण हरण भयो
**त्रैमासिकस्य** = तीन महिनाको हुँदा चाहिँ
**पदा** = पाउद्वारा नै
**शकटः** = गाढा र शकटासुर
**अपवृत्तः** = मर्‍यो
**यद्रिङ्गता** = जुन भगवान् घुँडाले टेकेर हिँड्दा
**दिविस्पृशोः** = आकाशलाई स्पर्श गर्ने खालका
**अर्जुनयोः** = यमलार्जुन वृक्षको
**अन्तरगतेन** = माझमा पुगेर
**उन्मूलनं वा** = वृक्ष उखेलिए
**इतरथा च** = ईश्वर नभएको भए
**न भाव्यम्** = नहुनुपर्ने

**वाक्यार्थ–** बाल्यावस्थामैं पूतनाको प्राणहरण गर्नु, तीन महिनाको अवस्थामा आफ्नो पाउद्वारा गाडा पल्टाउनु, घुँडाहरूका बलले बामे सर्दासर्दै यमलार्जुन वृक्षहरूको बीचबाट गएर तिनीहरूलाई उखेलिदिनु यी यस्ता कर्महरू हुन् जुन कर्महरू भगवानबाहेक अरू कसैले गर्न सक्दैन।

**यद् वै व्रजे व्रजपशून् विषतोयपीतान्**
**पालांस्त्वजीवयदनुग्रहदृष्टिवृष्ट्या।**
**तच्छुद्धयेऽतिविषवीर्यविलोलजिह्वम्**
**उच्चाटयिष्यदुरगं विहरन् ह्रदिन्याम्॥ २८॥**

पदार्थ–

**यत् वै** = अथवा उहाँ साक्षात् भगवान् हुनुहुन्छ भन्नेमा यो प्रमाण छ कि
**व्रजे** = व्रजमा
**विषतोयपीतान्** = यमुनाको विषपूर्ण जल पिउने
**व्रजपशून्** = व्रजका गाईहरू र
**पालान् तु** = गोपालहरूलाई समेत
**अनुग्रहदृष्टिवृष्ट्या** = कृपापूर्ण दृष्टिले
**अजीवयत्** = बचाउनुभयो फेरि
**तच्छुद्धये** = यमुनाको शुद्धिको लागि
**ह्रदिन्याम्** = नदीमा
**विहरन्** = विहार गर्दै

**अतिविषवीर्यविलोलजिह्वम्** = धेरै बलका घमण्डले जिब्रो लप्लपाएर (आएको)
**उरगं** = कालीय नागलाई
**उच्चाटयिष्यत्** = त्यस स्थानबाट भगाइदिनुभयो

**वाक्यार्थ—** जब कालीय नागको विषबाट दूषित भएको यमुनाको जल पिएर बाच्छाहरू र गोपबालकहरू मर्न लाग्दछन्, तब उहाँ आफ्नो सुधामय कृपादृष्टिको वर्षाले उनीहरूलाई जीवित गराइदिनुहुन्छ। यमुनाको जल शुद्ध गराउनका लागि त्यहाँ विहार गर्नुहुन्छ अनि विषको शक्तिले जिब्रो लपलप गर्ने कालीय नागलाई त्यहाँबाट भगाइदिनुहुन्छ।

**तत्कर्म दिव्यमिव यन्निशि निःशयानं**
**दावाग्निना शुचिवने परिदह्यमाने।**
**उन्नेष्यति व्रजमतोऽवसितान्तकालं**
**नेत्रे पिधाप्य सबलोऽनधिगम्यवीर्यः॥ २९॥**

**पदार्थ—**

**दावाग्निना** = डढेलोद्वारा
**शुचिवने** = ग्रीष्म ऋतुको सुकेको वन
**परिदह्यमाने** = डढ्न थाल्दा
**निशि** = राती
**निःशयानं** = यमुना किनारमा सुतेको
**अतः** = त्यसैले
**अवसितान्तकालं** = अन्तिम समयको निश्चय नभएको
**व्रजम्** = व्रजवासीहरूको झुण्डलाई
**सबलः** = बलरामले सहित
**अनधिगम्यवीर्यः** = अपरिमित पराक्रम हुने भगवान्ले
**नेत्रे** = आँखा
**पिधाप्य** = चिम्लन लगाएर
**उन्नेष्यति** = रक्षा गर्नुहुनेछ
**तत्कर्म** = त्यो अद्भुत काम
**दिव्यम् इव** = अलौकिकझैं लाग्छ सामान्य मान्छेका लागि

**वाक्यार्थ—** त्यही दिनको रात सबै मानिसहरू यमुनाका तटमा सुत्छन्। डढेलोले व्रजका आसपासका वनहरू चारैतिर जल्न थाल्दछन्, तब बलरामसहित भगवान् श्रीकृष्ण प्राणसङ्कटमा परेका व्रजवासीहरूलाई आफ्नो आँखा बन्द गर्न लगाएर उनीहरूलाई त्यो अग्निको भयबाट मुक्त गरी बचाउनुहुन्छ। उहाँको यो लीला पनि अलौकिक नै मानिन्छ। उहाँको शक्ति वास्तवमा अचिन्त्य छ।

**गृह्णीत यद् यदुपबन्धममुष्य माता**
**शुल्बं सुतस्य न तु तत्तदमुष्य माति।**
**यज्जृम्भतोऽस्य वदने भुवनानि गोपी**
**संवीक्ष्य शङ्कितमनाः प्रतिबोधिताऽऽसीत्॥ ३०॥**

**पदार्थ—**

**अमुष्य** = भगवान्‌की
**माता** = आमा यशोदाले
**यद्यत्** = जुन-जुन
**शुल्बं** = रज्जुविशेष
**उपबन्धम्** = बाँध्नका लागि
**गृह्णीत** = ग्रहण गर्नुहुन्छ
**तत्तत्** = त्यो-त्यो डोरी
**सुतस्य** = छोरारूप
**अमुष्य** = भगवान्‌को बन्धनमा
**न माति** = पर्याप्त हुँदैन
**यज्जृम्भतः** = बरु हाइ गर्ने
**अस्य** = भगवान्‌को
**वदने** = मुखभित्र
**गोपी** = यशोदाले
**भुवनानि** = चौध भुवन
**संवीक्ष्य** = देखेर
**शङ्कितमनाः** = आफ्नै छोरा हो कि होइन भन्ने विषयमा शङ्का गरेर
**प्रतिबोधिता** = भगवत्तत्त्वको विषयमा बुझाइएकी
**आसीत्** = थिइन्

**वाक्यार्थ—** उहाँकी आमा यशोदा उहाँलाई बाँध्नका लागि डोरी ल्याउनुहुन्छ। जुन डोरी ल्याए पनि केही अङ्गुल कम नै हुन्छ। त्यस्तै नै हाइ गर्दा भगवान् श्रीकृष्णको मुखमा चौध भुवनहरू देखेर आफ्नै छोरा हो कि होइन भन्ने विषयमा शङ्का हुन्छ र त्यसपछि भगवत्तत्त्वको ज्ञान हुन्छ।

**नन्दं च मोक्ष्यति भयाद् वरुणस्य पाशाद्**
**गोपान् बिलेषु पिहितान् मयसूनुना च।**
**अह्न्यापृतं निशि शयानमतिश्रमेण**
**लोकं विकुण्ठमुपनेष्यति गोकुलं स्म॥ ३१॥**

**पदार्थ—**

**वरुणस्य** = वरुणजीको
**पाशाद्** = बन्धनबाट
**भयात् च** = सर्पग्रासको भयबाट पनि
**नन्दं** = नन्दजीलाई
**मोक्ष्यति** = मुक्त गराउनुहुनेछ अनि
**मयसूनुना** = मयपुत्र व्योमासुरद्वारा
**बिलेषु** = गुफाहरूमा
**पिहितान्** = लुकाइएका
**गोपान्** = गोपालहरूलाई
**च** = पनि (छुटाउनुहुनेछ) त्यसै गरी
**अह्न्यापृतं** = दिनमा काम गर्ने
**निशि** = रात परेपछि
**अतिश्रमेण** = अत्यन्त थाकेर
**शयानम्** = सुतिरहेका गोकुलवासीहरूलाई
**विकुण्ठम्** = नित्य
**लोकं** = आनन्दपूर्णलोक
**गोकुलं** = गोकुलमा
**उपनेष्यति स्म** = लैजानुहुन्छ

**वाक्यार्थ—** उहाँले नन्दबाबालाई अजगर भय र वरुणको पासोबाट छुटाउनुहुन्छ। मयदानवको पुत्र कामासुर जब गोपबालकहरूलाई पहाडको गुफामा बन्द गरिदिन्छ तब उहाँले उनीहरूलाई बचाउनुहुन्छ। गोकुलमा मानिसहरू दिनभरि आफ्नो कामधन्दामा व्यस्त रहन्छन्, रातमा अत्यन्त थाकेर सुत्छन्, ती साधनाहीन भए तापनि उनीहरूलाई आफ्नो परमधाम गोकुलमा लैजानुहुन्छ।

**गोपैर्मखे प्रतिहते व्रजविप्लवाय**

**देवेऽभिवर्षति पशून् कृपया रिरक्षुः।**
**धर्तोच्छिलीन्ध्रमिव सप्तदिनानि सप्त**
**वर्षो महीध्रमनघैककरे सलीलम्॥ ३२॥**

पदार्थ—

| | | |
|---|---|---|
| **अनघ** = हे निष्पाप नारद ! | **अभिवर्षति** = रिसाएर अतिवृष्टि गर्दा | **सप्तदिनानि** = सात दिनसम्म |
| **गोपैः** = गोपहरूद्वारा | **कृपया** = कृपा गरेर | **महीध्रम्** = गोवर्धनलाई |
| **मखे** = इन्द्रयाग | **पशून्** = गाईहरूलाई | **उच्छिलीन्ध्रम् इव** = कर्कलाको पातजस्तो गरी |
| **प्रतिहते** = बन्द गरिएपछि | **रिरक्षुः** = रक्षा गर्नको लागि | **एककरेण** = एकै हातले |
| **व्रजविप्लवाय** = वज्रभूमिको नाश गर्नका लागि | **सप्तवर्षः** = सातवर्षमात्र हुनुभएका भगवान्ले | **सलीलम्** = विनापरिश्रम |
| **देवे** = इन्द्रले | | **धर्ता** = धारण गर्नुहुन्छ |

**वाक्यार्थ—** हे निष्पाप नारद ! जब श्रीकृष्णका सल्लाहले गोपहरूले इन्द्रको यज्ञलाई बन्द गरिदिन्छन् तब इन्द्र व्रजभूमिको नाश गर्नका लागि चारैतिर मूसलधारा वर्षा गरिदिन्छन्। ती रिसाएका इन्द्रबाट व्रजवासीहरू र उनीहरूका पशुहरूको रक्षाका लागि भगवान् कृपावश सात वर्षको उमेरमा नै सात दिनसम्म गोवर्द्धन पर्वतलाई एकै हातले कर्कलाको पात समाएझैं खेल खेलमैं धारण गर्नुहुन्छ।

**क्रीडन् वने निशि निशाकररश्मिगौर्यां**
**रासोन्मुखः कलपदायतमूर्च्छितेन।**
**उद्दीपितस्मररुजां व्रजभृद्वधूनां**
**हर्तुर्हरिष्यति शिरो धनदानुगस्य॥ ३३॥**

पदार्थ—

| | | |
|---|---|---|
| **रासोन्मुखः** = रासलीला गर्न तत्पर भगवान्ले | **वने** = वनभित्र | **व्रजभृद्वधूनां** = व्रजका गोपस्त्रीहरूको |
| **निशाकररश्मिगौर्यां** = चन्द्रमाको चाँदनीद्वारा चम्किएको | **कलपदायतमूर्च्छितेन** = मिठा पदचाल र लामा तानद्वारा युक्त मनोहारी गीतको कारणले | **हर्तुः** = हरण गर्ने |
| **निशि** = रात्रिमा | **उद्दीपितस्मररुजां** = प्रेमरोग अत्यन्त बढेका | **धनदानुगस्य** = कुबेर अनुचरको |
| **क्रीडन्** = खेल्दै | | **शिरः** = शिर |
| | | **हरिष्यति** = काटिदिनुहन्छ |

**वाक्यार्थ—** वृन्दावनमा विहार गर्दाखेरि रास गर्ने इच्छाले उहाँ रातको समय, जब चन्द्रमाको उज्ज्वल चाँदनी चारैतिर फैलिरहेका हुन्छन् त्यतिवेला आफ्नो बाँसुरीमा मधुर सङ्गीतको तान

छोडिदिनुहुन्छ। त्यसका कारणले प्रेमविवश भएर आएका गोपीहरूलाई जब कुवेरको सेवक शङ्खचूड हरण गर्दछ, तब भगवान् उसको शिर काटिदिनुहुन्छ।

**ये च प्रलम्बखरदर्दुरकेश्यरिष्ट-**
**मल्लेभकंसयवनाः कुजपौण्ड्रकाद्याः।**
**अन्ये च शाल्वकपिबल्वलदन्तवक्र**
**सप्तोक्षशम्बरविदूरथरुक्मिमुख्याः॥ ३४ ॥**
**ये वा मृधे समितिशालिन आत्तचापाः**
**काम्बोजमत्स्यकुरुसृञ्जयकैकयाद्याः।**
**यास्यन्त्यदर्शनमलं बलपार्थभीम**
**व्याजाह्वयेन हरिणा निलयं तदीयम्॥ ३५ ॥**

**पदार्थ—**

**ये** = अरू पनि
**प्रलम्बखरदर्दुरकेश्यरिष्टमल्लेभकंस यवनाः** = प्रलम्बासुर, बकासुर, धेनुकासुर, केशी, अरिष्ट आदि दैत्य मल्ल, कुवलयापीड हात्ती कंस अनि कालयवनहरू
**कुजपौण्ड्रकाद्याः** = भौमासुर र पौण्ड्रक आदि
**अन्ये च** = अझैं अरू
**शाल्वकपिबल्वलदन्तवक्रसप्तोक्ष शम्बरविदूरथरुक्मिमुख्याः** = शाल्व, द्विविद, बल्वल, दन्तवक्त्र, नग्नजित्का सात साँढे, शम्बर, विदूरथ, रुक्मि आदि दुष्टहरू
**ये वा** = अथवा अरू पनि
**काम्बोजमत्स्यकुरुसृञ्जयकैकयाद्याः** = कम्बोज, मत्स्य, कुरु, कैकेय, सृञ्जय आदि देशका राजाहरू
**मृधे** = युद्धमैदानमा
**समितिशालिन** = डटेर बस्ने
**आत्तचापाः** = धनु उठाउने राजाहरू छन् ती
**अलं** = सबै
**बलपार्थभीमव्याजाह्वयेन** = बलराम, अर्जुन, भीमसेन आदिको निहुले
**हरिणा** = स्वयं भगवान्द्वारा नै
**अदर्शनम्** = मृत्युलाई प्राप्त गरेर
**तदीयम्** =भगवान्का
**निलयं** = धाममा
**यास्यन्ति** = जानेछन्

**वाक्यार्थ—** अरू पनि धेरै प्रलम्बासुर, धेनुकासुर, बकासुर, केशी, अरिष्टासुर आदि दैत्य, चाणूर आदि पहलवान, कुवलयापीड हात्ती, कंस, कालयवन, भौमासुर, पौण्ड्रक, शाल्व, द्विविद वानर, बल्वल, दन्तवक्त्र, राजा नग्नजितका सातओटा साँढेहरू, शम्बरासुर, विदूरथ, रुक्मि आदि तथा काम्बोज, मत्स्य, कुरु, कैकय र सृञ्जय आदि देशका राजाहरू अनि अरू जो पनि योद्धाहरू धनुष धारण गरेर युद्धको मैदानमा अगाडि आउनेछन्, ती सम्पूर्ण योद्धाहरूलाई भगवान् स्वयम्, बलराम, भीमसेन, अर्जुन आदि नामहरूको आडमा मारेर आफ्नै धाममा लैजानुहन्छ।

**कालेन मीलितधियामवमृश्य नृणां**

**स्तोकायुषां स्वनिगमो बत दूरपारः।**
**आविर्हितस्त्वनुयुगं स हि सत्यवत्यां**
**वेदद्रुमं विटपशो विभजिष्यति स्म॥ ३६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **कालेन** = समयको अन्तरालबाट | **बत** = निश्चय नै | **आविर्हितः** = व्यासको रूपमा जन्मिएर |
| **मीलितधियाम्** = बुद्धि मन्द भएका | **दूरपारः** = दुर्बोध्य हुन्छ भन्ने | **विटपशः** = शाखापिच्छे |
| **स्तोकायुषां** = थोरै आयु बाँच्ने | **अवमृश्य** = बुझेर | **वेदद्रुमं** = वेदरूपी वृक्षलाई |
| **नृणां** = मनुष्यहरूको लागि | **हि** = निश्चय नै | **विभजिष्यति स्म** = भाग लगाउनुहुनेछ |
| **स्वनिगमः** = आफ्नो रहस्यतम वेदमार्ग | **सः** = भगवान्ले | |
| | **अनुयुगं** = हरेक युगमा | |
| | **सत्यवत्यां** = सत्यवतीमा | |

**वाक्यार्थ–** समयको प्रभावका कारणले गर्दा मनुष्यहरूको बुद्धि कमजोर हुन्छ, आयु कम हुन्छ। त्यस समयमा मानिसहरू मेरो तत्त्वलाई बताउने वेदवाणी बुझ्न असमर्थ हुनेछन् भन्ने ठानेर भगवान् प्रत्येक कल्पमा सत्यवतीका गर्भबाट व्यासको रूपमा प्रकट भएर विभिन्न शाखाहरूको रूपमा वेदरूपी कल्पवृक्षको विभाजन गर्नुहुनेछ।

**देवद्विषां निगमवर्त्मनि निष्ठितानां**
**पूर्भिर्मयेन विहिताभिरदृश्यतूर्भिः।**
**लोकान्घ्नतां मतिविमोहमतिप्रलोभं**
**वेषं विधाय बहु भाष्यत औपधर्म्यम्॥ ३७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **देवद्विषां** = देवताहरूले द्वेष गर्ने तर पनि | **अदृश्यपूर्भिः** = अदृश्य वेगवाला नगरहरूमा बसेर त्यहाँबाट | **अतिप्रलोभं** = लोभ उत्पन्न गराउने |
| **निगमवर्त्मनि** = वेदशास्त्रमा नै | **लोकान्** = संसारका प्राणीहरूलाई | **वेषं** = स्वरूपलाई |
| **निष्ठितानां** = अलि अलि आश्रय लिएर | **घ्नतां** = संसारका प्राणीहरूलाई नाश गर्ने (दैत्यहरू बढेपछि) | **विधाय** = धारण गरेर |
| **मयेन** = मयदानवले | **मतिविमोहम्** = बुद्धिलाई मोहित बनाउने | **बहु** = धेरै |
| **विहिताभिः** = बनाएको | | **औपधर्म्यम्** = उपधर्म |
| | | **भाष्यते** = भन्नुहुनेछ |

**वाक्यार्थ–** देवताका शत्रु दैत्यहरू वेदमार्गको सहारा लिएर मयदानवले बनाएको अदृश्य वेगवाला नगरमा बसेर जब मानिसहरूको सत्यानाश गर्न लाग्दछन् तब भगवान् मानिसहरूका

बुद्धिमा मोह र अत्यन्त लोभ उत्पन्न गराउने भेष धारण गरेर बुद्धका रूपमा धेरै उपधर्महरूको उपदेश गर्नुहुनेछ।

**यर्ह्यालयेष्वपि सतां न हरेः कथाः स्युः**
**पाषण्डिनो द्विजजना वृषला नृदेवाः।**
**स्वाहा स्वधा वषडिति स्म गिरो न यत्र**
**शास्ता भविष्यति कलेर्भगवान् युगान्ते॥ ३८॥**

पदार्थ—

| | | |
|---|---|---|
| **भगवान्** = भगवान् श्रीकृष्ण | **कथाः** = लीलाचरित्रहरू | **स्वाहा स्वधा वषडिति** = स्वाहा, |
| **कलेः** = कलिको | **न स्युः** = हुँदैनन् | स्वधा, वषट् इत्यादि |
| **युगान्ते** = युग अन्त हुने वेला | **द्विजजनाः** = त्रैवर्णिक ब्राह्मण, | **गिरः** = वाणीहरू |
| **यर्हि** = जुन समयमा | क्षत्रिय, वैश्यहरू पनि | **न स्म** = हुँदैनन् भने |
| **सतां** = सज्जनहरूको | **पाषण्डिनः** = पाखण्डी हुन्छन् | **शास्ता** = शासक अनि |
| **आलयेषु** = घरघरमा | **वृषलाः** = शुद्रकर्म गर्नेहरू | दमनकर्ता |
| **अपि** = पनि | **नृदेवाः** = राजा हुनेछन् | **भविष्यति** = हुनुहुनेछ |
| **हरेः** = भगवान् श्रीहरिका | **यत्र** = जुन समयमा | |

**वाक्यार्थ—** कलियुगको अन्तमा जब सत्पुरुषहरूका घरमा पनि भगवान्‌को कथा हुनका लागि बाधा पर्नेछ। ब्राह्मण, क्षत्रिय र वैश्य पाखण्डी हुनेछन्। यहाँसम्म कि कहीँ पनि 'स्वाहा' 'स्वधा' र 'वषट्कार'को ध्वनि देवता र पितृहरूको यज्ञ र श्राद्धमा सुनिनेछैन तब कलियुगको शासन गर्नका लागि भगवान्‌ले कल्कि अवतार ग्रहण गर्नुहुनेछ।

**सर्गे तपोऽहमृषयो नव ये प्रजेशाः**
**स्थाने च धर्ममखमन्वमरावनीशाः।**
**अन्ते त्वधर्महरमन्युवशासुराद्या**
**मायाविभूतय इमाः पुरुशक्तिभाजः॥ ३९॥**

पदार्थ—

| | | |
|---|---|---|
| **सर्गे** = सृष्टिको समयमा | **अहम्** = मेरो रूपमा त्यसै गरी | **धर्ममखमन्वमरावनीशाः** = धर्म, |
| **तपः** = तपस्या | **अथ** = यसपछि | विष्णु, मनु, देवता र राजाहरूको |
| **ऋषयः** = मरीचि आदि ऋषिहरू | **स्थाने** = स्थितिको समयमा | रूपमा तथा |
| **नव** = नौ | | **अन्ते** = सृष्टिको प्रलयको |
| **प्रजेशाः** = प्रजापति | | समयमा |

**अधर्महरमन्युवशासुराद्याः** = अधर्म, रुद्र, सर्प र देवताको रूपमा
**ये** = जति पनि स्वरूप छन्
**इमाः** = यी सबै
**पुरुशक्तिभाजः** = अपरिमित शक्तिसम्पन्न भगवान्का
**मायाविभूतय** = मायाका खेलमात्र हुन्

**वाक्यार्थ—** जब संसारको सृष्टिको समय हुन्छ, तब तपस्या, नौ प्रजापति, मरीचि आदि ऋषि र मेरो रूपमा; जब सृष्टिको रक्षाको समय हुन्छ, तब धर्म, विष्णु, मनु, देवता र राजाहरूको रूपमा; जब सृष्टिको प्रलयको समय हुन्छ, तब अधर्म ,रुद्र, सर्प र दैत्य आदिको रूपमा सर्वशक्तिमान् भगवान्का मायाविभूतिहरू प्रकट हुन्छन्।

**विष्णोर्नु वीर्यगणनां कतमोऽर्हतीह**
**यः पार्थिवान्यपि कविर्विममे रजांसि।**
**चस्कम्भ यः स्वरहसास्खलता त्रिपृष्ठं**
**यस्मात् त्रिसाम्यसदनादुरुकम्पयानम्॥ ४०॥**

**पदार्थ—**
**यः** = जुन
**कविः** = विद्वान्ले
**पार्थिवानि** = पृथिवीमा भएका
**रजांसि** = धुलोका कणहरूलाई
**विममे** = नाप्न सक्ला तर
**नु** = निश्चय नै
**इह** = यस संसारमा
**विष्णोः** = सर्वव्यापक परमात्माको
**वीर्यगणनां** = पराक्रमको वर्णन गर्न
**कतमः** = कुनचाहिँ
**अर्हति** = योग्य छ
**यस्मात्** = किनभने
**यः** = जुन वामन अवतारी भगवान्ले
**अस्खलता** = अदम्य
**स्वरहसा** = चरण उत्क्रमणको वेगद्वारा
**त्रिसाम्यसदनात्** = तीन गुण बस्ने स्थान प्रकृतिको आवरणदेखि
**त्रिपृष्ठं** = सत्यलोकमा
**उरुकम्पयानम्** = थर्थर काँपेको लोकहरूलाई
**चस्कम्भ** = धारण गर्नुभयो

**वाक्यार्थ—** आफ्नो प्रतिभाको बलले पृथिवीको एकएक धुलाको कणलाई कसैले गन्न सके तापनि यस संसारमा कुन त्यस्तो पुरूष होला भगवान्को शक्तिहरूको गणना गर्न सक्ला ? जब उहाँले त्रिविक्रम अवतार लिएर त्रिलोकीलाई नाप्दै हुनुहुन्थ्यो, त्यस समयमा उहाँको चरणको अदम्य वेगले प्रकृतिरूप अन्तिम आवरणदेखि लिएर सत्यलोकपर्यन्त सम्पूर्ण ब्रह्माण्ड काँप्न लागेको थियो, तब भगवान्ले आफ्नो शक्तिद्वारा उसलाई स्थिर गर्नुभयो।

**नान्तं विदाम्यहममी मुनयोऽग्रजास्ते**
**मायाबलस्य पुरुषस्य कुतोऽवरा ये।**

**गायन् गुणान् दशशताननआदिदेवः**
**शेषोऽधुनापि समवस्यति नास्य पारम्॥ ४१॥**

पदार्थ–

**मायाबलस्य** = माया शक्तियुक्त
**पुरुषस्य** = सर्वात्मा परमात्माको
**अन्तं** = सीमालाई
**अधुना** = अहिले
**ये** = जो
**अमी** = यी
**मुनयः** = मुनिहरू छन्
**ते** = तिमी नारदका
**अग्रजाः** = दाइ सनकादि र
**अहम्** = म
**अपि** = पनि
**न विदामि** = जान्दिनँ
**अवरा** = पछिका अरू प्राणीहरू
**कुतः** = कसरी जानुन्
**दशशताननः** = दश हजार मुख भएका
**आदिदेवः** = अनादिकाल देखिका
**शेषः** = शेषजी त
**अस्य** = भगवान्‌का
**गुणान्** = गुणहरू
**गायन्** = गाउँदा-गाउँदै
**पारम्** = अन्त
**न समवस्यति** = प्राप्त गर्नुहुन्न

**वाक्यार्थ–** समस्त सृष्टिको रचना र संहार गर्ने माया उहाँको एउटा शक्ति हो। यस्ता अनन्त शक्तिका आश्रय उहाँको स्वरूपलाई न म जान्दछु न त सनकादि नै जान्दछन्। फेरि अरूहरूले जान्ने प्रश्न त उठ्नै सक्दैन। आदिदेव भगवान् शेष हजारौं मुखले उहाँको गुणहरूको वर्णन गर्दै आइरहेका छन्। परन्तु अहिलेसम्म उनका गुणहरूको अन्तको कल्पना पनि गर्न सक्दैनन्।

**येषां स एष भगवान् दययेदनन्तः**
**सर्वात्मनाश्रितपदो यदि निर्व्यलीकम्।**
**ते दुस्तरामतितरन्ति च देवमायां**
**नैषां ममाहमिति धीः श्वशृगालभक्ष्ये॥ ४२॥**

पदार्थ–

**यदि** = यदि
**निर्व्यलीकम्** = निष्कपट भएर
**सर्वात्मना** = सर्वात्मा भगवान्‌मा समर्पित गरेर
**आश्रितपदः** = शरणागतिपूर्वक चरणको आश्रय ग्रहण गरिएका
**अनन्तः** = सनातन
**सः एषः** = उहाँ नै
**भगवान्** = परमप्रभु
**येषां** = आफ्ना जुन भक्तहरूप्रति
**दययेत्** = दया गर्नुहुन्छ
**ते च** = ती शरणागत भक्तहरू नै
**दुस्तराम्** = तर्न नसकिने **देवमायां** = मायाको स्वरूपलाई
**अतितरन्ति** = तर्दछन्
(यस्ता भक्तहरूको)
**श्वशृगालभक्ष्ये** = कुक्कुर र श्यालको आहारा भएको आफ्नो र आफन्तको शरीरमा
**मम** = मेरा
**अहम्** = म हूँ भन्ने
**इति** = यस्तो
**धीः** = बुद्धि
**न** = हुँदैन

**वाक्यार्थ—** जो निष्कपटभावले आफ्नो सर्वस्व र आफूलाई समेत उहाँको चरणमा समर्पित गरिदिन्छन् उनीहरूमाथि अनन्त भगवान् स्वयं नै आफ्नो तर्फबाट दया गर्नुहुन्छ। उहाँका दयाका पात्रहरू नै दुस्तर मायाको स्वरूपलाई जान्दछन् र त्यसबाट पार हुन्छन्। वास्तवमा यस्तै पुरुषहरू कुकुर र श्यालको आहार भएको आफ्नू र पुत्रादिको शरीरमा म र मेरो भावना राख्दैनन्।

**वेदाहमङ्ग परमस्य हि योगमायां**
**यूयं भवश्च भगवानथ दैत्यवर्यः।**
**पत्नी मनोः स च मनुश्च तदात्मजाश्च**
**प्राचीनबर्हिर्ऋभुरङ्ग उत ध्रुवश्च ॥ ४३ ॥**

पदार्थ—

| | | |
|---|---|---|
| **अङ्ग** = प्यारा नारद | **भवः** = शङ्कर | **तदात्मजाः च** = मनुपुत्र प्रियव्रत आदि |
| **हि** = निश्चय नै | **च** = पनि जान्नुहुन्छ | **च** = पनि |
| **परमस्य** = परमपुरुष भगवान्को | **अथ** = अनि | **प्राचीनबर्हिः** = प्राचीनबर्हि राजा |
| **योगमायां** = मायालाई | **दैत्यवर्यः** = दैत्यकुलभूषण प्रह्लाद | **ऋभुः** = ऋभु र |
| **अहम्** = म ब्रह्मा | **मनोः** = वैवस्वत मनुकी | **उत** = अनि |
| **वेद** = जान्दछु | **पत्नी** = पत्नी शतरूपा | **ध्रुवः च** = ध्रुव पनि जान्दछन् |
| **यूयं** = तिमीहरू | **सः मनुः** = उहाँ मनु | |
| **भगवान्** = भगवान् | | |

**वाक्यार्थ—** प्रिय नारद ! परमपूज्य पुरुषको त्यो योगमायालाई म जान्दछु। तिमीहरू, भगवान् शङ्कर, दैत्यकुलभूषण प्रह्लाद, शतरूपा, मनु, मनुपुत्र, प्रियव्रत आदि, प्राचीनबर्हि, ऋभु र ध्रुव पनि जान्दछन्।

**इक्ष्वाकुरैलमुचुकुन्दविदेहगाधि-**
**रघ्वम्बरीषसगरा गयनाहुषाद्याः।**
**मान्धात्रलर्कशतधन्वनुरन्तिदेवा**
**देवव्रतो बलिरमूर्त्तरयो दिलीपः॥ ४४ ॥**
**सौभर्युतङ्कशिबिदेवलपिप्पलाद-**
**सारस्वतोद्धवपराशरभूरिषेणाः।**
**येऽन्ये विभीषणहनूमदुपेन्द्रदत्त-**

**पार्थार्ष्टिषेणविदुरश्रुतदेववर्याः ॥ ४५ ॥**

**ते वै विदन्त्यतितरन्ति च देवमायां**

**स्त्रीशूद्रहूणशबरा अपि पापजीवाः ।**

**यद्यद्भुतक्रमपरायणशीलशिक्षास्**

**तिर्यग्जना अपि किमु श्रुतधारणा ये ॥ ४६ ॥**

**पदार्थ–**

**इक्ष्वाकुः** = इक्ष्वाकु राजा
**ऐलमुचुकुन्दविदेहगाधि-रघ्वम्बरीषसगराः** = ऐल, मुचुकुन्द जनक, गाधि, रघु, अम्बरीष र सगर राजाहरूले
**गयनाहुषाद्याः** = गय, नहुष पुत्र ययाति आदिले
**मान्धात्रलर्कशतधन्वनु-रन्तिदेवाः** = मान्धाता, अलर्क, शतधन्वा, अनु, रन्तिदेव आदि राजाहरूले त्यसै गरी
**देवव्रतः** = भीष्मले
**बलिः** = राजा बलिले अनि
**अमूर्त्तरयः** = अमूर्तरयले र
**दिलीपः** = दिलीप
**सौभर्युतङ्कशिबिदेवलपिप्पलाद-सारस्वतोद्धवपराशरभूरिषेणाः** = सौभरि, उतङ्क, शिबि, देवल, पिप्पलाद, सारस्वत, उद्धव, पराशर, भूरिषेण
**अन्ये** = अरू पनि
**विभीषणहनूमदुपेन्द्रदत्तपार्था-र्ष्टिषेणविदुरश्रुतदेववर्याः** =विभीषण हनुमान्, शुकदेव, अर्जुन, आर्ष्टिषेण, विदुर र श्रुतदेव जस्ता ठुला महात्माहरूले पनि
**यदि** = जुन कुनै रूपबाट पनि
**अद्भुतक्रमपरायणशीलशिक्षाः** = अद्‌भुत पराक्रमवाला भगवान्का प्रेमी भक्तहरूबाट शीलस्वभाव सिक्ने
**स्त्रीशूद्रहूणशबराः** = स्त्रीशुद्र-वृत्तिवाला हूण र भिल्लहरू र
**ते** = ती
**पापजीवाः** = पापको कारणले जन्मिएका
**तिर्यग्जनाः अपि** = पशु, पक्षी आदि समेत
**वै** = पूर्णरूपले
**देवमायां** = भगवन्मायाको रहस्य
**विदन्ति** = बुझ्दछन्
**अतितरन्ति च** = अतिक्रमण पनि गर्दछन् भने
**ये** = जो
**अपि** = पनि
**श्रुतधारणाः** = कर्णद्वारबाट भगवत्स्वरूपलाई हृदयभित्र विराजमान गराउने भक्तहरूले
**किमु** = भगवान्को मायालाई किन नजान्ने

**वाक्यार्थ–** इक्ष्वाकु, पुरुरवा, मुचुकुन्द, जनक, गाधि, रघु, अम्बरीष, सगर, गय, ययाति आदि तथा मान्धाता, अलर्क, शतधन्वा, अनु, रन्तिदेव, भीष्म, बलि, अमूर्तरय, दिलीप, सौभरि, उतङ्क, शिबि, देवल, पिप्पलाद, सारस्वत, उद्धव, पराशर, भूरिषेण विभीषण, हनुमान्, शुकदेव, अर्जुन, आर्ष्टिषेण, विदुर र श्रुतदेव आदि महात्मा पनि जान्दछन्। जुन व्यक्तिहरूलाई भगवान्का प्रेमी भक्तहरूको स्वभावको अनुकरण गर्ने शिक्षा मिलेको छ ती स्त्री, शूद्र, हूण, भील र पापको कारणले पशुपक्षी आदि योनिहरूमा रहने प्राणीहरूले पनि भगवान्को मायाको रहस्यलाई जान्दछन् र यस संसारसागरबाट सधैँका लागि पार हुन्छन्। फेरि जुन मनुष्यहरू वैदिक सदाचारको पालन गर्दछन्, उनीहरूका विषयमा त भन्नु नै के पऱ्यो र ?

**शश्वत् प्रशान्तमभयं प्रतिबोधमात्रं**
**शुद्धं समं सदसतः परमात्मतत्त्वम् ।**
**शब्दो न यत्र पुरुकारकवान् क्रियार्थो**
**माया परैत्यभिमुखे च विलज्जमाना ॥ ४७ ॥**

पदार्थ–

**शश्वत्प्रशान्तम्** = सर्वदा शान्त
**अभयं** = अभयरूप
**प्रतिबोधमात्रं** = केवल ज्ञानस्वरूप
**शुद्धं** = मायाको मलबाट अस्पृश्य
**समं** = मायाजन्य विषमताले रहित
**सदसतःपरम्** = सत् र असत्–भन्दा पर
**आत्मतत्त्वम्** = वास्तविक आत्मस्वरूप छ
**यत्र** = जहाँ
**शब्दः** = वैदिक र लौकिक दुबै शब्द अनि
**पुरुकारकवान्** = अनेक साधनद्वारा सिद्ध हुने
**क्रियार्थः** = कर्मफल पनि
**न** = छैन
**अभिमुखे** = भगवान्सँग संमुख पर्न
**विलज्जमाना** = लजाउँदै
**माया च** = माया पनि
**परैति** = भाग्दछे

**वाक्यार्थ–** परमात्माको वास्तविक स्वरूप एकरस, शान्त, अभय एव केवल ज्ञानस्वरूप छ। भगवान्को त्यो स्वरूपमा न मायाको मल छ न त मायाबाट बनेका विषमताहरू नै छन्। उहाँको उक्त स्वरूप सत् र असत् दुबैबाट पर छ। उहाँमा कुनै लौकिक र वैदिक शब्द पुग्न सक्दैनन्। अरूको त कुरै छोडौं, माया पनि उसको अगाडि जान सक्तिन, लाजले टाढैबाट भाग्दछे।

**तद्वै पदं भगवतः परमस्य पुंसो**
**ब्रह्मेति यद्विदुरजस्रसुखं विशोकम् ।**
**सध्र्यङ्नियम्य यतयो यमकर्तहेतिं**
**जह्युः स्वराडिव निपानखनित्रमिन्द्रः ॥ ४८ ॥**

पदार्थ–

**परमस्य** = परम
**पुंसः** = पुरुष
**भगवतः** = भगवान्को
**वै** = निश्चय नै
**तत्** = त्यही नै
**पदं** = परमपद हो
**विशोकम्** = शोकरहित
**अजस्रसुखं** = नित्य आनन्दस्वरूप
**यत्** = जसलाई
**ब्रह्म इति** = ब्रह्म भनेर
**विदुः** = (महात्माहरू) बुझ्दछन्
**स्वराट्** = स्वशक्तिसम्पन्न
**इन्द्रः** = इन्द्रले
**निपानखनित्रम्** = कुवा खन्ने साधनलाई
**इव** = झैं
**यतयः** = मुनिहरू

**सध्र्यक्** = मनलाई
**यम्** = जुन भगवान्मा
**नियम्य** = स्थिर गरेर
**अकर्तहेतिं** = भेदनाश गर्ने विभिन्न साधनहरूलाई
**जह्युः** = त्याग गरिदिन्छन्

**वाक्यार्थ—** परमपुरुष भगवान्को यही नै परमपद हो। महात्माहरू त्यही पदको शोकरहित अनन्त आनन्दस्वरूप ब्रह्मको रूपमा साक्षात्कार गर्दछन्। मुनिहरू त्यही परमतत्त्वमा आफ्नो मनलाई समाहित गरेर स्थित हुन्छन्। जसरी इन्द्र आफैं पानी पार्न सक्षम हुनाले जलका लागि कुवा खन्नका लागि कोदालो ग्रहण गर्दैनन् त्यसै गरी ज्ञानीहरू पनि भेद दूर गर्ने ज्ञानका साधनहरूको परित्याग गर्दछन्।

**स श्रेयसामपि विभुर्भगवान् यतोऽस्य**
**भावस्वभावविहितस्य सतः प्रसिद्धिः।**
**देहे स्वधातुविगमेऽनुविशीर्यमाणे**
**व्योमेव तत्र पुरुषो न विशीर्यतेऽजः॥ ४९॥**

**पदार्थ—**

**यतः** = जुन भगवान्बाट
**भावस्वभावविहितस्य** = महत्तत्त्व प्रधान आदिको परिणामले उत्पन्न
**अस्य** = यो
**सतः** = कार्यको
**प्रसिद्धिः** = अवस्थिति छ
**सः** = उहाँ
**भगवान्** = भगवान् नै
**श्रेयसाम् अपि** = स्वर्गादि फलहरूको पनि
**विभुः** = दाता हुनुहुन्छ
**स्वधातुविगमे** = देह बनाउने महाभूतहरूको वियोग भएर
**देहे** = शरीर
**अनुविशीर्यमाणे** = तत्काल नै नष्ट भए पनि
**व्योम इव** = आकाशझैं
**तत्र** = त्यहाँ रहेको
**अजः** = अजन्मा
**पुरुषः** = परमात्मतत्त्व
**न विशीर्यते** = नष्ट हुँदैन

**वाक्यार्थ—** सम्पूर्ण कर्महरूको फल भगवान् नै दिनुहुन्छ। किनभने मनुष्य आफ्नो स्वभावको अनुसार जुन शुभकर्म गर्दछ, त्यो सबै भगवान्कै प्रेरणाद्वारा हुन्छ। यस शरीरमा रहने पाँच भूतहरू अलग-अलग भएपछि यो शरीर नष्ट हुन्छ, तापनि आकाशझैं त्यहाँ रहेको यसमा अजन्मा पुरुष नष्ट हुँदैन।

**सोऽयं तेऽभिहितस्तात भगवान् विश्वभावनः।**
**समासेन हरेर्नान्यदन्यस्मात्सदसच्च यत्॥ ५०॥**

**पदार्थ—**

**अन्यस्मात्** = कार्य र कारणभन्दा पृथक् हुनुभएका
**हरेः** = हरि भगवान्भन्दा
**यत्** = जुन

**सदसत् च** = कार्य र कारणरूप पदार्थ या भाव र अभावरूप पदार्थ छन्
**अन्यत्** = भिन्न
**न** = होइनन्
**तात** = हे नारद
**सः अयं** = त्यस्ता खालका
**विश्वभावनः** = विश्वात्मा **भगवान्** = परमात्मा
**ते** = तिम्रा लागि
**समासेन** = संक्षेपले
**अभिहितः** = बताइनुभयो

**वाक्यार्थ—** बावु नारद ! संकल्पले नै विश्वको रचना गर्ने षडैश्वर्यसम्पन्न श्रीहरिको मैले तिम्रो अगाडि संक्षेपले वर्णन गरैँ। संसारमा कार्यकारणरूपमा अथवा भाव र अभावका रूपमा जति पनि पदार्थहरू छन् ती भगवान्देखि भिन्न छैनन्। परन्तु भगवान् ती पदार्थहरूदेखि भिन्न हुनुहुन्छ।

**इदं भागवतं नाम यन्मे भगवतोदितम्।**
**सङ्ग्रहोऽयं विभूतीनां त्वमेतद्विपुलीकुरु॥ ५१॥**

पदार्थ—
**मे** = मलाई
**भगवतोदितम्** = भगवान्ले बताउनुभएको
**यत्** = जुन
**भागवतं नाम** = भागवत नामको
**इदं** = यो अमृतविद्या हो
**अयं** = यो ग्रन्थ
**विभूतीनां** = भगवान्का लीलाविभूतिहरूको
**सङ्ग्रहः** = सङ्ग्रह हो
**एतत्** = यसलाई
**त्वम्** = तिमी
**विपुलीकुरु** = अरु फैलाऊ

**वाक्यार्थ—** भगवान्ले मलाई जुन कुराको उपदेश गर्नुभएको थियो, त्यही नै भागवत हो। यसमा भगवान्का र विभूतिहरूको संक्षेपमा वर्णन छ। तिमी यसको विस्तार गर।

**यथा हरौ भगवति नृणां भक्तिर्भविष्यति।**
**सर्वात्मन्यखिलाधार इति सङ्कल्प्य वर्णय॥ ५२॥**

पदार्थ—
**यथा** = जुन उपायले
**सर्वात्मनि** = सबै संसारको रूपमा देखापर्ने
**अखिलाधारे** = सम्पूर्ण जगत्का एकमात्र अधिष्ठान
**हरौ** = श्रीहरि
**भगवति** = भगवान्मा
**नृणां** = मानिसहरूको
**भक्तिः** = भक्ति
**भविष्यति** = हुनेछ
**इति** = यस्तो उपाय
**सङ्कल्प्य** = निश्चय गरेर
**वर्णय** = वर्णन गर

**वाक्यार्थ—** जुन उपायले सबै संसारको रूपमा देखापर्ने सम्पूर्ण जगत्का एकमात्र अधिष्ठान श्रीहरि भगवान्मा मानिसहरूको भक्ति हुनेछ यस्तो उपाय निश्चय गरेर वर्णन गर।

**मायां वर्णयतोऽमुष्य ईश्वरस्यानुमोदतः।**

**शृण्वतः श्रद्धया नित्यं माययाऽऽत्मा न मुह्यति ॥ ५३ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अमुष्य** = यी | **श्रद्धया** = श्रद्धापूर्वक | **आत्मा** = अन्तःकरण |
| **ईश्वरस्य** = परमात्माको | **नित्यं** = निरन्तर | **मायया** = भगवान्‌को मायाबाट |
| **मायां** = एक नै अनेकका रूपमा देखिएको मायाको प्रसङ्गलाई | **शृण्वतः** = निरन्तर श्रवण गर्ने | **न मुह्यति** = मुग्ध हुँदैन |
| **वर्णयतः** = वर्णन गर्ने | **अनुमोदतः** = त्यसलाई अनुमोदन गर्ने मनुष्यको पनि | |

**वाक्यार्थ–** जो पुरुष भगवान्‌को अचिन्त्यशक्ति मायाको वर्णन अथवा अर्काले गरेको वर्णनको अनुमोदन गर्दछ, अथवा श्रद्धाको साथ नित्य वर्णन गर्दछ, उसको चित्त मायाबाट कहिल्यै पनि मोहित हुँदैन।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां द्वितीयस्कन्धे**

**ब्रह्मनारदसंवादे सप्तमोऽध्यायः ॥ ७ ॥**

# अथ अष्टमोऽध्यायः

## राजा परीक्षित्का प्रश्नहरू

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**ब्रह्मणा चोदितो ब्रह्मन्गुणाख्यानेऽगुणस्य च।**
**यस्मै यस्मै यथा प्राह नारदो देवदर्शनः॥ १॥**

**पदार्थ–**

**ब्रह्मन्** = हे शुकदेवजी
**अगुणस्य** = निर्गुण परमात्माको
**गुणाख्याने** = गुण वर्णन गर्न
**ब्रह्मणा** = ब्रह्माजीद्वारा
**चोदितः** = प्रेरित हुनुभएका
**देवदर्शनः** = सबैमा भगवद्दर्शन गर्ने
**नारदः** = नारद मुनिले
**यस्मै यस्मै** = जस्ता-जस्ता अधिकारीलाई
**यथा** = जुन प्रकारले
**प्राह** = बताउनुभयो (त्यो कुरा सुन्न चाहन्छु)

**वाक्यार्थ–** हे शुकदेवजी ! निर्गुण परमात्माको गुण वर्णन गर्न ब्रह्माजीद्वारा प्रेरित हुनुभएका सबैमा भगवद्दर्शन गर्ने नारद मुनिले जस्ता-जस्ता अधिकारीलाई जुन प्रकारले बताउनुभयो त्यो कुरा सुन्न चाहन्छु।

**एतद् वेदितुमिच्छामि तत्त्वं वेदविदां वर।**
**हरेरद्भुतवीर्यस्य कथा लोकसुमङ्गलाः॥ २॥**

**पदार्थ–**

**वेदविदां** = वेदतात्पर्यवेत्ताहरूमध्ये
**वर** = श्रेष्ठ हे शुकदेवजी
**अद्भुतवीर्यस्य** = अद्भुत पराक्रम हुनुभएका
**हरेः** = हरि भगवान्को
**लोकसुमङ्गलाः** = सबैको परमकल्याण गर्ने
**कथाः** = लीलाचरित्रहरू जसको वर्णन नारदजीले गर्नुभयो
**एतत् तत्त्वं** = यो निर्गुण भगवत्तत्त्व
**वेदितुम्** = जान्न
**इच्छामि** = चाहन्छु

**वाक्यार्थ–** वेदतात्पर्यवेत्ताहरूमध्ये श्रेष्ठ हे शुकदेवजी ! अद्भुत पराक्रम हुनुभएका हरि भगवान्को सबैको परमकल्याण गर्ने लीलाचरित्रहरू जसको वर्णन नारदजीले गर्नुभयो त्यो निर्गुण भगवत्तत्त्व जान्न चाहन्छु।

**कथयस्व महाभाग यथाहमखिलात्मनि।**
**कृष्णे निवेश्य निःसङ्गं मनस्त्यक्ष्ये कलेवरम्॥ ३॥**

पदार्थ—

**महाभाग** = हे शुकदेवजी
**कथयस्व** = त्यस्तो उपदेश गर्नुहोस्
**यथा** = जुन उपदेशबाट
**अहम्** = म
**अखिलात्मनि** = सम्पूर्ण प्राणीहरूका आत्मस्वरूप
**कृष्णे** = श्रीकृष्णमा
**निःसङ्गं** = आसक्तिरहित
**मनः** = मनलाई
**निवेश्य** = लीन गराएर
**कलेवरम्** = शरीर
**त्यक्ष्ये** = त्याग्न सकूँ

**वाक्यार्थ—** महाभाग्यवान् शुकदेवजी ! तपाईं मलाई यस्तो उपदेश गर्नुहोस् कि म आफ्नो आसक्तिरहित मनलाई भगवान् श्रीकृष्णमा तन्मय गरेर आफ्नो शरीर त्याग्न सकूँ। उनीहरूका हृदयमा चाँडै नै भगवान् प्रकट हुनुहुन्छ।

**शृण्वतः श्रद्धया नित्यं गृणतश्च स्वचेष्टितम्।**
**कालेन नातिदीर्घेण भगवान् विशते हृदि ॥ ४ ॥**

पदार्थ—

**स्वचेष्टितम्** = लीलाचरित्रहरू
**नित्यं** = सधैं
**श्रद्धया** = श्रद्धापूर्वक
**शृण्वतः** = श्रवण गर्ने र
**गृणतः च** = कीर्तन गर्ने भक्तहरूको
**हृदि** = हृदयभित्र
**न अतिदीर्घेण** = छोटो
**कालेन** = समयभित्र नै
**भगवान्** = प्रभु
**विशते** = प्रवेश गर्नुहुन्छ

**वाक्यार्थ—** लीलाचरित्रहरू सधैं श्रद्धापूर्वक श्रवण गर्ने र कीर्तन गर्ने भक्तहरूको हृदयभित्र छोटो समयभित्र नै प्रभु प्रवेश गर्नुहुन्छ।

**प्रविष्टः कर्णरन्ध्रेण स्वानां भावसरोरुहम्।**
**धुनोति शमलं कृष्णः सलिलस्य यथा शरत् ॥ ५ ॥**

पदार्थ—

**यथा** = जसरी
**शरत्** = शरद्‌ऋतुले
**सलिलस्य** = जलको धमिलोपन नाश गर्दछ त्यसै गरी
**कर्णरन्ध्रेण** = कानरूपी छिद्रबाट
**भावसरोरुहम्** = हृदयकमलभित्र
**प्रविष्टः** = पसेका
**कृष्णः** = दयालु भगवान्‌ले पनि
**स्वानां** = आफ्ना प्रेमी भक्तहरूको
**शमलं** = मलिनतालाई
**धुनोति** = नाश गरिदिनुहुन्छ

**वाक्यार्थ—** भगवान् श्रीकृष्ण कानको छिद्रद्वारा आफ्ना भक्तहरूको भावमय हृदयकमलमा आएर बस्नुहुन्छ। जसरी शरद्‌ऋतुले जलको दूषितपनलाई नष्ट गरिदिन्छ त्यसै गरी भगवान् पनि भक्तहरूको मनोमललाई नष्ट गरिदिनुहुन्छ।

**धौतात्मा पुरुषः कृष्णपादमूलं न मुञ्चति।**
**मुक्तसर्वपरिक्लेशः पान्थः स्वशरणं यथा॥ ६॥**

पदार्थ–

**यथा** = जसरी
**मुक्तसर्वपरिक्लेशः** = यात्राका सम्पूर्ण दुःखहरूबाट छुटेको
**पान्थः** = बटुवाले
**स्वशरणं** = आफ्नो घर
**न मुञ्चति** = छोड्दैन (त्यसै गरी)
**धौतात्मा** = हृदयबाट सारा मलिनता पखालिएको
**पुरुषः** = मनुष्यले पनि
**कृष्णपादमूलं** = भगवान्‌को चरणकमललाई छोड्दैन

**वाक्यार्थ–** जसरी मार्गका समस्त केटाहरूबाट छुटेर आएको पथिकले आफ्नो घरलाई छोड्दैन त्यसैगरी जसको हृदय शुद्ध भएको छ त्यस्तो भक्तले श्रीकृष्णको चरणकमललाई एकक्षणका लागि पनि छोड्न चाहँदैन।

**यदधातुमतो ब्रह्मन् देहारम्भोऽस्य धातुभिः।**
**यदृच्छया हेतुना वा भवन्तो जानते यथा॥ ७॥**

पदार्थ–

**ब्रह्मन्** = हे शुकदेवजी
**यद्** =जुन जीवात्मा
**अधातुमतः** = पञ्चमहाभूतको सम्बन्धले शून्य छ तर पनि
**अस्य** = जीवात्माको
**धातुभिः** = महाभूतहरूद्वारा
**यदृच्छया** = कुनै पनि निमित्त विना स्वभाववश
**वा** = अथवा
**हेतुना** = कुनै विशेष कारणवश
**देहारम्भः** = शरीर बन्छ त्यो कुरा
**भवन्तः** = तपाईं
**यथा** = यथार्थरूपले
**जानते** = जान्नुहुन्छ

**वाक्यार्थ–** हे शुकदेवजी जीवको पञ्चभूतका साथ कुनै पनि सम्बन्ध छैन। तापनि यसको शरीर पञ्चमहाभूतबाट बन्दछ। के यो स्वभावबाट नै यस्तो भएको हो ? अथवा कुनै कारणवश तपाईं यस कुराको मर्मलाई पूर्णरूपले जान्नुहुन्छ।

**आसीद्यदुदरात् पद्मं लोकसंस्थानलक्षणम्।**
**यावानयं वै पुरुष इयत्तावयवैः पृथक्॥**
**तावानसाविति प्रोक्तः संस्थावयववानिव॥ ८॥**

पदार्थ–

**यदुदरात्** = जुन भगवान्‌को नाभिबाट
**लोकसंस्थानलक्षणम्** = लोकसृष्टिको आधार
**पद्मं** = कमल
**आसीत्** = जन्मियो उहाँ भगवान्‌लाई पनि
**अयं पुरुष** = यो जीव जसरी
**वै** = निश्चय नै
**इयत्तावयवैः** = सीमित अङ्गहरूद्वारा
**यावान्** = जति

**पृथक्** = परिच्छिन्न
**तावान्** = त्यत्ति नै
**असौ इति** = भगवान् पनि
**संस्थावयववान् इव** = सीमित अवयवहरूद्वारा युक्त भएझैं
**प्रोक्तः** = बताउनुभयो (त्यसको रहस्य के हो ?)

**वाक्यार्थ–** तपाईंले बताउनुभयो कि भगवान्को नाभिबाट त्यो कमल उत्पन्न भयो जसमा लोकहरूको रचना भयो। यो जीव आफ्नो सीमित अवयवद्वारा जसरी परिच्छिन्न छ त्यसै गरी परमात्मा पनि परिच्छिन्न छ जस्तो वर्णन गर्नुभयो।

**अजः सृजति भूतानि भूतात्मा यदनुग्रहात्।**
**ददृशे येन तद्रूपं नाभिपद्मसमुद्भवः॥ ९॥**
**स चापि यत्र पुरुषो विश्वस्थित्युद्भवाप्ययः।**
**मुक्त्वात्ममायां मायेशः शेते सर्वगुहाशयः॥ १०॥**

**पदार्थ–**

**भूतात्मा** = सर्वभूत समष्टि
**अजः** = ब्रह्माजीले
**यदनुग्रहात्** = जुन भगवान्को कृपाबाट
**भूतानि** = प्राणीहरूलाई
**सृजति** = सिर्जनुहुन्छ अनि
**तद्रूपं** = भगवत्तत्त्व स्वरूपलाई
**नाभिपद्मसमुद्भवः** = नारायणको नाभि कमलमा उत्पन्न ब्रह्माले
**येन** = जुन भगवान्को कृपाबाट
**ददृशे** = देख्नुभयो
**विश्वस्थित्युद्भवाप्ययः** = संसारको सृष्टि स्थिति र प्रलयको कारण
**मायेशः** = मायाको मालिक
**सर्वगुहाशयः** = सबैको हृदयभित्र बस्ने
**सः च** = त्यस्ता
**पुरुष अपि** = परमात्मा पनि
**आत्ममायां** = आफ्नो मायाशक्तिलाई
**मुक्त्वा** = छाडेर
**यत्र** = जहाँ
**शेते** = शयन गर्नुहुन्छ (त्यो स्थिति मलाई बताउनुहोस्)

**वाक्यार्थ–** जसको कृपाले सर्वभूतमय ब्रह्माजी प्राणीहरूको सृष्टि गर्नुहुन्छ जसको नाभिकमलबाट उत्पन्न भएर पनि जसको कृपाले ब्रह्माजीले भगवान्को रूपको दर्शन गर्नुभएको थियो। उहाँ संसारको उत्पत्ति, स्थिति र प्रलयको कारण, सर्वान्तर्यामी, मायाका स्वामी, परमपुरुष परमात्मा, आफ्नो मायालाई त्याग गरेर कसमा कुन रूपले शयन गर्नुहुन्छ ?

**पुरुषावयवैर्लोकाः सपालाः पूर्वकल्पिताः।**
**लोकैरमुष्यावयवाः सपालैरिति शुश्रुम॥ ११॥**

**पदार्थ–**

**लोकाः** = विभिन्न लोकहरू
**सपालाः** = लोकपालसहित
**पुरुषावयवैः** = विराट् पुरुषका अङ्गहरूबाट
**पूर्वकल्पिताः** = पहिले कल्पना गरिएका हुन् भन्ने कुरा र
**सपालैः** = लोकपालसहित

**लोकैः** = पाताल इत्यादि लोकहरूबाट
**अमुष्य** = यस विराट्पुरुषको
**अवयवाः** = पैताला आदि अङ्गहरू कल्पना गरिन्छन् भन्ने
**इति** = यी सबै कुराहरू
**शुश्रुम** = हामी सुन्दछौं (यसको रहस्य के हो ?)

**वाक्यार्थ–** पहिले तपाईंले के भन्नुभएको थियो भने विराट् पुरुषका अङ्गबाट लोक र लोकपालहरूको रचना भयो। फेरि यो कुरा पनि बताउनुभयो कि लोक र लोकपालको रूपमा उहाँको अङ्गको कल्पना भयो। यी दुइटा कुराहरूको तात्पर्य के हो ?

**यावान् कल्पो विकल्पो वा यथा कालोऽनुमीयते।**
**भूतभव्यभवच्छब्द आयुर्मानं च यत्सतः ॥ १२ ॥**

पदार्थ–

**कल्पः**= महाकल्प
**वा** = अथवा
**विकल्पः** = त्यसका अवान्तर कल्पहरू पनि
**यावान्** = जति थरि छन्
**भूतभव्यभवच्छब्द** = भूत, भविष्य र वर्तमान भनिने
**कालः** = समयलाई
**यथा** = जसरी
**अनुमीयते** = अनुमान गरिन्छ अनि
**सतः** = जीवात्माको
**यत्** = जुन
**आयुर्मानं च** = आयुको परिमाण छ (यो पनि बताउनुहोस्)

**वाक्यार्थ–** महाकल्प र त्यसअन्तर्गत अवान्तरकल्पहरू कति छन् ? भूत, भविष्यत्, वर्तमानकालको अनुमान कुन प्रकारले गर्न सकिन्छ ? अनि जीवात्माको आयुको परिमाण कति छ ? यो पनि बताउनुहोस्।

**कालस्यानुगतिर्या तु लक्ष्यतेऽण्वी बृहत्यपि।**
**यावत्यः कर्मगतयो यादृशीर्द्विजसत्तम ॥ १३ ॥**

पदार्थ–

**द्विजसत्तम** = हे ब्राह्मणश्रेष्ठ शुकदेवजी
**अण्वी** = सूक्ष्म निमेष आदि र
**बृहती** = स्थूल वर्ष आदि
**अपि** = पनि
**या** = जुन
**कालस्य** = समयको
**अनुगतिः** = अवान्तर गति
**लक्ष्यते** = देखिन्छ
**यादृशीः** = जस्तो प्रकारका र
**यावत्यः** = जतिथरी
**कर्मगतयः** = कर्मप्राप्य गतिहरू छन् (ती पनि बताउनुहोस्)

**वाक्यार्थ–** हे ब्राह्मणश्रेष्ठ शुकदेवजी ! कालको सूक्ष्मगति निमेष आदि र स्थूलगति वर्ष आदि कुन प्रकारले जान्न सकिन्छ ? विविध कर्मबाट जीवहरूको कति र कस्ता गतिहरू हुन्छन् ?

**यस्मिन् कर्मसमावायो यथा येनोपगृह्यते।**

**गुणानां गुणिनां चैव परिणाममभीप्सताम् ॥ १४ ॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **गुणिनां** = सत्त्व आदि गुणहरूको **परिणामम्** = फलभूत देवादि योनि **अभीप्सताम्** = चाहने | **गुणानां** = गुणयुक्त प्राणीहरूमध्ये **यस्मिन्** = देव, दानव, मनुष्यमध्ये जुन योनिको निमित्त **येन** = अधिकारीद्वारा | **यथा** = जसरी **कर्मसमावायः** = विभिन्न थरी कर्महरू **उपगृह्यते** = गरिन्छ |

**वाक्यार्थ—** देव, मनुष्य आदि योनिहरू सत्त्व, रज र तम यी तीन गुणहरूको फलस्वरूप नै प्राप्त हुन्छन्। ती योनिहरूलाई प्राप्त गर्न चाहने जीवहरूमध्ये कुनकुन जीव कुनकुन योनिलाई प्राप्त गर्नका लागि कुनकुन प्रकारले कुनकुन कर्मलाई स्वीकार गर्दछन् ?

**भूपातालककुब्व्योमग्रहनक्षत्रभूभृताम् ।**
**सरित्समुद्रद्वीपानां सम्भवश्चैतदोकसाम् ॥ १५ ॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **भूपातालककुब्व्योमग्रहनक्षत्र-भूभृताम्** = पृथ्वी, पाताल, दिशा, आकाश, ग्रह, नक्षत्र र पहाडहरूको | **सरित्समुद्रद्वीपानां** = नदी, समुद्र र द्वीपहरूको अनि **एतत् ओकसाम्** = त्यहाँ बस्ने प्राणीहरूको | **सम्भवः च** = उत्पत्तिप्रकार पनि बताउनुहोस् |

**वाक्यार्थ—** पृथ्वी, पाताल, दिशा, आकाश, ग्रह नक्षत्र, पर्वत, नदी, समुद्र, द्वीप र तिनमा बस्ने जीवहरूको उत्पत्ति कसरी हुन्छ ? यो पनि बताउनुहोस्।

**प्रमाणमण्डकोशस्य बाह्याभ्यन्तरभेदतः ।**
**महतां चानुचरितं वर्णाश्रमविनिश्चयः ॥ १६ ॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **बाह्याभ्यन्तरभेदतः** = बाहिर र भित्र गरी **अण्डकोशस्य** = ब्रह्माण्डको | **प्रमाणम्** = परिमाण **महतां** = महापुरुषहरूको **अनुचरितं च** = चरित्र पनि र | **वर्णाश्रमविनिश्चयः** = वर्णधर्म र आश्रमधर्मको निर्णय समेत (बताउनुहोस्) |

**वाक्यार्थ—** बाहिर र भित्र गरी ब्रह्माण्डको परिमाण कति छ ? साथै महापुरुषहरूको चरित्र, वर्णाश्रमको भेद र तिनका धर्महरूको विषयमा समेत मलाई बताउनुहोस्।

**युगानि युगमानं च धर्मो यश्च युगे युगे ।**
**अवतारानुचरितं यदाश्चर्यतमं हरेः ॥ १७ ॥**

पदार्थ–

**युगानि** = सत्य आदि युगहरू
**युगमानं च** = युगहरूको समय परिमाण पनि अनि
**युगे युगे** = युगैपिच्छे
**यः च** = जस्तो-जस्तो
**धर्मः** = धर्म छ त्यसै गरी
**आश्चर्यतमं** = अत्यन्त विस्मयजनक
**यत्** = जुन
**हरेः** = भगवान् श्रीहरिका
**अवतारानुचरितं** = अवतारलीलाहरू छन् (ती बताउनुहोस्)

**वाक्यार्थ–** सत्य आदि युगहरूको समयपरिमाण र युगैपिच्छे जस्तो-जस्तो धर्म छ त्यसै गरी अत्यन्त विस्मयजनक जुन भगवान् श्रीहरिका अवतारलीलाहरू छन् ती बताउनुहोस्।

**नृणां साधारणो धर्मः सविशेषश्च यादृशः।**
**श्रेणीनां राजर्षीणां च धर्मः कृच्छ्रेषु जीवताम्॥ १८॥**

पदार्थ–

**नृणां** = मनुष्यहरूको
**साधारणः** = सामान्य र
**सविशेषः च** = विशेष पनि
**यादृशः** = जस्तो-जस्तो
**धर्मः** = धर्म हुन्छ त्यसै गरी
**श्रेणीनां** = व्यवसायमा लागेका
**राजर्षीणां** = राजर्षिहरूको र
**कृच्छ्रेषु** = अत्यन्त संकटमा
**जीवताम्** = बाँचिरहेकाहरूका
**च** = पनि
**धर्मः** = धर्मका विषयमा बताउनुहोस्

**वाक्यार्थ–** मनुष्यका साधारण र विशेष धर्म कुन्-कुन् हुन्? विभिन्न व्यवसाय गर्ने मनुष्यहरूको राजर्षिहरूको र विपत्तिमा परेका मनुष्यहरूको धर्मको पनि उपदेश गर्नुहोस्।

**तत्त्वानां परिसङ्ख्यानं लक्षणं हेतुलक्षणम्।**
**पुरुषाराधनविधिर्योगस्याध्यात्मिकस्य च॥ १९॥**

पदार्थ–

**तत्त्वानां** = प्रकृति, महत्तत्त्व इत्यादिहरूको
**परिसङ्ख्यानं** = गणना
**लक्षणं** = असाधारण धर्म
**हेतुलक्षणम्** = तज्जन्यकार्यहरूको स्वरूप
**आध्यात्मिकस्य** = आत्मविषयक
**योगस्य** = अष्टाङ्गयोगहरूको विधि र
**पुरुषाराधनविधिः च** = भगवदाराधनविधि पनि बताउनुहोस्

**वाक्यार्थ–** तत्त्वको संख्या कति हो? तिनको स्वरूप र लक्षण के-के हुन्? भगवान्को आराधना र अध्यात्मयोगको विधि के हो? यी सबैको बारेमा बताउनुहोस्।

**योगेश्वरैश्वर्यगतिर्लिङ्गभङ्गस्तु योगिनाम्।**
**वेदोपवेदधर्माणामितिहासपुराणयोः॥ २०॥**

पदार्थ–

**योगेश्वरैश्वर्यगतिः** = योगेश्वरहरूको ऐश्वर्य र गति
**योगिनाम्** = योगीहरूको
**लिङ्गभङ्गः** = लिङ्गशरीर त्याग
**तु** = त
**वेदोपवेदधर्माणाम्** = वेद, उपवेद र धर्मशास्त्रहरूको अनि
**इतिहासपुराणयोः** = इतिहास र पुराणहरूको पनि स्वरूप एवं तात्पर्य के हो

**वाक्यार्थ–** योगीहरूको ऐश्वर्य र गति के–कस्तो हुन्छ ? लिङ्गशरीर कुन प्रकारले भङ्ग हुन्छ ? वेद, उपवेद, धर्मशास्त्र, इतिहास र पुराणको स्वरूप र तात्पर्य के हो ?

**सम्प्लवः सर्वभूतानां विक्रमः प्रतिसङ्क्रमः ।**
**इष्टापूर्तस्य काम्यानां त्रिवर्गस्य च यो विधिः ॥ २१ ॥**

पदार्थ–

**सर्वभूतानां** = सम्पूर्ण प्राणीहरूको
**सम्प्लवः** = उत्पत्ति
**विक्रमः** = स्थिति र
**प्रतिसङ्क्रमः** = प्रलय अनि
**इष्टापूर्तस्य** = इष्ट र पूर्तकर्मको
**काम्यानां** = काम्यकर्महरूको
**त्रिवर्गस्य च** = धर्म, अर्थ र कामको पनि
**यः** = जुन
**विधिः** = विधि छ त्यो बताउनुहोस्

**वाक्यार्थ–** समस्त प्राणीहरूको उत्पत्ति, स्थिति र प्रलय कसरी हुन्छ ? इष्टकर्म र पूर्तकर्महरूको, काम्यकर्महरूको र धर्म, अर्थ र कामको पनि जुन विधि छ (त्यो बताउनुहोस्) ।

**यश्चानुशायिनां सर्गः पाखण्डस्य च सम्भवः ।**
**आत्मनो बन्धमोक्षौ च व्यवस्थानं स्वरूपतः ॥ २२ ॥**

पदार्थ–

**यः** = जुन
**अनुशायिनां** = प्रलयलीन प्राणीहरूको
**सर्गः** = उत्पत्ति र
**पाखण्डस्य च** = पाखण्डको पनि
**सम्भवः** = उत्पत्ति हुन्छ, त्यसै गरी
**आत्मनः** = आत्माको
**बन्धमोक्षौ** = बन्धन र मोक्ष पनि
**स्वरूपतः** = आफ्नो स्वरूपमा
**व्यवस्थानं** = अवस्थिति पनि कसरी हुन्छ

**वाक्यार्थ–** प्रलयका समयमा जुन जीवहरू प्रकृतिमा लीन हुन्छन् उनीहरूको उत्पत्ति कसरी हुन्छ ? आत्माको बन्ध र मोक्षको स्वरूप के हो ? ऊ आफ्नो स्वरूपमा कसरी स्थित हुन्छ ?

**यथात्मतन्त्रो भगवान् विक्रीडत्यात्ममायया ।**
**विसृज्य वा यथा मायामुदास्ते साक्षिवद्विभुः ॥ २३ ॥**

पदार्थ–

**आत्मतन्त्रः** = स्वतन्त्र
**विभुः** = सर्वव्यापक
**भगवान्** = श्रीहरि

**आत्ममायया** = आफ्नो मायाद्वारा
**यथा** = जसरी
**विक्रीडति** = क्रीडा गर्नुहुन्छ
**वा** = अथवा
**मायाम्** = मायालाई
**विसृज्य** = छोडेर
**साक्षिवत्** = साक्षी जस्तै
**यथा** = जसरी
**उदास्ते** = उदासीन रहनुहुन्छ (त्यो बताउनुहोस्)

**वाक्यार्थ–** परमस्वतन्त्र भगवान् आफ्नो मायालाई स्वीकार गरेर कुन प्रकारले क्रीडा गर्नुहुन्छ र त्यसलाई छोडेर साक्षीसमान उदासीन कसरी हुनुहुन्छ ? यस विषयमा बताउनुहोस्।

**सर्वमेतच्च भगवन् पृच्छतो मेऽनुपूर्वशः।**
**तत्त्वतोऽर्हस्युदाहर्तुं प्रपन्नाय महामुने॥ २४॥**

पदार्थ–
**महामुने** = महामुनि
**भगवन्** = हे शुकदेवजी
**एतत् च सर्वम्** = यी सोधिएका सबै कुराहरू
**प्रपन्नाय** = शरणागत र
**पृच्छतः** = प्रश्न गरिरहेको
**मे** = मलाई
**अनुपूर्वशः** = क्रमशः
**तत्त्वतः** = तात्त्विकरूपले
**उदाहर्तुं** = निरूपण गर्न
**अर्हसि** = तपाईं मात्र योग्य हुनुहुन्छ

**वाक्यार्थ–** हे महामुनि शुकदेवजी ! म यी सब कुराहरू तपाईंसँग नै सोध्दछु। म तपाईंको शरणमा छु। तपाईं कृपा गरेर क्रमशः यी वस्तुहरूको तात्त्विक निरूपण गर्नुहोस्।

**अत्र प्रमाणं हि भवान् परमेष्ठी यथाऽऽत्मभूः।**
**अपरे चानुतिष्ठन्ति पूर्वेषां पूर्वजैः कृतम्॥ २५॥**

पदार्थ–
**अत्र** = यी सम्पूर्ण विषयमा
**यथा** = जसरी
**आत्मभूः** = स्वयम्भू
**परमेष्ठी** = ब्रह्माजी हुनुहुन्छ त्यसै गरी
**भवान्** = तपाईं
**प्रमाणं** = प्रमाण हुनुहुन्छ
**इह** = यस संसारमा
**अपरे च** = अरू मनुष्यहरू त
**पूर्वेषां पूर्वजैः** = पिता पुर्खाको परम्पराबाट
**कृतम्** = गरिएको नै
**अनुतिष्ठन्ति** = देखासिकी गर्दछन्

**वाक्यार्थ–** यस विषयमा तपाईं स्वयम्भू ब्रह्मासरह प्रमाण हुनुहुन्छ। अरू मनुष्यहरू त आफ्नो पितापुर्खाबाट गरिएका कामको नै देखासिकी गर्दछन्।

**न मेऽसवः परायन्ति ब्रह्मन्ननशनादमी।**
**पिबतोऽच्युतपीयूषमन्यत्रकुपिताद् द्विजात् २६॥**

पदार्थ–
**ब्रह्मन्** = हे शुकदेवजी

**अच्युतपीयूषं** = भगवत्कथामृतलाई
**पिबतः** = पिउँदै गरेको
**मे** = मेरो
**अमी** = यी
**असवः** = प्राणहरू
**कुपिताद्** = रिसाएका
**द्विजात्** = ब्राह्मणको श्रापभन्दा
**अन्यत्र** = बोहक
**अनशनात्** = निराहारबाट
**न परायन्ति**= निक्लदैनन्

**वाक्यार्थ—** ब्रह्मन्! तपाईं मेरो भोकको र तिर्खाको चिन्ता नगर्नुहोस्। मेरो प्राण कुपित ब्राह्मणको श्रापदेखि अतिरिक्त कुनै पनि कारणबाट निक्लन सक्तैनन्। किनभने म तपाईंको मुखारविन्दबाट निक्लेको भगवान्को अमृतमय लीलाकथाको पान गरिरहेको छु।

**सूत उवाच (सूतजीले भन्नुभयो)**

**स उपामन्त्रितो राज्ञा कथायामिति सत्पतेः।**
**ब्रह्मरातो भृशं प्रीतो विष्णुरातेन संसदि॥ २७॥**

**पदार्थ—**

**राज्ञा** = राजा
**विष्णुरातेन** = परीक्षित्द्वारा
**संसदि** = सज्जनसभामा
**सत्पतेः** = सत्पुरुषका स्वामी भगवान्को
**कथायाम्** = कथामा
**इति** = यसरी
**उपामन्त्रितः** = प्रार्थित हुनुभएका
**सः** = उहाँ
**ब्रह्मरातः** = शुकदेवजी
**भृशं** = अत्यन्त
**प्रीतः** = प्रसन्न हुनुभयो

**वाक्यार्थ—** जब राजा परीक्षित्ले सन्तहरूको सभामा भगवान्को लीलाकथा श्रवण गराउनको लागि यसप्रकार प्रार्थना गर्नुभयो तब श्रीशुकदेवजीलाई ठुलो प्रसन्नताको अनुभव भयो।

**प्राह भागवतं नाम पुराणं ब्रह्मसम्मितम्।**
**ब्रह्मणे भगवत्प्रोक्तं ब्रह्मकल्प उपागते॥ २८॥**

**पदार्थ—**

**ब्रह्मकल्पे** = ब्रह्मकल्प
**उपागते** = सुरु भएपछि
**ब्रह्मणे** = ब्रह्मालाई
**भगवत्प्रोक्तं** = भगवान्ले बताउनुभएको
**भागवतं नाम** = भागवत नामको
**ब्रह्मसम्मितम्** = वेदतुल्य
**पुराणं** = पुराण
**प्राह** = बताउनुभयो

**वाक्यार्थ—** शुकदेवले राजा परीक्षित्लाई त्यही वेदतुल्य श्रीमद्भागवतमहापुराण सुनाउनुभयो जुन ब्रह्मकल्पको आरम्भमा स्वयं भगवान्ले ब्रह्माजीलाई सुनाउनुभएको थियो।

**यद् यत् परीक्षिदृषभः पाण्डूनामनुपृच्छति।**
**आनुपूर्व्येण तत्सर्वमाख्यातुमुपचक्रमे॥ २९॥**

**पदार्थ—**

**पाण्डूनाम्** = पाण्डुकुलका
**ऋषभः** = श्रेष्ठ
**परीक्षित्** = राजा परीक्षित्‌ले
**यत् यत्** = जुनजुन
**अनुपृच्छति** = प्रश्न गर्नुभयो
**तत्सर्वम्** = ती सबै कुराहरू
**आनुपूर्व्येण** = क्रमशः
**आख्यातुम्** = बताउन
**उपचक्रमे** = थाल्नुभयो

**वाक्यार्थ–** पाण्डवंशशिरोमणि परीक्षित्‌ले भगवान् शुकदेवलाई जुनजुन प्रश्न गर्नुभयो उहाँले ती प्रश्नहरूको क्रमशः उत्तर दिन लाग्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां द्वितीयस्कन्धे**

**प्रश्नविधिर्नामाष्टमोऽध्यायः ॥ ८ ॥**

# अथ नवमोऽध्यायः

## ब्रह्माजीद्वारा भगवान्को धामको दर्शन र भगवान्द्वारा उहाँलाई चतुःश्लोकी भागवतको उपदेश

**श्रीशुक उवाच** (शुकजीले भन्नुभयो)

**आत्ममायामृते राजन् परस्यानुभवात्मनः ।**
**न घटेतार्थसम्बन्धः स्वप्नद्रष्टुरिवाञ्जसा ॥ १ ॥**

**पदार्थ—**

**राजन्** = हे राजा परीक्षित्
**आत्ममायाम्** = भगवान्को माया
**ऋते** = विना
**परस्य** = देहादिव्यतिरिक्त
**अनुभवात्मनः** = अनुभवरूप जीवको
**अर्थसम्बन्धः** = दृश्य देहादिका साथ सम्बन्ध
**अञ्जसा** = वस्तुतः
**न घटेत** = घट्न सक्दैन
**स्वप्नद्रष्टुः** = स्वप्नद्रष्टा पुरुषको अज्ञान नभईकन स्वाप्निक देहादिका साथ सम्बन्ध बन्न नसकेको
**इव** = जस्तै गरी

**वाक्यार्थ—** हे राजा परीक्षित् ! जसरी स्वप्नमा देखिएका पदार्थहरूका साथ स्वप्नद्रष्टाको कुनै सम्बन्ध छैन त्यसै गरी देहादिदेखि अतिरिक्त अनुभवस्वरूप आत्माको मायाको अभावमा दृश्य पदार्थहरूका साथ कुनै सम्बन्ध बन्न सक्दैन।

**बहुरूप इवाभाति मायया बहुरूपया ।**
**रममाणो गुणेष्वस्या ममाहमिति मन्यते ॥ २ ॥**

**पदार्थ—**

**बहुरूपया** = विविध रूपवाली
**मायया** = मायाको कारण (यो जीवात्मा)
**बहुरूपः इव** = विविध रूपवालाजस्तो
**आभाति** = प्रतीत हुन्छ
**अस्याः** = यो मायाको
**गुणेषु** = गुणहरूमा
**रममाणः** = रमण गर्दै
**मम अहम् इति** = शरीरमा अहं बुद्धि र शरीरादिमा मम बुद्धि
**मन्यते** = गर्न लाग्दछ

**वाक्यार्थ—** विविध रूपवाली मायाको कारण यो विविध रूपप्रपञ्च प्रतीत भइरहेको छ। जब जीव मायाका गुणहरूमा रमाउन लाग्दछ तब यो म हुँ र यो मेरो हो भन्न लाग्दछ।

**यर्हि वाव महिम्नि स्वे परस्मिन् कालमाययोः ।**

**रमेत गतसम्मोहस्त्यक्त्वोदास्ते तदोभयम् ॥ ३ ॥**

पदार्थ—

**यर्हि** = जुन समयमा
**कालमाययोः** = प्रकृतिका गुणहरूमा क्षोभ उत्पन्न गर्ने काल र मोह उत्पन्न गर्ने मायादेखि
**परस्मिन्** = पर रहेको
**स्वे** = आफ्नै
**महिम्नि** = परमार्थ स्वरूपमा
**रमेत** = रमाउन लाग्दछ
**तदा** = त्यस समयमा
**गतसम्मोहः** = मोहले रहित भएर
**उभयम्** = अहंभाव र ममभावलाई
**त्यक्त्वा** = छाडेर
**उदास्ते** = आफ्नो पूर्णरूपले अवस्थित हुन्छ

**वाक्यार्थ—** जीवात्मा जब गुणहरूमा क्षोभ उत्पन्न गर्ने काल र मोहलाई उत्पन्न गर्ने मायादेखि पर आफ्नो अनन्तस्वरूपमा मोहरहित भएर रमण गर्न लाग्दछ तब म र मेरो भावलाई छोडेर पूर्णरूपले आफ्नो गुणातीत स्वरूपलाई प्राप्त गर्दछ।

**आत्मतत्त्वविशुद्ध्यर्थं यदाह भगवानृतम् ।**
**ब्रह्मणे दर्शयन् रूपमव्यलीकव्रतादृतः ॥ ४ ॥**

पदार्थ—

**अव्यलीकव्रतादृतः** = ब्रह्माजीको निष्कपट आराधनाबाट प्रसन्न हुनुभएका
**भगवान्** = भगवान् नारायणले
**ऋतम्** = सत्य
**रूपम्** = रूपलाई
**दर्शयन्** = देखाउँदै
**आत्मतत्त्वविशुद्ध्यर्थं** = आत्मतत्त्वको ज्ञान गराउनका लागि
**ब्रह्मणे** = ब्रह्माजीलाई
**यत् आह** = जुन कुराको उपदेश दिनुभएको थियो (त्यही कुरा म अहिले तपाईंलाई सुनाउँछु )

**वाक्यार्थ—** ब्रह्माजीको निष्कपट तपस्याबाट प्रसन्न भएर भगवान्ले उहाँलाई आफ्नो रूपको दर्शन गराउनुभयो। आत्मतत्त्वको ज्ञानका लागि उहाँलाई जुन कुराको उपदेश दिनु भएको थियो त्यही कुरा म तपाईंलाई सुनाउँदैछु।

**स आदिदेवो जगतां परो गुरुः**
**स्वधिष्ण्यमास्थाय सिसृक्षयैक्षत ।**
**तां नाध्यगच्छद् दृशमत्र सम्मतां**
**प्रपञ्चनिर्माणविधिर्यया भवेत् ॥ ५ ॥**

पदार्थ—

**स** = उहाँ
**आदिदेवः** = आदिदेव ब्रह्माजी
**जगतां** = तीनै लोकका
**परः** = परम
**गुरुः** = गुरु

**स्वधिष्ण्यम्**= आफ्नो जन्मस्थान कमलमाथि
**आस्थाय** = बसेर
**सिसृक्षया** = जगत्‌को सृष्टि गर्ने इच्छाले
**ऐक्षत** = संसारको सृष्टि कसरी गर्ने भन्ने कुराको विचार गर्नुभयो ( यसप्रकार धेरै समयसम्म विचार गर्दा पनि)
**यया** = जुन प्रज्ञाद्वारा
**प्रपञ्चनिर्माणविधिः** = प्रपञ्चको निर्माण गर्ने विधि
**भवेत्** = जान्न सकियोस्
**अत्र** = प्रपञ्चको सृष्टिको विषयमा
**तां** = त्यो
**सम्मतां** = योग्य
**दृशम्** = प्रज्ञालाई
**न अध्यगच्छत्** = प्राप्त गर्न सक्नुभएन

**वाक्यार्थ—** तीनै लोकका परमगुरु आदिदेव ब्रह्माजी आफ्नो जन्मस्थान कमलमा बसेर सृष्टि गर्ने इच्छाले विचार गर्न लाग्नुभयो। परन्तु जुन ज्ञानदृष्टिबाट सृष्टिको निर्माण हुन सक्दथ्यो, जुन दृष्टि सृष्टिव्यापारका लागि वाञ्छनीय थियो, त्यो दृष्टि उहाँलाई प्राप्त भएन।

**स चिन्तयन् द्व्यक्षरमेकदाम्भ-**
**स्युपाशृणोद् द्विर्गदितं वचो विभुः।**
**स्पर्शेषु यत्षोडशमेकविंशं**
**निष्किञ्चनानां नृप यद्धनं विदुः॥ ६॥**

पदार्थ—
**नृप** = हे राजा
**सः** = ती
**विभुः** = व्यापक ब्रह्माजी
**चिन्तयन्** = प्रजाप्राप्तिको उपाय विचार गर्दै
**एकदा** = एक दिन
**द्व्यक्षरम्** = दुई अक्षरले बनेको र
**द्विर्गदितं** = दुई पटक भनिएको
**वचः** = वाणी
**अम्भसि** = जलमा
**उपाशृणोत्** = नजिकमा सुन्नुभयो (त्यो वाणी)
**स्पर्शेषु** = स्पर्शसंज्ञक वर्णमा
**यत्षोडशम्** = जुन सोह्रौँ तकार र
**एकविंशं** = जुन एक्काईसौँ पकार थियो
(त्वं तप, तप अर्थात् तिमी तपस्या गर, तपस्या गर भन्ने वाणी थियो)
**यत्** = जुन तपस्या
**निष्किञ्चनानां** = तपस्वीहरूको
**धनं** = धन हो भनेर
**विदुः** = विद्वान्‌हरू जान्दछन्

**वाक्यार्थ—** हे राजा ! एकदिन ब्रह्माजी विचारमा निमग्न हुनुहुन्थ्यो, प्रलयको समुद्रमा उहाँले व्यञ्जनको सोह्रौँ र एक्काइसौँ अक्षर “तप, तप” भन्ने दुई पटक सुन्नुभयो। महात्माहरू तपस्यालाई त्यागीहरूको धन ठान्दछन्।

**निशम्य तद्वक्तृदिदृक्षया दिशो**
**विलोक्य तत्रान्यदपश्यमानः।**

**स्वधिष्ण्यमास्थाय विमृश्य तद्धितं**

**तपस्युपादिष्ट इवादधे मनः ॥ ७ ॥**

पद्मार्थ—

| | | |
|---|---|---|
| **निशम्य** = "तप, तप" भन्ने यो वाणीलाई सुनेर | **अन्यत्** = अरू कुनै वस्तु | **तद्धितं** = त्यस तपस्याको आचरणलाई आफ्नो हितकारक |
| **तद्वक्तृदिदृक्षया** = त्यस वाणीका वक्तालाई हेर्ने इच्छाले | **अपश्यमानः** = नदेखेर | **विमृश्य** = ठानेर |
| **दिशः** = चारै दिशाहरूतिर | **स्वधिष्ण्यमास्थाय** = फेरि फर्केर आफ्नै जन्मस्थान कमलमा बसेर | **तपसि** = तपस्यामा |
| **विलोक्य** = हेरेर | **उपादिष्टः इव** = कसैले आफूलाई प्रत्यक्षरूपमा नियुक्त गरेकोजस्तो ठानेर | **मनः** = मनलाई |
| **तत्र** = ती दिशाहरूमा | | **आदधे** = लगाउनुभयो |

**वाक्यार्थ—** "तप, तप" भन्ने यस वाणीलाई सुनेर ब्रह्माजीले वक्तालाई हेर्ने इच्छाले चारैतिर हेर्नुभयो। परन्तु त्यहाँ उहाँले कुनै अर्को व्यक्तिलाई देख्नुभएन। उहाँ आफ्नो कमलमा आएर बस्नुभयो र मलाई तपस्या गर्ने आज्ञा मिलेको छ भनेर र त्यसैमा आफ्नो हित सम्झेर आफ्नो मन तपस्यामा लगाउनुभयो।

**दिव्यं सहस्राब्दममोघदर्शनो**

**जितानिलात्मा विजितोभयेन्द्रियः।**

**अतप्यत स्माखिललोकतापनं**

**तपस्तपीयांस्तपतां समाहितः ॥ ८ ॥**

पद्मार्थ—

| | | |
|---|---|---|
| **अमोघदर्शनः** = अमोघ ज्ञान भएका | **तपतां** = तपस्वीहरूमध्ये | **अखिललोकतापनं** = सम्पूर्ण लोकहरूलाई प्रकाशित गर्न समर्थ |
| **जितानिलात्मा** = प्राण र मनमाथि विजय प्राप्त गरेर | **तपीयान्** = अत्यन्त श्रेष्ठ तपस्वी ब्रह्माजीले | **तपः** = तपस्या |
| **विजितोभयेन्द्रियः** = ज्ञानेन्द्रिय र कर्मेन्द्रियहरूलाई वशमा गरेर | **समाहितः** = एकचित्त भएर | **अतप्यत स्म** = गर्नुभयो |
| | **दिव्यं सहस्राब्दम्** = एक हजार दिव्य वर्षपर्यन्त | |

**वाक्यार्थ—** ब्रह्माजी तपस्वीहरूमा सबभन्दा ठुला तपस्वी हुनुहुन्छ। उहाँको ज्ञान अमोघ छ। उहाँले त्यस समय एक हजार दिव्यवर्षपर्यन्त एकाग्रचित्तले आफ्नो प्राण, मन, कर्मेन्द्रिय, ज्ञानेन्द्रियहरूलाई वशमा गरेर यसप्रकारको तपस्या गर्नुभयो जसबाट उहाँ समस्त लोकहरूलाई प्रकाशित गर्न समर्थ हुनुभयो।

**तस्मै स्वलोकं भगवान् सभाजितः**

**सन्दर्शयामास परं न यत्परम् ।**

**व्यपेतसङ्क्लेशविमोहसाध्वसं**

**स्वदृष्टवद्भिर्विबुधैरभिष्टुतम् ॥ ९ ॥**

पदार्थ–

**सभाजितः** = ब्रह्माजीले तपस्याद्वारा आराधना गरिएका
**भगवान्** = भगवान् नारायणले
**व्यपेतसङ्क्लेशविमोहसाध्वसं** = क्लेश, मोह र भयले रहित भएको
**स्वदृष्टवद्भिः** = प्रशस्त पुण्य भएका
**विबुधैः** = देवताहरूद्वारा
**अभिष्टुतम्** = बारम्बार प्रशंसा गरिएका
**न यत्परम्** = जुन लोकभन्दा श्रेष्ठ अरू कुनै लोक नभएको
**परं** = उत्कृष्ट
**स्वलोकं** = आफ्नो वैकुण्ठ लोकलाई
**तस्मै** = ती ब्रह्माजीलाई
**सन्दर्शयामास** = देखाउनुभयो

**वाक्यार्थ–** उहाँको तपस्याबाट प्रसन्न भएर उहाँलाई त्यो लोक देखाउनुभयो जुन सर्वश्रेष्ठ छ, त्यसभन्दा ठुलो अर्को कुनै लोक छैन। त्यस लोकमा कुनै प्रकारको क्लेश, भय र मोह छैन। प्रशस्त पुण्य भएका देवताहरूत्यसै लोकको प्रशंसा गरिरहन्छन्।

**प्रवर्तते यत्र रजस्तमस्तयोः**

**सत्त्वं च मिश्रं न च कालविक्रमः ।**

**न यत्र माया किमुतापरे हरे-**

**रनुव्रता यत्र सुरासुरार्चिताः ॥ १० ॥**

पदार्थ–

**यत्र** = जुन वैकुण्ठमा
**रजः** = रजोगुण र
**तमः** = तमोगुण
**च** = पनि
**न प्रवर्तते** = छैनन्
**तयोः** = ती रजोगुण र तमोगुणले
**मिश्रं** = मिलेको
**सत्त्वं च** = सत्त्वगुण पनि
**न** = छैन अर्थात् केवल शुद्धसत्त्वगुणमात्र छ त्यहाँ
**कालविक्रमः** = कालको प्रभाव पनि छैन
**यत्र** = जुन वैकुण्ठमा
**माया** = कारणभूत माया नै छैन
**अपरे** = मायाका कार्य राग, लोभ आदि
**किम् उत** = हुने प्रसङ्गै भएन
**यत्र** = जुन वैकुण्ठमा
**सुरासुरार्चिताः** = इन्द्र आदि देवताहरू र प्रह्लाद आदि असुरहरूद्वारा पूजा गरिएका
**हरेः** = भगवान् नारायणका पार्षद र भक्तहरू
**अनुव्रताः** = विहार गर्दछन्

**वाक्यार्थ–** त्यहाँ रजोगुण, तमोगुण तथा ती दुई गुण मिलेको सत्त्वगुण पनि छैन। त्यहाँ कालको पनि प्रभाव छैन, त्यस लोकमा जब माया नै छैन भने मायाको कार्य हुने प्रसङ्ग नै छैन। त्यहाँ भगवान्‌का पार्षदहरू निवास गर्दछन्। जसको पूजन देवता र दानव दुबैले गर्दछन्।

**श्यामावदाताः शतपत्रलोचनाः**
**पिशङ्गवस्त्राः सुरुचः सुपेशसः।**
**सर्वे चतुर्बाहव उन्मिषन्मणि-**
**प्रवेकनिष्काभरणाः सुवर्चसः॥**
**प्रवालवैदूर्यमृणालवर्चसः**
**परिस्फुरत्कुण्डलमौलिमालिनः॥ ११॥**
**भ्राजिष्णुभिर्यः परितो विराजते**
**लसद्विमानावलिभिर्महात्मनाम्।**
**विद्योतमानः प्रमदोत्तमाद्युभिः**
**सविद्युदभ्रावलिभिर्यथा नभः॥ १२॥**

**पदार्थ–**

(ती पार्षदहरू)
**श्यामावदाताः** = श्याम वर्णका र स्वच्छ छन्
**शतपत्रलोचनाः** = शतदल कमलझैँ कोमल नेत्र भएका
**पिशङ्गवस्त्राः** = पहेँलो रङ्गको वस्त्र धारण गरेका
**सुरुचः** = अत्यन्त सुन्दर
**सुपेशसः** = अत्यन्त सुकुमार
**सर्वे** = ती सबै
**चतुर्बाहवः** = चार भुजावाला
**उन्मिषन्मणिप्रवेकनिष्काभरणाः** = मणि जडित सुवर्णको प्रभामय आभूषण धारण गरेका
**सुवर्चसः** = अत्यन्त तेजस्वी
**प्रवालवैदूर्यमृणालवर्चसः** = मुगा, वैदुर्यमणि र कमलको उज्ज्वल तन्तुसमान कान्ति भएका
**परिस्फुरत्कुण्डलमौलिमालिनः** = कानमा कुण्डल, मस्तकमा मुकुट र घाँटीमा माला धारण गरेका
**यथा** = जसरी
**नभः** = आकाश
**सविद्युदभ्रावलिभिः** = विजुली सहित बादलद्वारा
**विराजते** = सुशोभित हुन्छ (त्यसै गरी)
**यः** = जुन वैकुण्ठ
**भ्राजिष्णुभिः** = देदीप्यमान
**महात्मनाम्** = महात्माहरूको
**लसद्विमानावलिभिः** = देदीप्यमान विमानहरूको पंक्ति र
**प्रमदोत्तमाद्युभिः** = मनमोहक कामिनीहरूको कान्तिद्वारा
**परितः** = चारैतिर
**विद्योतमानः** = शोभायमान छ

**वाक्यार्थ—** त्यहाँ निवास गर्ने पार्षदहरू उज्ज्वल आभाले युक्त भएको श्यामशरीर, शतदलकमल समान कोमल नेत्र र पहेँलो रङ्गको वस्त्रले शोभायमान छन्। उनीहरूको प्रत्येक अङ्गबाट सौन्दर्यको तेज निक्लिरहेको छ, उनीहरू कोमलताका मूर्ति नै छन्। सबैका चार भुजाहरू छन्। उनीहरू स्वयं अत्यन्त तेजस्वी छन्। उनीहरूले मणिजडित सुवर्णको प्रभामय आभूषण धारण गरेका छन्। उनीहरूको कान्ति मुगा, वैदूर्यमणि र कमलको उज्ज्वल तन्तुसमान छ। उनीहरूको कानमा कुण्डल, मस्तकमा मुकुट र घाँटीमा मालाहरू शोभायमान छन्। जसरी आकाश बिजुलीसहित मेघद्वारा शोभायमान हुन्छ, त्यसै गरी त्यो लोक मनोहर कामिनीहरूको कान्ति र महात्माहरूको दिव्यतेजोमय विमानद्वारा चारैतिर सुशोभित छन्।

**श्रीर्यत्र रूपिण्युरुगायपादयोः**
**करोति मानं बहुधा विभूतिभिः।**
**प्रेङ्खं श्रिता या कुसुमाकरानुगै-**
**र्विगीयमाना प्रियकर्म गायती॥ १३॥**

पदार्थ—

| | | |
|---|---|---|
| **यत्र** = वैकुण्ठधाममा अत्यन्त सौन्दर्यले युक्त भएकी | **बहुधा** = धेरै प्रकारको | **विगीयमाना** = कीर्ति गाइएकी छिन् तापनि |
| **श्रीः** = लक्ष्मी | **मानं** = पूजा | **प्रियकर्म** = भगवान्को कीर्तिलाई |
| **विभूतिभिः** = आफ्ना सखीहरूका साथ अथवा वैभवका साथ | **करोति** = गर्दछन् | **गायती** = गाइरहेकी हुन्छिन् |
| **रूपिण्युरुगायपादयोः** = भगवान् नारायणको पाउमा | **या** = जो लक्ष्मी | |
| | **प्रेङ्खं श्रिता** = फुलनभित्र बसेर | |
| | **कुसुमाकरानुगैः** = शुक, कोकिल र भमराहरूद्वारा | |

**वाक्यार्थ—** त्यो वैकुण्ठलोकमा लक्ष्मी जो सुन्दर रूप धारण गरेर आफ्ना विविध विभूतिद्वारा भगवान्को चरणकमलको अनेक प्रकारले सेवा गर्नुहुन्छ। उहाँ फुलनभित्र बसेर आफ्ना प्रियतम भगवान्का लीलाहरूको गान गर्न थाल्नुहुन्छ। त्यहाँ उहाँको सौन्दर्य र सुगन्धबाट उन्मत्त भएर भमराहरू स्वयं लक्ष्मीको गुणगान गर्न लाग्दछन्।

**ददर्श तत्राखिलसात्वतां पतिं**
**श्रियः पतिं यज्ञपतिं जगत्पतिम्।**
**सुनन्दनन्दप्रबलार्हणादिभिः**
**स्वपार्षदाग्रैः परिसेवितं विभुम्॥ १४॥**

**भृत्यप्रसादाभिमुखं दृगासवं**
**प्रसन्नहासारुणलोचनाननम् ।**
**किरीटिनं कुण्डलिनं चतुर्भुजं**
**पीतांशुकं वक्षसि लक्षितं श्रिया ॥ १५ ॥**

**अध्यर्हणीयासनमास्थितं परं**
**वृतं चतुःषोडशपञ्चशक्तिभिः ।**
**युक्तं भगैः स्वैरितरत्र चाध्रुवैः**
**स्व एव धामन् रममाणमीश्वरम् ॥ १६ ॥**

**पदार्थ—**

**तत्र** = त्यो बैकुण्ठलोकमा (ब्रह्माजीले)
**अखिलसात्वतां** = सम्पूर्ण भक्तहरूका
**पतिं** = रक्षक
**श्रियः** = लक्ष्मीका
**पतिं** = पति
**यज्ञपतिं** = यज्ञका पति
**जगत्पतिम्** = विश्वका पति
**सुनन्दनन्दप्रबलार्हणादिभिः** = सनन्द, नन्द, प्रबल, अर्हण आदि
**स्वपार्षदाग्रैः** = आफ्ना पार्षदहरूद्वारा
**परिसेवितं** = सेवा गरिनुभएका
**भृत्यप्रसादाभिमुखं** = शरणागत भक्तहरूमाथि अनुग्रहको वर्षा गर्नका लागि तत्पर हुनुभएका
**दृगासवं** = अमृतजस्तै मोहक दृष्टिले युक्त
**प्रसन्नहासारुणलोचनाननम्** = प्रसन्नतामय मुस्कान र रक्तिम नेत्रद्वारा मुखमण्डल विभूषित हुनुभएका
**किरीटिनं** = मुकुटधारी
**कुण्डलिनं** = कानमा सुन्दर कुण्डल लगाउनुभएका
**चतुर्भुजं** = चार हातहरूले युक्त हुनुभएका
**पीतांशुकं** = पहेँलो रेशमी वस्त्र लगाउने
**वक्षसि** = वक्षःस्थलमा
**श्रिया** = सुनौलो रोमावलिले
**लक्षितं** = अलङ्कृत हुनुभएका (भगवान्लाई देख्नुभयो)
**परं** = सर्वश्रेष्ठ
**अध्यर्हणीयासनम्** = बहुमूल्य रत्नमय आसनमा
**आस्थितं** = रहनुभएका
**चतुःषोडशपञ्चशक्तिभिः** = प्रकृति पुरुष इत्यादि पच्चीस तत्त्वहरूद्वारा
**वृतं** = सेवित हुनुभएका
**इतरत्र च** = ब्रह्मादेखि समस्त जीवमात्रमा पनि
**अध्रुवैः** = सधैँ नरहने
**स्वैः** = आफ्ना
**भगैः** = ऐश्वर्य, धर्म इत्यादि छ ऐश्वर्यद्वारा
**युक्तं** = युक्त हुनुभएका
**स्वे एव धामन्** = आफ्नो नित्यानन्द स्वरूपमा नै
**रममाणम्** = रमण गरिरहने
**ईश्वरम्** = परमात्मालाई
**ददर्श** = देख्नुभयो

**वाक्यार्थ—** त्यसे दिव्यलोकमा समस्त भक्तहरूका रक्षक, लक्ष्मीपति, यज्ञपति र विश्वपति भगवान् विराजमान हुनुहुन्छ। सुनन्द, नन्द, प्रबल, अर्हण आदि मुख्य-मुख्य पार्षदगण उहाँको सेवा गरिरहेका छन्। उहाँको मुखकमल मधुर मुस्कानले युक्त छ। आँखाहरू राता छन्। अत्यन्त मोहक र मधुर हेराइ छ। यस्तो प्रतीत हुन्छ कि उहाँ आफ्ना भक्तहरूलाई अहिले नै सर्वस्व प्रदान गर्नुहुन्छ। शिरमा मुकुट, कानमा कुण्डल, काँधमा पीताम्बर जगमगाइरहेको छ। उहाँका चार हातहरू छन्। उहाँको वक्षःस्थलमा एक सुनको रेखाको रूपमा लक्ष्मीजी निवास गर्नुहुन्छ। उहाँ एक सर्वोत्तम र बहुमूल्य आसनमा विराजमान हुनुहुन्छ। पुरुष, प्रकृति, महत्तत्त्व, अहङ्कार, मन, दश इन्द्रिय, शब्दादि पञ्चतन्मात्रा र पञ्चमहाभूत चारैतिर खडा छन्। समग्र ऐश्वर्य, धर्म, कीर्ति, श्री, ज्ञान र वैराग्य यी छ नित्यसिद्धस्वरूपभूत शक्तिहरूले उहाँ सधैँ युक्त हुनुहुन्छ। उहाँलाई छोडेर अरू कसैमा पनि ती शक्तिहरू नित्य निवास गर्दैनन्। उहाँ सर्वेश्वर प्रभु आफ्नो नित्य, आनन्दमय स्वरूपमा नै नित्य-निरन्तर निमग्न रहनुहुन्छ।

**तद्दर्शनाह्लादपरिप्लुतान्तरो**
**हृष्यत्तनुः प्रेमभराश्रुलोचनः।**
**ननाम पादाम्बुजमस्य विश्वसृग्**
**यत्पारमहंस्येन पथाधिगम्यते॥ १७॥**

पदार्थ—

**तद्दर्शनाह्लादपरिप्लुतान्तरः** = भगवद्दर्शनबाट उत्पन्न भएको परमानन्दले हृदय पग्लिएका
**हृष्यत्तनुः** = रोमाञ्चित शरीर भएका
**प्रेमभराश्रुलोचनः** = प्रेमको आधिक्यले आँखाभरि आँसु भरिएका
**विश्वसृक्** = ब्रह्माजीले
**पारमहंस्येन** = परमहंसहरूद्वारा अबलम्बन गरिएको
**यत्** = जुन चरणकमल
**पथा** = निवृत्तिमार्गद्वारा
**अधिगम्यते** = प्राप्त गर्न सकिन्छ
**अस्य** = भगवान्को
**पादाम्बुजम्** = त्यही चरणकमललाई
**ननाम** = दण्डवत् प्रणाम गर्नुभयो

**वाक्यार्थ—** उहाँको दर्शन गर्नेबित्तिकै ब्रह्माजीको हृदय आनन्दको उद्रेकले भरियो। शरीर पुलकित भयो, आँखाबाट प्रेमका आँसुहरू बगे। परमहंसहरूको निवृत्तिमार्गबाट प्राप्त हुने भगवान्का ती चरणकमलमा शिर झुकाएर उहाँले प्रणाम गर्नुभयो।

**तं प्रीयमाणं समुपस्थितं कविं**
**प्रजाविसर्गे निजशासनार्हणम्।**
**बभाष ईषत्स्मितशोचिषा गिरा**

## प्रियः प्रियं प्रीतमनाः करे स्पृशन् ॥ १८ ॥

**पदार्थ–**

**प्रियः** = परमप्रेमास्पद भगवान्ले त्यस समयमा
**प्रजाविसर्गे** = प्रजासृष्टिको लागि
**निजशासनार्हणम्** = आज्ञा दिन योग्य अनि
**प्रीयमाणं** = दर्शनद्वारा प्रसन्न भएका र
**समुपस्थितं** = शरणागत
**प्रियं** = अत्यन्त प्यारा
**तं** = ती
**कविं** = ब्रह्माजीलाई (देखेर)
**प्रीतमनाः** = खुसी हुँदै
**करे** = हात
**स्पृशन्** = हात समातेर
**ईषत्स्मितशोचिषा** = मन्द मुस्कानले समुज्वल भएको
**गिरा** = वाणीले
**बभाषे** = भन्नुभयो

**वाक्यार्थ–** ब्रह्माजीका प्यारा भगवान् आफ्ना प्रिय ब्रह्माजीलाई प्रेम र दर्शनको आनन्दमा निमग्न, शरणागत तथा प्रजासृष्टिका लागि उपदेश दिन योग्य देखेर अत्यन्त प्रसन्न हुनुभयो। उहाँले ब्रह्माजीको हात समाउनुभयो र मन्दमुस्कानले समुज्वल भएको वाणीले भन्नुभयो।

**श्रीभगवानुवाच (भगवान्ले भन्नुभयो)**

## त्वयाहं तोषितः सम्यग् वेदगर्भ सिसृक्षया।
## चिरं भृतेन तपसा दुस्तोषः कूटयोगिनाम् ॥ १९ ॥

**पदार्थ–**

**वेदगर्भ** = आफ्ना गर्भमा वेदलाई धारण गर्ने हे ब्रह्माजी !
**कूटयोगिनाम्** = मनमा कामना या कपट राखेर तपस्या गर्ने योगीहरूद्वारा
**दुस्तोषः** = प्रसन्न गराउन नसकिने
**अहं** = म
**त्वया** = तपाईंले
**सिसृक्षया** = सृष्टि गर्ने इच्छाले
**चिरं** = धेरै कालसम्म
**भृतेन** = गरिएको
**तपसा** = तपस्याद्वारा
**सम्यक्** = राम्रोसँग
**तोषितः** = प्रसन्न गराइएको छु

**वाक्यार्थ–** आफ्ना गर्भमा वेदलाई धारण गर्ने हे ब्रह्माजी ! मनमा कामना या कपट राखेर तपस्या गर्ने योगीहरूद्वारा प्रसन्न गराउन नसकिने म तपाईंले सृष्टि गर्ने इच्छाले धेरै कालसम्म गरिएको तपस्याद्वारा राम्रोसँग प्रसन्न गराइएको छु।

## वरं वरय भद्रं ते वरेशं माभिवाञ्छितम्।
## ब्रह्मञ्छ्रेयः परिश्रामः पुंसां मद्दर्शनावधिः ॥ २० ॥

**पदार्थ–**

**ब्रह्मन्** = हे ब्रह्माजी
**वरेशं** = वरदाता
**मा** = मसँग
**अभिवाञ्छितम्** = चाहिएको
**वरं** = वर
**वरय** = माग्नुहोस्

(त्यसबाट)
**ते** = तपाईंको
**भद्रं** = कल्याण (हुनेछ)
**पुंसां** = पुरुषका लागि
**श्रेयःपरिश्रामः** = फल प्राप्तिका लागि जुन परिश्रम गरिन्छ (त्यो परिश्रम)
**मद्दर्शनावधिः** = मेरो दर्शन नहुन्जेलसम्ममात्र हो

**वाक्यार्थ—** हे ब्रह्माजी ! वरदाता मसँग चाहिएको वर माग्नुहोस्। त्यसबाट तपाईंको कल्याण हुनेछ। पुरुषका लागि फल प्राप्तिका लागि जुन परिश्रम गरिन्छ त्यो परिश्रम मेरो दर्शन नहुञ्जेलसम्ममात्र हो।

**मनीषितानुभावोऽयं मम लोकावलोकनम्।**
**यदुपश्रुत्य रहसि चकर्थ परमं तपः॥ २१॥**

**पदार्थ—**
**मम** = मेरो
**लोकावलोकनम्** = वैकुण्ठलोकको अवलोकन तपाईंले गर्नुभयो
**अयं** = यो
**मनीषितानुभावः** = ब्रह्माजीले मेरो वैकुण्ठलोकको दर्शन गरून् भन्ने सङ्कल्पको नै प्रभाव हो
**यत्** = किनभने
**रहसि** = एकान्त स्थलमा (तपः तप, तपस्या गर ) भन्ने यस्तो वचनलाई
**उपश्रुत्य** = सुनेर
**परमं** = अत्यन्त कठोर
**तपः** = तपस्या
**चकर्थ** = गर्नुभयो

**वाक्यार्थ—** तपाईंले मलाई नदेखीकन प्रलयकालीन जलमा, एकान्तमा, मेरो वाणीलाई सुनेर यति ठुलो घोर तपस्या गर्नुभयो। मेरो इच्छाले नै तपाईंलाई मेरो लोकको दर्शन भएको हो।

**प्रत्यादिष्टं मया तत्र त्वयि कर्मविमोहिते।**
**तपो मे हृदयं साक्षादात्माहं तपसोऽनघ॥ २२॥**

**पदार्थ—**
**तत्र** = त्यस तपस्याका लागि प्रेरणा पनि
**त्वयि** = तपाईं
**कर्मविमोहिते** = सृष्टिरचनारूप कर्ममा मोहित हुनाले
**मया** = मैले
**प्रत्यादिष्टं** = तपाईंलाई तपस्या गर्नुहोस् भनेर आज्ञा दिएको हुँ
**अनघ** = हे ब्रह्माजी
**तपः** = तपस्या
**मे** = मेरो
**हृदयं** = हृदय हो
**अहं** = म
**तपसः** = तपस्याको
**साक्षात्** = साक्षात्
**आत्मा** = आत्मा अर्थात् स्वरूप हुँ

**वाक्यार्थ—** तपाईं त्यस समयमा सृष्टिरचनाको कर्म गर्नमा किंकर्तव्यविमूढ हुनुहुन्थ्यो। यसैले मैले तपाईंलाई तपस्या गर्ने आज्ञा दिएको हुँ। निष्पाप ब्रह्माजी ! तपस्या मेरो हृदय हो, म स्वयं तपस्याको आत्मा हुँ।

**सृजामि तपसैवेदं ग्रसामि तपसा पुनः।**
**बिभर्मि तपसा विश्वं वीर्यं मे दुश्चरं तपः॥ २३॥**

**पदार्थ—**

**तपसा** = तपस्याद्वारा
**एव** = नै
**इदं** = यो विश्वलाई
**पुनः** = बारम्बार
**सृजामि** = बनाउँछु
**पुनः** = फेरि
**तपसा**= तपस्याद्वारा
**ग्रसामि** = संहार गर्छु
**तपसा** = तपस्याद्वारा नै
**विश्वं** = संसारलाई
**बिभर्मि** = पालन गर्दछु
(यसकारण)
**दुश्चरं** = कठोर
**तपः** = तपस्या नै
**मे** = मेरो
**वीर्यं** = शक्ति हो

**वाक्यार्थ—** तपस्याद्वारा म यो संसारको सृष्टि गर्दछु। तपस्याद्वारा यसको धारण र पोषण गर्दछु। फेरि तपस्याद्वारा म यसलाई आफूमा लीन गर्दछु। कठोर तपस्या नै मेरो एक दुर्लङ्घ्य शक्ति हो।

**ब्रह्मोवाच (ब्रह्माजीले भन्नुभयो)**

**भगवन् सर्वभूतानामध्यक्षोऽवस्थितो गुहाम्।**
**वेद ह्यप्रतिरुद्धेन प्रज्ञानेन चिकीर्षितम्॥ २४॥**

**पदार्थ—**

**भगवन्** = हे भगवन्! (तपाईं)
**सर्वभूतानाम्** = सम्पूर्ण प्राणीहरूको
**गुहाम्** = बुद्धिरूपी गुफामा
**अध्यक्षः** = साक्षीरूपले
**अवस्थितः** = निवास गर्नुहुन्छ
(यसकारण)
**अप्रतिरुद्धेन** = अप्रतिहत
**प्रज्ञानेन** = प्रकृष्ट ज्ञानद्वारा
**चिकीर्षितम्** = अरू सबैले र मैले गर्न खोजेको कुरालाई
**हि** = निश्चय नै
**वेद** = जान्नुहुन्छ

**वाक्यार्थ—** तपाईं समस्त प्राणीहरूको बुद्धिरूपी गुफामा साक्षीरूपले विराजमान हुनुहुन्छ। अतः म के गर्न चाहन्छु भन्ने कुरा तपाईं आफ्नो अप्रतिहतज्ञानद्वारा जान्नुहुन्छ।

**तथापि नाथमानस्य नाथ नाथय नाथितम्।**
**परावरे यथा रूपे जानीयां ते त्वरूपिणः॥ २५॥**

**पदार्थ—**

**तथापि** = तैपनि
**नाथ** = हे नाथ
**नाथमानस्य** = आफूमा सृष्टि गर्ने सामर्थ्य आओस् भनेर याचना गर्ने
**नाथितम्** = मैले मागेको
**नाथय** = दिनुहोस् (म)
**अरूपिणः** = रूपरहित
**ते** = तपाईंको
**परावरे** = सूक्ष्म र स्थूल

**रूपे** = रूपलाई
**यथा** = यथावत्
**जानीयां** = जान्न सकूँ

**वाक्यार्थ—** हे नाथ ! तपाईंले कृपा गरेर म याचकको यो माग पूरा गर्नुहोस् कि म तपाईंको सगुण र निर्गुण दुबै रूपलाई जान्न सकूँ।

**यथात्ममायायोगेन नानाशक्त्युपबृंहितम् ।**
**विलुम्पन् विसृजन् गृह्णन् बिभ्रदात्मानमात्मना ॥ २६ ॥**
**क्रीडस्यमोघसङ्कल्प ऊर्णनाभिर्यथोर्णुते ।**
**तथा तद्विषयां धेहि मनीषां मयि माधव ॥ २७ ॥**

**पदार्थ—**

**माधव** = हे माधव
**यथा** = जसरी
**ऊर्णनाभिः** = माकुरो
**उर्णुते** = अरू कुनै वस्तुको सहारा नलिईकन एक्लै जालो बुन्छ (त्यसै गरी)
**अमोघसङ्कल्प** = अमोघसङ्कल्प हुनुभएका तपाईं
**यथा** = जसरी
**आत्ममायायोगेन** = आत्ममायारूप योगद्वारा
**आत्मना** = आफूद्वारा नै
**आत्मानम्** = ब्रह्मा आदिको रूप
**गृह्णन्** = धारण गरेर
**नानाशक्त्युपबृंहितम्** = विभिन्न शक्तिहरूले युक्त भएको संसारलाई
**विसृजन्** = सृष्टि गर्दै
**बिभ्रत्** = पालना गर्दै
**विलुम्पन्** = संहार गर्दै
**क्रीडसि** = क्रीडा गर्नुहुन्छ
**तथा** = त्यस्तो
**तद्विषयां** = तद्विषयक
**मनीषां** = यथार्थबुद्धि
**मयि** = ममा
**धेहि** = आधान गर्नुहोस्

**वाक्यार्थ—** तपाईं मायाको स्वामी हुनुहुन्छ। तपाईंको सङ्कल्प कहिल्यै पनि व्यर्थ हुँदैन। जसरी माकुरो आफ्नो मुखबाट जालो निकालेर त्यसमा क्रीडा गर्दछ, फेरि ऊ त्यस जालोलाई आफूमा नै लीन गर्दछ। त्यसै गरी तपाईं पनि आफ्नो मायाको आश्रय लिएर यो विविध शक्तिसम्पन्न जगत्‌को उत्पत्ति, पालन र संहार गर्नका लागि आफैंलाई अनेक रूपमा बनाएर क्रीडा गर्नुहुन्छ। यसप्रकार संसारको सृष्टि तपाईं कसरी गर्नुहुन्छ त्यस मर्मलाई जान्ने किसिमको ज्ञान मलाई दिनुहोस्।

**भगवच्छिक्षितमहं करवाणि ह्यतन्द्रितः ।**
**नेहमानः प्रजासर्गं बध्येयं यदनुग्रहात् ॥ २८ ॥**

**पदार्थ—**

**भगवच्छिक्षितम्** = तपाईंको आज्ञा अनुसार
**अहं** = म
**प्रजासर्गं** = प्रजाहरूको सृष्टि
**अतन्द्रितः** = उत्साहपूर्वक
**हि** = निश्चय नै
**करवाणि** = गर्नेछु
**यदनुग्रहात्** = तपाईंको कृपाद्वारा
**प्रजासर्गं** = प्रजाहरूको सृष्टि
**ईहमानः** = गर्दाखेरी
**न बध्येयं** = कर्तापनको अभिमानले नबाधिऊँ

**वाक्यार्थ–** तपाईं ममाथि यस्तो कृपा गर्नुहोस् कि उत्साहपूर्वक सावधान भएर तपाईंको आज्ञाको पालन गर्न सकूँ। सृष्टिरचना गर्दाखेरि कर्तापन आदिको अभिमानबाट म बन्धनमा नपरूँ।

**यावत्सखा सख्युरिवेश ते कृतः**
**प्रजाविसर्गे विभजामि भो जनम्।**
**अविक्लवस्ते परिकर्मणि स्थितो**
**मा मे समुन्नद्धमदोऽजमानिनः॥ २९॥**

पदार्थ–

**भो ईश** = हे ईश्वर
**ते** = तपाईंले
**सख्युः** = लौकिक साथीको
**सखा इव**= साथीझैं गरेर
**कृतः** = मेरो सत्कार गर्नुभयो
**प्रजाविसर्गे** = प्रजाको सृष्टिरूप
**ते** = तपाईंको
**परिकर्मणि** = सेवामा
**स्थितः** = रहेर पनि
**अविक्लवः** = साबधान भएर
**यावत्** = जब म
**जनम्** = उत्तम मध्यम र अधम खालका मानिसको
**विभजामि** = सृष्टि गर्दछु ( त्यस समयमा)
**ओजमानिनः** = म स्वतन्त्र छु भन्ने
**मे** = मेरो
**मदः** = घमण्डले
**मा समुन्नद्धम्** = स्पर्श नगरोस्

**वाक्यार्थ–** प्रभो ! एउटा मित्रले जस्तो मेरो हात समातेर मलाई आफ्नो मित्रको रूपमा स्वीकार गर्नुभएको छ। जब म तपाईंको सेवाकार्य सृष्टिरचनामा संलग्न हुन्छु। सावधान भएर पूर्वसृष्टिको गुण र कर्मको अनुसार जीवहरूको विभाजन गर्न लाग्दा मलाई म यस सृष्टिको स्वतन्त्र कर्ता हुँ भन्ने अभिमानले स्पर्श नगरोस्।

**श्रीभगवानुवाच ( भगवान्ले भन्नुभयो)**
**ज्ञानं परमगुह्यं मे यद्विज्ञानसमन्वितम्।**
**सरहस्यं तदङ्गं च गृहाण गदितं मया॥ ३०॥**

पदार्थ–

**विज्ञानसमन्वितम्** = अनुभवले सहित
**सरहस्यं** = प्रेमाभक्तिले युक्त भएको
**तदङ्गं** = साधनले युक्त भएको
**परमगुह्यं** = अत्यन्त गोप्य
**मे** = मेरो
**यत्** = जुन
**ज्ञानं** = ज्ञान छ
**मया** = मद्वारा
**गदितं** = भनिएको (त्यो ज्ञान)
**गृहाण** = ग्रहण गर्नुहोस्

**वाक्यार्थ–** ब्रह्माजी ! म तपाईंलाई अनुभव, प्रेमाभक्ति र साधनले युक्त अत्यन्त गोपनीय आफ्नो स्वरूपको ज्ञान बताउँदैछु। तपाईं त्यसलाई ग्रहण गर्नुहोस्।

**यावानहं यथाभावो यद्रूपगुणकर्मकः।**

**तथैव तत्त्वविज्ञानमस्तु ते मदनुग्रहात्॥ ३१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अहं** = म | **यद्रूपगुणकर्मकः** = | **तथा एव** = त्यही-त्यही प्रकारले |
| **यावान्** = स्वरूपले जुन | श्यामचतुर्भुजत्वादि रूप, | **तत्त्वविज्ञानम्** = तत्त्वको ज्ञान |
| परिमाणवाला छु | भक्तवात्सल्यादि गुण, पूतनावध | **मदनुग्रहात्** = मेरो अनुग्रहबाट |
| **यथाभावः** = मेरो जस्तो लक्षण | गोवर्धनधारण आदि जुन कर्म | **ते** = तपाईंलाई |
| छ | छन् | **अस्तु** = होस् |

**वाक्यार्थ–** मेरो जति विस्तार छ, मेरो जुन लक्षण छ, मेरा जति र जस्ता रूप, गुण र लीलाहरू छन् मेरो कृपाले तपाईं तिनीहरूको तत्त्व ठिकठिक त्यस्तै नै जान्नुहोस्।

**अहमेवासमेवाग्रे नान्यद्यत्सदसत्परम्।**

**पश्चादहं यदेतच्च योऽवशिष्येत सोऽस्म्यहम्॥ ३२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अग्रे** = सृष्टि हुनुभन्दा पहिले | **परम्** = स्थूल र सूक्ष्मको कारण | **यः** = जो |
| **अहम् एव** = ममात्र | प्रधान पनि (अन्तर्मुख हुनाले | **अवशिष्येत** = बाँकी रहन्छ |
| **आसम्** = थिएँ | ममा लीन थियो) | **सः** = त्यो |
| **नान्यत्** = मदेखि अतिरिक्त | **पश्चात् च** = सृष्टिभन्दा पछि | **अहं एव** = ममात्र |
| **सदसत्** = स्थूल सूक्ष्म र | पनि | **अस्मि** = हुन्छु |
| | **यत्** = जुन | |

**वाक्यार्थ–** सृष्टि हुनुभन्दा पहिले ममात्र थिएँ। त्यस समयमा मदेखि अतिरिक्त न कुनै स्थूल पदार्थ थियो, न सूक्ष्म पदार्थ थियो। न त ती स्थूल र सूक्ष्म दुबैको कारण अज्ञान नै थियो। जहाँ सृष्टि छैन, त्यहाँ पनि म छु। सृष्टिको रूपमा जुन वस्तुहरू प्रतीत भइरहेका छन्, ती पदार्थहरू पनि म नै हुँ। प्रलयकालमा जुन वस्तु अवशिष्ट रहन्छ त्यो पनि म नै हुँ।

**ऋतेऽर्थं यत्प्रतीयेत न प्रतीयेत चात्मनि।**

**तद्विद्यादात्मनो मायां यथाऽऽभासो यथा तमः॥ ३३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ऋते अर्थं** = कुनै अनिर्वचनीय वस्तु वस्तुतः नभईकन पनि | **यथा तमः** = विद्यमान भईकन पनि आकाशमण्डलमा राहुको प्रतीति नभएझैं जसको कारणले मेरो प्रतीति हुँदैन | **मायां** = माया भनेर |
| **आत्मनि** = म परमात्मामा | **तत्** = त्यो | **विद्यात्** = जान्नुपर्दछ |
| **यथाभासः** = द्विचन्द्र प्रतीत भएझैं | **आत्मनः** = मेरो | |
| **प्रतीयेत** = प्रतीत भइरहेको छ अथवा | | |

**वाक्यार्थ—** वास्तवमा नभईकन पनि जुन अनिर्वचनीय वस्तु मदेखि अतिरिक्त द्विचन्द्रझैं मिथ्यारूपले प्रतीत भइरहेको छ। अथवा भईकन पनि आकाशमण्डलका नक्षत्रहरूमा राहुको प्रतीति नभएझैं मेरो प्रतीति जसको कारणले भइरहेको छैन, त्यसैलाई तपाईं मेरो माया हो भनी जान्नुहोस्।

**यथा महान्ति भूतानि भूतेषूच्चावचेष्वनु।**
**प्रविष्टान्यप्रविष्टानि तथा तेषु न तेष्वहम्॥ ३४॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **यथा** = जसरी | **प्रविष्टानि** = ती भौतिक पदार्थहरूमा प्रविष्ट भएका पनि छन् | तिनीहरूमा छु पनि, ती पदार्थहरूको उत्पत्ति हुनुभन्दा पहिले नै म तिनीहरूको कारणरूपले अवस्थित हुनाले) |
| **महान्ति भूतानि** = पञ्चमहाभूत-हरू | **अप्रविष्टानि** = प्रविष्ट नभएका पनि छन् | **अहम्** = म |
| **भूतेषु** = पञ्चमहाभूतबाट बनेका | **तथा** = त्यसै गरी | **तेषु** = तिनीहरूमा |
| **उच्चावचेषु** = साना-ठुला पदार्थहरूमा | **तेषु** = मबाट बनेका ती भूत र भौतिक पदार्थहरूमा (मेरो सत्ताको उपलब्धि हुनाले म | **न** = तिनीहरूमा छैन पनि (यसप्रकारको मेरो सत्ता छ) |
| **अनु** = ती पदार्थहरूको सृष्टि भएपछि | | |

**वाक्यार्थ—** जसरी प्राणीहरूका पञ्चभूतरचित साना-ठुला शरीरहरूमा पञ्चमहाभूत प्रविष्ट पनि छन्। ती भौतिकपदार्थहरू उत्पन्न हुनुभन्दा पहिले कारणरूपले विद्यमान हुनाले म पनि सो संसारको उपादान कारण हुँ। उपादान कारण आफ्नो-आफ्नो कार्यमा अनुस्यूत हुने हुनाले म संसारका सम्पूर्ण पदार्थहरूमा प्रविष्ट पनि छु। विचार गरेका खण्डमा मदेखि अतिरिक्त कुनै पनि वस्तु कहीं पनि नहुनाले म तिनीहरूमा अप्रविष्ट पनि छु।

**विवरण—** माथिका ३२-३५ श्लोकहरूमा सम्पूर्ण भागवतको सार रहेको हुनाले यी श्लोकलाई चतुःश्लोकी भागवत भनिन्छ। भगवान् नारायणले ब्रह्माजीलाई यी चार श्लोकहरूमा सम्पूर्ण वेद र उपनिषद्हरूको रहस्य बताउनुभएको छ। चतुःश्लोकी भागवतमा भगवान् नारायण ब्रह्माजीलाई उपदेश गर्दै सृष्टिको रहस्य बताउनुहुन्छ।

उहाँ भन्नुहुन्छ— हे ब्रह्माजी ! **अहमेवासमेवाग्रे** अर्थात् सृष्टि हुनुभन्दा पहिले केवल ममात्र थिएँ। त्यस समयमा न कुनै स्थूल पदार्थ थियो न कुनै सूक्ष्म पदार्थ थियो। न त ती स्थूल र सूक्ष्म दुबैको कारण प्रधान अथवा माया नै थियो। किनभने ती पदार्थहरू अन्तर्मुख भएर ममा नै लीन भएका थिए।

**पश्चादहं यदेतच्च योऽवशिष्यते सोऽस्म्यहम्** अर्थात् सृष्टिपछि पनि ममात्र बाँकी रहन्छु। त्यसै गरी प्रलयको समयमा पनि ममात्र रहनेछु। यो विश्व पनि म नै हुँ।

यहाँ भगवान् नारायणले ब्रह्माजीलाई सम्पूर्ण अद्वैत वेदान्तलाई केवल एक श्लोकमा बताउनुभएको छ। अद्वैतवेदान्तको सिद्धान्त हो— **ब्रह्मसत्यं जगन्मिथ्या जीवो ब्रह्मैव नापरः** अर्थात् ब्रह्म सत्य हो, संसार मिथ्या हो। जीव ब्रह्मदेखि अभिन्न हो। जुन वस्तु पहिले पनि थिएन र पछि पनि रहँदैन, बीचमा केही समयका लागि देखिन्छ भने जुन समयमा त्यो देखिएको छ, त्यस समयमा पनि त्यो वस्तु नभएकै मान्नुपर्दछ। उदाहरणका लागि डोरीमा सर्पको भ्रम हुनुभन्दा पहिला डोरीमा सर्प थिएन। डोरीको ज्ञान भइसकेपछि पनि डोरीमा सर्प रहँदैन। अतः जुन समयमा डोरीमा सर्प देखिन्छ त्यस समयमा पनि डोरीमा सर्प हुँदैन। त्यसै गरी सृष्टि हुनुभन्दा पहिले यो संसार थिएन। प्रलयकालमा पनि यो संसार रहँदैन। त्यसकारण जुन समयमा यो संसार देखिएको छ त्यस समयमा पनि यो संसार छैन। यसकारण संसार मिथ्या हो। मधुसूदनसरस्वतीले अद्वैतसिद्धिमा जहाँ जुन वस्तु देखिएको छ त्यहीँ त्यो वस्तुको अत्यन्ताभाव छ भने त्यो वस्तुलाई मिथ्या भन्दछन् भनी मिथ्याको परिभाषा गर्नुभएको छ।[७]

जुन ब्रह्ममा संसार देखिन्छ त्यही नै ब्रह्ममा संसारको अत्यन्ताभाव भएकाले ब्रह्ममा देखापरेको संसार मिथ्या हो।

यसपछि भगवान् नारायण **ऋतेऽर्थं यत्प्रतीयेत** यस अंशमा ब्रह्माजीलाई मायाको बारेमा बताउनुहुन्छ। माया भनेको त्यो वस्तु हो जसले भएको वस्तुलाई छोपेर नभएको वस्तुलाई देखाइदिन्छ। आवरणशक्ति र विक्षेपशक्ति गरी मायामा दुईप्रकारका शक्ति हुन्छन्। मायाले आफ्नो आवरणशक्तिद्वारा ब्रह्मको स्वरूपलाई ढाकिदिन्छे। त्यसपछि विक्षेपशक्तिद्वारा ब्रह्ममा मिथ्या आकाश आदि प्रपञ्च सृष्टि गरेर देखाइदिन्छे। अर्को शब्दमा भन्ने हो भने मायामा मोहशक्ति र निर्माणशक्ति दुई शक्तिहरू छन्। मायाले मोहशक्तिद्वारा जीवलाई मोहमा पारिदिन्छे भने निर्माणशक्तिद्वारा ब्रह्ममा नभएको मिथ्या संसारलाई उत्पन्न गरेर देखाइदिन्छे।

अब यथा महान्ति यस अंशमा भगवान् नारायणले ब्रह्माजीलाई म संसारका पदार्थहरूमा प्रविष्ट पनि छु र अप्रविष्ट पनि छु भन्ने कुरा उदाहरणद्वारा सम्झाउनुहुन्छ।

सृष्टिप्रक्रियामा सर्वप्रथम भगवान्‌बाट आकाश, वायु, तेज, जल र पृथिवी यी पञ्चमहाभूतहरू उत्पन्न हुन्छन्। ती पञ्चमहाभूतबाट उत्पन्न भएका पदार्थहरूलाई भौतिक भन्दछन्।

---

७. प्रतिपन्नोपाधौ त्रैकालिकनिषेधप्रतियोगित्वम् मिथ्यात्वम्।

भौतिक पदार्थहरूमा भगवान् कुनै दृष्टिले प्रविष्ट हुनुहुन्छ, कुनै दृष्टिले अप्रविष्ट पनि हुनुहुन्छ। यस कुरालाई माटो र त्यसबाट बन्ने घडाको उदाहरणबाट स्पष्ट पार्न सकिन्छ।

माटोबाट घडा उत्पन्न हुन्छ। माटो उपादान कारण हो भने घडा कार्य हो। त्यो घडामा माटो कुनै दृष्टिले प्रविष्ट छ भने कुनै दृष्टिले अप्रविष्ट छ। घडामा माटो खोज्दा त्यहाँ माटो उपलब्ध हुन्छ। यस दृष्टिले घडामा माटो प्रविष्ट छ भन्न सकिन्छ।

अर्को दृष्टिले विचार गरेको खण्डमा माटो घडामा प्रविष्ट छैन पनि भन्न सकिन्छ। किनभने घडा उत्पन्न हुनुभन्दा पहिले नै घडाको उपादान कारणको रूपमा माटो विद्यमान हुनाले घडामा माटो प्रविष्ट छैन। जसरी माटो घडाको उपादान कारण हो, त्यसै गरी भगवान् सम्पूर्ण भूत र भौतिक पदार्थहरूको उपादान कारण हुनुहुन्छ।

जसरी उदाहरणमा घडालाई माटोको कार्य मानेर घडाको नामरूपतिर दृष्टि दिएको खण्डमा कार्यमा आफ्नो उपादान कारण अनुस्यूत हुने हुनाले घडामा माटो प्रविष्ट छ भन्न सकिन्छ। घडाको नाम र रूपबाट दृष्टि हटाएर वस्तुतः विचार गरेको खण्डमा घडा भन्ने वस्तु माटोदेखि अतिरिक्त सिद्ध नहुने हुँदा घडा कार्य र माटो कारण भन्न मिल्दैन। त्यसै गरी दार्ष्टान्तिमा पनि संसारको नाम र रूपतिर ध्यानदृष्टि दिएर संसारलाई कार्य र परमात्मालाई उपादानकारण मानेको खण्डमा कार्यमा उपादानकारण अनुस्यूत हुने हुँदा सांसारिक पदार्थमा भगवान् प्रविष्ट हुनुहुन्छ भन्न सकिन्छ। नामरूपतिर ध्यान नदिएर अधिष्ठानतिर दृष्टि दिएको खण्डमा संसार कार्य र भगवान् कारण भन्ने कुरा सिद्ध नभई संसार भएको वस्तु नभएर मिथ्या सिद्ध हुने हुनाले भगवान् सांसारिक पदार्थमा प्रविष्ट हुनुहुन्न भन्न पनि सकिन्छ।

यसलाई अर्को शब्दमा यसरी पनि भन्न सकिन्छ। संसारको व्यावहारिक सत्तालाई स्वीकार गरेको खण्डमा संसार कार्य र परमात्मा उपादानकारण हुनुहुन्छ। अतः परमात्मा संसारमा प्रविष्ट हुनुहुन्छ। संसारको व्यावहारिक सत्तालाई नमानेको खण्डमा परमात्मादेखि अतिरिक्त अरू कुनै वस्तु नै सिद्ध नहुने हुँदा संसारमा परमात्मा अप्रविष्ट हुनुहुन्छ भन्न पनि सकिन्छ। यसप्रकार दृष्टिभेदले परमात्मा संसारमा प्रविष्ट र अप्रविष्ट पनि हुनुहुन्छ भनी दुबै तरिकाले भन्न सकिन्छ।

यसपछि **एतावदेव जिज्ञास्यं** यस अंशमा भगवान् नारायण ब्रह्माजीलाई जिज्ञासुले अन्वय र व्यतिरेकको माध्यमले आत्माको ज्ञान गर्नुपर्दछ भन्ने कुरा बताउनुहुन्छ। अन्वय र व्यतिरेक यी दुई वेदान्तका पारिभाषिक शब्द हुन्। यस श्लोकको टीकामा श्रीधरस्वामीले अन्वय र व्यतिरेकको परिभाषा यसप्रकार गर्नुभएको छ– **अन्वयः कार्येषु कारणत्वेन अनुवृत्तिः। कारणावस्थायां च तेभ्यो व्यतिरेकः**। अर्थात् कार्यमा कारण रहनु अन्वय हो र कारणमा कार्य नरहनु व्यतिरेक हो।

माटोबाट घडा उत्पन्न हुँदा घडामा माटोको अनुवर्तन हुनु अन्वय हो भने माटोबाट घडा आदि उत्पन्न नभएको समयमा माटोमा घडा नहुनु घडाको व्यतिरेक हो।

यस्तै स्वप्नमा स्थूल देहको भान नहुँदा आत्माको भान हुनुलाई आत्माको अन्वय भनिन्छ भने स्वप्नमा आत्माको भान हुँदा स्थूल देहको भान नहुनुलाई स्थूल देहको व्यतिरेक भनिन्छ। त्यसै गरी समाधिमा सुषुप्तिको भान नहुँदा आत्माको भान हुनुलाई आत्माको अन्वय भनिन्छ भने सुषुप्तिको भान नहनुलाई सुषुप्तिको व्यतिरेक भनिन्छ।

वेदान्तसिद्धान्तअनुसार मुख्यरूपमा बुझ्नुपर्ने कुरा द्रष्टा र दृश्य हो। द्रष्टा भन्नु, आत्मा भन्नु, क्षेत्रज्ञ भन्नु एउटै कुरा हो। त्यसै गरी दृश्य भन्नु अनात्मा भन्नु र क्षेत्र भन्नु पनि एउटै कुरा हो। दृश्यको आफ्नो सत्ता नहुनाले द्रष्टा अथवा आत्माको सत्ताको अभावमा दृश्य रहन सक्दैन। अतः जहाँ-जहाँ दृश्य हुन्छ, त्यहाँ-त्यहाँ द्रष्टा अवश्य हुन्छ। कारणको अभावमा कार्य कुनै पनि परिस्थितिमा रहन सक्दैन। जहाँ-जहाँ संसार छ, त्यहाँ-त्यहाँ आत्माको सत्ता छ। आत्माको सत्ताको अभावमा संसारको सत्ता सिद्ध हुँदैन। परन्तु जहाँ-जहाँ आत्मा छ त्यहाँ-त्यहाँ संसार छ भन्न सकिँदैन। किनभने सुषुप्ति, समाधि, प्रलय आदिमा आत्मा छ तर त्यहाँ संसार छैन।

आत्मा द्रष्टा हो भने माया र मायाको कार्य दृश्य हो। आत्माको सत्ताको अभावमा माया र मायाको कार्य सिद्ध हुँदैनन्। अतः माया र मायाको कार्यमा आत्माको अन्वय छ। परन्तु सुषुप्ति, समाधि र प्रलय आदि अवस्थामा माया र मायाको कार्य भूत-भौतिक प्रपञ्च आदि आत्मामा नरहने हुनाले प्रलय आदि अवस्थामा उक्त पदार्थहरूको व्यतिरेक वा अभाव छ। माया र मायाको कार्य नरहने हुनाले आत्मामा माया र मायाको कार्यको व्यतिरेक अर्थात् अभाव छ। यसप्रकार अन्वय र व्यतिरेकद्वारा आत्माको अभाव कुनै पनि देश, कुनै पनि काल र कुनै पनि वस्तुमा छैन भन्ने निश्चय भएपछि तत्त्वजिज्ञासु अथवा मुमुक्षु व्यक्तिले आत्मादेखि अतिरिक्त सत्ता छैन भनेर जान्नु नै तिनको मिथ्यात्वलाई स्वीकार गर्नु हो।

जसरी बाहिरको भूत र भौतिक पदार्थहरू आत्माको अभावमा सिद्ध नहुने हुनाले मिथ्या हुन् त्यसै गरी शरीरभित्र आत्मामा प्रतीत हुने कर्तृत्व, भोक्तृत्व र प्रमातृत्वभाव आत्माको अन्तःकरणका साथ तादात्म्याध्यासद्वारा मात्र सिद्ध हुने हुँदा उक्त भावहरू पनि आत्मा होइनन् भन्ने निश्चय भएपछि मुमुक्षु पुरुष आत्मस्वरूपमा स्थित हुन्छ। यही आत्मस्वरूपमा स्थित हुनुलाई नै मोक्ष भनिन्छ।

**एतावदेव जिज्ञास्यं तत्त्वजिज्ञासुनात्मनः।**
**अन्वयव्यतिरेकाभ्यां यत्स्यात्सर्वत्र सर्वदा॥ ३५॥**

**पदार्थ—**

**आत्मनः** = आत्माको
**तत्त्वजिज्ञासुना** = तत्त्वलाई जान्न चाहनेले
**एतावत् एव** = यत्ति नै
**जिज्ञास्यं** = विचार गर्नुपर्दछ
**अन्वयव्यतिरेकाभ्यां** = अन्वय र व्यतिरेकद्वारा
**यत्** = जुन वस्तु
**सर्वदा** = सधैं
**सर्वत्र** = सब ठाउँमा
**स्यात्** = छ (त्यही नै वास्तविक तत्त्व हो)

वाक्यार्थ— आत्माको तत्त्वलाई जान्न चाहनेले यत्ति नै विचार गर्नुपर्दछ। अन्वय र व्यतिरेकद्वारा जुन वस्तु सधैं सब ठाउँमा छ त्यही नै वास्तविक तत्त्व हो।

**एतन्मतं समातिष्ठ परमेण समाधिना।**
**भवान् कल्पविकल्पेषु न विमुह्यति कर्हिचित्॥ ३६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **परमेण** = अविचल | **समातिष्ठ** = पूर्ण निष्ठा राख्नुहोस् (यसबाट) | **कर्हिचित्** =कहिल्यै पनि |
| **समाधिना** = समाधिद्वारा | **भवान्** = तपाईंलाई | **न विमुह्यति** = मोहले स्पर्श गर्नेछैन। |
| **एतन्मतं** = मेरो यो सिद्धान्तमा | **कल्पविकल्पेषु**= कल्प-कल्पमा | |

**वाक्यार्थ–** ब्रह्माजी ! अविचल समाधिद्वारा मेरो यस सिद्धान्तमा पूर्ण निष्ठा राख्नुहोस् यसबाट तपाईंलाई कल्पकल्पमा विभिन्न प्रकारको सृष्टि गरे तापनि तपाईं म यस संसारको स्वतन्त्र कर्ता हुँ भन्ने मोहले कहिल्यै पनि स्पर्श गर्नेछैन।

**श्रीशुक उवाच (शुकदेवजीले भन्नुभयो)**

**सम्प्रदिश्यैवमजनो जनानां परमेष्ठिनम्।**

**पश्यतस्तस्य तद्रूपमात्मनो न्यरुणद्धरिः॥ ३७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अजनः** = अजन्मा | **एवम्** = यसप्रकार | **तत्** = त्यो |
| **हरिः** = भगवान् नारायण | **सम्प्रदिश्य** = उपदेश गरेर | **आत्मनः** = आफ्नो |
| **जनानां परमेष्ठिनम्** = लोकपितामह ब्रह्माजीलाई | **तस्य** = उहाँ ब्रह्माजीले | **रूपम्** = रूपलाई |
| | **पश्यतः** = हेर्दाहेर्दै | **न्यरुणत्** = तिरोहित गर्नुभयो |

**वाक्यार्थ–** लोकपितामह ब्रह्माजीलाई यसप्रकार उपदेश गरेर अजन्मा भगवान्ले ब्रह्माजीले हेर्दाहेर्दै आफ्नो त्यस रूपलाई त्यहीँ तिरोहित गर्नुभयो।

**अन्तर्हितेन्द्रियार्थाय हरये विहिताञ्जलिः।**

**सर्वभूतमयो विश्वं ससर्जेदं स पूर्ववत्॥ ३८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अन्तर्हितेन्द्रियार्थाय** = ब्रह्माजीको दृष्टिबाट अगोचर हुनुभएका | **विहिताञ्जलिः** = हात जोडेर नमस्कार गरेपछि | **विश्वं** = संसारलाई |
| **हरये** = भगवान् नारायणलाई | **सर्वभूतमयः** = सर्वभूतस्वरूप | **पूर्ववत्** = पहिलेझैँ |
| | **सः** = ती ब्रह्माजीले | **ससर्ज** = सृष्टि गर्नुभयो |
| | **इदं** = यस | |

**वाक्यार्थ–** ब्रह्माजीले आफ्नो आँखाबाट नदेखिने हुनुभएका भगवान् नारायणलाई दुई हात जोडेर उहाँलाई प्रणाम गर्नुभयो। पहिलो कल्पमा जस्तो प्रकारको सृष्टि थियो त्यसै रूपमा उहाँले यस संसारको रचना गर्नुभयो।

**प्रजापतिर्धर्मपतिरेकदा नियमान् यमान्।**

**भद्रं प्रजानामन्विच्छन्नातिष्ठत् स्वार्थकाम्यया ॥ ३९ ॥**

पदार्थ—

**एकदा** = कुनै समयमा
**प्रजापतिः** = प्रजाका पति
**धर्मपतिः** = धर्मका पति ब्रह्माजीले
**प्रजानाम्** = प्रजाहरूको र
**भद्रं** = कल्याणको
**अन्विच्छन्** = कामना गर्ने
**स्वार्थकाम्यया** = प्रजाको कल्याणरूप स्वार्थको कामनाले
**यमान्** = यम र
**नियमान्** = नियमको
**आतिष्ठत्** = धारण गर्नुभयो

**वाक्यार्थ—** एकपटक धर्मका पति प्रजापति ब्रह्माजीले संसारको कल्याणरूप स्वार्थपूर्तिका लागि विधिपूर्वक यम र नियमको धारण गर्नुभयो।

**तं नारदः प्रियतमो रिक्थादानामनुव्रतः।**

**शुश्रूषमाणः शीलेन प्रश्रयेण दमेन च ॥ ४० ॥**

**मायां विविदिषन् विष्णोर्मायेशस्य महामुनिः।**

**महाभागवतो राजन् पितरं पर्यतोषयत् ॥ ४१ ॥**

पदार्थ—

**राजन्** = हे राजा परीक्षित्
**रिक्थादानाम्** = छोराहरूमध्ये
**प्रियतमः** = अत्यन्त प्रिय
**अनुव्रतः** = परमभक्त
**महामुनिः** = महामुनि
**महाभागवतः** = महाभागवत
**नारदः** = देवर्षि नारदजीले
**मायेशस्य** = मायापति
**विष्णोः** = विष्णुको
**मायां** = मायालाई
**विविदिषन्** = जान्ने इच्छाले
**शुश्रूषमाणः** = सेवा गर्दै
**तं** = यम र नियमको अनुष्ठान गर्ने
**पितरं** = आफ्ना पिता ब्रह्माजीलाई
**शीलेन** = शीलद्वारा
**प्रश्रयेण** = विनयद्वारा
**दमेन च** = इन्द्रियसंयमद्वारा पनि
**पर्यतोषयत्** = प्रसन्न गराउनुभयो

**वाक्यार्थ—** त्यससमयमा उहाँका छोराहरूमा सबभन्दा अत्यन्त प्रिय परमभक्त देवर्षि नारदजीले मायापति भगवान्को मायाको तत्त्वलाई जान्ने इच्छाले अत्यन्त संयम, विनय र शीलयुक्त अनुगत भएर ब्रह्माजीको सेवा गर्नुभयो र उक्त सेवाद्वारा ब्रह्माजीलाई प्रसन्न गराउनुभयो।

**तुष्टं निशाम्य पितरं लोकानां प्रपितामहम्।**

**देवर्षिः परिपप्रच्छ भवान् यन्मानुपृच्छति ॥ ४२ ॥**

पदार्थ—

**लोकानां** = लोकहरूका
**प्रपितामहम्** = प्रपितामह

**पितरं** = आफ्ना पिता ब्रह्माजीलाई
**तुष्टं** = प्रसन्न भएको
**निशाम्य** = जानेर
**देवर्षिः** = देवर्षि नारदजीले
**परिपप्रच्छ** = ब्रह्माजीसँग त्यही कुरा सोध्नुभयो
**यत्** = जुन कुराको विषयमा
**भवान्** = तपाईं
**मा**= मलाई
**अनुपृच्छति** = सोध्दै हुनुहुन्छ

**वाक्यार्थ—** नारदजीले लोकपितामह ब्रह्माजी आफूमाथि प्रसन्न भएको देखेर ब्रह्माजीसँग त्यही प्रश्न गर्नुभयो जुन प्रश्न अहिले तपाईं मसँग गर्दै हुनुहुन्छ।

**तस्मा इदं भागवतं पुराणं दशलक्षणम्।**
**प्रोक्तं भगवता प्राह प्रीतः पुत्राय भूतकृत्॥ ४३॥**

पदार्थ—

**तस्मै** = सोध्ने भएका ती
**पुत्राय** = देवर्षि नारदलाई
**प्रीतः** = प्रसन्न भएका
**भूतकृत्** = ब्रह्माजीले
**प्रोक्तं** = आफूलाई भगवान्‌ले संक्षेपमा चतुःश्लोकीद्वारा बताउनुभएको
**इदं** = यो
**दशलक्षणम्** = दशलक्षणहरूले युक्त भएको
**भागवतं पुराणं** = भागवत पुराणलाई
**भगवता** = भगवान्‌ले
**प्राह** = भन्नुभयो

**वाक्यार्थ—** उहाँको प्रश्नबाट अत्यन्त प्रसन्न भएर उहाँले यो दश लक्षणयुक्त भागवतपुराण आफ्ना पुत्र नारदजीलाई सुनाउनुभयो। जुन भागवतको उपदेश उहाँलाई स्वयं भगवान्‌ले चतुःश्लोकीका रूपमा गर्नुभएको थियो।

**नारदः प्राह मुनये सरस्वत्यास्तटे नृप।**
**ध्यायते ब्रह्म परमं व्यासायामिततेजसे॥ ४४॥**

पदार्थ—

**नृप** = हे राजा
**नारदः** = ती नारदजीले
**सरस्वत्याः** = सरस्वती नदीको
**तटे** = तटमा
**परमं** = पर
**ब्रह्म** = ब्रह्मको
**ध्यायते** = ध्यान गर्ने
**अमिततेजसे** = परमतेजस्वी
**व्यासाय मुनये** = व्यासमुनिलाई
**प्राह** = बताउनुभयो

**वाक्यार्थ—** हे राजा परीक्षित्! जुन समयमा मेरा परमतेजस्वी पिता सरस्वती नदीको तटमा बसेर परमात्माको ध्यानमा मग्न हुनुहुन्थ्यो त्यस समयमा उहाँलाई देवर्षि नारदजीले यही भागवत सुनाउनुभयो।

**यदुताहं त्वया पृष्टो वैराजात् पुरुषादिदम्।**

**यथासीत् तदुपाख्यास्ते प्रश्नानन्यांश्च कृत्स्नशः ॥ ४५ ॥**

पदार्थ—

| | | |
|---|---|---|
| **वैराजात्** = विराट् | **अहं** = म | **कृत्स्नशः** = धेरै |
| **पुरुषात्** = पुरुषबाट | **पृष्टः** = जे सोधिएको थिएँ | **अन्यान्** = अरू |
| **इदम्** = यो संसार | **तदुपाख्याः** = ती प्रश्नको उत्तर र | **प्रश्नान्** = अरू प्रश्नहरूको |
| **यथा आसीत्** = कसरी उत्पन्न भयो भनेर | **ते** = तिमीले सोधेका | **च** = पनि (उत्तर म यो भागवतको माध्यमले दिन्छु) |
| **त्वया** = तपाईंद्वारा | सम्पूर्ण | |

**वाक्यार्थ—** तपाईंले विराट् पुरुषबाट यस संसारको उत्पत्ति कसरी भयो ? भन्ने प्रश्न गर्नुभएको थियो। त्यसै गरी तपाईंले मसँग अरू-अरू प्रश्नहरू पनि सोध्नुभएको थियो ती सम्पूर्ण प्रश्नहरूको उत्तर म यही भागवतपुराणको माध्यमले तपाईंलाई दिन्छु।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां द्वितीयस्कन्धे**

**नवमोऽध्यायः ॥ ९॥**

# अथ दशमोऽध्यायः

## भागवतका दश लक्षण

**श्रीशुक उवाच** (शुकदेवजीले भन्नुभयो)

**अत्र सर्गो विसर्गश्च स्थानं पोषणमूतयः।**

**मन्वन्तरेशानुकथा निरोधो मुक्तिराश्रयः॥ १॥**

**पदार्थ—**

**अत्र** = यस भागवत पुराणमा
**सर्गः** = सर्ग
**विसर्गः** = विसर्ग
**स्थानं** = स्थान
**पोषणम्** = पोषण
**ऊतयः** = ऊति
**मन्वन्तरेशानुकथा** = मन्वन्तर र ईशानुकथा
**निरोधः** = निरोध
**मुक्तिः** = मुक्ति
**आश्रयः च** = आश्रयको पनि (यी तत्त्वहरूको वर्णन गरिएको छ)

**वाक्यार्थ—** यस भागवत पुराणमा सर्ग, विसर्ग, स्थान, पोषण, ऊति, मन्वन्तर, ईशानुकथा, निरोध, मुक्ति र आश्रय यी दश विषयहरूको वर्णन गरिएको छ।

**दशमस्य विशुद्ध्यर्थं नवानामिह लक्षणम्।**

**वर्णयन्ति महात्मानः श्रुतेनार्थेन चाञ्जसा॥ २॥**

**पदार्थ—**

**इह** = यस भागवत ग्रन्थमा
**दशमस्य** = दशौँ आश्रयतत्त्वको
**विशुद्ध्यर्थं** = तत्त्वज्ञान गर्नका लागि
**महात्मानः** = महात्माहरू
**नवानाम्** = अरू नौ लक्षणहरूको
**लक्षणम्** = स्वरूप (स्तुत्यादि स्थानमा)
**श्रुतेन** = श्रुतिद्वारा
**अञ्जसा** = साक्षात्
**वर्णयन्ति** = वर्णन गर्दछन् भने (तत्तत् आख्यानमा)
**अर्थेन** = तात्पर्यवृत्तिद्वारा (वर्णन गर्दछन्)

वाक्यार्थ— यस भागवत ग्रन्थमा दशौँ आश्रयतत्त्वको तत्त्वज्ञान गर्नका लागि महात्माहरू अरू नौ लक्षणहरूको स्वरूप स्तुत्यादि स्थानमा श्रुतिद्वारा साक्षात् वर्णन गर्दछन् भने तत्तत् आख्यानमा तात्पर्यवृत्तिद्वारा वर्णन गर्दछन्।

**भूतमात्रेन्द्रियधियां जन्म सर्ग उदाहृतः।**

**ब्रह्मणो गुणवैषम्याद्विसर्गः पौरुषः स्मृतः॥ ३॥**

**पदार्थ—**

**गुणवैषम्यात्** = गुणहरूको परिणामद्वारा
**ब्रह्मणः** = परमात्माद्वारा
**भूतमात्रेन्द्रियधियां** = पञ्चमहाभूत, पञ्चतन्मात्रा, इन्द्रिय, महत्तत्त्व र अहङ्कारको
**जन्म** = उत्पत्तिलाई
**सर्गः** = सर्ग
**उदाहृतः** = भनिन्छ
**पौरुषः** = विराट्पुरुषबाट उत्पन्न हुनुभएका ब्रह्माजीबाट हुने विभिन्न चराचरको सृष्टिलाई
**विसर्गः** = विसर्ग
**स्मृतः** =भनिन्छ

**वाक्यार्थ—** ईश्वरको प्रेरणाले प्रकृतिका गुणहरूमा क्षोभ भएर रूपान्तर हुँदा जुन आकाशादि पञ्चभूत, शब्द आदि तन्मात्रा, इन्द्रियहरू, अहङ्कार र महत्तत्त्वको उत्पत्ति हुन्छ त्यसलाई सर्ग भनिन्छ। विराट्पुरुषबाट उत्पन्न हुनुभएका ब्रह्माजीबाट हुने विभिन्न चराचरको सृष्टिलाई विसर्ग भनिन्छ।

**स्थितिर्वैकुण्ठविजयः पोषणं तदनुग्रहः ।**
**मन्वन्तराणि सद्धर्म ऊतयः कर्मवासनाः ॥ ४ ॥**

**पदार्थ—**
**वैकुण्ठविजयः** = प्रतिक्षण परिवर्तित भइरहने सृष्टिलाई एक मर्यादामा राख्नाले हुने भगवान् विष्णुको श्रेष्ठतालाई
**स्थितिः** = स्थिति भनिन्छ
**तदनुग्रहः** = आफूद्वारा सुरक्षित सृष्टिमा भक्तहरूमाथि हुने भगवान्को कृपालाई
**पोषणं** = पोषण भनिन्छ
**सद्धर्मः** = मन्वन्तरका अधिपतिहरूले गरेको प्रजापालन र भगवान्को भक्तिरूप शुद्धधर्मको अनुष्ठानलाई
**मन्वन्तराणि** = मन्वन्तर भनिन्छ
**कर्मवासनाः** = जीवहरूलाई बन्धनमा पार्ने तिनका कर्महरूको वासनालाई
**ऊतयः** = ऊति भनिन्छ

**वाक्यार्थ—** प्रतिक्षण नाशतिर अग्रसर भइरहेको सृष्टिलाई एक मर्यादामा स्थित राख्नाले भगवान् विष्णुको जुन श्रेष्ठता सिद्ध हुन्छ, उसलाई स्थिति भन्दछन्। आफूद्वारा सुरक्षित सृष्टिमा भक्तहरूमाथि उहाँको जुन कृपा हुन्छ उसैलाई पोषण भन्दछन्। मन्वन्तरका अधिपतिहरू जुन भगवद्भक्ति र प्रजापालनरूप शुद्ध धर्मको अनुष्ठान गर्दछन्, उसलाई मन्वन्तर भन्दछन्। कर्मद्वारा बन्धनमा पार्ने जीवको वासनालाई ऊति भन्दछन्।

**अवतारानुचरितं हरेश्चास्यानुवर्तिनाम् ।**
**सतामीशकथाः प्रोक्ता नानाख्यानोपबृंहिताः ॥ ५ ॥**

**पदार्थ—**
**अवतारानुचरितं** = भगवान्का विभिन्न अवतारका चरित्रहरू
**अनुवर्तिनाम्** = प्रेमी
**सताम्** = भक्तहरूका
**नानाख्यानोपबृंहिताः** = विभिन्न आख्यानहरूले युक्त
**हरेः** = भगवान् हरिका विभिन्न कथालाई
**ईशकथाः** = ईशानुकथा

**प्रोक्ताः** = भनिन्छ

**वाक्यार्थ–** भगवान्का विभिन्न अवतार र उहाँका प्रेमी भक्तहरूको विभिन्न आख्यानले युक्त भएका गाथाहरूलाई ईशकथा भन्दछन्।

**निरोधोऽस्यानुशयनमात्मनः सह शक्तिभिः।**
**मुक्तिर्हित्वान्यथा रूपं स्वरूपेण व्यवस्थितिः॥ ६॥**

**पदार्थ–**

**अस्य** = यो
**आत्मनः** = जीवको
**अनु** = भगवान्ले योगनिद्रालाई स्वीकार गरेर शयन गरिसकेपछि
**शक्तिभिः सह** = इन्द्रिय आदि उपाधिहरूका साथ
**शयनम्** = भगवान्मा लीन हुनुलाई
**निरोधः** = निरोध भनिन्छ
**अन्यथारूपं** = अविद्याद्वारा अध्यस्त कर्तृत्व, भोक्तृत्व, प्रमातृत्व आदि भावलाई
**हित्वा** = छोडेर
**स्वरूपेण** = ब्रह्मस्वरूपले
**व्यवस्थितिः** = रहनुलाई
**मुक्तिः** = मुक्ति भनिन्छ

**वाक्यार्थ–** जब भगवान् योगनिद्रालाई स्वीकार गरेर शयन गर्नुहुन्छ त्यस समयमा संसारका सम्पूर्ण जीवहरू आफ्ना उपाधिहरूका साथ भगवान्मा लीन हुन्छन्। यही उपाधिसहित जीवहरूको भगवान्मा लीन हुनुलाई निरोध भन्दछन्। अज्ञानकल्पित कर्तृत्वभोक्तृत्व आदि अनात्मभावको परित्याग गरेर आफ्नो वास्तविक स्वरूप परमात्मामा स्थित हुनुलाई मुक्ति भन्दछन्।

**आभासश्च निरोधश्च यतश्चाध्यवसीयते।**
**स आश्रयः परं ब्रह्म परमात्मेति शब्द्यते॥ ७॥**

**पदार्थ–**

**यतः** = जुन तत्त्वबाट
**आभासः** = सृष्टि
**निरोधः** = निरोध
**च** = लय र मोक्ष पनि
**यतः** = जुन तत्त्वबाट
**अध्यवसीयते** = प्रकाशित हुन्छ
**यत् च** = जुन तत्त्वलाई
**परं ब्रह्म परमात्मा इति** = परब्रह्म परमात्मा
**शब्द्यते** = भनिन्छ
**सः** = त्यही तत्त्वलाई नै
**आश्रयः** = आश्रयतत्त्व भनेर पनि भनिन्छ

**वाक्यार्थ–** यो चराचर जगत्को उत्पत्ति र प्रलय जुन तत्त्वबाट प्रकाशित हुन्छ त्यसैलाई आश्रयतत्त्व भन्दछन्। शास्त्रमा त्यही तत्त्वलाई परब्रह्म परमात्मा पनि भनिएको छ।

**योऽध्यात्मिकोऽयं पुरुषः सोऽसावेवाधिदैविकः।**
**यस्तत्रोभयविच्छेदः पुरुषो ह्याधिभौतिकः॥ ८॥**

**पदार्थ–**

**यः अयं** = यो जुन
**अध्यात्मिकः पुरुषः** = नेत्र आदि इन्द्रियहरूको अभिमानी द्रष्टा जीव हो
**सः असौ** = त्यो यो
**आधिदैविकः** =इन्द्रियहरूको अधिष्ठातृ देवता सूर्यको रूपमा पनि छ
**यः** = जुन
**तत्र** = एउटैमा
**उभयविच्छेदः** = आध्यात्मिक र आधिदैविक भेद जसबाट हुन्छ ( त्यस्तो जुन दृश्य देह हो) त्यो
**आधिभौतिकः** = आधिभौतिक
**पुरुषः** = पुरुष भनिन्छ

**वाक्यार्थ–** यो जुन नेत्र आदि इन्द्रियहरूको अभिमानी द्रष्टा जीव हो त्यो योइन्द्रियहरूको अधिष्ठातृ देवता सूर्यको रूपमा पनि छ। जुन एउटैमा आध्यात्मिक र आधिदैविक भेद हुन्छ, त्यस्तो दृश्य देहलाई आधिभौतिक पुरुष भनिन्छ।

**एकमेकतराभावे यदा नोपलभामहे ।**
**त्रितयं तत्र यो वेद स आत्मा स्वाश्रयाश्रयः ॥ ९ ॥**

पदार्थ–

**एकम्** = यी तीन पुरुषहरूमध्ये
**एकतराभावे** = एउटा कुनैको अभावमा एक
**न उपलभामहे** = अरू दुई ओटालाई जान्न सकिँदैन
**तत्र** = त्यहाँ
**यः** = जुन पुरुषले
**यदा** = जतिखेर
**त्रितयं** = आध्यात्मिक आदि तीनै ओटालाई
**वेद** = जान्दछ
**सः** = त्यही
**आत्मा** = परमात्मा
**स्वाश्रयाश्रयः** = सबको अधिष्ठान आश्रयतत्त्व हो

**वाक्यार्थ–** यी तीनओटामध्ये यदि एउटाको अभाव भयो भने अरू दुईओटाको उपलब्धि सम्भव छैन। अतः यी तीनैओटालाई जसले जान्दछ, त्यही परमात्मा सबको अधिष्ठान आश्रयतत्त्व हो। उसको आश्रय ऊ स्वयं हो, अरू कुनै उसको आश्रय होइन।

**पुरुषोऽण्डं विनिर्भिद्य यदासौ स विनिर्गतः ।**
**आत्मनोऽयनमन्विच्छन्नपोऽस्राक्षीच्छुचिः शुचीः ॥ १० ॥**

पदार्थ–

**सः** = पूर्वोक्त
**असौ पुरुषः** = विराट् पुरुष
**यदा** = जुन समयमा
**अण्डं** = ब्रह्माण्डलाई
**विनिर्भिद्य** = भेदन गरेर
**विनिर्गतः** = निस्क्यो (त्यस समयमा)
**आत्मनः** = आफ्नो
**अयनम्** = वासस्थान
**अन्विच्छन्** = खोज्दै
**शुचिः** = पवित्र
**शुचीः** = अत्यन्त पवित्र
**अपः** = जललाई
**अस्राक्षीत्** = सृष्टि गर्नुभयो

**वाक्यार्थ–** जब पूर्वोक्त विराट् पुरुष ब्रह्माण्डलाई फोरेर निस्क्यो त्यसपछि त्यसले आफू बस्नका लागि ठाउँ खोज्न लाग्या। त्यसपछि आफू बस्नका लागि त्यस पवित्र विराट् पुरुषले अत्यन्त पवित्र जलको सृष्टि गर्‍यो।

**तास्ववात्सीत्स्वसृष्टासु सहस्रं परिवत्सरान्।**
**तेन नारायणो नाम यदापः पुरुषोद्भवाः॥ ११॥**

पदार्थ—

**स्वसृष्टासु** = आफूले सृष्टि गरेका
**तासु** = त्यस जलमा
**सहस्रपरिवत्सरान्** = हजार वर्षसम्म
**अवात्सीत्** = बस्नुभयो
**पुरुषोद्भवाः** = नरबाट जन्मेका
**यदापः** = जुन नारनामक जल छन्
**तेन** = त्यही जलमा सुतेको कारणले
**नारायणः नाम** = पुरुषको नाम नारायण भयो

**वाक्यार्थ—**विराट्पुरुष नरबाट उत्पन्न भएकाले जलको नाम नार पर्न गयो। आफूबाट उत्पन्न भएको जलमा सुत्ने हुनाले त्यो विराट्पुरुषको नाम नारायण रहेको हो।

**द्रव्यं कर्म च कालश्च स्वभावो जीव एव च।**
**यदनुग्रहतः सन्ति न सन्ति यदुपेक्षया॥ १२॥**

पदार्थ—

**यदनुग्रहतः एव** = जुन नारायणको अनुग्रहले मात्र
**द्रव्यं** = पृथिवी आदि द्रव्य
**कर्म** = गमन आदि कर्म
**कालः च** = समय र
**स्वभावः** = स्वभाव अनि
**जीवः च** = जीव पनि
**सन्ति** = हुन्छन्
**यदुपेक्षया** = पुरुषको उपेक्षा गरेका खण्डमा
**न सन्ति** = छैनन्

**वाक्यार्थ—** उहाँ नारायण भगवान्को कृपाबाट नै द्रव्य, कर्म, काल, स्वभाव र जीव आदिको सत्ता सिद्ध हुन्छ। उहाँको उपेक्षा गरेको खण्डमा कुनै पनि वस्तुको अस्तित्व सिद्ध हुँदैन।

**एको नानात्वमन्विच्छन् योगतल्पात्समुत्थितः।**
**वीर्यं हिरण्मयं देवो मायया व्यसृजत् त्रिधा॥ १३॥**
**अधिदैवमथाध्यात्ममधिभूतमिति प्रभुः।**
**अथैकं पौरुषं वीर्यं त्रिधाभिद्यत तच्छृणु॥ १४॥**

पदार्थ—

**एकः** = अद्वितीय
**देवः** = नारायणले
**योगतल्पात्** = योगनिद्राबाट
**समुत्थितः** = उठेर
**नानात्वम्** = भिन्नभिन्न नानारूपमा
**अन्विच्छन्** = हुन चाँहदै
**मायया** = मायाशक्तिबाट
**हिरण्मयं** = सुवर्णमय

**वीर्यं** = जगत्को कारण आफ्नो शक्तिलाई
**अथ** = अनि
**अधिदैवम्** = अधिदैव
**अध्यात्मम्** = अध्यात्म र
**अधिभूतम्** = अधिभूत गरी
**इति** = यी
**त्रिधा** = तीन भागमा
**व्यसृजत्** = विभक्त गर्नुभयो
**प्रभुः** = भगवान्ले आफ्नो वीर्यलाई
**पौरुषं** = पुरुषको
**एकं** = एकमात्र
**वीर्यं** = वीर्य
**त्रिधा** = तीन रूपमा
**यथा** = जुनप्रकारले
**अभिद्यत** = भिन्न गर्नुभयो
**तत्** = त्यो कुरा
**शृणु** = सुन

**वाक्यार्थ—** ती अद्वितीय भगवान् नारायणले योगनिद्राबाट जागेर अनेक हुने इच्छा गर्नुभयो तब आफ्नो मायाले उहाँले अखिल ब्रह्माण्डका बीजरूप आफ्नो सुवर्णमय वीर्यलाई तीन भागमा विभक्त गर्नुभयो- आधिदैव, अध्यात्म र अधिभूत। परीक्षित् ! विराट्पुरुषको एकै वीर्य तीन भागमा कसरी विभक्त भयो भन्ने कुरा मबाट सुन्नुहोस्।

**अन्तः शरीर आकाशात् पुरुषस्य विचेष्टतः।**
**ओजः सहो बलं जज्ञे ततः प्राणो महानसुः॥ १५॥**

पदार्थ—
**विचेष्टतः** = चेष्टा गर्ने
**पुरुषस्य** = पुरुषको
**अन्तः शरीरे** = शरीरभित्र रहेको
**आकाशात्** = आकाशबाट
**ओजः** = इन्द्रियशक्ति
**सहः** = मनशक्ति
**बलं** = शारीरिक बल
**जज्ञे** = जन्मियो
**ततः** = त्यसपछि
**महान्** = मुख्य
**असुः** = इन्द्रिय आदिको नियन्त्रक
**प्राणः** = प्राण (जन्मियो)

**वाक्यार्थ—** विराट्पुरुष यताउता हल्लँदाखेरि उनको शरीरभित्रको आकाशबाट इन्द्रियबल, मनोबल र शरीरबलको उत्पत्ति भयो। त्यसपछि इन्द्रियहरूको पनि नियन्त्रक प्राण जन्मियो।

**अनुप्राणन्ति यं प्राणाः प्राणन्तं सर्वजन्तुषु।**
**अपानन्तमपानन्ति नरदेवमिवानुगाः॥ १६॥**

पदार्थ—
**अनुगाः** = अनुचरहरूले
**नरदेवम् इव** = राजालाईझैं
**सर्वजन्तुषु** = सम्पूर्ण प्राणीहरूमा
**यं** = जुन प्राणले
**प्राणन्तं** = चेष्टा गर्दा
**प्राणाः** = इन्द्रियहरू
**अनुप्राणन्ति** = पछि-पछि चेष्टा गर्दछन्
**अपानन्तम्** = चेष्टारहित हुँदा
**अपानन्ति** = चेष्टारहित हुन्छन्

**वाक्यार्थ—** जसरी सेवकहरू आफ्ना स्वामी राजाको पछि-पछि हिँड्छन् त्यसै गरी सबको शरीरमा प्राण प्रबल रहेको खण्डमा मात्र इन्द्रियहरू सचेत रहन्छन्। प्राण चेष्टारहित हुँदा इन्द्रियहरू पनि चेष्टारहित हुन्छन्।

**प्राणेनाक्षिपता क्षुत्तृडन्तरा जायते विभोः।**
**पिपासतो जक्षतश्च प्राङ्मुखं निरभिद्यत॥ १७॥**

पदार्थ–

| | | |
|---|---|---|
| **विभोः** = विराट् पुरुषको | **क्षुत्तृड्** = भोक र तिर्खा पनि | **जक्षतः च** = खान चाहना भएपछि |
| **अन्तरा** = देहभित्र | **जायते** = जन्मिन्छ (त्यसपछि) | **प्राङ्मुखं** = पहिले नै मुख |
| **आक्षिपता** = आवागमन गर्ने | **पिपासतः** = पानी पिउन चाहने र | **निरभिद्यत** = निस्कियो |
| **प्राणेन** = प्राणद्वारा | | |

**वाक्यार्थ–** जब प्राण जोर-जोरसँग भित्र र बाहिर आउने जाने गर्न लाग्यो तब विराट् पुरुषलाई भोक र तिर्खाको अनुभव भयो। खाने र पिउने इच्छा हुनेबित्तिकै सबभन्दा पहिले उनको शरीरमा मुख प्रकट भयो।

**मुखतस्तालु निर्भिन्नं जिह्वा तत्रोपजायते।**
**ततो नानारसो जज्ञे जिह्वया योऽधिगम्यते॥ १८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **मुखतः** = मुखबाट | **उपजायते** = जन्मिन्छ | **जिह्वया** = जिब्रोले |
| **तालु** = तालुस्थान | **ततः** = त्यसपछि | **अधिगम्यते** = जान्न सकिन्छ |
| **निर्भिन्नं** = प्रकट भयो | **नानारसः** = विभिन्नथरी रस | |
| **तत्र** = त्यहाँ | **जज्ञे** = जन्मियो | |
| **जिह्वा** = जिब्रो | **यः** = जुन रस | |

**वाक्यार्थ–** मुखबाट तालु र तालुबाट रसनेन्द्रिय प्रकट भयो। त्यसपछि अनेक प्रकारका रसहरू उत्पन्न भए, जुन पदार्थहरूलाई रसनेन्द्रियले ग्रहण गर्दछ।

**विवक्षोर्मुखतो भूम्नो वह्निर्वाग्व्याहृतं तयोः।**
**जले वै तस्य सुचिरं निरोधः समजायत॥ १९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **विवक्षोः** = बोल्न इच्छा गर्ने | **तयोः** = यी दुबैको विषय | **सुचिरं** = धेरै समयसम्म |
| **भूम्नः** = व्यापक विराट्को | **व्याहृतं** = बोली निस्कियो | **निरोधः** = अवरोध |
| **मुखतः** = मुखबाट | **तस्य** = त्यस विराट् पुरुषको | **समजायत** = भयो |
| **वह्निः** = अग्निदेवता | **जले** = जलमा | |
| **वाक्** = वाणी र | **वै**= निश्चय नै | |

**माया नाम महाभाग ययेदं निर्ममे विभुः ॥ २५ ॥**

पदार्थ–

**महाभाग** = महाभाग्यशाली हे विदुरजी
**यया** = जुन शक्तिद्वारा
**विभुः** = व्यापक परमात्माले
**इदं** = यो जगत्लाई
**निर्ममे** = बनाउनुभयो
**सा** = त्यही द्रष्टा र दृश्यको अनुसन्धान गर्ने
**सदसदात्मिका** = कार्य र कारणरूप र अनिर्वचनीय भावरूप
**एतस्य** = उहाँ
**संद्रष्टुः** = द्रष्टा परमात्माको
**माया नाम** = माया नाम गरिएको
**शक्तिः** = शक्ति हो

**वाक्यार्थ–** महाभाग्यशाली हे विदुरजी ! जुन शक्तिद्वारा परमात्माले यस जगत्लाई बनाउनुभयो त्यो द्रष्टा र दृश्यको अनुसन्धान गर्ने अनिर्वचनीय भावरूप शक्ति नै माया हो।

**कालवृत्त्या तु मायायां गुणमय्यामधोक्षजः।**
**पुरुषेणात्मभूतेन वीर्यमाधत्त वीर्यवान्॥ २६ ॥**

पदार्थ–

**कालवृत्त्या** = कालरूप शक्तिद्वारा
**तु** = चाहिँ
**गुणमय्याम्** = त्रिगुणात्मक
**मायायां** = मायामा क्षोभ उत्पन्न भएपछि
**अधोक्षजः** = अतीन्द्रिय
**वीर्यवान्** = चित् शक्तिवाला परमात्माले
**आत्मभूतेन** = आफ्नो अंशभूत
**पुरुषेण** = पुरुषद्वारा
**वीर्यम्** = चिदाभासरूपी बीज
**आधत्त** = स्थापित गर्नुभयो

**वाक्यार्थ–** कालशक्तिद्वारा त्रिगुणमयी मायामा क्षोभ उत्पन्न भएपछि इन्द्रियातीत चित् शक्तिसम्पन्न परमात्माले आफ्नो अंशभूत पुरुषरूपले उक्त मायामा चिदाभासरूप बीज स्थापित गर्नुभयो।

**ततोऽभवन्महत्तत्त्वमव्यक्तात् कालचोदितात्।**
**विज्ञानात्मात्मदेहस्थं विश्वं व्यञ्जंस्तमोनुदः॥ २७ ॥**

पदार्थ–

**ततः** = त्यसपछि
**कालचोदितात्** = कालद्वारा प्रेरित
**अव्यक्तात्** = अव्यक्त मायाबाट
**विज्ञानात्मा** = विज्ञानरूप
**तमोनुदः** = अज्ञाननाशक
**महत्तत्त्वम्** = महत्तत्त्व नै
**आत्मदेहस्थं** = आफूभित्र प्रकट अवस्थामा रहेको
**विश्वं** = संसारलाई
**व्यञ्जन्** = प्रकाशित गर्दै
**अभवत्** = उत्पन्न भयो

**वाक्यार्थ–** त्यसपछि कालद्वारा प्रेरित अव्यक्त मायाबाट विज्ञानरूप अज्ञाननाशक महत्तत्त्व नै आफूभित्र प्रकट अवस्थामा रहेको संसारलाई प्रकाशित गर्दै उत्पन्न भयो।

**सोऽप्यंशगुणकालात्मा भगवद्दृष्टिगोचरः।**
**आत्मानं व्यकरोदात्मा विश्वस्यास्य सिसृक्षया॥ २८॥**

पदार्थ–

**अंशगुणकालात्मा** = चिदाभास सत्त्वादिगुण र कालको अधीनमा रहने
**सः** = त्यो
**आत्मा** = महत्तत्त्वले
**अपि** = पनि
**भगवद्दृष्टिगोचरः** = भगवान्को चेतनाबाट प्रेरित भएपछि
**आत्मानं** = आफूलाई
**अस्य** = यो
**विश्वस्य** = संसारको
**सिसृक्षया** = रचना गर्ने इच्छाले
**व्यकरोत्** = रूपान्तरित गऱ्यो

**वाक्यार्थ–** चिदाभास, सत्त्वादि गुण र कालको अधीनमा रहने त्यो महत्तत्त्व पनि भगवान्को चेतनाबाट प्रेरित भएपछि आफूलाई यो संसारको रचना गर्ने इच्छाले रूपान्तरित भयो।

**महत्तत्त्वाद् विकुर्वाणादहंतत्त्वं व्यजायत।**
**कार्यकारणकर्त्रात्मा भूतेन्द्रियमनोमयः॥ २९॥**

पदार्थ–

**विकुर्वाणात्** = रूपान्तरित हुँदै गएको
**महत्तत्त्वात्** = महत्तत्त्वबाट
**कार्यकारणकर्त्रात्मा** = अधिभूत, अध्यात्म र अधिदैवको आश्रय
**भूतेन्द्रियमनोमयः** = पञ्चभूत, तत्सम्बन्धी इन्द्रिय र तिनका देवताले युक्त
**अहंतत्त्वं** = अहङ्कार
**व्यजायत** = उत्पन्न भयो

**वाक्यार्थ–** रूपान्तरित हुँदै गएको महत्तत्त्वबाट अधिभूत, अध्यात्म र अधिदैवको आश्रय भएको एवं पञ्चभूत, तत्सम्बन्धी इन्द्रिय र तिनका देवताले युक्त अहङ्कार उत्पन्न भयो।

**वैकारिकस्तैजसश्च तामसश्चेत्यहं त्रिधा।**
**अहंतत्त्वाद् विकुर्वाणान्मनो वैकारिकादभूत्॥**
**वैकारिकाश्च ये देवा अर्थाभिव्यञ्जनं यतः॥ ३०॥**

पदार्थ–

**विकुर्वाणात्** = विकार अवस्थामा पुगेको
**वैकारिकात्** = सात्त्विक अंशको
**अहंतत्त्वात्** = अहङ्कारबाट
**यतः** = जसको कारणले
**अर्थाभिव्यञ्जनं** = विषयज्ञान हुन्छ त्यस्ता
**ये** = जति पनि

**वैकारिकाः** = सात्त्विक अंशबाट बन्ने
**देवाः** = देवताहरू र
**मनः** = मन पनि
**अभूत्** = उत्पन्न भयो
**अहं** = उक्त अहङ्कार
**वैकारिकः** = सात्त्विक
**तैजसः** = राजस र
**तामसः च इति** = तामस गरी
**त्रिधा** = तीन प्रकारको हुन्छ

**वाक्यार्थ–** त्यो अहङ्कार वैकारिक (सात्त्विक), तैजस (राजस) र तामसका भेदले तीन प्रकारको हुन्छ। यस अहङ्कारबाट मन र इन्द्रियहरूका अधिष्ठातृ देवताहरू प्रकट भए। त्यसै सात्त्विक अहङ्कारबाट विषयज्ञान हुन्छ।

**तैजसानीन्द्रियाण्येव ज्ञानकर्ममयानि च।**
**तामसो भूतसूक्ष्मादिर्यतः खं लिङ्गमात्मनः॥ ३१॥**

पदार्थ–
**ज्ञानकर्ममयानि** = ज्ञान र कर्मका साधनभूत
**इन्द्रियाणि च** = इन्द्रियहरू
**तैजसानि** = राजस अंशबाट उत्पन्न भएका हुन्
**तामसः** = तामस अंशबाट
**भूतसूक्ष्मादिः** = भूतसूक्ष्मको कारण शब्दतन्मात्रा भयो
**यतः** = जहाँबाट
**आत्मनः** = आत्माको
**लिङ्गम्** = सङ्केतक
**खं** = आकाश जन्मियो

**वाक्यार्थ–** ज्ञान र कर्मका साधनभूत इन्द्रियहरू राजस अंशबाट उत्पन्न भएका हुन् तामस अंशबाट भूतसूक्ष्मको कारण शब्दतन्मात्रा भयो जहाँबाट आत्माको सङ्केतक आकाश जन्मियो।

**कालमायांशयोगेन भगवद्वीक्षितं नभः।**
**नभसोऽनुसृतं स्पर्शं विकुर्वन्निर्ममेऽनिलम्॥ ३२॥**

पदार्थ–
**नभः** = आकाश
**भगवद्वीक्षितं** = भगवान्को दृष्टिले युक्त भयो तब
**कालमायांशयोगेन** = काल, माया र चिदाभासको संयोगले
**नभसः** = आकाशबाट
**अनुसृतं** = जन्मिएको
**स्पर्शं** = स्पर्शतन्मात्राले
**विकुर्वन्** = विकारमा प्राप्त हुँदै
**अनिलम्** = वायुलाई
**निर्ममे** = उत्पन्न गर्‍यो

**वाक्यार्थ–** भगवान्को दृष्टि आकाशमा परेपछि काल, माया र चिदाभासको योगबाट स्पर्शतन्मात्रा उत्पन्न भयो। स्पर्शतन्मात्रा विकृत भएपछि त्यसबाट वायु उत्पन्न भयो।

**अनिलोऽपि विकुर्वाणो नभसोरुबलान्वितः।**
**ससर्ज रूपतन्मात्रं ज्योतिर्लोकस्य लोचनम्॥ ३३॥**

पदार्थ—

| | | |
|---|---|---|
| **उरुबलान्वितः** = अत्यन्त बलयुक्त | **विकुर्वाणः** = विकार अवस्थामा प्राप्त भएर | **लोकस्य** = संसारको |
| **अनिलः** = वायुले | **रूपतन्मात्रं** = रूपतन्मात्रालाई | **लोचनम्** = प्रकाश |
| **अपि** = पनि | **ससर्ज** = सृजना गऱ्यो (त्यहाँबाट पनि) | **ज्योतिः** = तेज उत्पन्न भयो |
| **नभसा** = आकाशको साथमा | | |

**वाक्यार्थ—** आकाशसहित अत्यन्त बलवान् वायुमा विकार उत्पन्न भएपछि त्यसबाट रूपतन्मात्राको उत्पत्ति भयो। रूपतन्मात्राबाट संसारको प्रकाशक तेज उत्पन्न भयो।

**अनिलेनान्वितं ज्योतिर्विकुर्वत् परवीक्षितम्।**

**आधत्ताम्भो रसमयं कालमायांशयोगतः॥ ३४॥**

पदार्थ—

| | | |
|---|---|---|
| **परवीक्षितम्** = परमात्माको चित्सत्ताले युक्त | **ज्योतिः** = तेजले | **रसमयं** = रसतन्मात्राको कार्य |
| **अनिलेन** = वायुले | **कालमायांशयोगतः** = काल, माया र चिदाभासको संयोगले | **अम्भः** = जल |
| **अन्वितं** = सहित | **विकुर्वत्** = विकृत हुँदै | **आधत्त** = उत्पन्न गऱ्यो |

**वाक्यार्थ—** परमात्माको वायुयुक्त तेजले काल, माया र चिदंशको योगबाट विकार उत्पन्न भएपछि त्यसबाट रसतन्मात्राको कार्य जल उत्पन्न गऱ्यो।

**ज्योतिषाम्भोऽनुसंसृष्टं विकुर्वद् ब्रह्मवीक्षितम्।**

**महीं गन्धगुणामाधात् कालमायांशयोगतः॥ ३५॥**

पदार्थ—

| | | |
|---|---|---|
| **ब्रह्मवीक्षितम्** = ब्रह्मको चेतनादृष्टिबाट चैतन्ययुक्त भएको र | **अम्भः** = जलले | **महीं** = पृथिवीलाई |
| **ज्योतिषा** = तेजले | **कालमायांशयोगतः** = काल, माया र चिदाभासको संयोगले | **आधात्** = उत्पन्न गऱ्यो |
| **अनुसंसृष्टं** = संयुक्त | **विकुर्वत्** = विकृत हुँदै | |
| | **गन्धगुणाम्** = गन्धतन्मात्रायुक्त | |

**वाक्यार्थ—** ब्रह्मको दृष्टिपात भएपछि तेजयुक्त जलले काल, माया र चिदंशको योगबाट गन्धगुणले युक्त भएको पृथिवी उत्पन्न गऱ्यो।

**भूतानां नभआदीनां यद्यद् भव्यावरावरम्।**

**तेषां परानुसंसर्गाद् यथासङ्ख्यं गुणान् विदुः ॥ ३६ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **भव्य** = हे विदुरजी | **अवरावरम्** = पछिपछि उत्पन्न भएका छन् | **यथासङ्ख्यं** = उत्तरोत्तर |
| **नभआदीनां** = आकाश आदि | **तेषां** = ती महाभूतहरूमा | **गुणान्** = अधिक-अधिक गुणहरू हुन्छन् भनी |
| **भूतानां** = महाभूतहरूमध्ये | **परानुसंसर्गात्** = पूर्व भूतहरूको संसर्ग भएको कारणले | **विदुः** = (विद्वान्हरू) जान्दछन् |
| **यद्यत्** = जुनजुन | | |

**वाक्यार्थ–** हे विदुरजी ! आकाश आदि महाभूतहरूमध्ये जुनजुन पछिपछि उत्पन्न भएका छन् ती महाभूतहरूमा पूर्व भूतहरूको संसर्ग भएको कारणले उत्तरोत्तर अधिक-अधिक गुणहरू हुन्छन् भनी विद्वान्हरू जान्दछन्।

**एते देवाः कला विष्णोः कालमायांशलिङ्गिनः ।**

**नानात्वात् स्वक्रियानीशाः प्रोचुः प्राञ्जलयो विभुम् ॥ ३७ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **कालमायांशलिङ्गिनः** = काल, माया र चिदाभासको लक्षण, विकृति, विक्षेप र चेतनाले युक्त | **एते** = महत्तत्त्व आदिका अभिमानी यी | **स्वक्रियानीशाः** = आ-आफ्ना कार्यमा सफल नभएपछि |
| **विष्णोः** = भगवान्का | **देवाः** = देवताहरूले | **प्राञ्जलयः** = अञ्जलि बाँधेर |
| **कलाः** = अंश भएका | **नानात्वात्** = अलग-अलग हुनाले | **विभुम्** = व्यापक भगवान्लाई |
| | | **प्रोचुः** = भन्न लाग्नुभयो |

**वाक्यार्थ–** काल, माया र चिदाभासको लक्षण, विकृति, विक्षेप र चेतनाले युक्त भगवान्का अंश भएका महत्तत्त्व आदिका अभिमानी यी देवताहरूले अलग-अलग हुनाले आ-आफ्ना कार्यमा सफल नभएपछि अञ्जलि बाँधेर व्यापक भगवान्लाई भन्न लाग्नुभयो।

**देवा ऊचुः** (देवताहरूले भन्नुभयो)

**नमाम ते देव पदारविन्दं**

**प्रपन्नतापोपशमातपत्रम् ।**

**यन्मूलकेता यतयोऽञ्जसोरु**

**संसारदुःखं बहिरुत्क्षिपन्ति ॥ ३८ ॥**

पदार्थ–

**देव** = हे प्रकाशरूप भगवान्
**प्रपन्नतापोपशमातपत्रम्** = शरणमा आएका जीवहरूको ताप नष्ट गर्नका लागि छाताजस्तो भएको
**ते** = तपाईंको
**पदारविन्दं** = चरणकमललाई
**नमाम** = नमस्कार गर्दछौँ
**यन्मूलकेताः** = जुन चरणकमलको आश्रय लिने
**यतयः** = योगीहरू
**अञ्जसा उरु** = सजिलैसँग ठुलो
**उरु** = ठुलो
**संसारदुःखं** = संसारको दुःख
**बहिः** = टाढैबाट
**उत्क्षिपन्ति** = फ्याँकिदिन्छन्

**वाक्यार्थ–** हे प्रकाशरूप भगवान् शरणमा आएका जीवहरूको ताप नष्ट गर्नका लागि छाताजस्तो भएको तपाईंको चरणकमललाई नमस्कार गर्दछौँ जुन चरणकमलको आश्रय लिने योगीहरू संसारको ठुलो दुःखलाई सजिलैसँग टाढैबाट फ्याँकिदिन्छन्।

**धातर्यदस्मिन् भव ईश जीवा-**
**स्तापत्रयेणाभिहता न शर्म।**
**आत्मन् लभन्ते भगवंस्तवाङ्घ्रि-**
**च्छायां सविद्यामत आश्रयेम॥ ३९॥**

पदार्थ–

**धातः** = हे जगत्का पालनकर्ता
**ईश** = जगदीश्वर
**भगवन्** = भगवन्
**यत्** = जुन कारणले
**अस्मिन्** = यस
**भवे** = संसारमा
**तापत्रयेण** = तीन तापबाट
**अभिहताः** = पीडित
**जीवाः** = जीवहरू
**आत्मन्** = आत्मामा
**शर्म** = सुख
**न लभन्ते** = प्राप्त गर्न सक्दैनन्
**अत** = यसकारण
**सविद्याम्** = ज्ञानले युक्त
**तव** = तपाईंको
**अङ्घ्रिच्छायां** = चरणकमलको छायाको
**आश्रयेम** = आश्रय लिन्छौँ

**वाक्यार्थ–** जगत्का पालनकर्ता जगदीश्वर भगवन्! यस संसारमा तापत्रयबाट व्याकुल भएका जीवहरूलाई अलिकति पनि शान्ति मिल्दैन। यसकारण हामी तपाईंको चरणकमलको ज्ञानमय छायाको आश्रय लिन्छौँ।

**मार्गन्ति यत्ते मुखपद्मनीडै-**
**श्छन्दःसुपर्णैर्ऋषयो विविक्ते।**
**यस्याघमर्षोदसरिद्वरायाः**
**पदं पदं तीर्थपदः प्रपन्नाः॥ ४०॥**

पदार्थ–

**विविक्ते** = एकान्तमा रहेका
**ऋषयः** = ऋषिहरू
**ते** = तपाईंको
**मुखपद्मनीडैः** = मुखकमलको आश्रय लिने
**छन्दःसुपर्णैः** = वेदमन्त्ररूपी पक्षीहरूद्वारा
**यस्य** = शास्त्रप्रसिद्ध तपाईंको
**पदं** = पदको
**मार्गन्ति** = अन्वेषण गर्दछन्
**तीर्थपदः** = पवित्रकीर्ति हजुरको
**अघमर्षोदसरिद्वरायाः** = पापनाशक जलले युक्त भएको गङ्गाजीको
**पदं** = उद्गमस्थान (तपाईंको चरणकमलको)
**प्रपन्नाः** = शरणमा जान्छौँ

**वाक्यार्थ–** मुनिहरू एकान्तमा रहेर तपाईंको मुखकमलको आश्रय लिने वेदमन्त्ररूप पक्षीहरूद्वारा अनुसन्धान गरिने सम्पूर्ण पापनाशिनी नदीहरूमा श्रेष्ठ गङ्गाजीको उद्गमस्थान भएको तपाईंको चरणकमलको हामी शरणमा जान्छौँ।

**यच्छ्रद्धया श्रुतवत्या च भक्त्या**
**सम्मृज्यमाने हृदयेऽवधाय।**
**ज्ञानेन वैराग्यबलेन धीरा**
**व्रजेम तत्तेऽङ्घ्रिसरोजपीठम्॥ ४१॥**

पदार्थ–

**श्रद्धया** = श्रद्धाद्वारा
**श्रुतवत्या** = तपाईंको महिमाको श्रवणले युक्त भएको
**भक्त्या** = भक्तिद्वारा
**सम्मृज्यमाने** = शुद्ध भएको
**हृदये** = हृदयमा
**तत्** = त्यस चरणकमलको
**अवधाय** = ध्यान गरेर
**वैराग्यबलेन** = वैराग्यले युक्त भएको
**ज्ञानेन** = ज्ञानद्वारा
**धीराः** = धीर भक्तहरू (आफ्नो स्वरूपमा अवस्थित हुन्छन्)
**तत्** = त्यो
**ते** = तपाईंको
**अङ्घ्रिसरोजपीठम्** = चरणकमलको
**व्रजेम** = आश्रय लिन्छौँ

**वाक्यार्थ–** श्रद्धाद्वारा तपाईंको महिमाको श्रवणले युक्त भएको भक्तिद्वारा शुद्ध भएको हृदयमा त्यस चरणकमलको ध्यान गरेर वैराग्यले युक्त भएको ज्ञानद्वारा धीर भक्तहरू आफ्नो स्वरूपमा अवस्थित हुन्छन्। त्यो तपाईंको चरणकमलको हामी आश्रय लिन्छौँ।

**विश्वस्य जन्मस्थितिसंयमार्थे**
**कृतावतारस्य पदाम्बुजं ते।**
**व्रजेम सर्वे शरणं यदीश**

**स्मृतं प्रयच्छत्यभयं स्वपुंसाम्॥ ४२॥**

पदार्थ–

**ईश** = हे भगवान्
**विश्वस्य** = यस संसारको
**जन्मस्थितिसंयमार्थे** = उत्पत्ति, स्थिति र संहारका लागि
**कृतावतारस्य** = अवतार लिनुभएका
**ते** = तपाईंको
**यत्** = जुन
**स्मृतं** = स्मरण गरिएको
**पदाम्बुजं** = चरणकमलले
**स्वपुंसाम्** = स्मरण गर्ने भक्तहरूलाई
**अभयं** = अभय
**प्रयच्छति** = प्रदान गर्दछ त्यही चणकमलको
**सर्वे** = हामी सबै
**शरणं** = शरणमा
**व्रजेम** = जान्छौँ

**वाक्यार्थ–** हे भगवान्! तपाईं संसारको उत्पत्ति, स्थिति र संहारको लागि अवतार ग्रहण गर्नुहुन्छ। अतः हामी सबै तपाईंका ती चरणकमलको शरणमा जान्छौँ, जुन चरणले स्मरण गर्ने भक्तहरूलाई अभय प्रदान गर्दछन्।

**यत् सानुबन्धेऽसति देहगेहे**
**ममाहमित्यूढदुराग्रहाणाम्।**
**पुंसां सुदूरं वसतोऽपि पुर्यां**
**भजेम तत्ते भगवन् पदाब्जम्॥ ४३॥**

पदार्थ–

**भगवन्** = हे भगवान्
**सानुबन्धे** = स्त्री, पुत्र, शय्या आदि उपकरणले युक्त
**असति** = मिथ्या
**देहगेहे** = शरीर र घर आदिमा
**मम अहम् इति** = मेरो र म भन्ने
**ऊढदुराग्रहाणाम्** = दृढ दुराग्रहलाई बोकेका
**पुंसां** = मानिसहरूका लागि
**पुर्यां** = (तपाईंले उनीहरूकै) शरीरमा
**वसतः अपि** = निवास गरे तापनि
**सुदूरं** = (उनीहरूका लागि तपाईं) निकै टाढा रहनुहुन्छ (त्यस्ता)
**ते** = तपाईंको
**पदाब्जम्** = चरणकमलको
**भजेम** = भजन गर्दछौँ

**वाक्यार्थ–** हे भगवान् ! स्त्री, पुत्र, शय्या आदि उपकरणले युक्त मिथ्या शरीर र घर आदिमा मेरो र म भन्ने दृढ दुराग्रहलाई बोकेका मानिसहरूका लागि उनीहरूकै शरीरमा निवास गरे तापनि उनीहरूका लागि तपाईं निकै टाढा रहनुहुन्छ। त्यस्ता तपाईंको चरणकमलको हामी भजन गर्दछौँ।

**तान् वै ह्यसद्वृत्तिभिरक्षिभिर्ये**
**पराहृतान्तर्मनसः परेश।**
**अथो न पश्यन्त्युरुगाय नूनं**

**ये ते पदन्यासविलासलक्ष्याः ॥ ४४ ॥**

पदार्थ–

**परेश** = हे भगवान्
**वै** = निश्चय नै
**ये** = जो
**असद्वृत्तिभिः** = विषयाभिमुख
**अक्षिभिः** = आँखा आदि इन्द्रियहरूद्वारा
**पराहृतान्तर्मनसः** = बाह्यविषयले (मन हरण गरिएका छन्)
**अथ** = त्यसै कारणले
**ते** = त्यस्ता पामरहरू
**उरुगाय** = हे कीर्तिशाली प्रभो
**पदन्यासविलासलक्ष्याः** = रमणीय चरण र शोभाका
**ये** = जो उपासक भक्तहरू छन्
**तान्** = त्यस्ता प्रेमी भक्तहरूलाई
**नूनं** = निश्चय नै
**न पश्यन्ति** = देख्न सक्दैनन्

**वाक्यार्थ–** हे परमयशस्वी परमेश्वर ! इन्द्रियहरू विषयाभिमुख हुनाको कारणले जसको मन सधैं विषयतिर नै आकृष्ट भइरहन्छ, यस्ता पामरहरू तपाईंको विलासपूर्ण पादविन्यासको शोभाको विशेषज्ञ भक्तहरूको दर्शन गर्न पाउँदैनन्।

**पानेन ते देव कथासुधायाः**
**प्रवृद्धभक्त्या विशदाशया ये ।**
**वैराग्यसारं प्रतिलभ्य बोधं**
**यथाञ्जसान् वीयुरकुण्ठधिष्ण्यम् ॥ ४५ ॥**
**तथापरे चात्मसमाधियोग-**
**बलेन जित्वा प्रकृतिं बलिष्ठाम् ।**
**त्वामेव धीराः पुरुषं विशन्ति**
**तेषां श्रमः स्यान्न तु सेवया ते ॥ ४६ ॥**

पदार्थ–

**देव** = हे देव
**यथा** = जसरी
**ते** = तपाईंको
**कथासुधायाः** = कथारूपी अमृतको
**पानेन** = पानद्वारा
**प्रवृद्धभक्त्या** = बढेको भक्तिले
**विशदाशया** = शुद्ध अन्तःकरण भएका
**ये** = जो भक्तहरू छन्
**वैराग्यसारं** = वैराग्यमा बल
**प्रतिलभ्य** = प्राप्त गरेर
**बोधं** = ज्ञानलाई
**अञ्जसा** = सजिलैसित
**अकुण्ठधिष्ण्यम्** = कहिल्यै नाश नहुने तपाईंको वैकुण्ठधामलाई
**अन्वीयुः** = प्राप्त गर्दछन्
**तथा** = त्यसै गरी
**अपरे** = अरू
**धीराः** = जितेन्द्रिय पुरुषहरू
**आत्मसमाधियोगबलेन** = चित्तवृत्तिनिरोधरूप समाधिको

बलले
**बलिष्ठाम्** = तपाईंकी बलवती
**प्रकृतिं** = मायालाई
**जित्वा** = जितेर
**पुरुषं** = परम पुरुष
**त्वाम् एव** = तपाईंमा नै
**विशन्ति** = प्रवेश गर्दछन्
**तेषां** = ती योगीहरूलाई
**श्रमः** = धेरै श्रम
**स्यात्** = पर्दछ
**ते** = तपाईंको
**सेवया न** = सेवाको मार्गमा
त्यस्तो कष्ट छैन

**वाक्यार्थ–** हे देव ! तपाईंको कथाको श्रवणद्वारा बढेको भक्तिको कारणले जसको अन्तःकरण निर्मल भएको छ, ती साधकहरू वैराग्यरूपी बलयुक्त भएको आत्मज्ञानलाई प्राप्त गरेर अनायास नै तपाईंको वैकुण्ठधाममा पुग्दछन्। अरू धीर पुरुषहरू चित्तनिरोधरूप समाधिको बलले तपाईंको बलवती मायामाथि विजय प्राप्त गरेर तपाईंमा नै लीन हुन्छन्। परन्तु ती योगीहरूलाई कष्ट ज्यादा हुन्छ। तपाईंको सेवाको मार्गमा भने कुनै पनि प्रकारको कष्ट छैन।

**तत्ते वयं लोकसिसृक्षयाद्य**
**त्वयानुसृष्टास्त्रिभिरात्मभिः स्म ।**
**सर्वे वियुक्ताः स्वविहारतन्त्रं**
**न शक्नुमस्तत्प्रतिहर्तवे ते ॥ ४७ ॥**

**पदार्थ–**
**आद्य** = हे आदिदेव
**तत्** = त्यसकारण
**ते** = तपाईंका सेवक
**वयं** = हामीहरू
**त्वया** = तपाईंले नै
**लोकसिसृक्षया** = लोकहरूको सृष्टि गर्ने इच्छाले
**त्रिभिः** = त्रिगुणात्मक
**आत्मभिः** = स्वभावका रूपमा
**अनुसृष्टाः स्म** = रचिएका छौं
**सर्वे** = हामी सबै
**वियुक्ताः** = भिन्न-भिन्न स्वभाव भएका कारणले
**स्वविहारतन्त्रं** = तपाईंको क्रीडाको साधनरूप ब्रह्माण्डको रचना गरेर
**ते** = तपाईंलाई
**प्रतिहर्तवे** = समर्पण गर्न
**न शक्नुमः** = सक्दैनौं

**वाक्यार्थ–** हे आदिदेव ! तपाईंले सृष्टिरचनाको इच्छाले हामीलाई त्रिगुणमय बनाउनुभएको छ। यसकारण विभिन्न स्वभाववाला हुनाको कारणले हामी परस्परमा मिल्न सक्दैनौं। अतः तपाईंको क्रीडाको साधनरूप ब्रह्माण्डको रचना गरेर तपाईंलाई समर्पण गर्न हामी असमर्थ भएका छौं।

**यावद् बलिं तेऽज हराम काले**
**यथा वयं चान्नमदाम यत्र ।**
**यथोभयेषां त इमे हि लोका**

**बलिं हरन्तोऽन्नमदन्त्यनूहाः ॥ ४८ ॥**

**पदार्थ–**

**अज** = हे जन्मरहित भगवान्
**यथा** = जसरी
**वयं** = हामीहरू
**यावत्** = जति
**काले** = समयमा
**ते** = तपाईंलाई
**बलिं** = सबप्रकारको भोग
**हरामः** = समर्पण गर्न सक्छौँ
**यत्र** = जहाँ
**अन्नम्** = (आफ्नो योग्यताको अनुरूप) अन्न
**अदाम** = ग्रहण गर्न सक्छौँ
**यथा** = जसरी
**हि** = निश्चय नै
**इमे** = उत्पन्न गरिने
**ते** = यी
**लोकाः** = प्राणीहरू
**उभयेषां** = तपाईं र हामीहरूलाई
**बलिं** = भोग
**हरन्तः** = समर्पण गर्दै
**अनूहाः** = विघ्नले रहित भएर
**अन्नम् अदन्ति** = आ-आफ्नो अन्न ग्रहण गर्न सक्छन् (त्यस्तो कुनै उपाय गर्नुहोस्)

**वाक्यार्थ–** हे जन्मरहित भगवन् ! तसर्थ हामी तपाईंसँग यस्तो उपायका लागि प्रार्थना गर्दछौँ जुन उपायको सहायतालाई प्राप्त गरेर हामीहरू यस ब्रह्माण्डको रचना गरेर तपाईंलाई सब प्रकारको भोग यथोचित समयमा समर्पण गर्दै आफू पनि आफ्नो योग्यताको अनुसार अन्न ग्रहण गर्न सकौँ। त्यस्तै यी जीवहरू पनि सम्पूर्ण विघ्नबाधाहरूबाट टाढा रहेर तपाईं र हामीहरू दुबैलाई भोग समर्पण गर्दै आ-आफ्नो अन्न भक्षण गर्न समर्थ होऊन्।

**त्वं नः सुराणामसि सान्वयानां**
**कूटस्थ आद्यः पुरुषः पुराणः।**
**त्वं देव शक्त्यां गुणकर्मयोनौ**
**रेतस्त्वजायां कविमादधेऽजः ॥ ४९ ॥**

**पदार्थ–**

**देव** = हे देव
**सान्वयानां** = कारणले सहित भएका
**नः** = हामी
**सुराणाम्** = देवताहरूको
**त्वं** = तपाईं
**आद्यः** = कारणभूत
**कूटस्थ** = निर्विकार
**अजः** = नजन्मने
**पुरुषः पुराणः** = पुराण पुरुष
**असि** = हुनुहुन्छ
**त्वं** = तपाईंले नै
**गुणकर्मयोनौ** = सत्त्व आदि गुण र जन्म आदि कर्महरूको कारण भएको
**अजायां** = माया
**शक्त्यां** = शक्तिमा
**कविम्** = विज्ञ महत्तत्त्व
**रेतः** = गर्भ
**आदधे** = स्थापित गर्नुभयो

**वाक्यार्थ–** तपाईं निर्विकार पुराणपुरुष नै कार्यवर्ग सहित हामी देवताहरूको आदिकारण हुनुहुन्छ। देव ! अजन्मा तपाईंले नै सत्त्व आदि गुण र जन्म आदि कर्मको कारणरूप मायाशक्तिमा चिदाभासरूप वीर्यलाई स्थापित गर्नुभयो।

**ततो वयं मत्प्रमुखा यदर्थे**
**बभूविमात्मन् करवाम किं ते।**
**त्वं नः स्वचक्षुः परिदेहि शक्त्या**
**देव क्रियार्थे यदनुग्रहाणाम्॥ ५०॥**

**पदार्थ–**

**आत्मन्** = आत्मस्वरूप
**देव** = हे देव !
**मत्प्रमुखाः** = महत्तत्त्वरूप
**वयं** = हामीहरू
**बभूविम** = (जुन कार्यका लागि) उत्पन्न भएका छौं
**यदर्थे** = त्यस सम्बन्धमा
**किं करवाम** = के गरौं
**क्रियार्थे** = ब्रह्माण्ड रचनाका लागि
**यदनुग्रहाणाम्** = तपाईंको अनुग्रहका पात्र भएका (हामीहरूलाई अनुग्रह गर्ने)
**त्वं** = तपाईं हुनुन्छ
**ततः** = त्यसकारण
**ते** = तपाईंको
**शक्त्या** = क्रियाशक्तिले युक्त भएको
**स्वचक्षुः** = आफ्नो ज्ञानशक्ति
**नः** = हामीहरूलाई
**परिदेहि** = प्रदान गर्नुहोस्

**वाक्यार्थ–** आत्मस्वरूप हे देव ! महत्तत्त्व आदिरूप हामी देवताहरूलाई तपाईंले जुन कार्यका लागि उत्पन्न गर्नुभएको छ, त्यसको सम्बन्धमा हामीहरू के गरौं ? देव ! हामीमाथि अनुग्रह गर्ने तपाईं नै हुनुहुन्छ। तसर्थ हामीलाई क्रियाशक्तिले सहित आफ्नो ज्ञानशक्ति प्रदान गर्नुहोस्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां तृतीयस्कन्धे**

**पञ्चमोऽध्यायः॥ ५॥**

# अथ षष्ठोऽध्यायः

## विराट् शरीरको उत्पत्ति

**ऋषिरुवाच** (मैत्रेय ऋषिले भन्नुभयो)

**इति तासां स्वशक्तीनां सतीनामसमेत्य सः।**

**प्रसुप्तलोकतन्त्राणां निशाम्य गतिमीश्वरः॥ १॥**

**कालसञ्ज्ञां तदा देवीं बिभ्रच्छक्तिमुरुक्रमः।**

**त्रयोविंशतितत्त्वानां गणं युगपदाविशत्॥ २॥**

पदार्थ–

**इति** = यसप्रकार
**असमेत्य** = नमिलीकन
**सतीनाम्** = रहेका (त्यसैले)
**प्रसुप्तलोकतन्त्राणां** = विश्व रचना गर्न नसकेका
**तासां** = ती
**स्वशक्तीनां** = आफ्ना शक्तिहरूको
**गतिम्** = अवस्थिति
**निशाम्य** = जानेर
**सः** = उहाँ
**ईश्वरः** = भगवान्
**उरुक्रमः** = सर्वसमर्थ प्रभुले
**तदा** = त्यस समयमा
**कालसञ्ज्ञां** = काल संज्ञा भएकी
**देवीं** = प्रकृतिरूप
**शक्तिम्** = आफ्नो शक्तिलाई
**बिभ्रत्** = स्वीकार गरेर
**युगपत्** = एकैपटक
**त्रयोविंशतितत्त्वानां** = तेईसओटा तत्त्वहरूको
**गणं** = समूहमा
**आविशत्** = अन्तर्यामीरूपले प्रवेश गर्नुभयो

**वाक्यार्थ–** सर्वशक्तिमान् भगवान्ले देख्नुभयो कि आपसमा सङ्गठित नहुनाको कारणले यी मेरा महत्तत्त्व आदि शक्तिहरू विश्वरचनाको कार्यमा असमर्थ भइरहेका छन्। तब उहाँले क्रियाशक्तिलाई स्वीकार गरेर एकं साथमा तेईसओटा तत्त्वहरूको समूहमा अन्तर्यामीरूपले प्रवेश गर्नुभयो।

**टिप्पणी–** यहाँ प्रकृति र पुरुष बाहेक अरू तेईसओटा तत्त्वहरूको ग्रहण गरिएको छ। ती तेईसओटा तत्त्वहरू हुन्– महत्तत्त्व, अहङ्कार, पञ्चभूत, पञ्चतन्मात्रा, मनसहित एघार इन्द्रियहरू।

**सोऽनुप्रविष्टो भगवांश्चेष्टारूपेण तं गणम्।**

**भिन्नं संयोजयामास सुप्तं कर्म प्रबोधयन्॥ ३॥**

पदार्थ–

**चेष्टारूपेण** = क्रियाशक्तिको रूपमा
**तं** = त्यो
**गणम्** = तत्त्वहरूको समूहमा
**अनुप्रविष्टो** = अन्तर्यामीरूपले
**प्रबोधयन्** = जगाउँदै पस्नुभएका
**सः** = उहाँ
**भगवान्** = भगवान्ले
**सुप्तं** = सुप्त अवस्थामा रहेको (जीवहरूको)
**कर्म** = कर्मसंस्कारहरूलाई
**भिन्नं** = छुट्टाछुट्टै रहेको गणलाई
**संयोजयामास** = संयुक्त पार्नुभयो

**वाक्यार्थ–** तिनीहरूमा प्रविष्ट भएर उहाँले सुप्त अवस्थामा रहेको जीवहरूको कर्मसंस्कारहरूलाई जाग्रत् गर्नुभयो र परस्परमा भिन्न त्यो तत्त्वसमूहलाई आफ्नो क्रियाशक्तिद्वारा आपसमा मिलाउनुभयो।

**प्रबुद्धकर्म दैवेन त्रयोविंशतिको गणः।**
**प्रेरितोऽजनयत् स्वाभिर्मात्राभिरधिपूरुषम्॥ ४॥**

**पदार्थ–**

**दैवेन** = ईश्वरद्वारा
**प्रेरितः** = प्रेरित भएको र
**प्रबुद्धकर्म** = क्रियाशक्ति अभिव्यक्त भएको
**त्रयोविंशतिकः** = तेईस तत्त्वको
**गणः** = समूहले
**स्वाभिः** = आफ्ना
**मात्राभिः** = अंशहरूको संयोगबाट
**अधिपूरुषम्** = विराट् पुरुषको देहलाई
**अजनयत्** = प्रकट गर्‍यो

**वाक्यार्थ–** यसप्रकार जब भगवान्ले अदृष्टलाई कार्योन्मुख गर्नुभयो, तब त्यो तेइस तत्त्वको समूहले भगवान्को प्रेरणाले आफ्नो अंशद्वारा विराट् पुरुषलाई उत्पन्न गर्‍यो।

**परेण विशता स्वस्मिन् मात्रया विश्वसृग्गणः।**
**चुक्षोभान्योन्यमासाद्य यस्मिन् लोकाश्चराचराः॥ ५॥**

**पदार्थ–**

**परेण** = परमात्मा
**स्वस्मिन्** = आफूभित्र
**विशता** = प्रवेश गरेपछि
**विश्वसृग्गणः** = विश्व रचना गर्ने महत्तत्त्व आदिको समूह
**अन्योन्यम्** = अरू-अरू तत्त्वहरूसँग
**आसाद्य** = मिलेर
**मात्रया** = केही अंशहरूद्वारा
**चुक्षोभ** = विराट् देहको रूपमा परिणत भयो
**यस्मिन्** = जुन विराट्मा
**चराचराः** = चर र अचर
**लोकाः** = सम्पूर्ण सृष्टि अडिएको छ

**वाक्यार्थ–** अर्थात् जब भगवान्ले अंशरूपले आफ्नो शरीरमा प्रवेश गर्नुभयो, तब त्यो विश्वरचना गर्ने महत्तत्त्व आदिको समुदाय एकअर्कोसँग मिलेर विराट् पुरुष बन्यो। जुन विराट्मा चराचर सम्पूर्ण सृष्टि अडिएको छ।

**हिरण्मयः स पुरुषः सहस्रपरिवत्सरान् ।**

**आण्डकोश उवासाप्सु सर्वसत्त्वोपबृंहितः ॥ ६ ॥**

**पदार्थ–**

**सर्वसत्त्वोपबृंहितः** = सम्पूर्ण जीवहरूलाई साथमा लिएको
**सः** = त्यो
**हिरण्मयः** = हिरण्मय
**पुरुषः** = विराट् पुरुष
**आण्डकोशे** = ब्रह्माण्डभित्र
**अप्सु** = जलमा
**सहस्रपरिवत्सरान्** = हजारौँ वर्षसम्म
**उवास** = रह्यो

**वाक्यार्थ–** जलभित्र जुन अखण्ड आश्रयस्थान थियो, त्यसमा त्यो हिरण्मय विराट् पुरुष सम्पूर्ण जीवहरूलाई साथमा लिएर एकहजार दिव्यवर्षसम्म त्यहीँ रहिरह्यो ।

**स वै विश्वसृजां गर्भो देवकर्मात्मशक्तिमान् ।**

**विबभाजात्मनात्मानमेकधा दशधा त्रिधा ॥ ७ ॥**

**पदार्थ–**

**वै** = निश्चय नै
**विश्वसृजां** = विश्व रचना गर्ने महत्तत्त्व आदिको
**गर्भः** = कार्यरूप
**देवकर्मात्मशक्तिमान्** = ज्ञानशक्ति, क्रियाशक्ति र आत्मशक्तिले सहित
**सः** = विराट्ले
**आत्मना** = आफूले नै
**आत्मानम्** = आफैँलाई
**एकधा** = भोक्तृत्व ज्ञानशक्तिको रूपमा एक प्रकारले
**दशधा** = क्रियाशक्तिभित्र प्राणवृत्तिको रूपमा दश प्रकारले र
**त्रिधा** = अधिदैव, अध्यात्म र अधिभूतको रूपमा तीन प्रकारले
**विबभाज** = विभक्त गऱ्यो

**वाक्यार्थ–** त्यो विश्वरचना गर्ने तत्त्वहरूको कार्य थियो; तथा ज्ञान, क्रिया र आत्मशक्तिले सम्पन्न थियो। यी शक्तिहरूद्वारा उसले स्वयं आफ्नो क्रमशः एक (हृदयरूप) दश (प्राणरूप) र तीन (आध्यात्मिक, आधिभौतिक र आधिदैविक) विभाग गऱ्यो ।

**एष ह्यशेषसत्त्वानामात्मांशः परमात्मनः ।**

**आद्योऽवतारो यत्रासौ भूतग्रामो विभाव्यते ॥ ८ ॥**

**पदार्थ–**

**अंशः** = जीवको प्रथम अंशको रूपमा रहेको
**एषः** = यो विराट् पुरुष
**हि** = निश्चय नै
**अशेषसत्त्वानाम्** = सम्पूर्ण जीवहरूको
**आत्मा** = समष्टिचेतन हो र
**असौ** = यो विराट्
**परमात्मनः** = परमात्माको
**आद्यः** = प्रथम
**अवतारः** = अवतार हो
**यत्र** = जहाँ

**भूतग्रामः** = प्राणीहरूको समुदाय
**विभाव्यते** = प्रकट हुन्छ

**वाक्यार्थ–** यो विराट् पुरुष प्रथम जीव भएकाले समस्त जीवहरूको आत्मा र जीवरूप हुनाको कारणले परमात्माको अंश र पहिला अभिव्यक्त हुनाको कारणले भगवान्‌को प्रथम अवतार हो। यो सम्पूर्ण भूतसमुदाय यसैमा प्रकाशित हुन्छ।

**साध्यात्मः साधिदैवश्च साधिभूत इति त्रिधा।**
**विराट्प्राणो दशविध एकधा हृदयेन च॥ ९॥**

**पदार्थ–**

**विराट्** = विराट् पुरुष
**साध्यात्मः** = अध्यात्मले सहित
**साधिदैवः** = अधिदैवरूपले सहित
**साधिभूतः** = अधिभूतस्वरूपले सहित
**इति** = यसप्रकार
**त्रिधा** = तीन प्रकारको छ
**प्राणः** = प्राणवृत्तिको रूपमा
**दशविधः** = दश प्रकारले र
**हृदयेन च** = हृदयावच्छिन्न चैतन्यको रूपमा
**एकधा** = एकरूपमा मात्र छ

**वाक्यार्थ–** यो अध्यात्म, अधिभूत र अधिदैवरूपले तीनप्रकारको, प्राणरूपले दश प्रकारको र हृदयरूपले एक प्रकारको छ।

**स्मरन् विश्वसृजामीशो विज्ञापितमधोक्षजः।**
**विराजमतपत् स्वेन तेजसैषां विवृत्तये॥ १०॥**

**पदार्थ–**

**अधोक्षजः** = इन्द्रियबाट नभेटिने
**ईशः** = भगवान्‌ले
**विश्वसृजाम्** = विश्व रचना गर्ने महत्तत्त्व आदिको
**विज्ञापितम्** = प्रार्थनालाई
**स्मरन्** = स्मरण गरेर
**स्वेन** = आफ्नो
**तेजसा** = चिच्छक्तिद्वारा
**एषां** = यी तत्त्वहरूको
**विवृत्तये** = विभिन्न नामरूप प्रकट गर्नका लागि
**विराजम्** = विराट्‌लाई
**अतपत्** = विचाररूप तपद्वारा प्रकाशित गर्नुभयो

**वाक्यार्थ–** फेरि भगवान्‌ले विश्वको रचना गर्ने महत्तत्त्व आदिको प्रार्थनालाई स्मरण गरेर उनको वृत्तिलाई जगाउनको लागि आफ्नो चेतनरूप तेजले त्यस विराट् पुरुषलाई प्रकाशित गरेर जगाउनुभयो।

**अथ तस्याभितप्तस्य कतिधायतनानि ह।**
**निरभिद्यन्त देवानां तानि मे गदतः शृणु॥ ११॥**

**पदार्थ–**

**अथ** = त्यसपछि
**तस्य** = परमात्माले

**अभितप्तस्य** = विचारमय तप गरेपछि
**ह** = निश्चय नै
**देवानां** = तत्त्वात्मक देवताहरूको
**कतिधा** = कति प्रकारका
**आयतनानि** = स्थानहरू
**निरभिद्यन्त** = प्रकट भए
**तानि** = ती सबैको बारेमा
**गदतः** = भनिरहेको
**मे** = म (मैत्रेय)बाट
**शृणु** = सुन्नुहोस्

**वाक्यार्थ–** त्यसपछि परमात्माले विचारमय तप गरेपछि निश्चय नै तत्त्वात्मक देवताहरूको कति प्रकारका स्थानहरू प्रकट भए ती सबैको बारेमा भनिरहेको म (मैत्रेय)बाट सुन्नुहोस्।

**तस्याग्निरास्यं निर्भिन्नं लोकपालोऽविशत् पदम्।**
**वाचा स्वांशेन वक्तव्यं ययासौ प्रतिपद्यते॥ १२॥**

पदार्थ–
**तस्य** = विराट् पुरुषको
**आस्यं** = मुख
**निर्भिन्नं** = प्रकट भयो अनि
**स्वांशेन** = आफ्नो अंशभूत
**वाचा** = वाणीद्वारा
**लोकपालः** = लोकपाल
**अग्निः** = अग्निदेवता
**पदम्** = त्यस स्थानमा
**अविशत्** = प्रवेश गर्नुभयो
**यया** = जुन वाणीको कारणले
**असौ** = यो जीव
**वक्तव्यं** = बोल्नुपर्ने कुरा
**प्रतिपद्यते** = जान्दछ

**वाक्यार्थ–** विराट् पुरुषको मुख प्रकट भयो अनि आफ्नो अंशभूत वाणीद्वारा लोकपाल अग्निदेवता त्यस स्थानमा प्रवेश गर्नुभयो जुन वाणीको कारणले यो जीव बोल्नुपर्ने कुरा जान्दछ।

**निर्भिन्नं तालु वरुणो लोकपालोऽविशद्धरेः।**
**जिह्वयांशेन च रसं ययासौ प्रतिपद्यते॥ १३॥**

पदार्थ–
**हरेः** = विराट्को
**तालु** = तालुस्थान
**निर्भिन्नं** = प्रकट भयो
**लोकपालः** = लोकपाल
**वरुणः** = वरुणदेवता (आफ्नो अंशभूत)
**जिह्वया** = रसना
**अंशेन** = अंशद्वारा
**अविशत्** = प्रवेश गर्नुभयो
**यया** = जुन रसनाशक्तिबाट
**असौ** = जीवात्मा
**रसं** = रसलाई
**प्रतिपद्यते** = ग्रहण गर्दछ

**वाक्यार्थ–** फेरि विराट् पुरुषको तालु उत्पन्न भयो। त्यसमा लोकपाल वरुण आफ्नो अंश रसनेन्द्रिय सहित स्थित हुनुभयो, जसद्वारा जीव रस ग्रहण गर्दछ।

**निर्भिन्ने अश्विनौ नासे विष्णोराविशतां पदम्।**
**घ्राणेनांशेन गन्धस्य प्रतिपत्तिर्यतो भवेत्॥ १४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **विष्णोः** = विराट्को | **घ्राणेन** = घ्राणरूप | **यतः** = जहाँबाट |
| **नासे** = नासिका छिद्रहरू | **अंशेन** = अंश सहित भई | **गन्धस्य** = गन्धको |
| **निर्भिन्ने** = प्रकट भए | **पदम्** = उक्त स्थानमा | **प्रतिपत्तिः** = ग्रहण |
| **अश्विनौ** = अश्विनीकुमारहरू | **आविशतां** = प्रवेश गर्नुभयो | **भवेत्** = हुन्छ |

**वाक्यार्थ–** त्यसपछि विराट् पुरुषबाट नासिकाछिद्र प्रकट भए। ती नासिकाछिद्रहरूमा अश्विनीकुमार आफ्नै अंश घ्राणेन्द्रियसहित प्रविष्ट हुनुभयो। यसैद्वारा जीवले गन्ध ग्रहण गर्दछ।

**निर्भिन्ने अक्षिणी त्वष्टा लोकपालोऽविशद्विभोः।**
**चक्षुषांशेन रूपाणां प्रतिपत्तिर्यतो भवेत्॥ १५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **विभोः** = विराट् पुरुषको | **त्वष्टा** = सूर्यले | **यतः** = जहाँबाट |
| **अक्षिणी** = आँखाहरू | **चक्षुषा** = चक्षुरिन्द्रियरूप | **रूपाणां** = रूपहरूको |
| **निर्भिन्ने** = प्रकट भए | **अंशेन** = अंशद्वारा | **प्रतिपत्तिः** = ज्ञान |
| **लोकपालः** = लोकपति | **अविशत्** = प्रवेश गर्नुभयो | **भवेत्** = हुन्छ |

**वाक्यार्थ–** यसप्रकार जब त्यो विराट् देहमा आँखा प्रकट भए, तब ती आँखामा आफ्नो अंश नेत्रेन्द्रिय सहित लोकपति सूर्यले प्रवेश गर्नुभयो। यसै नेत्रेन्द्रियद्वारा पुरुषलाई विविध रूपको ज्ञान हुन्छ।

**निर्भिन्नान्यस्य चर्माणि लोकपालोऽनिलोऽविशत्।**
**प्राणेनांशेन संस्पर्शं येनासौ प्रतिपद्यते॥ १६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अस्य** = विराट्को | **अनिलः** = वायुदेवता | **येन** = जुन त्वगिन्द्रियद्वारा |
| **चर्माणि** = छालाहरू | **प्राणेन** = प्राणरूपी | **आसौ** = जीव |
| **निर्भिन्नानि** = प्रकट भए | **अंशेन** = अंशद्वारा | **संस्पर्शं** = स्पर्शलाई |
| **लोकपालः** = लोकपाल | **अविशत्** = प्रवेश गर्नुभयो | **प्रतिपद्यते** = जान्दछ |

**वाक्यार्थ–** फेरि त्यो विराट् विग्रहमा त्वचा उत्पन्न भयो। त्यसमा आफ्नो अंश त्वगिन्द्रियसहित वायुदेवता स्थित हुनुभयो। यसै त्वगिन्द्रियद्वारा जीव स्पर्शको अनुभव गर्दछ।

**कर्णावस्य विनिर्भिन्नौ धिष्ण्यं स्वं विविशुर्दिशः।**
**श्रोत्रेणांशेन शब्दस्य सिद्धिं येन प्रपद्यते॥ १७॥**

पदार्थ–

**अस्य** = विराट्को
**कर्णौ** = कानका छिद्रहरू
**विनिर्भिन्नौ** = प्रकट भए
**स्वं धिष्ण्यं** = आफ्नो वासस्थानमा
**श्रोत्रेण** = श्रोत्रेन्द्रियरूप
**अंशेन** = अंशद्वारा
**दिशः** = दिशाहरू
**विविशुः** = प्रवेश गरे
**येन** = जुन श्रोत्रद्वारा
**शब्दस्य** = शब्दको
**सिद्धिं** = अभिव्यक्तिलाई
**प्रपद्यते** = जीव जान्दछ

**वाक्यार्थ–** जब यसका कर्णच्छिद्र प्रकट भए, तब उसमा आफ्नो अंश श्रवणेन्द्रिय सहित दिशाहरूले प्रवेश गरे। जुन श्रवणेन्द्रियद्वारा जीवलाई शब्दको ज्ञान हुन्छ।

**त्वचमस्य विनिर्भिन्नां विविशुर्धिष्ण्यमोषधीः।**
**अंशेन रोमभिः कण्डूं यैरसौ प्रतिपद्यते॥ १८॥**

पदार्थ–

**अस्य** = विराट्को
**विनिर्भिन्नां** = प्रकट भयो
**त्वचम्** = बाहिरी छालारूप
**धिष्ण्यम्** = वासस्थानमा
**ओषधीः** = औषधिहरू
**रोमभिः** = रौँरूपी
**अंशेन** = अंशद्वारा
**विविशुः** = प्रवेश गर्नुभयो
**यैः** = जुन रौँहरूबाट
**असौ** = जीव
**कण्डूं** = कन्याउन
**प्रतिपद्यते** = जान्दछ

**वाक्यार्थ–** विराट्को प्रकट भयो बाहिरी छालारूप वासस्थानमा औषधिहरू रौँरूपी अंशद्वारा प्रवेश गर्नुभयो जुन रौँहरूबाट जीव कन्याउन जान्दछ।

**मेढ्रं तस्य विनिर्भिन्नं स्वधिष्ण्यं क उपाविशत्।**
**रेतसांशेन येनासावानन्दं प्रतिपद्यते॥ १९॥**

पदार्थ–

**तस्य** = विराट्को
**मेढ्रं** = जननेन्द्रिय
**विनिर्भिन्नं** = प्रकट भयो
**कः** = प्रजापतिले
**स्वधिष्ण्यं** = आफ्नो वासस्थानमा
**रेतसा** = वीर्यरूप
**अंशेन** = अंशद्वारा
**उपाविशत्** = प्रवेश गर्नुभयो
**येन** = जसको कारणले
**असौ** = यो जीव
**आनन्दं** = कामसुख
**प्रतिपद्यते** = अनुभव गर्दछ

**वाक्यार्थ–** विराट्को जननेन्द्रिय प्रकट भयो प्रजापतिले आफ्नो वासस्थानमा वीर्यरूप अंशद्वारा प्रवेश गर्नुभयो, जसको कारणलेयो जीव कामसुख अनुभव गर्दछ।

**गुदं पुंसो विनिर्भिन्नं मित्रो लोकेश आविशत्।**
**पायुनांशेन येनासौ विसर्गं प्रतिपद्यते॥ २०॥**

पदार्थ–

**पुंसः** = पुरुषको
**गुदं** = गुदद्वार
**विनिर्भिन्नं** = प्रकट भयो अनि
**लोकेशः** = लोकपाल
**मित्रः** = यमराजले
**पायुना** = पायु इन्द्रियरूप
**अंशेन** = अंशद्वारा
**आविशत्** = प्रवेश गर्नुभयो
**येन** = जसको मद्दतले
**असौ** = यो जीव
**विसर्गं** = मलत्याग गर्न
**प्रतिपद्यते** = समर्थ हुन्छ

**वाक्यार्थ–** फेरि विराट् पुरुषबाट गुदा प्रकट भयो। त्यसमा लोकपाल यमराजले आफ्नो अंश पायु इन्द्रियसहित प्रवेश गर्नुभयो। यसबाट जीव मलत्याग गर्न समर्थ हुन्छ।

**हस्तावस्य विनिर्भिन्नाविन्द्रः स्वर्पतिराविशत्।**
**वार्तयांशेन पुरुषो यया वृत्तिं प्रपद्यते॥ २१॥**

पदार्थ–
**अस्य** = पुरुषको
**हस्तौ** = हातहरू
**विनिर्भिन्नौ** = प्रकट भए
**स्वर्पतिः** = स्वर्गको राजा
**इन्द्रः** = इन्द्र देवताले
**वार्तया** = ग्रहण र त्याग
**अंशेन** = अंशद्वारा
**आविशत्** = प्रवेश गर्नुभयो
**यया** = जसद्वारा
**पुरुषः** = जीव
**वृत्तिं** = जीविका
**प्रपद्यते** = चलाउन समर्थ हुन्छ

**वाक्यार्थ–** त्यसपछि उसका हातहरू प्रकट भए। तिनमा आफ्नो ग्रहणरूप शक्तिसहित देवराज इन्द्रले प्रवेश गर्नुभयो। यस शक्तिबाट जीव आफ्नो जीविका प्राप्त गर्दछ।

**पादावस्य विनिर्भिन्नौ लोकेशो विष्णुराविशत्।**
**गत्या स्वांशेन पुरुषो यया प्राप्यं प्रपद्यते॥ २२॥**

पदार्थ–
**अस्य** = विराट्को
**पादौ** = चरणहरू
**विनिर्भिन्नौ** = प्रकट भए
**लोकेशः** = लोकपाल
**विष्णुः** = विष्णुजीले
**स्वांशेन** = आफ्नो अंशभूत
**गत्या** = गतिशक्तिद्वारा
**आविशत्** = प्रवेश गर्नुभयो
**यया** = जसद्वारा
**पुरुषः** = जीवले
**प्राप्यं** = लक्ष्य
**प्रपद्यते** = प्राप्त गर्दछ

**वाक्यार्थ–** यी विराट्को पुरुषको चरण उत्पन्न भए, तब आफ्नो शक्ति गतिसहित लोकेश्वर भगवान् विष्णुले प्रवेश गर्नुभयो। यो गतिशक्तिद्वारा जीव आफ्नो गन्त यठाउँमा पुग्दछ।

**बुद्धिं चास्य विनिर्भिन्नां वागीशो धिष्ण्यमाविशत्।**
**बोधेनांशेन बोद्धव्यप्रतिपत्तिर्यतो भवेत्॥ २३॥**

पदार्थ–
**अस्य** = विराट् पुरुषको
**विनिर्भिन्नां** = प्रकट भएको
**बुद्धिं** = बुद्धिरूप
**वागीशः** = ब्रह्माजीले
**धिष्ण्यम्** = स्थानमा
**बोधेन** = ज्ञानरूप

| | |
|---|---|
| **अंशेन** = अंशद्वारा | **बोद्धव्यप्रतिपत्तिः** = ज्ञातव्य |
| **आविशत्** = प्रवेश गर्नुभयो | वस्तुको ज्ञान |
| **यतः** = जुन बुद्धिबाट | **भवेत्** = हुन्छ |

**वाक्यार्थ—** फेरि यसमा बुद्धि उत्पन्न भयो। आफ्नो यो ठाउँमा बुद्धिशक्तिका साथ वाक्पति ब्रह्माजीले प्रवेश गर्नुभयो। यही बुद्धिशक्तिद्वारा जीव ज्ञातव्यविषयलाई जान्दछ।

**हृदयं चास्य निर्भिन्नं चन्द्रमा धिष्ण्यमाविशत्।**
**मनसांशेन येनासौ विक्रियां प्रतिपद्यते॥ २४॥**

पदार्थ—

| | | |
|---|---|---|
| **अस्य च** = फेरि यो विराट्को | **मनसा** = मनरूपी | **येन** = जुन मनको सहायताले |
| **हृदयं** = हृदय | **अंशेन** = अंशद्वारा | **असौ** = जीव |
| **निर्भिन्नं** = प्रकट भयो | **चन्द्रमा** = चन्द्रमा | **विक्रियां** = सङ्कल्प विकल्प |
| **धिष्ण्यम्** = त्यस स्थानमा | **आविशत्** = प्रवेश गर्नुभयो | **प्रतिपद्यते** = गर्न सक्छ |

वाक्यार्थ— फेरि यो विराट्को हृदय प्रकट भयो त्यस स्थानमा मनरूपी अंशद्वारा चन्द्रमा प्रवेश गर्नुभयो जुन मनको सहायताले जुन मनको सहायताले जीव सङ्कल्प विकल्प गर्न सक्छ।

**आत्मानं चास्य निर्भिन्नमभिमानोऽविशत् पदम्।**
**कर्मणांशेन येनासौ कर्तव्यं प्रतिपद्यते॥ २५॥**

पदार्थ—

| | | |
|---|---|---|
| **अस्य** = विराट्को | **कर्मणा** = अहङ्कृतिरूप कर्मको | **असौ** = जसद्वारा जीव |
| **आत्मानं** = अहङ्कार | **अंशेन** = अंशद्वारा | **कर्तव्यं** = कर्तव्यलाई |
| **च** = पनि | **अभिमानः** = रुद्रजीले | **प्रतिपद्यते** = जान्दछ |
| **निर्भिन्नम्** = प्रकट भयो (अनि | **अविशत्** = प्रवेश गर्नुभयो | |
| आफ्नो स्थानमा) | **येन** = जसद्वारा | |

**वाक्यार्थ—** त्यसपछि विराट् पुरुषमा अहङ्कार उत्पन्न भयो। यो आफ्नो आश्रयमा क्रियाशक्तिसहित रुद्रले प्रवेश गर्नुभयो, जसद्वारा जीव कर्तव्यलाई स्वीकार गर्दछ।

**सत्त्वं चास्य विनिर्भिन्नं महान् धिष्ण्यमुपाविशत्।**
**चित्तेनांशेन येनासौ विज्ञानं प्रतिपद्यते॥ २६॥**

पदार्थ—

| | | |
|---|---|---|
| **अस्य** = विराट्को | **सत्त्वं च** = चित्त पनि | **विनिर्भिन्नं** = प्रकट भयो र |

**धिष्ण्यम्** = उक्त स्थानमा
**महान्** = महत्तत्त्व
**चित्तेन** = चैतन्यरूप
**अंशेन** = अंशले
**उपाविशत्** = प्रवेश गऱ्यो
**येन** = जुन चैतन्यद्वारा
**असौ** = जीव
**विज्ञानं** = ज्ञानलाई
**प्रतिपद्यते** = ग्रहण गर्दछ

**वाक्यार्थ–** त्यसपछि यसमा चित्त प्रकट भयो। उसमा चित्शक्ति सहित महत्तत्त्व स्थित भयो। यही चैतन्य शक्तिद्वारा जीव ज्ञानलाई प्राप्त गर्दछ।

**शीर्ष्णोऽस्य द्यौर्धरा पद्भ्यां खं नाभेरुदपद्यत।**
**गुणानां वृत्तयो येषु प्रतीयन्ते सुरादयः॥ २७॥**

पदार्थ–

**अस्य** = विराट्को
**शीर्ष्णः** = शीर्षभागबाट
**द्यौः** = अन्तरिक्ष
**पद्भ्यां** = पाउबाट
**धरा** = पृथिवी र
**नाभेः** = नाभिबाट
**खं** = आकाश
**उदपद्यत** = उत्पन्न भयो
**येषु** = जहाँ
**गुणानां** = गुणहरूका
**वृत्तयः** = परिणामरूप
**सुरादयः** = देवताहरू
**प्रतीयन्ते** = प्रतीत हुन्छन्

**वाक्यार्थ–** विराट्को शीर्षभागबाट अन्तरिक्ष, पाउबाट पृथिवी र नाभिबाट आकाश उत्पन्न भयो जहाँ गुणहरूका परिणामरूप देवताहरू प्रतीत हुन्छन्।

**आत्यन्तिकेन सत्त्वेन दिवं देवाः प्रपेदिरे।**
**धरां रजःस्वभावेन पणयो ये च ताननु॥ २८॥**
**तार्तीयेन स्वभावेन भगवन्नाभिमाश्रिताः।**
**उभयोरन्तरं व्योम ये रुद्रपार्षदां गणाः॥ २९॥**

पदार्थ–

**देवाः** = देवताहरूले
**आत्यन्तिकेन** = केवल
**सत्त्वेन** = सत्त्वगुणको कारणले
**दिवं** = स्वर्गलोकलाई
**प्रपेदिरे** = प्राप्त गरे
**पणयः** = यागादि गर्ने मनुष्यहरूले र
**ये च** = अरू पनि
**तान्** = उनीहरूको
**अनु** = अनुवर्तन गर्ने (गाई आदिले)
**रजःस्वभावेन** = रज स्वभावको कारणले
**धरां** = पृथिवीलोकलाई
**तार्तीयेन** = तेस्रो (तमोगुणी)
**स्वभावेन** = स्वभावको कारणले
**ये** = जो
**रुद्रपार्षदां** = रुद्रका पार्षद
**गणाः** = भूतादिगणहरू छन् तिनीहरूले
**भगवन्नाभिम्** = भगवान्को नाभिस्थानभूत
**उभयोः अन्तरं** = पृथिवी र अन्तरिक्षको बीचमा
**व्योम** = आकाशलाई
**आश्रिताः** = आश्रय बनाउनुभयो

**वाक्यार्थ–** यीमध्ये देवताहरू सत्त्वगुणको अधिकताको कारण स्वर्गलोकमा, मनुष्य र उनीहरूका लागि उपयोगी गाई आदि जीवहरू रजोगुणको अधिकताको कारण पृथिवीमा तथा तमोगुणस्वभाव भएका रुद्रका पार्षदगण भूत, प्रेत, पिशाच आदि दुइओटाको बीचमा स्थित भगवान्को नाभिस्थानीय अन्तरिक्ष लोकमा निवास गर्दछन्।

**मुखतोऽवर्तत ब्रह्म पुरुषस्य कुरूद्वह।**

**यस्तून्मुखत्वाद् वर्णानां मुख्योऽभूद् ब्राह्मणो गुरुः॥ ३०॥**

पदार्थ–

**कुरूद्वह** = हे विदुरजी
**पुरुषस्य** = विराट्को
**मुखतः** = मुखबाट
**ब्रह्म** = वेद
**अवर्तत** = उत्पन्न भयो
**वर्णानां** = चार वर्णहरूमध्ये
**यः** = जुन
**ब्राह्मणः** = ब्राह्मण छ त्यो
**उन्मुखत्वात्** = मुखबाट उत्पन्न भएकाले
**मुख्यः** = मुख्य र
**गुरुः** = वेदशिक्षा प्रदाता गुरु
**अभूत्** = भयो

**वाक्यार्थ–** विदुरजी ! वेद र ब्राह्मण भगवान्को मुखबाट प्रकट भए। मुखबाट प्रकट भएको हुनाले ब्राह्मण सबै वर्णहरूमा श्रेष्ठ र सबको गुरु हो।

**बाहुभ्योऽवर्तत क्षत्रं क्षत्रियस्तदनुव्रतः।**

**यो जातस्त्रायते वर्णान् पौरुषः कण्टकक्षतात्॥ ३१॥**

पदार्थ–

**बाहुभ्यः** = भुजाबाट
**क्षत्रं** = क्षत्रियवृत्ति
**अवर्तत** = प्रकट भयो
**क्षत्रियः** = क्षत्रिय कुल
**तदनुव्रतः** = त्यही रक्षकत्व वृत्तिलाई अनुकरण गर्ने भयो
**पौरुषः** = पुरुषार्थवान्
**यः** = जो
**जातः** = जन्मिएर
**कण्टकक्षतात्** = चोर आदि उपद्रवहरूबाट
**वर्णान्** = अरू वर्णहरूलाई
**त्रायते** = रक्षा गर्दछ

**वाक्यार्थ–** उहाँको भुजाबाट क्षत्रियवृत्ति र उसको अबलम्बन गर्ने क्षत्रिय वर्ण उत्पन्न भयो। जुन विराट् भगवान्को अंश हुनाको कारणले उसले जन्म लिएर चोर आदि उपद्रवबाट सब वर्णहरूको रक्षा गर्दछ।

**विशोऽवर्तन्त तस्योर्वोर्लोकवृत्तिकरीर्विभोः।**

**वैश्यस्तदुद्भवो वार्तां नृणां यः समवर्तयत्॥ ३२॥**

पदार्थ–

**तस्य** = उहाँ
**विभोः** = व्यापक विराट् पुरुषको
**उर्वोः** = तिघ्राबाट
**लोकवृत्तिकरीः** = संसारलाई नै जीविका प्रदान गर्ने
**विशः** = वैश्यवृत्ति
**अवर्तन्त** = उत्पन्न भए
**तदुद्भवः** = त्यहाँबाट उत्पन्न
**वैश्यः** = वैश्यवर्ण हो
**यः** = जसले
**नृणां** = मनुष्यहरूको
**वार्तां** = जीविका
**समवर्तयत्** = चलायो

**वाक्यार्थ**– भगवान्का दुईटा तिघ्राबाट सम्पूर्ण मनुष्यहरूको निर्वाह गर्ने वैश्यवृत्ति र वैश्यवर्ण उत्पन्न भए। यस वर्णले मनुष्यहरूको जीविका चलायो।

**पद्भ्यां भगवतो जज्ञे शुश्रूषा धर्मसिद्धये।**

**तस्यां जातः पुरा शूद्रो यद् वृत्त्या तुष्यते हरिः॥ ३३॥**

**पदार्थ**–

**भगवतः** = विराट्को
**पद्भ्यां** = पाउबाट
**धर्मसिद्धये** = धर्मरूप पुरुषार्थ सिद्धिको लागि
**शुश्रूषा** = सेवावृत्ति
**जज्ञे** = उत्पन्न भयो
**तस्यां** = सेवावृत्तिमा
**पुरा** = पहिले
**शूद्रः** = शूद्रवर्ण
**जातः** = उत्पन्न भयो
**यद् वृत्त्या** = जुन सेवाभावद्वारा
**हरिः** = सर्वात्मा भगवान्
**तुष्यते** = प्रसन्न हुनुहुन्छ

**वाक्यार्थ**– फेरि सब धर्महरूको चरणबाट सेवावृत्ति र त्यो वृत्तिको अधिकारी शुद्रवर्ण प्रकट भयो। जसको वृत्तिले सर्वात्मा भगवान् प्रसन्न हुनुहुन्छ।

**एते वर्णाः स्वधर्मेण यजन्ति स्वगुरुं हरिम्।**

**श्रद्धयात्मविशुद्ध्यर्थं यज्जाताः सह वृत्तिभिः॥ ३४॥**

**पदार्थ**–

**एते** = यी
**वर्णाः** = चारथरी वर्णहरू
**स्वधर्मेण** = आ–आफ्ना धर्मद्वारा
**स्वगुरुं** = आफ्ना जनक
**हरिम्** = भगवान्लाई
**आत्मविशुद्ध्यर्थं** = चित्तशुद्धिका लागि
**श्रद्धया** = श्रद्धापूर्वक
**यजन्ति** = पूजन गर्दछन्
**यत्** = किनभने (यिनीहरू)
**वृत्तिभिः सह** = आफ्ना वृत्तिसँगै
**जाताः** = जन्मिएका हुन्

**वाक्यार्थ**– यी चारै वर्णहरू आआफ्नो वृत्तिसहित जुन भगवान्बाट उत्पन्न भएका छन्, उनै आफ्ना गुरु श्रीहरिको आ–आफ्ना धर्मद्वारा चित्तशुद्धिको लागि श्रद्धापूर्वक पूजन गर्दछन्।

**एतत् क्षत्तर्भगवतो दैवकर्मात्मरूपिणः।**

**कः श्रद्दध्यादुपाकर्तुं योगमायाबलोदयम्॥ ३५॥**

**पदार्थ**–

**क्षत्तः** = हे विदुरजी

**दैवकर्मात्मरूपिणः** = कालकर्मस्वभाव शक्तिवाला
**भगवतः** = भगवान्‌को
**एतत्** = यो
**योगमायाबलोदयम्** = योगमायाको कारणले उत्पन्न विराट् रूपलाई
**उपाकर्तुं** = निरूपण गर्न
**कः** = कुन मानिसले
**श्रद्दध्यात्** = साह गर्न सक्दछ र

**वाक्यार्थ–** विदुरजी ! यो विराट् पुरुष काल, कर्म र स्वभाव शक्तिले युक्त भगवान्‌को योगमायाको प्रभावलाई प्रकट गर्दछ। यसको स्वभावको पूर्णरूपले वर्णन गर्न कुन मानिसले साहस गर्न सक्छ र ?

**तथापि कीर्तयाम्यङ्ग यथामति यथाश्रुतम्।**
**कीर्तिं हरेः स्वां सत्कर्तुं गिरमन्याभिधासतीम्॥ ३६॥**

पदार्थ–
**तथा अपि** = तैपनि
**अङ्ग** = हे प्रिय विदुरजी
**हरेः** = भगवान्‌को
**कीर्तिं** = कीर्तिलाई
**यथाश्रुतम्** = गुरुबाट सुने अनुसार अनि अरू
**यथामति** = आफ्नो बुद्धिअनुसार मात्र भए
**अपि** = पनि
**अन्याभिधासतीम्** = अरू संसारी कुराबाट मलिन भएको
**स्वां** = आफ्नो
**गिरम्** = वाणीलाई
**सत्कर्तुं** = पवित्र पार्नको लागि
**कीर्तयामि** = बताउँछु

**वाक्यार्थ–** तथापि प्रिय विदुरजी ! अन्य व्यावहारिक चर्चाले अपवित्र भएको आफ्नो वाणीलाई पवित्र गर्नका लागि मेरो बुद्धिमा जति सामर्थ्य छ र मैले गुरुमुखबाट जति सुनेको छु त्यसको अनुसार श्रीहरिको गुणहरूको वर्णन गर्दछु।

**एकान्तलाभं वचसो नु पुंसां**
**सुश्लोकमौलेर्गुणवादमाहुः।**
**श्रुतेश्च विद्वद्भिरुपाकृतायां**
**कथासुधायामुपसम्प्रयोगम्॥ ३७॥**

पदार्थ–
**सुश्लोकमौले** = सर्वाधिक कीर्तिशाली भगवान्‌को
**गुणवादम्** = गुणवर्णन गर्नु नै
**पुंसां** = मनुष्यहरूको
**वचसः** = वाणीको अनि
**विद्वद्भिः** = विद्वान्‌हरूद्वारा
**उपाकृतायां** = वर्णित
**कथासुधायाम्** = भगवान्‌को कथामृतमा
**उपसम्प्रयोगम्** = संयुक्त पार्नु नै
**श्रुतेः च** = कानको पनि
**एकान्तलाभं** = एकमात्र र सर्वोत्तम लाभ हो भनेर
**आहुः** = (विद्वान्‌हरू) भन्दछन्

**वाक्यार्थ–** महापुरुषहरूको मत के छ भनेपुण्यश्लोक शिरोमणि श्रीहरिको गुणहरूको गान गर्नु नै मनुष्यको वाणीको र विद्वान्को मुखबाट भगवत् कथामृतको पान गर्नु नै उनीहरूको कानको ठुलो लाभ हो।

**आत्मनोऽवसितो वत्स महिमा कविनादिना।**
**संवत्सरसहस्रान्ते धिया योगविपक्वया॥ ३८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **वत्स** = हे प्रिय विदुरजी | **आदिना** = आदि | **आत्मनः** = आत्मस्वरूप भगवान्को |
| **योगविपक्वया** = चित्तवृत्ति निरोधको कारणले संस्कृत भएको | **कविना** = कवि ब्रह्माजीद्वारा | **महिमा** = महिमा |
| **धिया** = बुद्धिले युक्त | **संवत्सरसहस्रान्ते** = हजारौँ वर्षसम्म पनि | **अवसितः** = के थाहाँ पाउन सकियो |

**वाक्यार्थ–** हे प्रिय विदुरजी ! मेरो त के कुरा आदिकवि ब्रह्माजीद्वारा एक हजार दिव्यवर्षपर्यन्त आफ्नो योगपरिपक्व बुद्धिद्वारा विचार गर्दा पनि के भगवान्को महिमा के थाहाँ पाउन सकियो र ?

**अतो भगवतो माया मायिनामपि मोहिनी।**
**यत् स्वयं चात्मवर्त्मात्मा न वेद किमुतापरे॥ ३९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अतः** = त्यसकारणले | **अपि** = पनि | **अपरे** = अरूले |
| **भगवतः** = भगवान्को | **मोहिनी** = मोह प्रदान गर्दछे | **किम् उत** = के नै जान्न सक्दछन् |
| **माया** = मायाशक्तिले | **यत्** = किनभने | |
| **मायिनाम्** = माया जान्नेहरूका लागि | **आत्मा** = भगवान्ले समेत | |
| | **न वेद** = जान्नुहुन्न | |

**वाक्यार्थ–** त्यसकारणले भगवान्को मायाशक्तिले माया जान्नेहरूका लागि पनि मोह प्रदान गर्दछे किनभने भगवान्ले समेत जान्नुहुन्न अरूले के नै जान्न सक्दछन् ?

**यतोऽप्राप्य न्यवर्तन्त वाचश्च मनसा सह।**
**अहं चान्य इमे देवास्तस्मै भगवते नमः॥ ४०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अप्राप्य** = स्वरूपलाई नजानेर नै | **च** = र | **अन्ये** = अरू |
| **मनसा सह** = मन सँगसँगै | **अहं** = अहङ्कारका अधिष्ठाता देवता | **इमे** = यी |
| **वाचः** = वाणीहरू | | |

**देवाः** = यन्द्रियका अधिष्ठाता देवताहरू
**च** = पनि
**यतः** = जहाँबाट
**न्यवर्तन्त** = फर्किए
**तस्मै** = त्यस्ता
**भगवते** = भगवान्लाई
**नमः** = नमस्कार गर्दछु

**वाक्यार्थ–** जहाँ पुग्न नसकेर मनसहित वाणी फर्केर आउँछ र जसको पार पाउन अहङ्कारका अधिष्ठाता देवता रुद्र तथा अन्य इन्द्रियाधिष्ठाता देवताहरू पनि समर्थ छैनन् त्यस्ता भगवान्लाई हाम्रो नमस्कार छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां तृतीयस्कन्धे**

**षष्ठोऽध्यायः ॥ ६ ॥**

# अथ सप्तमोऽध्यायः

## विदुरजीका प्रश्नहरू

**श्रीशुक उवाच** (श्रीशुकदेवजीले भन्नुभयो)

**एवं ब्रुवाणं मैत्रेयं द्वैपायनसुतो बुधः।**

**प्रीणयन्निव भारत्या विदुरः प्रत्यभाषत॥ १॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **एवं** = यसप्रकार | **द्वैपायनसुतः** = व्यासपुत्र | **भारत्या** = प्रार्थनारूप वाणीद्वारा |
| **ब्रुवाणं** = बताउँदै गर्नुभएका | **बुधः** = ज्ञानी | **प्रीणयन् इव** = प्रसन्न पार्दै |
| **मैत्रेयं** = मैत्रेयजीलाई | **विदुरः** = विदुरजीले | **प्रत्यभाषत** = भन्नुभयो |

**वाक्यार्थ–** यसप्रकार बताउँदै गर्नुभएका मैत्रेयजीलाई व्यासपुत्र ज्ञानी विदुरजीले प्रार्थनारूप वाणीद्वारा प्रसन्न पार्दै भन्नुभयो।

**विदुर उवाच** (विदुरजीले सोध्नुभयो)

**ब्रह्मन् कथं भगवतश्चिन्मात्रस्याविकारिणः।**

**लीलया चापि युज्येरन्निर्गुणस्य गुणाः क्रियाः॥ २॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **ब्रह्मन्** = हे मैत्रेयजी | **भगवतः** = भगवान्का | **लीलया अपि** = लीलारूप |
| **चिन्मात्रस्य** = ज्ञानस्वरूप | **गुणाः** = सत्त्व, रज र तम | प्रयोजनद्वारा |
| **अविकारिणः** = अविकारी | गुणहरू (अनि) | **कथं** = कसरी |
| **निर्गुणस्य** = निर्गुण | **क्रियाः** = सृष्टि आदि कर्म | **युज्येरन्** = उत्पन्न हुन सक्दछन् |

**वाक्यार्थ–** हे मैत्रेयजी ! ज्ञानस्वरूप अविकारी निर्गुण भगवान्का सत्त्व, रज र तम गुणहरू अनि सृष्टि आदि कर्म लीलारूप प्रयोजनद्वारा कसरी उत्पन्न हुन सक्दछन् ?

**क्रीडायामुद्यमोऽर्भस्य कामश्चिक्रीडिषान्यतः।**

**स्वतस्तृप्तस्य च कथं निवृत्तस्य सदान्यतः॥ ३॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अर्भस्य** = बालकको | **उद्यमः** = प्रवृत्तिको लागि | **अन्यतः** = अरू साथीबाट |
| **क्रीडायाम्** = खेलमा | **कामः** = कामना हुन्छ (अथवा) | |

**चिक्रीडिषा** = खेल्ने इच्छा उत्पन्न हुन्छ परन्तु
**स्वतः** = आफैंबाट
**तृप्तस्य** = तृप्त रहने भगवान्को त
**कथं** = कामना कसरी होला ? त्यसै गरी
**सदा** = सधैं
**निवृत्तस्य** = असङ्ग भइरहने प्रभुको
**अन्यतः** = अर्कालाई देख्ने प्रवृत्ति पनि कसरी होला र

**वाक्यार्थ–** बालकमा त कामना र आफ्नो साथीसँग खेल्ने इच्छा रहन्छ। त्यसैकारण ऊ खेल्नका लागि प्रयत्न गर्दछ। परन्तु भगवान् त स्वतः नित्यतृप्त, पूर्णकाम र सर्वदा असङ्ग हुनुहुन्छ। अतः क्रीडाका लागि पनि उहाँले सङ्कल्प किन गर्नुभयो ?

**अस्राक्षीद् भगवान् विश्वं गुणमय्यात्ममायया।**
**तया संस्थापयत्येतद् भूयः प्रत्यपिधास्यति ॥ ४ ॥**

पदार्थ–
**भगवान्** = परमात्माले
**गुणमय्या** = गुणयुक्त
**आत्ममायया** = आफ्नो मायाशक्तिद्वारा
**विश्वं** = संसारलाई
**अस्राक्षीत्** = सृष्टि गर्नुभयो
**तया** = त्यही मायाद्वारा नै
**एतत्** = यो जगत्लाई
**संस्थापयति** = पालन गर्नुहन्छ अनि
**भूयः** = पछि फेरि
**प्रत्यपिधास्यति** = आफूमा नै लीन गर्नुहुनेछ

**वाक्यार्थ–** भगवान्ले आफ्नो गुणमयी त्यही मायाद्वारा जगत्को रचना गर्नुभयो। त्यही मायाद्वारा यसको पालन पनि गर्नुहुन्छ। फेरि त्यही मायाद्वारा संहार पनि गर्नुहुन्छ।

**देशतः कालतो योऽसाववस्थातः स्वतोऽन्यतः।**
**अविलुप्तावबोधात्मा स युज्येताजया कथम् ॥ ५ ॥**

पदार्थ–
**देशतः** = स्थानद्वारा (दूरीको कारणले दीपप्रभाझैं)
**कालतः** = समयद्वारा (चम्केर निभ्ने बिजुली झैं)
**अवस्थातः** = अवस्थाद्वारा (नाश हुने स्मृतिशक्तिझैं)
**स्वतः** = मिथ्या भएकाले स्वतः (नाश हुने स्वरूपझैं
**अन्यतः** = प्रहार आदि अरू साधनद्वारा (नासिने घैंटोझैं)
**अविलुप्तावबोधात्मा** = कुनै पनि कारणले आफ्नो ज्ञानशक्ति ननासिने
**य** ः = जो
**असौ** = उहाँ
**सः** = त्यो
**अजया** = मायासँग
**कथम्** = भगवान्
**युज्येत** = मिल्न सक्छ

**वाक्यार्थ–** जसको ज्ञानको देश, काल अथवा अवस्थाद्वारा आफैं अथवा अरू कुनै निमित्तद्वारा पनि लोप हुँदैन। त्यस्ता असङ्ग ज्ञानस्वरूप भगवान्को मायाका साथ कसरी संयोग भयो ?

**भगवानेक एवैष सर्वक्षेत्रेष्ववस्थितः ।**

**अमुष्य दुर्भगत्वं वा क्लेशो वा कर्मभिः कुतः ॥ ६ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सर्वक्षेत्रेषु** = सबै प्राणीभित्र | **एकः** = संसारमा भगवान्भन्दा | **कर्मभिः** = कर्महरूद्वारा |
| **अवस्थितः** = रहेको | भिन्न केही न भएकाले त्यसैले | **क्लेशः वा** = जन्ममरणरूप दुःख |
| **एषः** = जीव पनि | **अमुष्य** = यस जीवको | पनि |
| **भगवान् एव** = परमात्मस्वरूप नै | **दुर्भगत्वं** = नित्य आनन्दको नाश | **कुतः** = कसरी हुन सक्छ |
| हो (किनभने) | र | |

**वाक्यार्थ–** सबै प्राणीभित्र रहेको जीव पनि परमात्मस्वरूप नै हो किनभने संसारमा भगवान्भन्दा भिन्न केही न भएकाले त्यसैले यस जीवको नित्य आनन्दको नाश र कर्महरूद्वारा जन्ममरणरूप दुःख पनि कसरी हुन सक्छ ?

**एतस्मिन् मे मनो विद्वन् खिद्यतेऽज्ञानसङ्कटे ।**

**तन्नः पराणुद विभो कश्मलं मानसं महत् ॥ ७ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **विद्वन्** = हे तत्त्वदर्शी मैत्रेयजी | **मनः** = मन | **तत्** = त्यो संशयात्मक |
| **एतस्मिन्** = यस्तो संशयात्मक | **खिद्यते** = फसेको छ | **महत्** = अज्ञानजनित ठुलो |
| **अज्ञानसङ्कटे** = अज्ञानको | **विभो** = हे भगवान् | **कश्मलं** = ठुलो दुःखलाई |
| सङ्कटभित्र | **नः** = मेरो | **पराणुद** = हटाउनुहोस् |
| **मे** = मेरो | **मानसं** = हृदयभित्रको | |

**वाक्यार्थ–** हे भगवान् ! मेरो मन यो अज्ञानको सङ्कटमा परेर अत्यन्त खिन्न भइरहेको छ। मेरो मनको यो महान् दुःखलाई कृपा गरेर हटाइदिनुहोस्।

**श्रीशुक उवाच** (शुकदेवजीले भन्नुभयो)

**स इत्थं चोदितः क्षत्त्रा तत्त्वजिज्ञासुना मुनिः ।**

**प्रत्याह भगवच्चित्तः स्मयन्निव गतस्मयः ॥ ८ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **तत्त्वजिज्ञासुना** = तत्त्व जान्न | **इत्थं** = यसप्रकार उत्तरको लागि | **भगवच्चित्तः** = भगवान्मा चित्त |
| खोज्ने | **चोदितः** = प्रेरित गरिएका | लगाएर |
| **क्षत्त्रा** = विदुरजीद्वारा | **सः** = उहाँ | **गतस्मयः** = ज्ञानद्वारा अहङ्कार |
| | **मुनिः** = मैत्रेय मुनिले | नष्ट भए तापनि |

**स्मयन् इव** = प्रौढताको कारणले हाँसेझैं गरेर | **प्रत्याह** = भन्नुभयो

**वाक्यार्थ–** तत्त्वजिज्ञासु विदुरजीको यो प्रेरणा प्राप्त गरेर अहङ्कारहीन मैत्रेयजीले भगवान्‌को स्मरण गरेर हाँस्दै भन्नुभयो।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**सेयं भगवतो माया यन्नयेन विरुध्यते।**

**ईश्वरस्य विमुक्तस्य कार्पण्यमुत बन्धनम्॥ ९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ईश्वरस्य** = ऐश्वर्यशाली प्रभुको | **बन्धनम्** = बन्धन हुने | **भगवतः** = भगवान्‌कै शक्तिभूत |
| **कार्पण्यम्** = दीनता | **यत्** = जुन कुरा | **इयं** = यो |
| **उत** = अथवा | **नयेन** = तर्कसँग | **माया** = माया छ |
| **विमुक्तस्य** = नित्य मुक्त | **विरुध्यते** = मेल खाँदैन | |
| भगवान्‌को पनि | **सा** = त्यस्तै खालको | |

वाक्यार्थ– ऐश्वर्यशाली प्रभुको दीनता अथवा नित्य मुक्त भगवान्‌को पनि बन्धन हुने जुन कुरा तर्कसँग मेल खाँदैन त्यस्तै खालको भगवान्‌कै शक्तिभूत यो माया छ।

**यदर्थेन विनामुष्य पुंस आत्मविपर्ययः।**

**प्रतीयत उपद्रष्टुः स्वशिरश्छेदनादिकः॥ १०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यत्** = जसरी | **अर्थेन** = यथार्थता | **आत्मविपर्ययः** = नभएको |
| **उपद्रष्टुः** = स्वप्न देख्ने | **विना** = नभईकन पनि | वस्तुको ज्ञान |
| **अमुष्य** = यो | **स्वशिरश्छेदनादिकः** = आफ्नो | **प्रतीयते** = प्रतीत हुन्छ |
| **पुंसः** = पुरुषको | शिर काटिएका जस्ता दृश्यहरू | |

**वाक्यार्थ–** जसरी स्वप्नमा कुनै व्यक्तिले आफ्नो शिर काटिएको आफैंले देख्दछ। त्यो शिर काटिनु आदि कार्य मिथ्या भए तापनि मायाको कारणले सत्यझैं प्रतीत हुन्छ त्यसै गरी जीवलाई बन्धन वस्तुतः नभए तापनि अज्ञानको कारणले भासित भइरहेको छ।

**यथा जले चन्द्रमसः कम्पादिस्तत्कृतो गुणः।**

**दृश्यतेऽसन्नपि द्रष्टुरात्मनोऽनात्मनो गुणः॥ ११॥**

**स वै निवृत्तिधर्मेण वासुदेवानुकम्पया।**

**भगवद्भक्तियोगेन तिरोधत्ते शनैरिह॥ १२॥**

तावन्ममेत्यसदवग्रह आर्तिमूलं
यावन्न तेऽङ्घ्रिमभयं प्रवृणीत लोकः ॥ ६ ॥

पदार्थ–

**द्रविणदेहसुहृन्निमित्तं** = धन, घर र बान्धवको कारणले हुने
**भयं** = भय
**शोकः** = दुःख
**स्पृहा** = कामना
**परिभवः** = दीनता अनि
**विपुलः** = उत्कट
**लोभः** = लोभ
**मम** = मेरो
**इति** = भन्ने
**असदवग्रहः** = असत्यको स्वीकार गर्नु (यी सब)
**आर्तिमूलं** = (तबसम्म) दुःखका कारण हुन्
**यावत्** = जबसम्म
**लोकः** = प्राणीले
**ते** = तपाईंको
**अभयं** = अभयदायक
**अङ्घ्रिम्** = चरणलाई
**न प्रवृणीत** = ग्रहण गर्दैनन्

वाक्यार्थ– धन, घर र बान्धवको कारणले हुने भय दुःख कामना दीनता अनि उत्कट लोभ मेरो भन्ने असत्यको स्वीकार गर्नु यी सब तबसम्म) दुःखका कारण हुन्। जबसम्म प्राणीले तपाईंको अभयदायक चरणलाई ग्रहण गर्दैनन्।

दैवेन ते हतधियो भवतः प्रसङ्गात्
सर्वाशुभोपशमनाद्विमुखेन्द्रिया ये ।
कुर्वन्ति कामसुखलेशलवाय दीना
लोभाभिभूतमनसोऽकुशलानि शश्वत् ॥ ७ ॥

पदार्थ–

**ये** = जो प्राणीहरू
**सर्वाशुभोपशमनात्** = सम्पूर्ण अशुभ नाश गर्ने
**भवतः** = तपाईंको
**प्रसङ्गात्** = श्रवण आदिबाट
**विमुखेन्द्रियाः** = पर हटेका छन् अनि
**कामसुखलेशलवाय** = विषयसुखको थोरै अंश पाउन
**दीनाः** = दीनहीन बनेर
**लोभाभिभूतमनसः** = लोभयुक्त मन बनाई
**शश्वत्** = निरन्तर
**अकुशलानि** = संसारी दुष्कर्महरू
**कुर्वन्ति** = गर्दछन्
**ते** = तिनीहरू
**दैवेन** = भाग्यद्वारा
**हतधियः** = बुद्धि भ्रष्ट पारिएका हुन्

**वाक्यार्थ–** जो प्राणीहरू सम्पूर्ण अशुभ नाश गर्ने तपाईंको श्रवण आदिबाट पर हटेका छन्, विषयसुखको थोरै अंश पाउन दीनहीन बनेर लोभयुक्त मन बनाई निरन्तर संसारी दुष्कर्महरू गर्दछन् तिनीहरू भाग्यले बुद्धिभ्रष्ट पारिएका हुन्।

**क्षुत्तृट्त्रिधातुभिरिमा मुहुरर्द्यमानाः**
**शीतोष्णवातवरषैरितरेतराच्च ।**
**कामाग्निनाच्युतरुषा च सुदुर्भरेण**
**सम्पश्यतो मन उरुक्रम सीदते मे ॥ ८ ॥**

**पदार्थ–**

**उरुक्रम** = हे सर्वसमर्थ
**अच्युत** = हे अच्युत प्रभो
**क्षुत्तृट्त्रिधातुभिः** = भोक, प्यास, कफ, वात, पित्त आदिबाट
**शीतोष्णवातवरषैः** = चीसोतातो हावा र पानीबाट अनि
**इतरेतरात्** = आफैं आफैंबाट लडेर
**च** = पनि (त्यसै गरी)
**कामाग्निना** = कामाग्निले र
**सुदुर्भरेण** = दुःसह
**रुषा च** = क्रोधले समेत
**मुहुः** = बारम्बार
**अर्द्यमानाः** = पीडित भइरहेका
**इमाः** = यी प्राणीहरूलाई
**सम्पश्यतः** = हेर्दा हेर्दै
**मे** = मेरो
**मन** = मन
**सीदते** = खिन्न हुन्छ

**वाक्यार्थ–** हे सर्वसमर्थ अच्युत प्रभो ! उरुक्रम, भोक, तिर्खा, बात, पित्त, कफ, सर्दी, गर्मी, हावा, वर्षा, कामाग्नि र दुःसह क्रोधको कारणले बारम्बार दुःखी भइरहेका प्राणीहरूलाई देख्दा मेरो मन ज्यादै खिन्न हुन्छ।

**यावत् पृथक्त्वमिदमात्मन इन्द्रियार्थ-**
**मायाबलं भगवतो जन ईश पश्येत् ।**
**तावन्न संसृतिरसौ प्रतिसङ्क्रमेत**
**व्यर्थापि दुःखनिवहं वहती क्रियार्था ॥ ९ ॥**

**पदार्थ–**

**ईश** = हे स्वामी
**यावत्** = जबसम्म
**जनः** = मानिसले
**इन्द्रियार्थमायाबलं** = इन्द्रिय, विषय र मायाको प्रभावले
**आत्मनः** = आत्माबाट
**भगवतः** = भगवान्को
**इदम्** = यो
**पृथक्त्वम्** = परस्परको भेदलाई
**पश्येत्** = देख्ला
**तावत्** = तबसम्म
**व्यर्था** = मिथ्या (भए)
**अपि** = पनि
**क्रियार्था** = कर्मफलक्षेत्र भएकाले
**दुःखनिवहं** = जन्ममृत्युरूप दुःखसमूहलाई
**वहती** = वहन गर्ने
**असौ** = यो
**संसृति** = संसारचक्र

**न प्रतिसङ्क्रमेत** = निवृत्त हुँदैन

**वाक्यार्थ–** हे स्वामी ! जबसम्म मानिसले इन्द्रिय, विषय र मायाको प्रभावले आत्मा र भगवान्को यो परस्परको भेदलाई स्वीकार गर्दछ तबसम्म मिथ्या भए पनि कर्मफलक्षेत्र भएकाले जन्ममृत्युरूप दुःखसमूहलाई वहन गर्ने यो संसारचक्र निवृत्त हुँदैन।

**अह्न्यापृतार्तकरणा निशि निःशयाना**
**नानामनोरथधिया क्षणभग्ननिद्राः।**
**दैवाहतार्थरचना ऋषयोऽपि देव**
**युष्मत्प्रसङ्गविमुखा इह संसरन्ति॥ १०॥**

**पदार्थ–**

**देव** = हे देव
**युष्मत्प्रसङ्गविमुखाः** = तपाईंको प्रसङ्गबाट विमुख भएका
**ऋषयः** = ठुला ऋषिमुनि
**अपि** = पनि
**अह्नि** = दिउसो
**आपृतार्तकरणाः** = व्यस्त र व्यग्र चित्त भएर
**निशि** = रात्रिमा
**निःशयाना** = सुत्ने गरेका
**नानामनोरथधिया** = विभिन्न कामनाको कारणले
**क्षणभग्ननिद्राः** = क्षणक्षणमा निद्रा टुटेर
**दैवाहतार्थरचना** ः = दैववश सब उद्यम विफल भई
**इह** = यस संसारमा
**संसरन्ति** = पुनः पुनः जन्ममृत्यु लिन्छन्

**वाक्यार्थ–** हे देव ! तपाईंको प्रसङ्गबाट विमुख भएका ठुला ऋषिमुनि पनि दिउसो व्यस्त र व्यग्र चित्त भएर रात्रिमा सुत्ने गरेका र विभिन्न कामनाको कारणले क्षण–क्षणमा निद्रा टुटेर दैववश सब उद्यम विफल भई संसारमा पुनः पुनः जन्ममृत्यु लिन्छन्।

**त्वं भक्तियोगपरिभावितहृत्सरोज**
**आस्से श्रुतेक्षितपथो ननु नाथ पुंसाम्।**
**यद्यद्धिया त उरुगाय विभावयन्ति**
**तत्तद् वपुः प्रणयसे सदनुग्रहाय॥ ११॥**

**पदार्थ–**

**नाथ** = हे स्वामी
**ननु** = निश्चय नै
**श्रुतेक्षितपथः** = श्रवणद्वारा भेटिनुभएका
**त्वं** = तपाईं
**पुंसाम्** = आफ्ना भक्तहरूको
**भक्तियोगपरिभावितहृत्सरोजे** = प्रेमभावद्वारा शुद्ध भएको हृदयतलमा
**आस्से** = रहनुहुन्छ

**उरुगाय** = कीर्तिशाली प्रभो
**ते** = ती भक्तहरू
**यत् यत्** = जुन–जुन
**धिया** = स्वरूपबुद्धिले
**विभावयन्ति** = चिन्तन गर्दछन्
**सदनुग्रहाय** = भक्तहरूको कल्याणका लागि
**तत् तत्** = त्यही–त्यही
**वपुः** = स्वरूप
**प्रणयसे** = धारण गर्नुहुन्छ

**वाक्यार्थ–** हे स्वामी ! निश्चय नै श्रवणद्वारा भेटिनुभएका तपाईं आफ्ना भक्तहरूको प्रेमभावद्वारा शुद्ध भएको हृदयतलमा रहनुहुन्छ र ती भक्तहरू जुन–जुन भावनाले चिन्तन गर्दछन् भक्तहरूको कल्याणका लागि त्यही–त्यही स्वरूप धारण गर्नुहुन्छ।

**नातिप्रसीदति तथोपचितोपचारै-**
**राराधितः सुरगणैर्हृदि बद्धकामैः ।**
**यत् सर्वभूतदययासदलभ्ययैको**
**नानाजनेष्ववहितः सुहृदन्तरात्मा ॥ १२ ॥**

पदार्थ–
**तथा** = त्यसै कारणले
**एकः** = एकमात्र
**नानाजनेषु** = सम्पूर्ण प्राणीहरूमा
**अवहितः** = बस्नुहुने
**सुहृत्** = परमहितकारी
**अन्तरात्मा** = अन्तर्यामी भगवान्
**हृदि** = हृदयमा
**बद्धकामैः** = कामना राख्ने
**उपचितोपचारैः** = विभिन्न उपचारबाट पूजा गर्ने भए पनि
**सुरगणैः** = देवताहरूद्वारा
**न अतिप्रसीदति** = त्यति खुसी हुनुहुन्न
**यत्** = जुन प्रभु
**असदलभ्यया** = दुष्टले प्राप्त गर्न नसक्ने
**सर्वभूतदयया** = सबै प्राणीमा गरिने दयाभावद्वारा
**आराधितः** = आराधना गरिँदा प्रसन्न हनुहुन्छ

**वाक्यार्थ–** हे भगवान् ! तपाईं एक्लै हुनुहुन्छ तथा सम्पूर्ण प्राणीहरूका अन्तःकरणमा स्थित उनीहरूको परमहितकारी अन्तरात्मा हुनुहुन्छ। त्यसकारण यी देवताहरू पनि हृदयमा विभिन्न प्रकारका कामनाहरू राखेर विभिन्न सामग्रीद्वारा तपाईंको पूजा गर्दछन्। परन्तु तपाईं ती सामग्रीद्वारा त्यति प्रसन्न हुनुहुन्न जति दुष्टले गर्न नसक्ने सबै प्राणीमाथि गरिने दयाभावद्वारा आराधना गरिँदा प्रसन्न हनुहुन्छ।

**पुंसामतो विविधकर्मभिरध्वराद्यै-**
**र्दानेन चोग्रतपसा परिचर्यया च ।**
**आराधनं भगवतस्तव सत्क्रियार्थो**
**धर्मोऽर्पितः कर्हिचिद् म्रियते न यत्र ॥ १३ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अतः** = त्यसै कारणले | **उग्रतपसा** = कठिन तपस्या र | **आराधनं** = प्रसन्नता हो |
| **पुंसाम्** = कर्म गर्ने प्राणीहरूको | **परिचर्यया** = व्रतबाट पनि | **यत्र** = जो तपाईंमा |
| **अध्वराद्यैः** = यज्ञ आदि | **सत्क्रियार्थः** = प्राप्त गर्नु पर्ने | **अर्पितः** = चढाइएको |
| **विविधकर्मभिः** = विभिन्न | उत्तम फल भनेको | **धर्मः** = सत्कार्य |
| कर्महरूद्वारा | **तव** = तपाईं | **कर्हिचित्** = कहिल्यै पनि |
| **दानेन** = दानद्वारा | **भगवतः** = प्रभुको | **न म्रियते** = नष्ट हुँदैन |

**वाक्यार्थ–** त्यसै कारणले नाना प्रकारका कर्म, यज्ञ, दान, कठिन तपस्या र व्रतादिद्वारा तपाईंलाई प्रसन्न बनाउनु नै कर्म गर्ने व्यक्तिहरूका लागि सबभन्दा ठुलो कर्मफल हो। तपाईंको प्रसन्नताको लागि गरिएको कर्म कहिल्यै पनि नष्ट हुँदैन।

**शश्वत् स्वरूपमहसैव निपीतभेद-**
**मोहाय बोधधिषणाय नमः परस्मै।**
**विश्वोद्भवस्थितिलयेषु निमित्तलीला**
**रासाय ते नम इदं चकृमेश्वराय॥ १४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **शश्वत्** = निरन्तर | **परस्मै** = परमात्मालाई | **ईश्वराय** = सर्वसमर्थ प्रभु |
| **स्वरूपमहसा** = आफ्नो | **नमः** = नमस्कार गर्दछु | **ते** = तपाईंमा |
| चैतन्यप्रकाशबाट नै | **विश्वोद्भवस्थितिलयेषु** = संसारको | **इदं** = यो |
| **निपीतभेदमोहाय** = भेदभ्रमरूप | उत्पत्ति, स्थिति र प्रलयमा | **नमः** = नमस्कार |
| अन्धकार नाश गर्ने | **निमित्तलीलारासाय** = | **चकृम** = गर्दछु |
| **बोधधिषणाय** = ज्ञानस्वरूप | मायानिमित्त भई क्रीडा गर्नुहुने | |

**वाक्यार्थ–** निरन्तर आफ्नो चैतन्यप्रकाशबाट नै भेदभ्रमरूप अन्धकार नाश गर्ने ज्ञानस्वरूप परमात्मालाई नमस्कार गर्दछु। यस्तै संसारको उत्पत्ति, स्थिति र प्रलयमा माया निमित्त भई क्रीडा गर्नुहुने सर्वसमर्थ प्रभुलाई नमस्कार गर्दछु।

**यस्यावतारगुणकर्मविडम्बनानि**
**नामानि येऽसुविगमे विवशा गृणन्ति।**
**ते नैकजन्मशमलं सहसैव हित्वा**
**संयान्त्यपावृतमृतं तमजं प्रपद्ये॥ १५॥**

पदार्थ–

**ये** = जो मानिसहरू
**असुविगमे** = प्राणनाश हुने समयमा
**विवशाः** = विवशतावश भए पनि
**यस्य** = जुन भगवान्‌को
**अवतारगुणकर्मविडम्बनानि** = अवतार, गुण र कर्मसूचक
**नामानि** = नामहरू
**गृणन्ति** = ग्रहण गर्दछन्
**ते** = तिनीहरूले
**नैकजन्मशमलं** = अनेक जन्मका पापहरूलाई
**सहसा एव** = तुरुन्त नै
**हित्वा** = त्यागेर
**अपावृतामृतं** = मायाको गुणहरूद्वारा नढाकिएको ब्रह्मपदलाई
**संयान्ति** = प्राप्त गर्दछन् भने
**तम्** = त्यस्ता
**अजं** = अजन्मा प्रभुको
**प्रपद्ये** = शरणमा पर्दछु

**वाक्यार्थ–** जो मनुष्यहरू प्राणत्याग गर्दा विवशतावश भए पनि तपाईंको अवतार, गुण र कर्मलाई सूचित गर्ने नामहरूको उच्चारण गर्दछन् भने ती अनेकजन्मको पापबाट तत्काल छुटेर मायादि आवरणरहित सत्य ब्रह्मपदलाई प्राप्त गर्दछन्। त्यस्ता अजन्मा प्रभुको शरणमा म पर्दछु।

**यो वा अहं च गिरिशश्च विभुः स्वयं च**
**स्थित्युद्भवप्रलयहेतव आत्ममूलम्।**
**भित्त्वा त्रिपाद् ववृध एक उरुप्ररोह**
**स्तस्मै नमो भगवते भुवनद्रुमाय॥ १६॥**

पदार्थ–

**यः** = जुन
**विभुः** = व्यापक भगवान्
**एकः** = एकमात्र भएर
**त्रिपात्** = तीन स्वरूपवाला
**ववृधे** = हुनुहुन्छ
**आत्ममूलम्** = आफैंमा भएकी प्रकृतिलाई
**भित्त्वा** = तीन गुणको रूपमा विभक्त गराई
**स्थित्युद्भवप्रलयहेतवे** = सृष्टि, स्थिति र प्रलयको कारण
**अहं** = म
**गिरिशः** = शङ्करजी
**स्वयं च** = स्वयं विष्णुको रूपमा देखिनुभयो
**उरुप्ररोहः** = विभिन्न मरीचि आदि शाखा प्रशाखाको रूपमा समेत हुनुभयो
**तस्मै** = त्यस्ता
**भुवनद्रुमाय** = संसारवृक्षका वीजरूप
**भगवते** = भगवान्‌लाई
**नमः** = नमस्कार गर्दछु

**वाक्यार्थ–** जो व्यापक भगवान् एकमात्र भएर तीन स्वरूपवाला हुनुभयो। अनि आफैंमा भएकी प्रकृतिलाई तीनगुणको रूपमा विभक्त गराई सृष्टि, स्थिति र प्रलयको कारण म, शङ्करजी र विष्णुको रूपमा देखिनुभयो, विभिन्न मरीचि आदि शाखा प्रशाखाको रूपमा समेत हुनुभयो त्यस्ता संसारवृक्षका वीजरूप भगवान्‌लाई नमस्कार गर्दछु।

**लोको विकर्मनिरतः कुशले प्रमत्तः**

**कर्मण्ययं त्वदुदिते भवदर्चने स्वे ।**

**यस्तावदस्य बलवानिह जीविताशां**

**सद्यश्छिनत्त्यनिमिषाय नमोऽस्तु तस्मै ॥ १७ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **विकर्मनिरतः** = निषिद्ध कर्म गर्ने | **प्रमत्तः** = चित्त नलगाउने भएको छ | **यः** = जो कालले |
| **अयं** = यो | **इह** = यस संसारमा | **सद्यः** = तत्काल |
| **लोकः** = प्राणी | **तावत्** = तपाईंमा मन नलगाउन्जेलसम्म | **छिनत्ति** = नाश गर्दछ |
| **कुशले** = हितकारक | **अस्य** = प्राणीको | **तस्मै** = त्यस्ता |
| **त्वदुदिते** = तपाईंले नै बताएका | **जीविताशां** = बाँच्ने इच्छालाई | **अनिमिषाय** = कालस्वरूप तपाईंलाई |
| **भवदर्चने** = तपाईंको पूजारूप | **बलवान्** = बलवान् | **नमः** = नमस्कार |
| **स्वे** = आफूले गर्नुपर्ने | | **अस्तु** = छ |
| **कर्मणि** = कर्ममा | | |

**वाक्यार्थ–** हे भगवान् ! तपाईंले आफ्ना आराधनालाई नै प्राणीहरूका लागि कल्याणकारी स्वधर्म बताउनुभएको छ। परन्तु संसारका मनुष्यहरू तपाईंको आराधनाबाट विमुख भएर निषिद्धकर्ममा नै सधैं लागिरहन्छन्। यसप्रकार प्रमादमा रहेका जीवहरूको जीवनको आशालाई सावधान भएर सधैं काटिरहने बलवान् काल पनि तपाईंकै रूप हो। म कालस्वरूप तपाईंलाई नमस्कार गर्दछु।

**यस्माद् बिभेम्यहमपि द्विपरार्धधिष्ण्य-**

**मध्यासितः सकललोकनमस्कृतं यत् ।**

**तेपे तपो बहुसवोऽवरुरुत्समान-**

**स्तस्मै नमो भगवतेऽधिमखाय तुभ्यम् ॥ १८ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यत्** = जुन | **अध्यासितः** = रहेको | **अवरुरुत्समानः** = तपाईंलाई प्राप्त गर्न |
| **सकललोकनमस्कृतं** = सबै लोकमध्ये वन्दनीय | **अहम्** = म | **बहुसवः** = धेरै समयसम्म |
| **द्विपरार्धधिष्ण्यम्** = दुई परार्धसम्म रहने सत्यलोक छ त्यहाँ | **अपि** = पनि | **तपः** = तपस्या |
| | **यस्मात्** = जुन कालबाट | **तेपे** = गरेँ |
| | **बिभेमि** = डराउँछु त्यसैले | **तस्मै** = त्यस्ता |

**अधिमखाय** = यज्ञाधिष्ठाता
**तुभ्यम्** = तपाईं
**भगवते** = भगवान्लाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** यद्यपि म सत्यलोकको अधिष्ठाता हुँ। जुन लोक दुई परार्धसम्म रहन्छ, जुन सम्पूर्ण लोकहरूका लागि वन्दनीय छ। तापनि तपाईंको त्यो कालरूपबाट म सधैँ डराइरहन्छु। त्यो कालबाट बच्नका लागि र तपाईंलाई प्राप्त गर्नका लागि मैले धेरै कालसम्म तपस्या गरेँ। मेरो यो तपस्यारूप यज्ञको साक्षी हुनुभएका तपाईंलाई म नमस्कार गर्दछु।

**तिर्यङ्मनुष्यविबुधादिषु जीवयोनि-**
**ष्वात्मेच्छयात्मकृतसेतुपरीप्सया यः।**
**रेमे निरस्तविषयोऽप्यवरुद्धदेह-**
**स्तस्मै नमो भगवते पुरुषोत्तमाय ॥ १९ ॥**

पदार्थ–
**यः** = जो भगवान्
**निरस्तविषयः** = विषयलाई त्यागेर
**अपि** = पनि
**आत्मकृतसेतुपरीप्सया** = आफूले बनाएको धर्ममार्गको रक्षाका लागि
**आत्मेच्छया** = आफ्नै इच्छाले
**तिर्यङ्मनुष्यविबुधादिषु** = पशु, मनुष्य र देवता आदि
**जीवयोनिषु** = विभिन्न जीवयोनिहरूको रूपमा
**अवरुद्धदेहः** = विभिन्न शरीर स्वीकार गरी
**रेमे** = क्रीडा गर्नुहुन्छ
**तस्मै** = त्यस्ता
**पुरुषोत्तमाय** = पुरुषोत्तम
**भगवते** = भगवान्लाई
**नमः** = नमस्कार गर्दछु

**वाक्यार्थ–** जो भगवान् विषयलाई त्यागेर पनि आफूले बनाएको धर्ममार्गको रक्षाका लागि आफ्नै इच्छाले पशु, मनुष्य र देवता आदि विभिन्न जीवयोनिहरूके रूपमा विभिन्न शरीर स्वीकार गरी क्रीडा गर्नुहुन्छ त्यस्ता पुरुषोत्तम भगवान्लाई नमस्कार गर्दछु।

**योऽविद्ययानुपहतोऽपि दशार्धवृत्त्या**
**निद्रामुवाह जठरीकृतलोकयात्रः।**
**अन्तर्जलेऽहिकशिपुस्पर्शानुकूलां**
**भीमोर्मिमालिनि जनस्य सुखं विवृण्वन्॥ २० ॥**

पदार्थ–
**जठरीकृतलोकयात्रः** = संसारलाई आफैँभित्र लीन गर्ने
**यः** = जो भगवान्ले
**दशार्धवृत्त्या** = दशको आधा अर्थात् पाँच वृत्तिले युक्त
**अविद्यया** = अविद्याद्वारा
**अनुपहतः अपि** = नछोइए पनि
**जनस्य** = (व्यवहारबाट थाकेको) जीवलाई

**सुखं** = विश्राम सुख
**विवृण्वन्** = दिनका लागि
**भीमोर्मिमालिनि** = भयङ्कर तरङ्गयुक्त
**अन्तर्जले** = समुद्रभित्र
**अहिकशिपुस्पर्शानुकूलां** = सर्पको शय्यालाई पनि अनुकूल मानेर आएको
**निद्राम्** = निद्रालाई
**उवाह** = स्वीकार गर्नुभयो

**वाक्यार्थ–** संसारलाई आफैंभित्र लीन गर्ने तपाईं पाँच वृत्तिले युक्त अविद्याद्वारा नछोइए पनि पूर्वकल्पका व्यवहारबाट थाकेको जीवलाई विश्राम सुख दिनका लागि भयङ्कर तरङ्गयुक्त समुद्रभित्र सर्पको शय्यालाई पनि अनुकूल मानेर आएको निद्रालाई स्वीकार गर्नुभयो।

**विवरण–** यस श्लोकमा आएको **दशार्धवृत्या अविद्ययाऽनुपहतः** यस अंशको चर्चा गरौं। यहाँ अविद्या आदि पाँच क्लेशको अधीनमा नरहेका भगवान्को स्वरूपका बारेमा बताइएको छ। अविद्या, अस्मिता, राग, द्वेष र अभिनिवेशलाई पञ्चक्लेश भन्दछन्। जसले प्राणीहरूलाई दुःख दिन्छ, त्यसलाई क्लेश भन्दछन्। महर्षि पतञ्जलिको योगसूत्र (२।३)मा पञ्चक्लेशको बारेमा बताइएको छ। महर्षि पतञ्जलिका अनुसार अविद्या भनेको त्यो वस्तु हो जसको कारणले मनुष्य अनित्य पदार्थलाई नित्य, अपवित्रलाई पवित्र, दुःखलाई सुख र अनात्मालाई आत्मा मान्न लाग्दछ (योगसूत्र २।५)।

यस्तै परस्परमा एक अर्कादेखि भिन्न भएका द्रष्टा र दृश्यलाई एकजस्तो ठान्नु या मान्नुलाई अस्मिता भनिन्छ। अथवा अत्यन्त सूक्ष्म अहङ्कारलाई अस्मिता भनिन्छ (योगसूत्र २।६)।

कुनै पदार्थबाट एकपटक सुख प्राप्त गरेपछि त्यो पदार्थलाई फेरि पनि बारम्बार प्राप्त गर्ने इच्छा हुनुलाई राग भनिन्छ (योगसूत्र २।७)।

कुनै वस्तुबाट एकपटक दुःख प्राप्त गरेपछि त्यो पदार्थ फेरि आफ्नो अगाडि आउँदा त्यसलाई घृणा गर्नु अथवा त्यो पदार्थ देख्दा मनमा रिस उठ्नुलाई द्वेष भन्दछन् (योगसूत्र २।८)।

मर्ने डरलाई अभिनिवेश भनिन्छ (योगसूत्र २।९)।

यी पाँच क्लेशहरू मायाका रजोगुण र तमोगुणको कारणबाट उत्पन्न हुन्छन्। माया नै परमात्माको अधीनमा हुने हुनाले मायाबाट उत्पन्न भएका यी क्लेशहरू पनि भगवान्का अधीनमा हुन्छन्। त्यसकारण भगवान् यी क्लेशहरूको अधीनमा हुनुहुन्न।

**यन्नाभिपद्मभवनादहमासमीड्य**
**लोकत्रयोपकरणो यदनुग्रहेण।**
**तस्मै नमस्त उदरस्थभवाय योग-**
**निद्रावसानविकसन्नलिनेक्षणाय॥ २१॥**

**पदार्थ–**

**ईड्य** = हे पूजनीय प्रभु
**लोकत्रयोपकरणः** = विभिन्न लोकहरूको सृष्टि गर्ने
**अहम्** = म

**यदनुग्रहेण** = जुन भगवान्को कृपाले
**यन्नाभिपद्मभवनात्** = जसको नाभिकमलबाट
**आसम्** = प्रकट भएँ
**उदरस्थभवाय** = आफ्नै पेटभित्र संसार अटाउने
**योगनिद्रावसानविकसन्नलिने-क्षणाय** = योगनिद्राको अन्त्यमा नेत्रकमललाई उघारिदिनुभएका
**तस्मै** = त्यस्ता प्रभुलाई
**नमस्ते** = नमस्कार गर्दछु

**वाक्यार्थ–** तपाईंको नाभिकमलरूप भवनबाट मेरो जन्म भएको हो। यो सम्पूर्ण विश्व तपाईंको पेटमा अटाएको छ। तपाईंको कृपाले नै म त्रिलोकीको रचनारूप कार्यमा प्रवृत्त भएको छु। यस समयमा योगनिद्राको अन्त्य भएको हुनाले तपाईंका नेत्रकमल विकसित भइरहेका छन्। यस्ता तपाईंलाई म नमस्कार गर्दछु।

**सोऽयं समस्तजगतां सुहृदेक आत्मा**
**सत्त्वेन यन्मृडयते भगवान् भगेन।**
**तेनैव मे दृशमनुस्पृशताद् यथाहं**
**स्रक्ष्यामि पूर्ववदिदं प्रणतप्रियोऽसौ॥ २२॥**

पदार्थ–
**सः अयं** = यस्ता उहाँ भगवान्
**समस्तजगतां** = सम्पूर्ण जगत्को
**सुहृत्** = हितकारी
**एकः** = एकमात्र
**आत्मा** = अन्तर्यामी हुनुहुन्छ (साथै)
**असौ** = उहाँ भगवान्
**प्रणतप्रियः** = भक्तवत्सल हुनुहुन्छ
**भगवान्** = प्रभुले
**यत्** = जुन
**सत्त्वेन** = ज्ञानले
**भगेन** = ऐश्वर्यले
**मृडयते** = विश्वलाई आनन्दित पार्नुहुन्छ
**तेन एव** = त्यही ज्ञान र ऐश्वर्यले
**मे** = मेरो
**दृशम्** = प्रज्ञालाई
**अनुस्पृशतात्** = स्पर्श गर्नुहोस्
**यथा** = जसले गर्दा
**अहं** = म
**इदं** = यो जगत्
**पूर्ववत्** = पहिलेझैं
**स्रक्ष्यामि** = रचना गर्न सकूँ

**वाक्यार्थ–** यस्ता उहाँ भगवान् सम्पूर्ण जगत्को हितकारक एकमात्र आत्मस्वरूप हुनुहुन्छ। साथै उहाँ भगवान् भक्तवत्सल पनि हुनुहुन्छ। उहाँ जुन ज्ञान र ऐश्वर्यले विश्वलाई आनन्दित पार्नुहुन्छ त्यही ज्ञान र ऐश्वर्यले मेरो प्रज्ञालाई स्पर्श गर्नुहोस्, जसले गर्दा म यस जगत्लाई पहिलेझैं रचना गर्न सकूँ।

**एष प्रपन्नवरदो रमयात्मशक्त्या**
**यद्यत् करिष्यति गृहीतगुणावतारः।**
**तस्मिन् स्वविक्रममिदं सृजतोऽपि चेतो**

**युञ्जीत कर्मशमलं च यथा विजह्याम् ॥ २३ ॥**

**पदार्थ–**

**प्रपन्नवरदः** = शरणागतलाई वरदिने
**एषः** = भगवान्ले
**आत्मशक्त्या** = आफ्नो स्वरूपशक्ति
**रमया** = लक्ष्मीद्वारा
**गृहीतगुणावतारः** = विभिन्न अवतारहरू धारण गरेर
**यत् यत्** = जे–जे सृष्टि आदि
**करिष्यति** = गर्नुहुनेछ
**स्वविक्रमम्** = त्यही भगवान्कै पराक्रमभूत
**इदं** = यो जगत्
**सृजतः अपि** = रचना गर्ने भए पनि
**चेतः** = मेरो मन
**तस्मिन्** = उहाँ भगवान्मैं
**युञ्जीत** = युक्त होस्
**यथा च** = जुन कारणले
**कर्मशमलं** = कर्तृत्वाभिमानलाई
**विजह्याम्** = छोड्न सकूँ

**वाक्यार्थ–** शरणागतलाई वरदिने भगवान्ले आफ्नो स्वरूपशक्ति लक्ष्मीद्वारा विभिन्न अवतारहरू धारण गरेर जे–जे सृष्टि आदि गर्नुहुन्छ। तदनुरूप जगत् रचना गर्ने भए पनि मेरो मन भगवान्मै लागिरहोस् जुन कारणले म कर्तृत्वाभिमानलाई छोड्न सकूँ।

**नाभिह्रदादिह सतोऽम्भसि यस्य पुंसो**
**विज्ञानशक्तिरहमासमनन्तशक्तेः**
**रूपं विचित्रमिदमस्य विवृण्वतो मे**
**मा रीरिषीष्ट निगमस्य गिरां विसर्गः ॥ २४ ॥**

**पदार्थ–**

**यस्य** = जुन
**अनन्तशक्तेः** = अनन्त पराक्रमवाला
**अम्भसि** = जलमा
**सतः** = रहनुहुने
**पुंसः** = पुरुषको
**नाभिह्रदात्** = नाभिबाट
**विज्ञानशक्तिः** = प्रभुकै अन्तःकरणरूप विज्ञानशक्ति
**अहम्** = म
**आसम्** = उत्पन्न भएँ
**इह** = यहाँ
**अस्य** = यस संसारको
**इदम्** = यो
**विचित्रम्** = विभिन्न
**रूपं** = नामरूप
**विवृण्वतः** = विभाग गर्न खोज्ने
**मे** = मेरो
**निगमस्य** = वेदरूप
**गिरां** = वाणीको
**विसर्गः** = अभिव्यक्ति
**मा रीरिषीष्ट** = लुप्त नहोस्

**वाक्यार्थ–** जो जलमा रहनुहुने अनन्त पराक्रमवाला पुरुषको नाभिबाट उहाँको अन्तःकरणरूप विज्ञानशक्ति प्राप्त गरेर म उत्पन्न भएँ। यस संसारको विभिन्न नामरूप विभाग गर्न खोज्ने मेरो वेदरूप वाणीको अभिव्यक्ति लुप्त नहोस्।

**सोऽसावदभ्रकरुणो भगवान् विवृद्ध-**
**प्रेमस्मितेन नयनाम्बुरुहं विजृम्भन्।**
**उत्थाय विश्वविजयाय च नो विषादं**
**माध्व्या गिरापनयतात् पुरुषः पुराणः॥ २५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **स ः** = त्यस्ता | **नयनाम्बुरुहं** = नेत्रकमललाई | **माध्व्या** = महजस्तै अमृतवर्षी |
| **असौ** = उहाँ | **विजृम्भन्** = उघार्दै | **गिरा** = वाणीद्वारा |
| **अदभ्रकरुणः** = अपार करुणामय | **विश्वविजयाय** = संसारको उत्पत्तिको लागि | **अपनयतात्** = हटाउनुहोस् |
| **पुराणपुरुषः** = पुराणपुरुष | **उत्थाय** = शेषशय्याबाट उठी | |
| **भगवान्** = प्रभुले | **नः** = म ब्रह्मको | |
| **विवृद्धप्रेमस्मितेन** = अत्यन्त प्रेममय मुस्कानसहित | **विषादं** = बढिरहेको पीडालाई | |

**वाक्यार्थ–** त्यस्ता उहाँ अपार करुणामय पुराणपुरुष प्रभुले अत्यन्त प्रेममय मुस्कानसहित नेत्रकमललाई उघार्दै संसारको उत्पत्तिका लागि शेषशय्याबाट उठी म ब्रह्माको बढिरहेको पीडालाई महजस्तै अमृतवर्षी वाणीद्वारा हटाउनुहोस्।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**स्वसम्भवं निशाम्यैवं तपोविद्यासमाधिभिः।**
**यावन्मनोवचः स्तुत्वा विरराम स खिन्नवत्॥ २६॥**

पदार्थ–

| | | |
|---|---|---|
| **एवं** = यसप्रकार | **निशाम्य** = जानेर अनि | **खिन्नवत्** = केही थाकेको जस्तो भएझैँ |
| **तपोविद्यासमाधिभिः** = तपस्या, ज्ञान र समाधिद्वारा | **यावन्मनोवचः** = आफ्नो मन र वाणीको क्षमताअनुसार | **विरराम** = मौन हुनुभयो |
| **स्वसम्भवं** = आफ्ना कारण भगवान्लाई | **स्तुत्वा** = स्तुति गरेर | |
| | **सः** = ब्रह्माजी | |

**वाक्यार्थ–** विदुरजी ! यसप्रकार तपस्या, ज्ञान र समाधिद्वारा आफ्नो उत्पत्तिस्थान भगवान्लाई देखेर आफ्नो मन र वाणीको शक्तिअनुसार उहाँको स्तुति गरेर ब्रह्माजी थाकेको जस्तो भएर मौन हुनुभयो।

**अथाभिप्रेतमन्वीक्ष्य ब्रह्मणो मधुसूदनः।**

**विषण्णचेतसं तेन कल्पव्यतिकराम्भसा ॥ २७ ॥**

**लोकसंस्थानविज्ञान आत्मनः परिखिद्यतः ।**

**तमाहागाधया वाचा कश्मलं शमयन्निव ॥ २८ ॥**

पदार्थ–

**अथ** = त्यसपछि
**तेन** = त्यस
**कल्पव्यतिकराम्भसा** = प्रलयजलको कारण
**विषण्णचेतसं** = आत्तिएका ब्रह्मालाई (देखेर अनि)
**आत्मनः** = आफ्नो
**लोकसंस्थानविज्ञाने** = लोकरचनाको विषयमा
**परिखिद्यतः** = खिन्न भएका
**ब्रह्मणः** = ब्रह्माजीको
**अभिप्रेतम्** = भावनालाई
**अन्वीक्ष्य** = बुझेर
**मधुसूदनः** = मधुसूदन प्रभुले
**अगाधया** = गम्भीर
**वाचा** = वाणीबाट
**कश्मलं** = दुःखलाई
**शमयन् इव** = नाश गरेझैं
**तम्** = उहाँ ब्रह्माजीलाई
**आह** = भन्नुभयो

**वाक्यार्थ–** त्यसपछि त्यस प्रलयजलको कारण आत्तिएका ब्रह्मालाई देखेर आफ्नो लोकरचनाको विषयमा खिन्न भएका ब्रह्माजीको भावनालाई बुझेर मधुसूदन प्रभुले गम्भीर वाणीबाट दुःखलाई नाश गरेझैं उहाँ ब्रह्माजीलाई भन्नुभयो।

**श्रीभगवानुवाच** (श्रीभगवान्ले भन्नुभयो)

**मा वेदगर्भ गास्तन्द्रीं सर्ग उद्यममावह ।**

**तन्मयापादितं ह्यग्रे यन्मां प्रार्थयते भवान् ॥ २९ ॥**

पदार्थ–

**वेदगर्भ** = हे वेद धारण गर्ने ब्रह्माजी
**तन्द्रीं** = आलस्यलाई
**मा गाः** = धारण नगर्नुहोस्
**सर्गे** = सृष्टिको लागि
**उद्यमम्** = परिश्रम
**आवह** = गर्नुहोस्
**यत्** = जुन कुरा
**मां** = मबाट
**भवान्** = तपाईं
**प्रार्थयते** = माग्नुहुन्छ
**तत्** = त्यो कुरा
**हि** = निश्चय नै
**अग्रे** = पहिले
**मया** = मद्वारा
**आपादितं** = गरिसकिएको छ

**वाक्यार्थ–** हे वेद धारण गर्ने ब्रह्माजी ! तपाईं विषादको वशीभूत भएर आलस्य नगर्नुहोस्। सृष्टिरचनाको उद्यममा तत्पर हुनुहोस्। तपाईंले मसँग जुन कुरा चाहनुभएको थियो, त्यो मैले पहिले नै गरिसकेको छु।

**भूयस्त्वं तप आतिष्ठ विद्यां चैव मदाश्रयाम् ।**

**ताभ्यामन्तर्हृदि ब्रह्मन् लोकान् द्रक्ष्यस्यपावृतान्॥ ३०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **त्वं** = तपाईं | **आतिष्ठ** = गर्नुहोस् | **अपावृतान्** = स्नढाकिएका |
| **भूयः** = फेरि पनि | **ब्रह्मन्** = हे ब्रह्मा | **लोकान्** = विभिन्न लोकहरूलाई |
| **मदाश्रयाम्** = मबाट प्राप्त | **ताभ्याम्** = यी दुई साधनबाट | **द्रक्ष्यस्य** = देख्नु हुनेछ |
| **विद्यां** = भागवतज्ञान र | **एव** = नै | |
| **तपः च** = तपस्या पनि | **अन्तर्हृदि** = आफ्नै हृदयभित्र | |

**वाक्यार्थ–** तपाईं एकचोटि फेरि तपस्या गर्नुहोस् र भागवतज्ञानको अनुष्ठान गर्नुहोस्। यी दुई साधनबाट तपाईं सम्पूर्ण लोकहरूलाई स्पष्टरूपले आफ्नो अन्तःकरणमा देख्नुहुनेछ।

**तत आत्मनि लोके च भक्तियुक्तः समाहितः।**
**द्रष्टासि मां ततं ब्रह्मन् मयि लोकांस्त्वमात्मनः॥ ३१॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ब्रह्मन्** = हे ब्रह्माजी | **आत्मनि** = आफूमा र | **त्वम्** = तपाईं आफैंलाई |
| **तत** ः = त्यसपछि | **लोके च** = समस्त संसारमा पनि | **आत्मनः** = आफ्ना |
| **भक्तियुक्तः** = भक्तिसहित अनि | **ततं** = व्याप्त | **लोकान्** = सबै लोकहरूलाई पनि |
| **समाहितः** = नियन्त्रित चित्त हुनुभएका तपाईं | **मां** = मलाई र | |
| | **मयि** = ममा | **द्रष्टासि** = देख्नुहुनेछ |

**वाक्यार्थ–** हे ब्रह्माजी ! त्यसपछि भक्तिसहित नियन्त्रित चित्त हुनुभएका तपाईं आफूमा र समस्त संसारमा पनि व्याप्त मलाई र ममा तपाईं आफैंलाई र आफ्ना सबै लोकहरूलाई पनि देख्नुहुनेछ।

**यदा तु सर्वभूतेषु दारुष्वग्निमिव स्थितम्।**
**प्रतिचक्षीत मां लोको जह्यात् तर्ह्येव कश्मलम्॥ ३२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यदा** = जुन समयमा | **सर्वभूतेषु** = सम्पूर्ण प्राणीभित्र | **एव** = नै |
| **लोकः** = प्राणीले | **स्थितम्** = रहेको | **कश्मलम्** = सम्पूर्ण दुःखलाई |
| **दारुषु** = दाउराभित्र | **मां** = मलाई | **जह्यात्** = त्याग गर्दछ |
| **अग्निम् इव** = अग्नि व्याप्त भएझैं | **प्रतिचक्षीत** = देख्दछ | |
| | **तर्हि** = त्यही समयमा | |

**वाक्यार्थ–** जुन समयमा प्राणीले दाउराभित्र अग्नि व्याप्त भएझैं सम्पूर्ण प्राणीभित्र रहेको मलाई देख्दछ त्यही समयमा नै सम्पूर्ण दुःखलाई त्याग गर्दछ।

**यदा रहितमात्मानं भूतेन्द्रियगुणाशयैः।**

**स्वरूपेण मयोपेतं पश्यन् स्वाराज्यमृच्छति॥ ३३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यदा** = जुन समयमा | **रहितम्** = रहित र | **पश्यन्** = देख्दछ भने |
| **आत्मानं** = आफूलाई | **स्वरूपेण** = स्वरूपले | **स्वाराज्यम्** = मोक्ष |
| **भूतेन्द्रियगुणाशयैः** = महाभूत, इन्द्रिय, गुण र कर्मसंस्कारद्वारा | **मया** = मदेखि | **ऋच्छति** = प्राप्त गर्दछ |
| | **उपेतं** = अभिन्न | |

**वाक्यार्थ–** जब ऊ आफूलाई महाभूत, इन्द्रिय, गुण र कर्मसंस्कारद्वारा रहित देख्दछ तब उसले मोक्षपदलाई प्राप्त गर्दछ।

**नानाकर्मवितानेन प्रजा बह्वीः सिसृक्षतः।**

**नात्मावसीदत्यस्मिंस्ते वर्षीयान् मदनुग्रहः॥ ३४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **नानाकर्मवितानेन** = विभिन्न कर्मसंस्कारको अनुसार | **सिसृक्षतः** = सृष्टि गर्न खोज्ने | **न अवसीदति** = फसेको छैन (यो नै) |
| | **ते** = तपाईंको | |
| **बह्वीः** = अनेक | **आत्मा** = अन्तःकरण | **वर्षीयान्** = अत्यन्त बढी |
| **प्रजाः** = प्राणीहरू | **अस्मिन्** = यो सृष्टिमा | **मदनुग्रहः** = मेरो कृपा हो |

**वाक्यार्थ–** हे ब्रह्माजी ! विभिन्न कर्मसंस्कारका अनुसार अनेक प्रकारका प्राणीहरूको सृष्टि गर्ने इच्छा भए तापनि तपाईंलाई मोह हुनेछैन। यो नै मेरो अतिशय कृपाको फल हो।

**ऋषिमाद्यं न बध्नाति पापीयांस्त्वां रजोगुणः।**

**यन्मनो मयि निर्बद्धं प्रजाः संसृजतोऽपि ते॥ ३५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **आद्यं** = सर्वप्रथम | **न बध्नाति** = बाँध्ने छैन | **ते मनः** = तपाईंको मन |
| **ऋषिम्** = मन्त्रद्रष्टा | **यत्** = किनभने | **मयि** = अन्तर्यामी ममा |
| **त्वां** = तपाईंलाई | **प्रजाः** = प्राणीहरूको | **निर्बद्धं** = बाँधिएको छ |
| **पापीयान्** = अत्यन्त दुष्ट | **संसृजतः** = सृष्टि गर्दा | |
| **रजोगुणः** = रजोगुणले | **अपि** = पनि | |

**वाक्यार्थ–** सर्वप्रथम मन्त्रद्रष्टा तपाईं हुनुहुन्छ। प्रजा उत्पन्न गर्दाखेरि पनि तपाईंको मन ममा लागिरहनेछ। यसकारण पापमय रजोगुणले तपाईंलाई बन्धनमा पार्नेछैन।

**ज्ञातोऽहं भवता त्वद्य दुर्विज्ञेयोऽपि देहिनाम्।**

**यन्मां त्वं मन्यसेऽयुक्तं भूतेन्द्रियगुणात्मभिः ॥ ३६ ॥**

**पदार्थ–**

**अद्य** = आज
**तु** = चाहि
**देहिनाम्** = प्राणीहरूबाट
**दुर्विज्ञेयः** = जान्न नसकिने
**अहं** = म
**भवता** = तपाईंद्वारा
**ज्ञातः** = जानिएँ
**यत्** = किनभने
**त्वं** = तपाईं
**भूतेन्द्रियगुणात्मभिः** = महाभूत, इन्द्रिय, गुण र मनबाट
**अयुक्तं** = नछाड्ने भनी
**मां** = मलाई
**मन्यसे** = मान्नुहुन्छ

**वाक्यार्थ–** तपाईं मलाई भूत, इन्द्रिय, गुण र अन्तःकरणले रहित सम्झनुहुन्छ। यद्यपि देहधारी जीवका लागि मेरो ज्ञान अत्यन्त कठिन छ, तथापि तपाईंले मलाई जान्नुभएको छ।

**तुभ्यं मद्विचिकित्सायामात्मा मे दर्शितोऽबहिः।**
**नालेन सलिले मूलं पुष्करस्य विचिन्वतः॥ ३७ ॥**

**पदार्थ–**

**मद्विचिकित्सायाम्** = मेरो खोजी गर्दा
**नालेन** = कमलनालद्वारा
**सलिले** = जलभित्र
**पुष्करस्य** = कमलको
**मूलं** = मूल
**विचिन्वतः** = खोजिरहनुभएका
**तुभ्यं** = तपाईंलाई
**मे** = मैले
**आत्मा** = आफ्नो स्वरूप
**अबहिः** = भित्री हृदयदेशमा
**दर्शितः** = देखाएँ

**वाक्यार्थ–** मेरो आश्रय अरू कोही छैन भन्ने सन्देहले तपाईं कमलनालद्वारा जलमा त्यसको मूल खोजिरहनुभएको थियो। मैले तपाईंलाई आफ्नो यो स्वरूप अन्तःकरणमा देखाएँ।

**यच्चकर्थाङ्ग मत्स्तोत्रं मत्कथाभ्युदयाङ्कितम्।**
**यद्वा तपसि ते निष्ठा स एष मदनुग्रहः॥ ३८ ॥**

**पदार्थ–**

**अङ्ग** = हे प्यारा ब्रह्माजी
**यत्** = जुन
**मत्कथाभ्युदयाङ्कितम्** = मेरो गुणवर्णनले युक्त
**मत्स्तोत्रं** = मेरो स्तुति
**चकर्थ** = गर्नुभयो
**यत् वा** = अथवा
**ते** = तपाईंको
**तपसि** = तपस्यामा
**निष्ठा** = निष्ठा भएको छ
**सः एषः** = यही नै
**मदनुग्रहः** = मेरो कृपा हो

**वाक्यार्थ–** प्रिय ब्रह्माजी ! तपाईंले मेरो कथाको वैभवले युक्त मेरो स्तुति गर्नुभएको छ र तपस्यामा तपाईंको जुन निष्ठा छ, त्यो पनि मेरो कृपाको फल हो।

**प्रीतोऽहमस्तु भद्रं ते लोकानां विजयेच्छया।**
**यदस्तौषीर्गुणमयं निर्गुणं मानुवर्णयन्॥ ३९ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **लोकानां** = संसारको | **अनुवर्णयन्** = वर्णन गर्दै | **प्रीतः** = खुसी छु |
| **विजयेच्छया** = रचनाको इच्छाले | **यत्** = जुन कष्टसाध्य | **ते** = तपाईंको |
| **गुणमयं** = सगुण नै प्रतीत हुने | **स्तौषीः** = स्तुति गर्नुभयो | **भद्रं** = कल्याण |
| **मा** = मलाई | त्यसबाट | **अस्तु** = होस् |
| **निर्गुणं** = निर्गुणतत्त्वको रूपमा | **अहम्** = म | |

**वाक्यार्थ–** संसारको रचनाको इच्छाले म सगुणरूपमा प्रतीत भए तापनि निर्गुणरूपले वर्णन गर्दै तपाईंले मेरो जुन स्तुति गर्नुभएको छ, त्यसबाट म अत्यन्त प्रसन्न छु। तपाईंको कल्याण होस्।

**य एतेन पुमान्नित्यं स्तुत्वा स्तोत्रेण मां भजेत्।**
**तस्याशु सम्प्रसीदेयं सर्वकामवरेश्वरः ॥ ४० ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यः** = जो | **स्तुत्वा** = स्तुति गरेर | **सर्वकामवरेश्वरः** = सम्पूर्ण |
| **पुमान्** = मनुष्य | **मां** = मलाई | चाहिएका कुरा दिन सक्ने म |
| **नित्यं** = सधैं | **भजेत्** = भजन गर्दछ | **आशु** = छिटै नै |
| **एतेन** = यस | **तस्य** = त्यस्ता व्यक्तिमाथि | **सम्प्रसीदेयं** = खुसी हुनेछु |
| **स्तोत्रेण** = स्तोत्रले | | |

**वाक्यार्थ–** जो मनुष्य सधैं यस स्तोत्रले स्तुति गरेर मलाई भजन गर्दछ त्यस्ता व्यक्तिमाथि सम्पूर्ण चाहिएका कुरा दिन सक्ने म छिटै नै खुसी हुनेछु।

**पूर्तेन तपसा यज्ञैर्दानैर्योगसमाधिना।**
**राद्धं निःश्रेयसं पुंसां मत्प्रीतिस्तत्त्वविन्मतम्॥ ४१ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **पूर्तेन** = पूर्तकर्मबाट | **योगसमाधिना** = योग र | **मत्प्रीतिः** = मेरो प्रसन्नता नै हो |
| **तपसा** = तपस्याबाट | समाधिबाट समेत | भन्ने |
| **यज्ञैः** = यज्ञबाट | **राद्धं** = प्राप्त हुने | **तत्त्वविन्मतम्** = तत्त्वज्ञहरूको |
| **दानैः** = दानबाट | **पुंसां** = प्राणीहरूको | मत रहेको छ |
| | **निःश्रेयसं** = परमकल्याण भनेको | |

**वाक्यार्थ–** तत्त्ववेत्ताहरूको मत के छ भने पूर्त, तप, यज्ञ, दान, योग र समाधि आदि साधनद्वारा प्राप्त हुने जुन परमकल्याणमय फल छ, त्यो मेरो प्रसन्नता नै हो।

**टिप्पणी–** अग्निहोत्र, अतिथिसेवा, वैश्वदेव, वेदको आज्ञापालन गर्नुजस्ता कर्मलाई पूर्त भनिन्छ।

**अहमात्मात्मनां धातः प्रेष्ठः सन् प्रेयसामपि ।**

**अतो मयि रतिं कुर्याद् देहादिर्यत्कृते प्रियः ॥ ४२ ॥**

पदार्थ–

**धातः** = हे ब्रह्माजी
**अहम्** = म
**आत्मनां** = सम्पूर्ण जीव आत्माहरूमध्ये
**आत्मा** = सबैको आत्मस्वरूप
**प्रेयसामपि** = पुत्र, पत्नी आदि प्रियहरूमध्ये पनि
**प्रेष्ठः सन्** = सर्वाधिक प्रिय हूँ
**अतः** = त्यसकारण
**मयि** = ममा नै
**रतिं** = रमण
**कुर्यात्** = गरोस्
**यत्कृते** = जुन आत्मस्वरूप मेरो लागि
**देहादिः** = देह, सम्पत्ति आदि
**प्रियः** = प्रिय जस्ता बन्दछन्

**वाक्यार्थ–** हे ब्रह्माजी ! म सम्पूर्ण जीव आत्माहरूमध्ये सबैको आत्मस्वरूप पुत्र, पत्नी आदि प्रियहरूमध्ये पनि सर्वाधिक प्रिय हुँ। त्यसकारण ममा नै रमण गरोस् जुन आत्मस्वरूप मेरा लागि देह, सम्पत्ति आदि प्रियजस्ता बन्दछन्।

**सर्ववेदमयेनेदमात्मनात्मात्मयोनिना ।**

**प्रजाः सृज यथापूर्वं याश्च मय्यनुशेरते ॥ ४३ ॥**

पदार्थ–

**आत्मयोनिना** = मबाट उत्पन्न
**सर्ववेदमयेन** = सर्ववेदमय
**आत्मना** = स्वरूपले
**आत्मा** = तपाईं
**इदम्** = यो त्रिलोकी र
**याः** = जति
**प्रजाः** = प्राणीहरू
**मयि** = ममा
**अनुशेरते** = लीन छन्
**यथापूर्वं** = पूर्वकल्पमा झैं
**सृज** = रचना गर्नुहोस्

**वाक्यार्थ–** हे ब्रह्माजी ! मबाट उत्पन्न सर्ववेदमय स्वरूपले तपाईं यो त्रिलोकी र जति प्राणीहरू ममा लीन छन्, पूर्वकल्पमा झैं तिनीहरूको रचना गर्नुहोस्।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**तस्मा एवं जगत्स्रष्ट्रे प्रधानपुरुषेश्वरः ।**

**व्यज्येदं स्वेन रूपेण कञ्जनाभस्तिरोदधे ॥ ४४ ॥**

पदार्थ–

**एवं** = यसप्रकार
**जगत्स्रष्ट्रे** = जगत् रचयिता
**तस्मै** = उहाँ ब्रह्माजीलाई
**इदं** = यो जगत्
**स्वेन** = आफ्नो
**रूपेण** = स्वयंप्रकाश रूपद्वारा
**व्यज्य** = प्रकाशित गराई
**प्रधानपुरुषेश्वरः** = प्रकृति र पुरुषका मालिक
**कञ्जनाभिः** = कमलनाभ परमात्मा

**तिरोदधे** = अन्तर्धान हुनुभयो

**वाक्यार्थ–** यसप्रकार जगत् रचयिता उहाँ ब्रह्माजीलाई यो जगत् आफ्नो स्वयंप्रकाश रूपद्वारा प्रकाशित गराई प्रकृति र पुरुषका मालिक कमलनाभ परमात्मा अन्तर्धान हुनुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां तृतीयस्कन्धे**

**नवमोऽध्यायः ॥ ९॥**

# अथ दशमोऽध्यायः

## दश प्रकारका सृष्टिहरूको वर्णन

**विदुर उवाच** (विदुरजीले भन्नुभयो)

**अन्तर्हिते भगवति ब्रह्मा लोकपितामहः।**

**प्रजाः ससर्ज कतिधा दैहिकीर्मानसीर्विभुः॥ १॥**

**पदार्थ–**

**भगवति** = भगवान्
**अन्तर्हिते** = अन्तर्धान भएपछि
**विभुः** = व्यापक
**लोकपितामहः** = संसारका नै उत्पत्तिकर्ता
**ब्रह्मा** = ब्रह्माजीले
**दैहिकीः** = देहसम्बन्धी र
**मानसीः** = मनसम्बन्धी पनि
**कतिधा** = कति प्रकारका
**प्रजाः** = प्रजाहरूलाई
**ससर्ज** = रच्नुभयो

**वाक्यार्थ–** मुनिवर! भगवान् नारायण अन्तर्धान भएपछि सम्पूर्ण लोकका पितामह ब्रह्माजीले आफ्नो देह र मनद्वारा कति प्रकारका प्रजाहरूलाई रच्नुभयो ?

**ये च मे भगवन् पृष्टास्त्वय्यर्था बहुवित्तम।**

**तान् वदस्वानुपूर्व्येण छिन्धि नः सर्वसंशयान्॥ २॥**

**पदार्थ–**

**बहुवित्तम** = धेरै जान्ने
**भगवन्** = हे भगवान् मैत्रेयजी
**मे** = मद्वारा
**त्वयि** = तपाईंमाथि
**ये** = अरू जति
**च** = पनि
**अर्थाः** = प्रश्नहरू
**पृष्टाः** = सोधिए
**तान्** = ती सबैका उत्तरहरू
**आनुपूर्व्येण** = क्रमशः
**वदस्व** = बताउनुहोस्
**नः** = मेरो
**सर्वसंशयान्** = सम्पूर्ण संशयहरूलाई
**छिन्धि** = नाश गर्नुहोस्

**वाक्यार्थ–** मैत्रेयजी यसदेखि अतिरिक्त मैले तपाईंसँग जुन–जुन प्रश्नहरू सोधेको छु, ती सम्पूर्ण प्रश्नहरूको उत्तर क्रमशः दिनुहोस् र मेरा सम्पूर्ण संशयहरूलाई नष्ट गर्नुहोस्। किनभने तपाईं धेरै विषयको ज्ञाता हुनुहुन्छ।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**एवं सञ्चोदितस्तेन क्षत्त्रा कौषारविर्मुनिः।**

**प्रीतः प्रत्याह तान् प्रश्नान् हृदिस्थानथ भार्गव॥ ३॥**

पदार्थ–

**भार्गव** = हे शौनकजी
**अथ** = अनि
**तेन** = ती
**क्षत्त्रा** = विदुरजीद्वारा
**एवं** = यसप्रकार
**सञ्चोदितः** = प्रार्थित हुनुभएका
**कौषारविः** = मैत्रेय
**मुनिः** = मुनिले
**प्रीतः** = अत्यन्त प्रसन्न भई
**हृदिस्थान्** = हृदयभित्र रहेका
**तान्** = ती
**प्रश्नान्** = प्रश्नहरूको
**प्रत्याह** = उत्तर दिनुभयो

**वाक्यार्थ–** हे शौनकजी ! अनि ती विदुरजीद्वारा यसप्रकार प्रार्थित हुनुभएका मैत्रेय मुनिले अत्यन्त प्रसन्न भई हृदयभित्र रहेका ती प्रश्नहरूको उत्तर दिनुभयो।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**विरिञ्चोऽपि तथा चक्रे दिव्यं वर्षशतं तपः।**

**आत्मन्यात्मानमावेश्य यथाह भगवानजः॥ ४॥**

पदार्थ–

**अजः** = अजन्मा
**भगवान्** = प्रभुले
**यथा** = जे
**आह** = भन्नुभएको थियो
**तथा** = त्यसै गरी
**विरिञ्चः** = ब्रह्माजीले
**अपि** = पनि
**आत्मानम्** = मनलाई
**आत्मनि** = सर्वात्म भगवान्मा
**आवेश्य** = लगाएर
**दिव्यं** = दिव्य
**वर्षशतं** = सय वर्षसम्म
**तपः** = तपस्या
**चक्रे** = गर्नुभयो

**वाक्यार्थ–** अजन्मा प्रभुले जे भन्नुभएको थियो त्यसै गरी ब्रह्माजीले पनि मनलाई सर्वात्म भगवान्मा लगाएर दिव्य सय वर्षसम्म तपस्या गर्नुभयो।

**तद्विलोक्याब्जसम्भूतो वायुना यदधिष्ठितः।**

**पद्ममम्भश्च तत्कालकृतवीर्येण कम्पितम्॥ ५॥**

**तपसा ह्येधमानेन विद्यया चात्मसंस्थया।**

**विवृद्धविज्ञानबलो न्यपाद् वायुं सहाम्भसा॥ ६॥**

पदार्थ–

**तत्कालकृतवीर्येण** = प्रलयकालीन शक्तिसम्पन्न
**वायुना** = वायुद्वारा
**यदधिष्ठितः** = जसमाथि बस्नुभएको थियो
**पद्मम्** = कमल र
**अम्भः** = जल
**च** = पनि
**कम्पितम्** = काँप्न थाल्यो
**तत्** = त्यसलाई
**विलोक्य** = देखेर
**हि** = निश्चय नै
**एधमानेन** = बढिरहेको
**तपसा** = तपस्या र
**अत्मसंस्थया** = हृदययमा स्थित

**विद्यया** = आत्मज्ञानले पनि
**विवृद्धविज्ञानबलः** = बुद्धि र बल बढेका
**अब्जसम्भूतः** = कमलबाट उत्पन्न ब्रह्माले
**अम्भसा सह** = जलसँगसँगै
**वायुं च** = वायुलाई पनि
**न्यपात्** = पिउनुभयो

**वाक्यार्थ–** प्रलयकालीन शक्तिसम्पन्न वायुद्वारा ब्रह्माजी बस्नुभएको कमल र जल पनि काँप्न थाले। तपस्या र हृदययमा स्थित आत्मज्ञानका कारणले ब्रह्माजीको बुद्धि र बल बढेको थियो। यसरी जल र कमल काँप्न थालेको देखेर कमलबाट उत्पन्न ब्रह्माले जलसँगसँगै वायुलाई पनि पिउनुभयो।

**तद्विलोक्य वियद्व्यापि पुष्करं यदधिष्ठितम्।**
**अनेन लोकान् प्राग्लीनान् कल्पितास्मीत्यचिन्तयत्॥ ७॥**

**पदार्थ–**
**यत्** = जहाँ
**अधिष्ठितम्** = बसिएको थियो
**तत्** = त्यो
**वियद्व्यापि** = आकाशै ढाक्ने
**पुष्करं** = कमललाई
**विलोक्य** = देखेर
**अनेन** = त्यो कमलद्वारा
**प्राग्लीनान्** = पहिलो प्रलयमा लीन भएका
**लोकान्** = लोकहरूलाई
**कल्पितास्मि** = सृष्टि गर्नेछु
**इति** = यस्तो
**अचिन्तयत्** = विचार गर्नुभयो

**वाक्यार्थ–** ब्रह्माजीले आफू बसेको आकाशै ढाक्ने कमललाई देखेर त्यही कमलद्वारा पहिलो प्रलयमा लीन भएका लोकहरूलाई कल्पना गर्नेछु भन्ने विचार गर्नुभयो।

**पद्मकोशं तदाविश्य भगवत्कर्मचोदितः।**
**एकं व्यभाङ्क्षीदुरुधा त्रिधा भाव्यं द्विसप्तधा॥ ८॥**

**पदार्थ–**
**भगवत्कर्मचोदितः** = भगवान्‌द्वारा सृष्टिकर्ममा प्रेरित ब्रह्माजीले
**द्विसप्तधा** = चौध भुवनको रूपमा र
**उरुधा** = अरू धेरै किसिमले
**भाव्यं** = विभाग गर्न सकिने
**तत्** = त्यो
**पद्मकोशं** = कमलको कोशभित्र
**आविश्य** = पसेर
**एकं** = एउटै कमललाई
**त्रिधा** = भूः, भुवः र स्वःको रूपमा तीन भागमा
**व्यभाङ्क्षीत्** = विभाग गर्नुभयो

**वाक्यार्थ–** भगवान्‌द्वारा सृष्टिकर्ममा प्रेरित ब्रह्माजीले चौध भुवनको रूपमा र अरू धेरै किसिमले विभाग गर्न सकिने त्यस कमलको कोशभित्र पसेर एउटै कमललाई भूः, भुवः र स्वःको रूपमा तीन भागमा विभाग गर्नुभयो।

**एतावाञ्जीवलोकस्य संस्थाभेदः समाहृतः।**
**धर्मस्य ह्यनिमित्तस्य विपाकः परमेष्ठ्यसौ॥ ९॥**

पदार्थ–

**जीवलोकस्य** = प्राणीको
**एतावान्** = यसप्रकारको
**संस्थाभेदः** = सृष्टिपद्धति
**समाहृतः** = बताइयो तर
**असौ** = उहाँ
**परमेष्ठी** = ब्रह्मा
**हि** = चाहिँ
**अनिमित्तस्य** = निष्काम
**धर्मस्य** = उपासना आदिको
**विपाकः** = फलविशेष हुनुहुन्छ

**वाक्यार्थ–** प्राणीको यसप्रकारको सृष्टिपद्धति बताइयो तर उहाँ सृष्टिकर्ता ब्रह्माचाहिँ निष्काम उपासना आदिको फलविशेष हुनुहुन्छ।

**विदुर उवाच** (विदुरजीले भन्नुभयो)

**यथात्थ बहुरूपस्य हरेरद्भुतकर्मणः।**

**कालाख्यं लक्षणं ब्रह्मन् यथा वर्णय नः प्रभो ॥ १० ॥**

पदार्थ–

**ब्रह्मन्** = हे मैत्रेयजी
**अद्भुतकर्मणः** = अद्भुत लीला गर्ने
**बहुरूपस्य** = अनन्तरूप हुनुभएका
**हरेः** = भगवान्को
**कालाख्यं** = समय नाम गरेको
**यत्** = जुन
**लक्षणं** = लक्षण
**यथा** = जसरी
**आत्थ** = भन्नुभयो (त्यो)
**प्रभो** = हे भगवान्
**नः** = मलाई
**वर्णय** = बताउनुहोस्

**वाक्यार्थ–** हे मैत्रेयजी ! अद्भुत लीला गर्ने अनन्तरूप हुनुभएका भगवान्को समय नाम गरेको जुन लक्षण जसरी भन्नुभयो त्यो मलाई बताउनुहोस्।

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**गुणव्यतिकराकारो निर्विशेषोऽप्रतिष्ठितः।**

**पुरुषस्तदुपादानमात्मानं लीलयासृजत् ॥ ११ ॥**

पदार्थ–

**गुणव्यतिकराकारः** = पदार्थहरूको परिवर्तन नै स्वरूप भएको
**निर्विशेषः** = निर्विशेष र
**अप्रतिष्ठितः** = आदि अन्त्यले रहित भएको (जुन काल छ)
**तदुपादानम्** = त्यसलाई नै उपादान कारण बनाएर
**पुरुषः** = भगवान्ले
**आत्मानं** = आफूलाई
**लीलया** = मायाद्वारा
**असृजत्** = विभिन्न रूपमा प्रकट गर्नुभयो

**वाक्यार्थ–** पदार्थहरूको परिवर्तन नै स्वरूप भएका निर्विशेष र आदि–अन्त्यले रहित भएको जुन काल छ त्यसलाई नै उपादान कारण बनाएर भगवान्ले आफूलाई मायाद्वारा विभिन्न रूपमा प्रकट गर्नुभयो।

**विश्वं वै ब्रह्मतन्मात्रं संस्थितं विष्णुमायया।**
**ईश्वरेण परिच्छिन्नं कालेनाव्यक्तमूर्तिना॥ १२॥**

पदार्थ–

**विष्णुमायया** = भगवान्को मायाद्वारा
**संस्थितं** = रहेको
**विश्वं** = विश्व
**वै** = निश्यच नै
**ब्रह्मतन्मात्रं** = ब्रह्मस्वरूप नै थियो
**ईश्वरेण** = भगवान्ले
**अव्यक्तमूर्तिना** = अव्यक्तस्वरूप भएको
**कालेन** = कालद्वारा
**परिच्छिन्नं** = भिन्नभिन्न रूपमा प्रकट गर्नुभयो

**वाक्यार्थ–** पहिले यो सम्पूर्ण विश्व भगवान्को मायामा लीन भएर ब्रह्मरूपले स्थित थियो। यसैलाई अव्यक्तस्वरूप कालद्वारा भगवान्ले पुनः भिन्नभिन्न रूपमा प्रकट गर्नुभयो।

**यथेदानीं तथाग्रे च पश्चादप्येतदीदृशम्।**
**सर्गो नवविधस्तस्य प्राकृतो वैकृतस्तु यः॥ १३॥**

पदार्थ–

**एतत्** = कालप्रवाहबाट चलेको यो जगत्
**यथा** = जस्तो
**इदानीं** = अहिले छ
**तथा** = त्यस्तै
**अग्रे** = पहिले
**च** = पनि (थियो)
**पश्चात्** = पछि
**अपि** = पनि
**ईदृशम्** = त्यस्तै (रहनेछ)
**तस्य** = त्यो कालको
**नवविधः** = नौ प्रकारको
**सर्गः** = सृष्टि हुन्छ
**यः** = जुन
**तु** = चाहिँ
**प्राकृतः** = प्राकृत र
**वैकृतः** = वैकृत (मिसिएको छ त्यो दसौँ सर्ग हो)

**वाक्यार्थ–** कालप्रवाहबाट चलेको यो जगत् जस्तो अहिले छ, त्यस्तै पहिले पनि थियो र पछि पनि त्यस्तै रहनेछ। यो सृष्टि नौ प्रकारको छ। यस्तै प्राकृत र वैकृतका भेदले एउटा दसौँ सृष्टि पनि छ।

**कालद्रव्यगुणैरस्य त्रिविधः प्रतिसङ्क्रमः।**
**आद्यस्तु महतः सर्गो गुणवैषम्यमात्मनः॥ १४॥**

पदार्थ–

**अस्य** = यस सर्गको
**कालद्रव्यगुणैः** = काल, द्रव्य र गुणहरूको माध्यमले
**प्रतिसङ्क्रमः** = प्रलय
**त्रिविधः** = नित्य, नैमित्तिक र प्राकृतिक गरी तीन प्रकारको हुन्छ

**आद्यः** = पहिलो
**तु** = त
**महतः** = महतत्तत्त्वबाट भएको
**सर्गः** = सृष्टि हो (जहाँ)
**आत्मनः** = भगवान्‌को
**गुणवैषम्यम्** = गुणहरूको विषमता हुन्छ

**वाक्यार्थ–** यस सर्गको प्रलय काल, द्रव्य र गुणहरूको माध्यमले नित्य, नैमित्तिक र प्राकृतिक गरी तीन प्रकारको हुन्छ पहिलो त महत्तत्त्वबाट भएको सृष्टि हो जहाँ भगवान्‌को गुणहरूको विषमता हुन्छ।

**द्वितीयस्त्वहमो यत्र द्रव्यज्ञानक्रियोदयः।**
**भूतसर्गस्तृतीयस्तु तन्मात्रो द्रव्यशक्तिमान्॥ १५॥**

पदार्थ–
**द्वितीयः** = द्वितीय सर्ग
**तु** = चाहिँ
**अहमः** = अहङ्कारको सर्ग हो
**यत्र** = जहाँ
**द्रव्यज्ञानक्रियोदयः** = द्रव्य, ज्ञानेन्द्रिय र कर्मेन्द्रियको उत्पत्ति हुन्छ
**तृतीयः** = तेस्रो
**तु** = चाहिँ
**द्रव्यशक्तिमान्** = महाभूत उत्पन्न गर्न सक्ने
**तन्मात्रः** = तन्मात्राहरूको
**भूतसर्गः** = भूतसर्ग हो

**वाक्यार्थ–** द्वितीय सर्गचाहिँ अहङ्कारको सर्ग हो जहाँ द्रव्य, ज्ञानेन्द्रिय र कर्मेन्द्रियको उत्पत्ति हुन्छ तेस्रोचाहिँ महाभूत उत्पन्न गर्न सक्ने तन्मात्राहरूको भूतसर्ग हो।

**चतुर्थ ऐन्द्रियः सर्गो यस्तु ज्ञानक्रियात्मकः।**
**वैकारिको देवसर्गः पञ्चमो यन्मयं मनः॥ १६॥**

पदार्थ–
**चतुर्थः** = चौथो
**सर्गः** = सृष्टि
**ऐन्द्रियः** = इन्द्रियहरूको हो
**यः** = जो
**ज्ञानक्रियात्मकः** = ज्ञान र क्रियाशक्ति सम्पन्न हुन्छ
**पञ्चमः** = पाँचौँ
**वैकारिकः** = सात्त्विक अहङ्कारबाट उत्पन्न
**देवसर्गः** = इन्द्रियाधिष्ठाता देवताहरूको सृष्टि हो
**मनः** = मन पनि
**यन्मयं** = सात्त्विक अहङ्कारबाट नै उत्पन्न हुन्छ

**वाक्यार्थ–** चौथो सृष्टि इन्द्रियको हो। यो ज्ञान र क्रियाशक्तिले सम्पन्न हुन्छ। पाँचौ सृष्टि सात्त्विक अहङ्कारबाट उत्पन्न भएको इन्द्रियाधिष्ठाता देवताको हो। मन पनि सात्त्विक अहङ्कारबाट नै उत्पन्न हुन्छ।

**षष्ठस्तु तमसः सर्गो यस्त्वबुद्धिकृतः प्रभोः।**
**षडिमे प्राकृताः सर्गा वैकृतानपि मे शृणु॥ १७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **प्रभोः** = हे विदुरजी | **अबुद्धिकृतः** = आवरण र विक्षेप गर्ने | **प्राकृतसर्गाः** = प्राकृत सृष्टि हुन् |
| **यः** = जुन | **सर्गः** = सृष्टि छ त्यो | **मे** = म (भगवान्) बाट भएका |
| **षष्ठः** = छैटौँ | **इमे** = यी | **वैकृतान्** = वैकृत सर्गहरूलाई |
| **तमसः** = अविद्याको | **षड्** = छ | **अपि** = पनि |
| | | **शृणु** = सुन्नुहोस् |

**वाक्यार्थ–** हे विदुरजी ! जुन अविद्याको आवरण र विक्षेप गर्ने छैटौँ सृष्टि छ त्यो यी छ प्राकृत सृष्टि हुन् म (भगवान्)बाट भएका वैकृत सर्गहरूलाई पनि सुन्नुहोस्।

**रजोभाजो भगवतो लीलेयं हरिमेधसः।**
**सप्तमो मुख्यसर्गस्तु षड्विधस्तस्थुषां च यः॥ १८॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **इयं** = यो सृष्टि | **रजोभाजः** = रजोगुणलाई लिई ब्रह्मा बन्ने भगवान्को | **तस्थुषां** = स्थावर वृक्षादिहरूको |
| **हरिमेधसः** = जहाँ बुद्धि लगाउँदा संसारको हरण हुन्छ त्यस्ता | **लीला** = लीलामात्र हो | **मुख्यसर्गः** = मुख्य वैकृत सर्ग छ त्यो |
| **भगवतः** = भगवान्को | **यः** = जुन चाहिँ | **तु** = चाहिँ |
| | **षड्विधः** = छ प्रकारको | **सप्तमः** = सातौँ सृष्टि हो |

**वाक्यार्थ–** जो भगवान् आफ्ना चिन्तन गर्ने सम्पूर्ण भक्तहरूको दुःखलाई हरण गर्नुहुन्छ, यो सम्पूर्ण सृष्टि उहाँ भगवान् श्रीहरिको लीलामात्र हो। उहाँ नै ब्रह्माको रूपमा रजोगुणलाई स्वीकार गरेर जगत्को रचना गर्नुहुन्छ। जुनचाहिँ छ प्रकारको स्थावर वृक्षादिहरूको मुख्य वैकृत सर्ग छ त्योचाहिँ सातौँ सृष्टि हो।

**वनस्पत्योषधिलतात्वक्सारा वीरुधो द्रुमाः।**
**उत्स्रोतसस्तमःप्राया अन्तःस्पर्शा विशेषिणः॥ १९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **वनस्पत्योषधिलतात्वक्साराः** = वनस्पति, औषधि, लता, कडा बोक्रा भएका बाँस आदि | **द्रुमाः** = फूलपछि फल फल्ने वृक्षहरू यी सबै ६ थरी सृष्टिहरू | **तमःप्राया** = तमोगुणको आधिक्य भएका |
| **वीरुधः** = भुइँमैं उत्पन्न हुने लहराहरू | **उत्स्रोतसः** = माथितिर आहार सञ्चार गर्ने | **अन्तःस्पर्शा** = भित्रभित्रै स्पर्शको महसुस गर्ने |
| | | **विशेषिणः** = फरक–फरक गुणले युक्त छन् |

**वाक्यार्थ–** वनस्पति, औषधि, लता, कडा बोक्रा भएका बाँस आदि भुइमैं फल्ने लहरा, फूलपछि फल फल्ने वृक्षहरू यी सबै ६ थरी सृष्टिहरूको सञ्चार जराबाट माथितिर हुन्छ। तमोगुणको आधिक्य भएका यिनीहरू भित्र भित्र नै केवल स्पर्शको अनुभव गर्दछन्। तथा यी प्रत्येक फरक–फरक गुणले युक्त छन्।

**तिरश्चामष्टमः सर्गः सोऽष्टाविंशद्विधो मतः।**

**अविदो भूरितमसो घ्राणज्ञा हृद्यवेदिनः॥ २०॥**

पदार्थ–

**अष्टमः** = आठौं
**सर्गः** = सृष्टि
**तिरश्चाम्** = तेर्सो गरी हिँड्ने प्राणीहरूको हो
**सः** = त्यो सृष्टि
**अष्टाविंशद्विधः** = अठ्ठाईस प्रकारको
**मतः** = मानिन्छ (यी सबै)
**अविदः** = भविष्यको विचार नगर्ने
**भूरितमसः** = तमोगुणको आधिक्य भएका
**घ्राणज्ञाः** = नाकबाट आहार थाह पाउने
**हृदि** = हृदयमा
**अवेदिनः** = लामा विचार नरहने खालका छन्

**वाक्यार्थ–** आठौं सृष्टि तेर्सो गरी हिँड्ने प्राणीको हो। त्यो सृष्टि अठ्ठाईस प्रकारको मानिन्छ। तमोगुणको अधिकताको कारण भविष्यको विचार नगर्ने यिनीहरू नाकबाट आहार थाहा पाउने र हृदयमा लामा विचार नरहने खालका छन्।

**गौरजो महिषः कृष्णः सूकरो गवयो रुरुः।**

**द्विशफाः पशवश्चेमे अविरुष्ट्रश्च सत्तम॥ २१॥**

पदार्थ–

**सत्तम** = हे विदुरजी
**गौः** = गाई र
**अजः** = बोको
**महिषः** = भैंसी
**कृष्णः** = कृष्णमृग
**सूकरः** = सुँगुर
**गवयः** = नीलगाई
**रुरुः** = रुरुमृग
**अविः** = भेडा
**उष्ट्रः** = उँट
**च** = समेत
**इमे** = यी नौथरी
**पशवः** = पशुहरू
**द्विशफाः** = दुई खुरवाला प्राणी हुन्

**वाक्यार्थ–** हे विदुरजी ! गाई, बोको, भैंसी, कृष्णमृग, सुँगुर, नीलगाई, रुरुमृग, भेडा र उँट यी दुई खुर भएका प्राणीहरू हुन्।

**खरोऽश्वोऽश्वतरो गौरः शरभश्चमरी तथा।**

**एते चैकशफाः क्षत्तः शृणु पञ्चनखान् पशून्॥ २२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **खरः** = गधा | **चमरी** = चौँरी | **पञ्चनखान्** = पाँच नङ्ग्रा हुने |
| **अश्वः** = घोडा | **एते** = यीचाहिँ | **पशून्** = पशुहरूको बारेमा |
| **अश्वतरः** = खच्चर | **एकशफाः** = एक खुरवाला हुन् | **च** = पनि |
| **गौरः** = गौरमृग | **क्षत्तः** = हे विदुरजी | **शृणु** = सुन्नुहोस् |
| **शरभः** = विशेष प्रकारको मृग | **तथा** = यस्तै | |

**वाक्यार्थ–** गधा, घोडा, खच्चर, गौरमृग, शरभमृग, चौँरी यीचाहिँ एक खुरवाला हुन्। हे विदुरजी ! अब पाँचनङ्ग्रे पशुपक्षीहरूको नाम सुन्नुहोस्।

**श्वा सृगालो वृको व्याघ्रो मार्जारः शशशल्लकौ।**

**सिंहः कपिर्गजः कूर्मो गोधा च मकरादयः॥ २३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **श्वा** = कुक्कुर | **शशशल्लकौ** = खरायो र शल्लक | **कूर्मः** = कछुवा |
| **सृगालः** = स्याल | **सिंहः** = सिंह | **गोधा** = गोही |
| **वृकः** = ब्वाँसो | **कपिः** = बाँदर | **मकरादयः** = विशेष गोही आदि |
| **व्याघ्रः** = बाघ | **गजः** = हात्ती | **च** = पनि |
| **मार्जारः** = बिरालो | | पाँच नङ् हुने पशु हुन् |

**वाक्यार्थ–**कुकुर, स्याल, गिद्ध, ब्वाँसो, बाघ, बिरालो, खरायो, शल्लक, सिंह, बाँदर, हात्ती, कछुवा, गोही, विशेष किसिमका गोही आदि जन्तुहरू पनि पाँच नङ् हुने पशु हुन्।

**कङ्कगृध्रबकश्येनभासभल्लूकबर्हिणः।**

**हंससारसचक्राह्व काकोलूकादयः खगाः॥ २४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **कङ्कगृध्रबकश्येनभासभल्लूक-बर्हिणः** = बकुल्ला, गिद्ध, बराह, बाज, भास, भालु र मयुर आदि र | **हंससारसचक्राह्वकाकोलूकादयः** = हाँस, सारस, चखेवा, काग र लाटोकोसेरो आदि | **खगाः** = उड्नेवाला पक्षीहरू हुन् |

**वाक्यार्थ–** बकुल्ला, गिद्ध, बराह, बाज, भास, भालु र मयुर आदि र हाँस, सारस, चखेवा र काग र लाटोकोसेरो आदि उड्नेवाला पक्षीहरू हुन्।

**अर्वाक्स्रोतस्तु नवमः क्षत्तरेकविधो नृणाम्।**

**रजोऽधिकाः कर्मपरा दुःखे च सुखमानिनः॥ २५॥**

पदार्थ–

**क्षत्तः** = हे विदुरजी
**अर्वाक्स्रोतः** = तलतिर आहार सञ्चार गर्ने
**नवमः** = नवौँ सृष्टि
**नृणाम्** = मनुष्यहरूको हो
**एकविधः** = एक प्रकारको छ (मनुष्यहरू)
**रजःअधिकाः** = रजोगुणको आधिक्य भएका
**कर्मपराः** = कर्मपरायण अनि
**दुःखे च** = दुःखमा पनि
**सुखमानिनः** = सुख मान्दछन्

**वाक्यार्थ–** विदुरजी ! नवौँ सृष्टि मनुष्यहरूको हो। यो एकै प्रकारको हुन्छ। यसको आहारको प्रवाह मुखभन्दा तलतिर हुन्छ। मनुष्यहरू जो गुणको आधिक्य भएका, कर्मपरायण, दुःखरूप विषयमा पनि सुख मान्नेवाला हुन्छन्।

**वैकृतास्त्रय एवैते देवसर्गश्च सत्तम।**
**वैकारिकस्तु यः प्रोक्तः कौमारस्तूभयात्मकः॥ २६॥**

**पदार्थ–**
**सत्तम** = हे विदुरजी
**एते** = यी
**त्रयः** = तीन थरी सृष्टि र
**देवसर्गः** = देवसृष्टि
**च** = पनि
**वैकृताः** = वैकृत सृष्टि हुन्
**यः** = जुन
**वैकारिकः** = महत्तत्त्व आदिको वैकारिक सृष्टि हो त्यो
**प्रोक्तः** = प्राकृतसृष्टिमा बताइयो
**कौमारः** = सनत्कुमार आदिको सृष्टि
**तु** = चाहिँ
**उभयात्मकः** = प्राकृत र वैकृत दुबै प्रकारको हो

**वाक्यार्थ–** हे विदुरजी ! तीन थरी सृष्टि र देवसृष्टि पनि वैकृत सृष्टि हुन्। जुन महत्तत्त्व आदिको वैकारिक सृष्टि हो त्यो प्राकृत सृष्टिमा बताइयो सनत्कुमार आदिको सृष्टि चाहिँ प्राकृत र वैकृत दुबै प्रकारको हो।

**देवसर्गश्चाष्टविधो विबुधाः पितरोऽसुराः।**
**गन्धर्वाप्सरसः सिद्धा यक्षरक्षांसि चारणाः॥ २७॥**
**भूतप्रेतपिशाचाश्च विद्याध्राः किन्नरादयः।**
**दशैते विदुराख्याताः सर्गास्ते विश्वसृक्कृताः॥ २८॥**

**पदार्थ–**
**देवसर्गः** = देवसर्ग
**च** = चाहिँ
**अष्टविधः** = आठ प्रकारको हुन्छ
**विबुधाः** = देवताहरू
**पितरः** = पितृहरू
**असुराः** = असुरहरू
**गन्धर्वाप्सरसः** = गन्धर्व, अप्सरा आदि
**सिद्धाः** = सिद्धहरू
**यक्षरक्षांसि** = यक्ष र राक्षसहरू
**चारणाः** = चारणहरू
**भूतप्रेतपिशाचाः च** = भूत, प्रेत र पिशाच आदि
**च** = पनि
**विद्याध्राः** = विद्याधरहरू

**किन्नरादयः** = किन्नरहरू समेत आठै प्रकारभित्र पर्दछन्
**विदुर** = हे विदुरजी
**विश्वसृक्कृताः** = जगत्स्रष्टा ब्रह्माजीद्वारा रचित
**एते** = यी
**दश** = दश प्रकारका
**सर्गाः** = सृष्टिहरू
**ते** = तपाईंलाई
**आख्याताः** = बताइए

**वाक्यार्थ–** देवता, पितृ, असुर, गन्धर्व, अप्सरा, यक्ष, राक्षस, सिद्ध, चारण र विद्याधर, भूतप्रेत-पिशाच, विद्याधरहरू किन्नरहरू समेत आठै प्रकारभित्र पर्दछन्। हे विदुरजी ! यसप्रकार जगत्कर्ता ब्रह्माजीद्वारा रचिएको दश प्रकारको सृष्टि मैले तपाईंलाई बताएँ।

**अतः परं प्रवक्ष्यामि वंशान् मन्वन्तराणि च।**
**एवं रजःप्लुतः स्रष्टा कल्पादिष्वात्मभूर्हरिः॥**
**सृजत्यमोघसङ्कल्प आत्मैवात्मानमात्मना॥ २९॥**

पदार्थ–
**अतः परं** = यस पछि
**वंशान्** = वंश र
**मन्वन्तराणि** = मन्वन्तरहरू
**च** = पनि
**प्रवक्ष्यामि** = बताउनेछु
**एवं** = यसरी
**स्रष्टा** = जगत्रचयिता
**अमोघसङ्कल्पः** = सत्यसङ्कल्प
**हरिः** = भगवान्ले
**कल्पादिषु** = कल्पको आदिमा
**रजःप्लुतः** = रजोगुणी
**आत्मभूः** = ब्रह्मा बनेर
**आत्मा** = आफैं नै
**आत्मना** = आफैंले
**आत्मानम्** = आफैंलाई
**सृजति** = जगत्को रूपमा बनाउनुहुन्छ

**वाक्यार्थ–** अब म अगाडि वंश र मन्वन्तर आदिको वर्णन गर्नेछु। यसप्रकार सृष्टि गर्ने सत्यसङ्कल्प हरि नै ब्रह्माको रूपमा प्रत्येक कल्पको आदिमा रजोगुणले व्याप्त भएर स्वयं नै जगत्को रूपमा आफ्नो नै रचना गर्नुहुन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां तृतीयस्कन्धे**

**दशमोऽध्यायः॥ १०॥**

# अथ एकादशोऽध्यायः

## मन्वन्तर आदि कालविभागको वर्णन

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नभयो)

**चरमः सद्विशेषाणामनेकोऽसंयुतः सदा ।**

**परमाणुः स विज्ञेयो नृणामैक्यभ्रमो यतः ॥ १ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सद्विशेषाणाम्** = पृथ्वी आदिका अंशहरूमध्ये | **सदा** = सधैँ (कार्य नाश हुँदा पनि रहिरहने) | **यतः** = जुन परमाणुबाट |
| **असंयुतः** = समुदाय अवस्थामा प्राप्त नभएको (त्यसैले) | **सः** = त्यो | **नृणाम्** = मान्छेहरूलाई |
| **अनेकः** = कुनै एक कार्यको रूपमा नदेखिएको अनि | **चरमः** = अन्तिम अंश | **ऐक्यभ्रमः** अद्वैतको भ्रम हुन्छ |
| | **परमाणुः** = परमाणु भनी | |
| | **विज्ञेयः** = बुझ्नुपर्दछ | |

**वाक्यार्थ**– पृथ्वी आदिका अंशहरूमध्ये समुदाय अवस्थामा प्राप्त नभएकाले कुनै कार्यको रूपमा नदेखिएको अनि कार्य नाश हुँदा पनि रहिरहने अन्तिम अंशलाई परमाणु भनी बुझ्नुपर्दछ। जुन परमाणुबाट मान्छेहरूलाई अद्वैतको भ्रम हुन्छ।

**सत एव पदार्थस्य स्वरूपावस्थितस्य यत् ।**

**कैवल्यं परममहानविशेषो निरन्तरः ॥ २ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **स्वरूपावस्थितस्य** = प्रलयमा आफ्नै स्वरूपमा अवस्थित | **अविशेषः** = विशेष विवक्षा नहुँदा | **कैवल्यं** = जुन एक भावमा पुगेको (कारणावस्थाको) स्थिति छ, त्यो |
| **सतः पदार्थस्य एव** = (पृथिवी आदि) भएका पदार्थहरूको नै | **निरन्तरः** = भेदरहित हुँदा | **परममहान्** = परम महान् हो |
| | **यत्** = जुन | |

**वाक्यार्थ**– प्रलयमा आफ्नै स्वरूपमा अवस्थित पृथिवी आदि पदार्थहरूको नै विशेष विवक्षा नभई भेदरहित हुँदा जुन एक भावमा पुगेको कारणावस्थाको स्थिति छ, त्यो परम महान् हो।

**एवं कालोऽप्यनुमितः सौक्ष्म्ये स्थौल्ये च सत्तम ।**

**संस्थानभुक्त्या भगवानव्यक्तो व्यक्तभुग्विभुः ॥ ३ ॥**

पदार्थ–

**सहसा** = अकस्मात्
**कामानुजेन** = कामको भाइ क्रोधद्वारा
**ईषत्** = केही
**उपप्लुताक्षाः** = आँखा रातो बनाएर
**ऊचुः** = भन्नुभयो

**वाक्यार्थ–** पूजाका योग्य भए पनि भगवान्को ती द्वारपालहरूबाट देवताहरूले हेर्दाहेर्दै रोकिएका ती कुमारहरूले प्रियतम प्रभुको दर्शनमा बाधा परेपछि अकस्मात् क्रोधले केही आँखा केही रातो बनाएर भन्नुभयो।

**मुनय ऊचुः** (मुनिहरूले भन्नुभयो)

**को वामिहैत्य भगवत्परिचर्ययोच्चै-**
**स्तद्धर्मिणां निवसतां विषमः स्वभावः।**
**तस्मिन् प्रशान्तपुरुषे गतविग्रहे वां**
**को वात्मवत् कुहकयोः परिशङ्कनीयः॥ ३२॥**

पदार्थ–

**उच्चैः** = दीर्घकालीन
**भगवत्परिचर्यया** = भगवान्को सेवाबाट
**इह** = यहाँ
**एत्य** = आई
**निवसतां** = निवास गर्ने
**तद्धर्मिणां** = भगवान्जस्तै समदर्शी हुनुपर्ने
**वाम्** = तिमीहरूको
**विषमः** = विषम
**स्वभावः** = स्वभाव
**कः** = किन (भयो)
**तस्मिन्** = उहाँ
**गतविग्रहे** = विरोधरहित
**प्रशान्तपुरुषे** = प्रशान्तपुरुष भगवान्मा भयशङ्का पनि नभएकाले
**कुहकयोः** = कपटी
**वां** = तिमीहरूका लागि
**आत्मवत्** = आफैँलाई जस्तै
**परिशङ्कनीयः** = शङ्का गर्नुपर्ने
**कः** = यहाँ अरू को छ ?

**वाक्यार्थ–** दीर्घकालीन भगवान्को सेवाबाट यहाँ आई निवास गर्ने भगवान्जस्तै समदर्शी हुनुपर्ने तिमीहरूको विषम स्वभाव किन भयो ? उहाँ विरोधरहित प्रशान्तपुरुष भगवान्मा भयशङ्का पनि नभएकाले कपटी तिमीहरूका लागि आफैँलाई जस्तै शङ्का गर्नुपर्ने यहाँ अरू को छ ?

**न ह्यन्तरं भगवतीह समस्तकुक्षा-**
**वात्मानमात्मनि नभो नभसीव धीराः।**
**पश्यन्ति यत्र युवयोः सुरलिङ्गिनोः किं**
**व्युत्पादितं ह्युदरभेदि भयं यतोऽस्य॥ ३३॥**

पदार्थ–

**समस्तकुक्षौ** = सम्पूर्ण संसारलाई आफूमा नै अन्तर्भूत गर्ने
**यत्र** = जो
**भगवति** = भगवान्मा
**धीराः** = ज्ञानीहरू
**आत्मनि** = परमात्मामा नै
**आत्मानम्** = आफूलाई
**नभसि** = आकाशमा रहेको
**नभः** = आकाशलाई
**इव** = जस्तै देख्दछन्
**अन्तरं** = भेद
**न पश्यन्ति** = देख्दैनन्
**यतः** = जुन शत्रुबाट
**अस्य** = राजा आदिलाई
**उदरभेदि** = वृत्तिनाशको
**भयं** = भय हुन्छ, त्यसै गरी
**इह** = यहाँ
**सुरलिङ्गिनोः** = देवरूपधारी
**युवयोः** = तिमीहरूले
**व्युत्पादितं** = भय उत्पन्न गर्ने कारण
**किं** = के (देख्यौ)

**वाक्यार्थ–** सम्पूर्ण संसारलाई आफूमा नै अन्तर्भूत गर्ने जो भगवान्मा ज्ञानीहरू परमात्मामा नै आफूलाई आकाशमा रहेको आकाशलाई जस्तै देख्दछन्, भेद देख्दैनन्। जुन शत्रुबाट राजा आदिलाई वृत्तिनाशको भय हुन्छ, त्यसै गरी यहाँ देवरूपधारी तिमीहरूले भय उत्पन्न गर्ने कारण के देख्यौ ?

**तद्वाममुष्य परमस्य विकुण्ठभर्तुः**
**कर्तुं प्रकृष्टमिह धीमहि मन्दधीभ्याम्।**
**लोकानितो व्रजतमन्तरभावदृष्ट्या**
**पापीयसस्त्रय इमे रिपवोऽस्य यत्र ॥ ३४ ॥**

पदार्थ–

**तत्** = त्यसै कारण
**अमुष्य** = यस्ता
**परमस्य** = परमात्मा
**विकुण्ठभर्तुः** = प्रभुका सेवक
**मन्दधीभ्याम्** = मन्दबुद्धिवाला
**वाम्** = तिमीहरूकै
**प्रकृष्टम्** = उपकार
**कर्तुं** = गर्न
**इह** = यहाँ
**धीमहि** = हामी विचार गर्दछौँ
**अन्तरभावदृष्ट्या** = विषमदृष्टि गरेकाले
**इतः** = वैकुण्ठबाट
**पापीयसः** = पापमय
**लोकान्** = योनिहरूमा
**व्रजतम्** = जाओ
**यत्र** = जहाँ
**अस्य** = भेदबुद्धिवालाका लागि
**इमे** = यी
**त्रयः** = काम, क्रोध र लोभ गरी तीन
**रिपवः** = शत्रुहरू विद्यमान छन्

**वाक्यार्थ–** त्यसै कारण यस्ता परमात्मा प्रभुका सेवक मन्दबुद्धिवाला तिमीहरूकै उपकार गर्न यहाँ हामी विचार गर्दछौँ। विषमदृष्टि गरेकाले वैकुण्ठबाट पापमय योनिहरूमा जाओ। जहाँ भेदबुद्धिवालाका लागि यी काम, क्रोध र लोभ गरी तीन शत्रुहरू विद्यमान छन्।

**तेषामितीरितमुभाववधार्य घोरं**

**तं ब्रह्मदण्डमनिवारणमस्त्रपूगैः।**
**सद्यो हरेरनुचरावुरु बिभ्यतस्तत्**
**पादग्रहावपततामतिकातरेण॥ ३५॥**

पदार्थ–

**तेषाम्** = ती मुनिहरूको
**इति** = यस्तो
**ईरितम्** = भनाइ (श्राप)लाई
**अवधार्य** = सुनेर
**अस्त्रपूगैः** = अस्त्रहरूद्वारा पनि
**अनिवारणम्** = हटाउन नसकिने
**तं** = त्यो
**घोरं** = घोर
**ब्रह्मदण्डम्** = ब्रह्मदण्डरूप श्रापबाट
**उरुबिभ्यतः** = धेरै डराएका
**हरेः** = भगवान् हरिका
**उभौ** = ती दुबै
**अनुचरौ** = सेवकहरू
**सद्यः** = तत्काल नै
**अतिकातरेण** = अत्यन्त दीनताका साथ
**पादग्रहौ** = मुनिहरूको पाउ समातेर
**अपतताम्** = भूमिमा लडीबुडी गरे

**वाक्यार्थ–** ती मुनिहरूको यस्तो श्राप सुनेर अस्त्रहरूद्वारा पनि हटाउन नसकिने त्यो घोर ब्रह्मदण्डरूप श्रापबाट धेरै डराएका भगवान् हरिका ती दुबै सेवकहरू तत्काल नै अत्यन्त दीनताका साथ मुनिहरूको पाउ समातेर भूमिमा लडीबुडी गर्न थाले।

**भूयादघोनि भगवद्भिरकारि दण्डो**
**यो नौ हरेत सुरहेलनमप्यशेषम्।**
**मा वोऽनुतापकलया भगवत्स्मृतिघ्नो**
**मोहो भवेदिह तु नौ व्रजतोरधोऽधः॥ ३६॥**

पदार्थ–

**भगवद्भिः** = तपाईंहरूद्वारा
**अघोनि** = पापीमाथि नै
**दण्डः** = दण्ड
**अकारि** = गरिएको हो
**यः** = जुन दण्डले
**नौ** = हामीहरूको
**सुरहेलनम्** = भगवान्को आज्ञालाई उल्लङ्घन गरेको
**अशेषम्** = सम्पूर्ण दोषलाई
**हरेत** = हरण गरोस्
**इह** = अहिले
**तु** = चाहिँ
**अधः अधः** = तल्लो-तल्लो योनिमा
**व्रजतः** = जाने
**नौ** = हामीहरूमाथि
**वः** = तपाईंहरूको (दया उत्पन्न गर्नका लागि भएको)
**अनुतापकलया** = अनुतापको केही मात्राले गर्दा
**भगवत्स्मृतिघ्नः** = भगवत्स्मरणलाई रोक्ने
**मोहः** = मोह
**मा भूयात्** = नहोस्

**वाक्यार्थ–** हजुरहरूद्वारा पापीमाथि नै दण्ड गरिएको हो जुन दण्डले हामीहरूको भगवान्को आज्ञालाई उल्लङ्घन गरेको सम्पूर्ण दोषलाई हरण गरोस् ! अहिले चाहिँ तल्लो-तल्लो योनिमा जाने हामीहरूमाथि तपाईंहरूको दया उत्पन्न गर्नका लागि भएको अनुतापको केही मात्राले गर्दा भगवत्स्मरणलाई रोक्ने मोह नहोस्।

**एवं तदैव भगवानरविन्दनाभः**
**स्वानां विबुध्य सदतिक्रममार्यहृद्यः।**
**तस्मिन् ययौ परमहंसमहामुनीना-**
**मन्वेषणीयचरणौ चलयन् सहश्रीः॥ ३७॥**

**पदार्थ–**

**एवं** = यसप्रकार
**आर्यहृद्यः** = साधुका प्रिय
**अरविन्दनाभः** = नाभिमा कमल हुनुभएका
**भगवान्** = भगवान् विष्णु
**स्वानां** = आफ्ना पार्षदले गरेको
**सदतिक्रमम्** = साधुको अतिक्रमणलाई
**विबुध्य** = बुझेर
**तदा एव** = त्यही समय
**परमहंसमहामुनीनाम्** = परमहंस साधुजनले पनि
**अन्वेषणीयचरणौ** = खोज्नुपर्ने आफ्ना चरणलाई
**चलयन्** = चलाउँदै
**सहश्रीः** = लक्ष्मीसहित भई
**तस्मिन्** = त्यस स्थलमा
**ययौ** = पुग्नुभयो

**वाक्यार्थ–** यसप्रकार साधुका प्रिय नाभिमा कमल हुनुभएका भगवान् विष्णु आफ्ना पार्षदले गरेको साधुको अतिक्रमणलाई बुझेर त्यही समय परमहंस साधुजनले पनि खोज्नुपर्ने आफ्ना चरणलाई चलाउँदै लक्ष्मीसहित भई त्यस स्थलमा पुग्नुभयो।

**तं त्वागतं प्रतिहृतौपयिकं स्वपुम्भि-**
**स्तेऽचक्षताक्षविषयं स्वसमाधिभाग्यम्।**
**हंसश्रियोर्व्यजनयोः शिववायुलोल-**
**च्छुभ्रातपत्रशशिकेसरशीकराम्बुम्॥ ३८॥**

**पदार्थ–**

**स्वपुम्भिः** = आफ्ना पार्षदहरूद्वारा
**प्रतिहृतौपयिकं** = छत्रचामर आदि सामग्री अर्पित गरिनुभएका
**हंसश्रियोः** = राजहाँसको जस्तै शोभा भएका
**व्यजनयोः** = पङ्खाको
**शिववायुलोलच्छुभ्रातपत्रशशिकेसरशीकराम्बुम्** = अनुकूल हावाद्वारा सेतो छातामा रहेका मोतीहरू हल्लिँदा अमृतवर्षी चन्द्रकिरणझैं शोभित
**स्वसमाधिभाग्यम्** = एकमात्र भजनीय तत्त्व भएर पनि

| | | |
|---|---|---|
| **अक्षविषयं** = नेत्रगोचर भई | **तं** = भगवान्लाई | **अचक्षत** = देख्नुभयो |
| **आगतं** = आउनुहुने | **ते** = ती मुनिहरूले | |

**वाक्यार्थ–** आफ्ना पार्षदहरूद्वारा छत्रचामर आदि सामग्री अर्पित गरिनुभएका, राजहाँसको जस्तै शोभा भएका पङ्खाको अनुकूल हावाद्वारा सेतो छातामा रहेका मोतीहरू हल्लिँदा अमृतवर्षी चन्द्रकिरणझैँ शोभित, एकमात्र भजनीय तत्त्व भएर पनि नेत्रगोचर भई आउनुहुने भगवान्लाई मुनिहरूले देख्नुभयो।

**कृत्स्नप्रसादसुमुखं स्पृहणीयधाम**
**स्नेहावलोककलया हृदि संस्पृशन्तम्।**
**श्यामे पृथावुरसि शोभितया श्रिया स्व-**
**श्चूडामणिं सुभगयन्तमिवात्मधिष्ण्यम्॥ ३९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **कृत्स्नप्रसादसुमुखं** = सबैको कल्याण गर्ने मुहारयुक्त | **संस्पृशन्तम्** = छोइरहनुभएको | **चूडामणिं** = मुकुटमणि |
| **स्पृहणीयधाम** = समस्त सद्गुणका आश्रय | **पृथौ** = विशाल | **आत्मधिष्ण्यम्** = आफ्नो वैकुण्ठलाई |
| **स्नेहावलोककलया** = स्नेहमय हेराइद्वारा | **श्यामे** = श्याम | **सुभगयन्तम् इव** = शोभित गराउँदैझैँ आउनुभएका (प्रभुलाई मुनिहरूले देख्नुभयो) |
| **हृदि** = भक्तहरूको हृदय | **उरसि** = वक्षःस्थलमा | |
| | **शोभितया** = शोभित हुनुभएकी | |
| | **श्रिया** = लक्ष्मीद्वारा | |
| | **स्वः** = स्वर्ग लोकको | |

**वाक्यार्थ–** सबैको कल्याण गर्ने मुहारयुक्त, समस्त सद्गुणका आश्रय स्नेहमय हेराइद्वारा भक्तहरूको हृदय छोइरहनुभएको विशाल श्याम वक्षःस्थलमा शोभित हुनुभएकी लक्ष्मीद्वारा स्वर्ग लोकको मुकुटमणि आफ्नो वैकुण्ठलाई शोभित गराउँदैझैँ आउनुभएका प्रभुलाई मुनिहरूले देख्नुभयो।

**पीतांशुके पृथुनितम्बिनि विस्फुरन्त्या**
**काञ्च्यालिभिर्विरुतया वनमालया च।**
**वल्गुप्रकोष्ठवलयं विनतासुतांसे**
**विन्यस्तहस्तमितरेण धुनानमब्जम्॥ ४०॥**

पदार्थ–

**पृथुनितम्बिनि** = विशाल नितम्बमा रहेको
**पीतांशुके** = पीताम्बरमाथि
**विस्फुरन्त्या** = झलमलाइरहेको
**काञ्च्या** = मेखला
**च** = र
**वनमालया** = वनमालाद्वारा शोभित अनि
**विनतासुतांसे** = गरुडजीको काँधमा
**वल्गुप्रकोष्ठवलयं** = सुन्दर चुराहरूले युक्त
**विन्यस्तहस्तम्** = एक हात राख्नुभएको र
**इतरेण** = अर्को हातले
**अलिभिः** = भ्रमरसमूहको
**विरुतया** = ध्वनिपूर्ण
**अब्जम्** = लीलाकमललाई
**धुनानम्** = घुमाउँदै गर्नुभएका (प्रभुलाई मुनिहरूले देख्नुभयो)

**वाक्यार्थ–** विशाल नितम्बमा रहेको पीताम्बरमाथि झलमलाइरहेको मेखला र वनमालाद्वारा शोभित अनि गरुडजीको काँधमा सुन्दर चुराहरूले युक्त एक हात राख्नुभएको र अर्को हातले भ्रमरसमूहको ध्वनिपूर्ण लीलाकमललाई घुमाउँदै गर्नुभएका प्रभुलाई मुनिहरूले देख्नुभयो।

**विद्युत्क्षिपन्मकरकुण्डलमण्डनार्ह-**
**गण्डस्थलोन्नसमुखं मणिमत्किरीटम्।**
**दोर्दण्डषण्डविवरे हरता परार्ध्य-**
**हारेण कन्धरगतेन च कौस्तुभेन ॥ ४१ ॥**

पदार्थ–
**विद्युत्क्षिपन्मकरकुण्डलमण्डनार्ह-गण्डस्थलोन्नसमुखं** = विद्युत्प्रकाशलाई तिरस्कार गर्ने मकराकार कुण्डलको शोभालाई बढाउने गाला र उन्नत नासिकाले युक्त मुख हुनुभएका
**मणिमत्किरीटम्** = मणियुक्त मुकुट लगाउने
**दोर्दण्डषण्डविवरे** = भुजाहरूको बीचमा
**हरता** = मन हरण गर्ने
**परार्ध्यहारेण** = बहुमूल्य हार र
**कन्धरगतेन** = काँधमा रहेको
**कौस्तुभेन** = कौस्तुभ मणिद्वारा
**च** = पनि (विभूषित प्रभुलाई मुनिहरूले देख्नुभयो)

**वाक्यार्थ–** विद्युत्प्रकाशलाई तिरस्कार गर्ने मकराकार कुण्डलको शोभालाई बढाउने गाला र उन्नत नासिकाले युक्त मुख हुनुभएका मणियुक्त मुकुट लगाउने भुजाहरूको बीचमा मन हरण गर्ने बहुमूल्य हार र काँधमा रहेको कौस्तुभमणिद्वारा पनि विभूषित प्रभुलाई मुनिहरूले देख्नुभयो।

**अत्रोपसृष्टमिति चोत्स्मितमिन्दिरायाः**
**स्वानां धिया विरचितं बहुसौष्ठवाढ्यम्।**
**मह्यं भवस्य भवतां च भजन्तमङ्गं**

## नेमुर्निरीक्ष्य न वितृप्तदृशो मुदा कैः ॥ ४२ ॥

**पदार्थ–**

**इन्दिरायाः** = लक्ष्मीजीको
**उत्स्मितम्** = सौन्दर्यको अभिमान
**अत्र** = यहाँ
**उपसृष्टम् इति** = आएर भङ्ग भयो भन्दै
**स्वानां** = आफ्ना
**धिया** = भक्तहरूले
**विरचितं** = मनमनै विचार गरिनुभएका
**बहुसौष्ठवाढ्यम्** = अत्यन्त सौन्दर्यशाली श्रीविग्रहयुक्त भगवान्लाई (देखेपछि)
**मह्यं** = म
**भवस्य** = शङ्करजी र
**भवतां च** = तपाईं देवताहरूको लागि समेत
**भजन्तम्** = भजन गर्न योग्य
**अङ्गं** = मूर्तिलाई
**निरीक्ष्य** = देखेर
**मुदा** = अत्यन्त प्रसन्नताले
**न वितृप्तदृशः** = नेत्र तृप्त नभएका मुनिहरूले
**कैः** = शिरहरूले
**नेमुः** = प्रभुलाई प्रणाम गर्नुभयो

**वाक्यार्थ–** लक्ष्मीजीको सौन्दर्यको अभिमान यहाँ आएर भङ्ग भयो भन्दै आफ्ना भक्तहरूले मनमनै विचार गरिनुभएका, अत्यन्त सौन्दर्यशाली श्रीविग्रहयुक्त भगवान्लाई देखेपछि म, शङ्करजी र तपाईं देवताहरूका लागि समेत भजन गर्नयोग्य मूर्तिलाई देखेर अत्यन्त प्रसन्नताले नेत्र तृप्त नभएका मुनिहरूले शिरहरूले प्रभुलाई प्रणाम गर्नुभयो।

## तस्यारविन्दनयनस्य पदारविन्द-
## किञ्जल्कमिश्रतुलसीमकरन्दवायुः ।
## अन्तर्गतः स्वविवरेण चकार तेषां
## सङ्क्षोभमक्षरजुषामपि चित्ततन्वोः ॥ ४३ ॥

**पदार्थ–**

**तस्य** = त्यस्ता
**अरविन्दनयनस्य** = कमलयन भगवान्को
**पदारविन्दकिञ्जल्कमिश्रतुलसी-मकरन्दवायुः** = चरणकमलमा रहेको केसरमिश्रित तुलसीको सुगन्धले युक्त वायु
**स्वविवरेण** = नासिकाछिद्रबाट
**अन्तर्गतः** = अन्तःकरणमा प्रवेश गरेर
**अक्षरजुषाम्** = अक्षर (निर्गुण) ब्रह्मको चिन्तन गर्न
**अपि** = पनि
**तेषां** = उहाँ सनकादि मुनिहरूको
**चित्ततन्वोः** = मन र शरीरभित्र
**सङ्क्षोभम्** = क्षोभ
**चकार** = उत्पन्न भयो

**वाक्यार्थ–** त्यस्ता कमलयन भगवान्को चरणकमलमा रहेको केसरमिश्रित तुलसीको सुगन्धले युक्त वायु नासिकाछिद्रबाट अन्तःकरणमा प्रवेश गरेर अक्षर (निर्गुण) ब्रह्मको चिन्तन गर्ने भए तापनि सनकादि मुनिहरूको मन र शरीरभित्र क्षोभ उत्पन्न भयो।

**ते वा अमुष्य वदनासितपद्मकोश-**
**मुद्वीक्ष्य सुन्दरतराधरकुन्दहासम्।**
**लब्धाशिषः पुनरवेक्ष्य तदीयमङ्घ्रि-**
**द्वन्द्वं नखारुणमणिश्रयणं निदध्युः ॥ ४४ ॥**

**पदार्थ–**

**ते** = ती (मुनि)हरूले
**अमुष्य** = भगवान्‌को
**सुन्दरतराधरकुन्दहासम्** = अति सुन्दर ओठ र कुन्द कलिकाको जस्तो श्वेत दन्तपंक्तियुक्त हाँसोले शोभित
**वदनासितपद्मकोशम्** = नीलकमल जस्तै मुखाकृति हुनुभएका भगवान्‌लाई
**उद्वीक्ष्य** = हेरेर नै
**लब्धाशिषः** = कृतकृत्य भएर
**पुनः** = फेरि पनि
**नखारुणमणिश्रयणं** = राता-राता नखज्योतिले युक्त
**तदीयम्** = भगवान्‌का
**अङ्घ्रिद्वन्द्वं** = चरणकमलहरूको
**अवेक्ष्य** = दर्शन गरेर
**निदध्युः** = ध्यान गर्न लाग्नुभयो

**वाक्यार्थ–** ती मुनिहरूले भगवान्‌को अति सुन्दर ओठ र कुन्द कलिकाको जस्तो श्वेत दन्तपंक्तियुक्त हाँसोले शोभित नीलकमल जस्तै मुखाकृति हुनुभएका भगवान्‌लाई हेरेर नै कृतकृत्य भएर फेरि पनि राता-राता नखज्योतिले युक्त भगवान्‌का चरणकमलहरूको दर्शन गरेर ध्यान गर्न लाग्नुभयो।

**पुंसां गतिं मृगयतामिह योगमार्गै-**
**र्ध्यानास्पदं बहुमतं नयनाभिरामम्।**
**पौंस्नं वपुर्दर्शयानमनन्यसिद्धै-**
**रौत्पत्तिकैः समगृणन्युतमष्टभोगैः ॥ ४५ ॥**

**पदार्थ–**

**योगमार्गैः** = विभिन्न योगप्रणालीद्वारा
**गतिं** = आफ्नो सद्गति
**मृगयताम्** = खोज्ने
**पुंसां** = पुरुषहरूको लागि पनि
**इह** = यहाँ
**ध्यानास्पदं** = ध्यान गर्न योग्य
**बहुमतं** = धेरै तत्त्ववादीहरूद्वारा आदृत
**नयनाभिरामम्** = आँखालाई आनन्द दिने
**पौंस्नं** = आदिपुरुषको
**वपुः** = शरीर
**दर्शयानम्** = प्रकट गर्ने अनि
**अनन्यसिद्धैः** = अरूद्वारा पाउन नसकिने तर
**औत्पत्तिकैः** = प्रभुमा चाहिँ स्वतः रहने
**अष्टभोगैः** = अष्टसिद्धिहरूले
**युतम्** = युक्त प्रभुलाई
**समगृणन्** = स्तुति गर्न लाग्नुभयो

**वाक्यार्थ–** विभिन्न योगप्रणालीद्वारा आफ्नो सद्गति खोज्ने मानिसहरूको लागि पनि यहाँ ध्यान गर्न योग्य धेरै तत्त्ववादीहरूद्वारा आदृत आँखालाई आनन्द दिने आदिपुरुषस्वरूप प्रकट गर्ने अनि अरूद्वारा पाउन न सकिने तर प्रभुमा चाहिँ स्वतः रहने अष्टसिद्धिहरूले युक्त प्रभुलाई स्तुति गर्न लाग्नुभयो।

**कुमारा ऊचुः** (कुमारहरूले भन्नुभयो)

**योऽन्तर्हितो हृदि गतोऽपि दुरात्मनां त्वं**
**सोऽद्यैव नो नयनमूलमनन्त राद्धः।**
**यर्ह्येव कर्णविवरेण गुहां गतो नः**
**पित्रानुवर्णितरहा भवदुद्भवेन॥ ४६॥**

**पदार्थ–**

**यः** = जो प्रभु
**दुरात्मनां** = दुष्टहरूको
**हृदि** = हृदयमा
**गतः** = रहेर पनि
**अन्तर्हितः** = भित्रै नै लुक्नुभएको छ
**अनन्त** = हे प्रभो
**सः** = त्यस्ता
**त्वं** = अन्तर्यामी तपाईं
**नः** = हामीहरूको
**नयनमूलम्** = नेत्रगोचर भई
**अद्य** = आज
**एव** = नै
**राद्धः** = प्राप्त हुनुभएको छ
**भवदुद्भवेन** = तपाईंबाट जन्मेका
**पित्रा** = हाम्रा पिताजी (ब्रह्मा)ले
**अपि** = पनि
**यर्हि एव** = जुन समयमा
**अनुवर्णितरहाः** = हजुरको रहस्य वर्णन गर्नुभएको थियो (त्यही वेलामा नै हजुर)
**कर्णविवरेण** = कर्णमार्गबाट
**नः** = हामीहरूको
**गुहां** = हृदयभित्र
**गतः** = पस्नुभएको थियो

**वाक्यार्थ–** जो प्रभु दुष्टहरूको हृदयमा रहेर पनि भित्रै नै लुक्नुभएको छ, हे प्रभो! त्यस्ता अन्तर्यामी तपाईं हामीहरूको नेत्रगोचर भई आज नै प्राप्त हुनुभएको छ। तपाईंबाट जन्मेका हाम्रा पिताजी (ब्रह्मा)ले पनि जुन समयमा हजुरको रहस्य वर्णन गर्नुभएको थियो त्यही वेलामा नै हजुर कर्णमार्गबाट हामीहरूको हृदयभित्र पस्नुभएको थियो।

**तं त्वां विदाम भगवन् परमात्मतत्त्वं**
**सत्त्वेन सम्प्रति रतिं रचयन्तमेषाम्।**
**यत्तेऽनुतापविदितैर्दृढभक्तियोगै-**
**रुद्ग्रन्थयो हृदि विदुर्मुनयो विरागाः॥ ४७॥**

**पदार्थ–**

**भगवन्** = हे प्रभु
**सम्प्रति** = अहिले
**एषाम्** = यी भक्तहरूका लागि
**सत्त्वेन** = सत्त्वगुण स्वीकार गरी
**रतिं** = प्रीति
**रचयन्तम्** = उत्पन्न गराउने
**तं** = त्यस्ता
**त्वां** = तपाईंलाई
**परमात्मतत्त्वं** = परब्रह्मतत्त्वको रूपमा
**विदाम** = जान्दछौँ
**यत्** = जुन ब्रह्मतत्त्वलाई
**ते** = तपाईंको
**अनुतापविदितैः** = कृपालभ्य
**दृढभक्तियोगैः** = आत्यन्तिक भक्तिद्वारा
**उद्ग्रन्थयः** = हृदयग्रन्थिभेदन गरेका
**विरागाः** = विरक्त
**मुनयः** = मुनिहरूले
**हृदि** = हृदयभित्र
**विदुः** = साक्षात्कार गर्दछन्

**वाक्यार्थ–** हे प्रभु ! अहिले भक्तहरूका लागि सत्त्वगुण स्वीकार गरी प्रीति उत्पन्न गराउने यस्ता तपाईंलाई परब्रह्मतत्त्वको रूपमा जान्दछौँ जुन ब्रह्मतत्त्वलाई तपाईंको कृपालभ्य आत्यन्तिक भक्तिद्वारा हृदयग्रन्थिभेदन गरेका विरक्त मुनिहरूले हृदयभित्र साक्षात्कार गर्दछन्।

**नात्यन्तिकं विगणयन्त्यपि ते प्रसादं**
**किम्वन्यदर्पितभयं भ्रुव उन्नयैस्ते।**
**येऽङ्ग त्वदङ्घ्रिशरणा भवतः कथायाः**
**कीर्तन्यतीर्थयशसः कुशला रसज्ञाः॥ ४८॥**

पदार्थ–

**अङ्ग** = हे प्रिय प्रभो
**कीर्तन्यतीर्थयशसः** = कीर्तनीय परमपवित्र यश हुनुभएका
**भवतः** = तपाईंका
**कथायाः** = लीलाचरित्रको
**रसज्ञाः** = रसग्रहण गर्न
**कुशलाः** = कुशल
**ये** = जति पनि भक्तहरू
**त्वदङ्घ्रिशरणाः** = तपाईंको चरणमा आश्रित छन्
**ते** = तिनीहरू
**आत्यन्तिकं** = मोक्षरूप
**ते** = तपाईंको
**प्रसादं** = प्रसाद
**अपि** = समेत
**न विगणयन्ति** = ठुलो मान्दैनन्
**ते** = तपाईंका
**भ्रुवः** = आँखिभौंको
**उन्नयैः** = उठाइले मात्र
**अर्पितभयं** = अत्यन्त भयभीत हुने
**अन्यत्** = अरू इन्द्रादि पदभोगलाई त
**किमु** = के ठुलो मान्दथे

**वाक्यार्थ–** हे प्रिय प्रभो ! कीर्तनीय परमपवित्र यश हुनुभएका तपाईंका लीलाचरित्रको रसग्रहण गर्न कुशल जति पनि भक्तहरू तपाईंको चरणमा आश्रित छन् तिनीहरू मोक्षरूप तपाईंको प्रसादसमेत ठुलो मान्दैनन्। तपाईंका आँखिभौंको उठाइले मात्र अत्यन्त भयभीत हुने अरू इन्द्रादि पदभोगलाई त के ठुलो मान्दथे ?

**कामं भवः स्ववृजिनैर्निरयेषु नः स्ता–**

**च्चेतोऽलिवद्यदि नु ते पदयो रमेत।**
**वाचश्च नस्तुलसिवद्यदि तेऽङ्घ्रिशोभाः**
**पूर्येत ते गुणगणैर्यदि कर्णरन्ध्रः॥ ४९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **नु** = निश्चय नै | **च** = पनि | **यदि** = यदि |
| **ते** = तपाईंको | **तुलसिवत्** = तुलसीजस्तै | **पूर्येत** = भरिन्छ भने |
| **पदयः** = चरणकमलमा | **यदि** = यदि | **नः** = हामीहरूको |
| **चेतः** = चित्त | **ते** = तपाईंको | **स्ववृजिनैः** = आ-आफ्नो पापको कारणले |
| **अलिवत्** = भ्रमराजस्तै | **अङ्घ्रिशोभाः** = चरणसँग सम्बन्धित हुन्छन् भने | **निरयेषु** = नरकहरूमा |
| **यदि** = यदि | **ते** = तपाईंका | **भवः** = जन्म |
| **रमेत** = रमाउँछ भने | **गुणगणैः** = गुणगानहरूद्वारा | **कामं** = अवश्य नै |
| **नः** = हाम्रा | **कर्णरन्ध्रः** = कर्णविवर | **स्तात्** = होस् |
| **वाचः** = वाणीहरू | | |

**वाक्यार्थ–** निश्चय नै तपाईंको चरणकमलमा हाम्रो चित्त भ्रमराजस्तै यदि रमाउँछ भने, हाम्रा वाणीहरू पनि तुलसीजस्तै यदि तपाईंका चरणसँग सम्बन्धित हुन्छन् र तपाईंका गुणगानहरूद्वारा कर्णविवर यदि भरिन्छ भने हामीहरूको आ-आफ्नो पापको कारणले नरकहरूमा जन्म हुनुपरे पनि अवश्य नै होस्।

**प्रादुश्चकर्थ यदिदं पुरुहूत रूपं**
**तेनेश निर्वृतिमवापुरलं दृशो नः।**
**तस्मा इदं भगवते नम इद्विधेम**
**योऽनात्मनां दुरुदयो भगवान् प्रतीतः॥ ५०॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **पुरुहूत** = हे विपुलकीर्तिसम्पन्न | **तेन** = त्यो रूपद्वारा | **अनात्मनां** = विषयासक्तहरूका लागि |
| **यत्** = जुन | **नः** = हाम्रा | **दुरुदयः** = अदृश्य |
| **इदं** = यो | **दृशः** = आँखाहरूले | **यः** = जुन |
| **रूपं** = मङ्गलमय रूप | **अलं** = पूर्ण | **भगवान्** = प्रभु |
| **प्रादुश्चकर्थ** = हाम्रो अघि प्रकट गराउनुभयो | **निर्वृतिम्** = शान्तिलाई | **इदं** = हाम्रो अगाडि |
| **ईश** = हे प्रभो | **अवापुः** = प्राप्त गरे | **प्रतीतः** = प्रतीत हुनुभयो |

**तस्मै** = त्यस्ता
**भगवते** = भगवान्लाई
**नमः** = नमस्कार
**विधेम** = गर्छौं

**वाक्यार्थ–** हे विपुलकीर्तिसम्पन्न ! जुन मङ्गलमय रूप हाम्रो अघि प्रकट गराउनुभयो, हे प्रभो ! त्यस रूपद्वारा हाम्रा आँखाहरूले पूर्ण शान्तिलाई प्राप्त गरे। विषयासक्तहरूका लागि अदृश्य जुन प्रभु हाम्रो अगाडि प्रतीत हुनुभयो त्यस्ता भगवान्लाई नमस्कार गर्छौं।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां तृतीयस्कन्धे**

**पञ्चदशोऽध्यायः ॥ १५ ॥**

# अथ षोडशोऽध्यायः

## जय र विजयको वैकुण्ठबाट पतन

**ब्रह्मोवाच** (ब्रह्माजीले भन्नुभयो)

**इति तद् गृणतां तेषां मुनीनां योगधर्मिणाम्।**
**प्रतिनन्द्य जगादेदं विकुण्ठनिलयो विभुः॥ १॥**

पदार्थ—

| | | |
|---|---|---|
| **विकुण्ठनिलयः** = वैकुण्ठवासी | **तेषां** = ती | **प्रतिनन्द्य** = प्रशंसा गर्दै |
| **विभुः** = सर्वव्यापक भगवान् हरि | **योगधर्मिणाम्** = योगी | **इदं** = यो |
| **इति** = पूर्वोक्त प्रकारले | **मुनीनां** = सनकादि मुनिहरूको | **जगाद** = भन्न लाग्नुभयो |
| **गृणतां** = स्तुति गर्दै गरेका | **तत्** = त्यस स्तुतिलाई | |

**वाक्यार्थ—** वैकुण्ठवासी सर्वव्यापक भगवान् हरि पूर्वोक्त प्रकारले स्तुति गर्दै गरेका ती योगी सनकादि मुनिहरूको स्तुतिलाई प्रशंसा गर्दै यसो भन्न लाग्नुभयो।

**श्रीभगवानुवाच** (भगवान्ले भन्नुभयो)

**एतौ तौ पार्षदौ मह्यं जयो विजय एव च।**
**कदर्थीकृत्य मां यद्वो बह्वक्रातामतिक्रमम्॥ २॥**

पदार्थ—

| | | |
|---|---|---|
| **एतौ** = यी | **मह्यं** = मेरा | **कदर्थीकृत्य** = हेलाँ गरेर |
| **तौ** = दुई | **पार्षदौ** = पार्षद (अङ्गरक्षक, सेवक) | **वः** = हजुरहरूमाथि |
| **जयः** = जय | | **बहु** = ठुलो |
| **च** = र | **यत्** = जो यिनीहरूले | **अतिक्रमम्** = अपराध |
| **विजयः** = विजय नाम गरेका | **मां** = म नारायणलाई | **अक्राताम्** = गरे |

**वाक्यार्थ—** यी दुई जय र विजय नाम गरेका मेरा पार्षद (अङ्गरक्षक, सेवक) यिनीहरूले म नारायणलाई हेलाँ गरेर हजुरहरूमाथि ठुलो अपराध गरे।

**यस्त्वेतयोर्धृतो दण्डो भवद्भिर्मामनुव्रतैः।**
**स एवानुमतोऽस्माभिर्मुनयो देवहेलनात्॥ ३॥**

पदार्थ—

| | | |
|---|---|---|
| **मुनयः** = हे मुनिहरू | **देवहेलनात्** = तपाईंहरूजस्ता देवताहरूको तिरस्कार गरे वापत | **धृतः** = दिनुभयो |
| **माम्** = ममा | **यः** = जुन | **सः** = त्यही |
| **अनुव्रतैः** = अनुरक्त हुनुभएका | **एतयोः** = यी दुईलाई | **एव** = नै |
| **भवद्भिः** = हजुरहरूले | **दण्डः** = सजाय | **अस्माभिः** = हामीहरूद्वारा |
| | | **अनुमतः** = स्वीकार गरिन्छ |

**वाक्यार्थ—** हे मुनिहरू ! ममा अनुरक्त हुनुभएका हजुरहरूले आफूजस्ता देवताहरूको तिरस्कार गरेबापत यी दुईलाई जुन सजाय दिनुभयो त्यही नै हामीहरूद्वारा स्वीकार गरिन्छ।

**तद् वः प्रसादयाम्यद्य ब्रह्म दैवं परं हि मे।**

**तद्धीत्यात्मकृतं मन्ये यत् स्वपुम्भिरसत्कृताः॥ ४॥**

पदार्थ—

| | | |
|---|---|---|
| **हि** = निश्चय नै | **अद्य** = आज | **यत्** = जुन अपराध छ |
| **ब्रह्म** = ब्राह्मण | **वः** = हजुरहरूलाई | **तत्** = त्यो |
| **मे** = मेरा | **प्रसादयामि** = प्रसन्न गराउँछु | **आत्मकृतं** = आफैँले नै गरेजस्तो |
| **परं** = ठुला | **स्वपुम्भिः** = मेरा सेवकहरूद्वारा | **मन्ये** = मान्दछु |
| **दैवं** = देवता हुनुहुन्छ | **असत्कृताः** = सत्कार नगर्नुरूप | |
| **तत्** = त्यसकारणले | **इति** = यो | |

**वाक्यार्थ—** निश्चय नै ब्राह्मण मेरा ठुला देवता हुनुहुन्छ। त्यसकारणले आज हजुरहरूलाई प्रसन्न गराउँछु। मेरा सेवकहरूद्वारा सत्कार नगर्नुरूप जुन अपराध छ त्यो आफैँले नै गरेजस्तो मान्दछु।

**यन्नामानि च गृह्णाति लोको भृत्ये कृतागसि।**

**सोऽसाधुवादस्तत्कीर्तिं हन्ति त्वचमिवामयः॥ ५॥**

पदार्थ—

| | | |
|---|---|---|
| **भृत्ये** = नोकरहरूद्वारा | **सः** = त्यो | **तत्कीर्तिं** = त्यस मालिकको कीर्ति |
| **कृतागसि** = अपराध गरिँदा | **असाधुवादः** = निन्दा | **हन्ति** = नाश गर्दछ |
| **लोकः** = संसारले | **आमयः** = रोगले | |
| **यन्नामानि** = जसको नाम | **त्वचम्** = छाला | |
| **गृह्णाति** = लिन्छ | **इव** = झैँ | |

**वाक्यार्थ—** नोकरहरूद्वारा अपराध गरिँदा संसारले जसको नाम लिन्छ त्यस निन्दावादले रोगले छालालाई झैँ त्यस मालिकको कीर्तिलाई नाश गर्दछ।

**यस्यामृतामलयशःश्रवणावगाहः**
**सद्यः पुनाति जगदाश्वपचाद्विकुण्ठः ।**
**सोऽहं भवद्भ्य उपलब्धसुतीर्थकीर्ति-**
**श्छिन्द्यां स्वबाहुमपि वः प्रतिकूलवृत्तिम् ॥ ६ ॥**

पदार्थ–

**यस्य** = जसको
**अमृतामलयशःश्रवणावगाहः** = अमृतसमान आह्लादक निर्मल कीर्तिको श्रवणरूप स्नानमात्रले
**आश्वपचात्** = चाण्डालपर्यन्त
**जगत्** = संसार
**सद्यः** = तुरुन्तै
**पुनाति** = पवित्र गर्दछ
**विकुण्ठः** = जित्न नसकिने (सर्वशक्तिशाली)
**भवद्भ्यः** = हजुरहरूद्वारा
**सुतीर्थकीर्तिः** = राम्राराम्रा प्रसिद्धिहरू
**उपलब्धः** = प्राप्त गरेको
**सः** = त्यो
**अहं** = म नारायण
**वः** = हजुरहरूको
**प्रतिकूलवृत्तिम्** = विरुद्ध काम गर्ने
**स्वबाहुम्** = आफ्नो हात
**अपि** = पनि
**छिन्द्यां** = काट्न तयार छु अरूको त के कुरा

**वाक्यार्थ–** जसको अमृतसमान आह्लादक निर्मल कीर्तिको श्रवणरूप स्नानमात्रले चाण्डालपर्यन्त संसारलाई तुरुन्तै पवित्र गर्दछ त्यस्ता जित्न नसकिने (सर्वशक्तिशाली) हजुरहरूद्वारा राम्राराम्रा प्रसिद्धिहरू प्राप्त गरेको त्यो म नारायण हजुरहरूको विरुद्ध काम गर्ने आफ्नो हात पनि काट्न तयार छु अरूको त के कुरा ?

**यत्सेवया चरणपद्मपवित्ररेणुं**
**सद्यः क्षताखिलमलं प्रतिलब्धशीलम् ।**
**न श्रीर्विरक्तमपि मां विजहाति यस्याः**
**प्रेक्षालवार्थ इतरे नियमान् वहन्ति ॥ ७ ॥**

पदार्थ–

**यत्सेवया** = जुन ब्राह्मणदेवहरूको सेवाको प्रभावले
**चरणपद्मपवित्ररेणुं** = मेरा कमलरूपी पाउका पवित्र कणहरूले
**अखिलमलं** = सबै किसिमका दोषहरूलाई
**सद्यः** = छिट्टै
**क्षत** = नाश गर्दछन् (र जसको सेवाले मैले)
**शीलम्** = असल स्वभाव
**प्रतिलब्धः** = प्राप्त गरेको छु
**यस्याः** = जसको
**प्रेक्षालवार्थे** = दर्शनमात्रका निम्ति
**इतरे** = ब्रह्मा आदि देवता पनि
**नियमान्** = तप व्रतादि
**वहन्ति** = पालन गर्दछन् ती
**श्रीः** = लक्ष्मीले

| | |
|---|---|
| **विरक्तम्** = उदासीन बन्दा | **न विजहाति** = छाड्दिनन् |
| **अपि** = पनि | (त्यस्ता हजुरलाई कुनै कष्ट पर्न |
| **मां** = मलाई | दिन्नँ) |

**वाक्यार्थ–** जुन ब्राह्मणदेवहरूको सेवाको प्रभावले मेरा कमलरूपी पाउका पवित्र कणहरूले सबै किसिमका दोषहरूलाई छिट्टै नाश गर्दछन् र जसको सेवाले मैले असल स्वभाव प्राप्त गरेको छु। जसको दर्शनमात्रका निम्ति ब्रह्मा आदि देवता पनि तप, व्रतादि पालन गर्दछन्। ती लक्ष्मीले उदासीन बन्दा पनि मलाई छाड्दिनन्। त्यस्ता हजुरलाई कुनै कष्ट पर्न दिन्नँ।

**नाहं तथाद्मि यजमानहविर्विताने**
**श्च्योतद्घृतप्लुतमदन् हुतभुङ्मुखेन।**
**यद् ब्राह्मणस्य मुखतश्चरतोऽनुघासं**
**तुष्टस्य मय्यवहितैर्निजकर्मपाकैः॥ ८॥**

पदार्थ–

| | | |
|---|---|---|
| **यत्** = जसरी | **निजकर्मपाकैः** = आफ्ना कर्मका | **विताने** = ठुलाठुला यज्ञहरूमा |
| **श्च्योतद्घृतप्लुतम्** = चुहिने गरी | फलद्वारा | **यजमानहविः** = यजमानद्वारा |
| घिउले परिपूर्ण भएको | **तुष्टस्य** = सन्तुष्ट भएका | हवन गरिएका चरु |
| पायसादिको | **ब्राह्मणस्य** = ब्राह्मणहरूको | **हुतभुङ्मुखेन** = अग्निका |
| **अनुघासं** = प्रत्येक गाँसहरू | **मुखतः** = मुखद्वारा | मुखद्वारा खाँदा पनि |
| **चरतः** = खाने | **अहं** = म सन्तुष्ट भएर | **न** = सन्तुष्ट हुन्नँ |
| **मयि** = म नारायणमा | **अद्मि** = खान्छु | |
| **अवहितैः** = समर्पित गरेका | **तथा** = त्यसरी | |

**वाक्यार्थ–** जसरी चुहिने गरी घिउले परिपूर्ण भएको पायसादिको प्रत्येक गाँसहरू खाने म नारायणमा समर्पित गरेका आफ्ना कर्मका फलद्वारा सन्तुष्ट भएका ब्राह्मणहरूको मुखद्वारा सन्तुष्ट भएर खान्छु त्यसरी ठुलाठुला यज्ञहरूमा यजमानद्वारा हवन गरिएका चरु अग्निका मुखद्वारा खाँदा पनि सन्तुष्ट हुन्नँ।

**येषां बिभर्म्यहमखण्डविकुण्ठयोग-**
**मायाविभूतिरमलाङ्घ्रिरजः किरीटैः।**
**विप्रांस्तु को न विषहेत यदर्हणाम्भः**
**सद्यः पुनाति सहचन्द्रललामलोकान्॥ ९॥**

पदार्थ–

**अखण्डविकुण्ठयोगमाया-विभूतिः** = निरन्तर चलिरहने अप्रतिहत शक्ति भएकी योगमायारूप ऐश्वर्यले युक्त भएको
**यत्** = जसको
**अर्हणाम्भः** = पादोदकरूप गङ्गाले
**सहचन्द्रललामलोकान्** = शिरमा चन्द्रमा धारण गर्ने भगवान् शिवसहित सम्पूर्ण जगत्लाई
**सद्यः** = स्पर्शमात्रले
**पुनाति** = पवित्र गर्दछिन् (यस्तो शक्तिसम्पन्न भएर पनि)
**अहम्** = म नारायणलाई
**येषां** = जसको
**अमलाङ्घ्रिरजः** = पवित्र चरणधूली
**किरीटैः** = मुकुटद्वारा
**बिभर्मि** = धारण गर्दछु (त्यस्ता)
**विप्रान्** = ब्राह्मणहरूलाई
**कः** = कसले
**न विषहेत** = सहन नगरोस्

**वाक्यार्थ–** निरन्तर चलिरहने अप्रतिहत शक्ति भएकी योगमायारूप ऐश्वर्यले युक्त भएको जसको पादोदकरूप गङ्गाले शिरमा चन्द्रमा धारण गर्ने भगवान् शिवसहित सम्पूर्ण जगत्लाई स्पर्शमात्रले पवित्र गर्दछिन्, यस्तो शक्तिसम्पन्न भएर पनि म नारायणलाई जसको पवित्र चरणधूलि मुकुटद्वारा धारण गर्दछु त्यस्ता ब्राह्मणहरूलाई कसले सहन नगरोस्।

**ये मे तनूर्द्विजवरान् दुहतीर्मदीया**
**भूतान्यलब्धशरणानि च भेदबुद्ध्या।**
**द्रक्ष्यन्त्यघक्षतदृशो ह्यहिमन्यवस्तान्**
**गृध्रा रुषा मम कुषन्त्यधिदण्डनेतुः॥ १०॥**

पदार्थ–

**अघक्षतदृशः** = पापले अन्धा भएका
**ये** = जो व्यक्तिहरू
**मे** = मेरा
**तनूः** = शरीर भनिएका
**द्विजवरान्** = ब्राह्मणहरू
**मदीया** = मेरी
**दुहतीः** = दुध दिने गाई र
**अलब्धशरणानि च** = शरण नपाएका
**भूतानि** = प्राणीहरूलाई
**च** = पनि
**भेदबुद्ध्या** = भेददृष्टिले
**द्रक्ष्यन्ति** = हेर्दछन्
**तान्** = तिनीहरूलाई
**हि** = निश्चय नै
**मम** = मद्वारा
**अधिदण्डनेतुः** = दण्ड दिन नियुक्त गरिएका यमराजका
**अहिमन्यवः** = सर्पको जस्तै क्रोध भएका
**गृध्राः** = गिद्ध जस्ता दूतहरूले
**रुषा** = क्रोधले
**कुषन्ति** = आफ्ना मुखका चुच्चाहरूले लुछेर मार्दछन्

**वाक्यार्थ–** पापले अन्धा भएका जो व्यक्तिहरू मेरा शरीर भएका ब्राह्मणहरू, मेरी दुध दिने गाई र शरण नपाएका प्राणीहरूलाई पनि भेददृष्टिले हेर्दछन् तिनीहरूलाई निश्चय नै मद्वारा दण्ड दिन

नियुक्त गरिएका यमराजका सर्पको जस्तै क्रोध भएका गिद्ध जस्ता दूतहरूले क्रोधले आफ्ना मुखका चुच्चाहरूले लुछेर मार्दछन्।

**ये ब्राह्मणान् मयि धिया क्षिपतोऽर्चयन्त-**

**स्तुष्यद्धृदः स्मितसुधोक्षितपद्मवक्त्राः।**

**वाण्यानुरागकलयात्मजवद् गृणन्तः**

**सम्बोधयन्त्यहमिवाहमुपाहृतस्तैः॥ ११॥**

पदार्थ—

**ये** = जो
**क्षिपतः** = तिरस्कार गर्नेवाला
**ब्राह्मणान्** = ब्राह्मणहरूलाई
**मयि** = मेरो स्वरूप हो भन्ने
**धिया** = बुद्धिले
**अर्चयन्तः** = पूजा गर्दै
**तुष्यद्धृदः** = प्रसन्न चित्तले
**स्मितसुधोक्षितपद्मवक्त्राः** = मुस्कानरूपी अमृतले भरिएको मुखकमलले
**अहम् इव** = म नारायणले भृगुलाई
**इव** = झैं
**वाण्यानुरागकलया** = प्रेमपूर्ण वाणीले
**आत्मजवद्** = सन्तानलाई सम्झाएझैं
**गृणन्तः** = स्तुति गर्दै
**सम्बोधयन्ति** = प्रार्थना गर्दछन्
**तैः** = तिनीहरूद्वारा
**अहम्** = म
**उपाहृतः** = वशीभूत हुन्छु

**वाक्यार्थ—** जो तिरस्कार गर्नेवाला ब्राह्मणहरूलाई मेरो स्वरूप हो भन्ने बुद्धिले पूजा गर्दै प्रसन्न चित्तले मुस्कानरूपी अमृतले भरिएको मुखकमलले म नारायणले भृगुलाई झैं प्रेमपूर्ण वाणीले सन्तानलाई सम्झाएझैं स्तुति गर्दै प्रार्थना गर्दछन् तिनीहरूद्वारा म वशीभूत हुन्छु।

**तन्मे स्वभर्तुरवसायमलक्षमाणौ**

**युष्मद्व्यतिक्रमगतिं प्रतिपद्य सद्यः।**

**भूयो ममान्तिकमितां तदनुग्रहो मे**

**यत् कल्पतामचिरतो भृतयोर्विवासः॥ १२॥**

पदार्थ—

**तत्** = त्यसकारण
**स्वभर्तुः** = आफ्नो मालिक
**मे** = मेरो
**अवसायम्** = आशय
**अलक्षमाणौ** = नजानेका (यी जय र विजय दुई)
**युष्मद्व्यतिक्रमगतिं** = तपाईंहरूलाई तिरस्कार गरे बापतको सजाय
**प्रतिपद्य** = भोगेर
**सद्यः** = तुरुन्त
**भूयः** = फेरि
**मम** = मेरो
**अन्तिकम्** = सामीप्यलाई
**इतां** = प्राप्त गरून्
**तत्** = त्यो
**भृतयो :** = सेवकहरूको
**विवासः** = वियोग

| | |
|---|---|
| **अचिरतः** = छिट्टै | **मे** = मलाई |
| **कल्पताम्** = गर्नुहोस् अथवा गरेर | **अनुग्रहः** = कृपा गर्नुहोस् |

**वाक्यार्थ–** त्यसकारण आफ्नो मालिक मेरो आशय नजानेका यी जय र विजय दुई तपाईंहरूलाई तिरस्कार गरे बापतको सजाय भोगेर तुरुन्त फेरि मेरो सामीप्यलाई प्राप्त गरून् ! त्यो सेवकहरूको वियोग छिट्टै गर्नुहोस् अथवा गरेर मलाई कृपा गर्नुहोस्।

**ब्रह्मोवाच** (ब्रह्माजीले भन्नुभयो)

**अथ तस्योशतीं देवीमृषिकुल्यां सरस्वतीम्।**

**नास्वाद्य मन्युदष्टानां तेषामात्माप्यतृप्यत॥ १३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अथ** = त्यसपछि (भगवान्ले) अनुग्रह गरेपछि | **सरस्वतीम् देवीम्** = वाणी | **आत्मा** = मन |
| **तस्य** = भगवान् नारायणको | **आस्वाद्य** = सुनेर | **अपि** = पनि |
| **उशतीं** = मधुर | **मन्युदष्टानां** = क्रोधरूपी सर्पले डसिएका | **न अतृप्यत** = तृप्त भएन |
| **ऋषिकुल्यां** = पवित्र | **तेषाम्** = सनकादि मुनिहरूको | |

**वाक्यार्थ–** त्यसपछि भगवान्ले अनुग्रह गरेपछि भगवान् नारायणको मधुर पवित्र वाणी सुनेर क्रोधरूपी सर्पले डसिएका सनकादि मुनिहरूको मन पनि तृप्त भएन।

**सतीं व्यादाय शृण्वन्तो लघ्वीं गुर्वर्थगह्वराम्।**

**विगाह्यागाधगम्भीरां न विदुस्तच्चिकीर्षितम्॥ १४॥**

पदार्थ–

| | | |
|---|---|---|
| **व्यादाय** = कान खोलेर (ध्यानपूर्वक) | **अगाधगम्भीरां** = अत्यन्त गम्भीर | **तच्चिकीर्षितम्** = भगवान्को आशयलाई |
| **लघ्वीं** = छोटो तर | **सतीं** = भगवान्को वाणी | **न विदुः** = जान्न सक्नुभएन |
| **गुर्वर्थगह्वराम्** = गूढ अर्थले भरिएको | **विगाह्य** = विचारपूर्वक | |
| | **शृण्वन्तः** = सुनेर पनि | |

**वाक्यार्थ–** कान खोलेर (ध्यानपूर्वक) छोटो तर गूढ अर्थले भरिएको अत्यन्त गम्भीर भगवान्को वाणी विचारपूर्वक सुनेर पनि भगवान्को आशयलाई जान्न सक्नुभएन।

**ते योगमाययारब्ध पारमेष्ठ्यमहोदयम्।**

**प्रोचुः प्राञ्जलयो विप्राः प्रहृष्टाः क्षुभितत्वचः॥ १५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ते** = पूर्वोक्त | **प्रहृष्टाः** = प्रसन्न भएकाले | **प्रोचुः** = भन्न लाग्नुभयो |
| **योगमायया** = योगमायाद्वारा | **क्षुभितत्वचः** = रोमहर्षले युक्त भएका | |
| **आरब्धपारमेष्ठ्यमहोदयम्** = प्रदर्शित ऐश्वर्यको उत्कर्षलाई देखेर | **विप्राः** = ब्राह्मणहरू | |
| | **प्राञ्जलयः** = हात जोडेर | |

**वाक्यार्थ–** पूर्वोक्त योगमायाद्वारा प्रदर्शित ऐश्वर्यको उत्कर्षलाई देखेर प्रसन्न भएकाले रोमहर्षले युक्त भएका ब्राह्मणहरू हात जोडेर भन्न लाग्नुभयो।

**ऋषय ऊचुः** (ऋषिहरूले भन्नुभयो)

**न वयं भगवन् विद्मस्तव देव चिकीर्षितम्।**
**कृतो मेऽनुग्रहश्चेति यदध्यक्षः प्रभाषसे ॥ १६ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **देव** = हे देव | **न विद्मः** = बुझ्न सकेनौँ | **प्रभाषसे** = भन्दै हुनुहुन्छ (यो अनौठो व्यवहारदृष्टिले) |
| **भगवन्** = भगवान् | **मे** = मलाई | **तव** = हजुरले |
| **यदध्यक्षः** = जो सर्वेश्वर भएर पनि | **अनुग्रहः** = कृपा | **चिकीर्षितम्** = के चाहनुभएको हो |
| **वयं** = हामीले | **कृतः इति** = गर्नुहोस् भन्ने | |

**वाक्यार्थ–** हे देव भगवान् ! जो सर्वेश्वर भएर पनि हामीले हजुरलाई बुझ्न सकेनौँ। मलाई कृपा गर्नुहोस् भन्दै हुनुहुन्छ। यो अनौठो व्यवहारदृष्टिले हजुरले के चाहनुभएको हो ?

**ब्रह्मण्यस्य परं दैवं ब्राह्मणाः किल ते प्रभो।**
**विप्राणां देवदेवानां भगवानात्मदैवतम् ॥ १७ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **ब्रह्मण्यस्य** = ब्राह्मणको हित गर्ने | **किल** = निश्चय नै यो लोकशिक्षाका निमित्त हो वास्तवमा | **विप्राणां** = ब्राह्मणहरूको |
| **ते** = हजुरका निम्ति | **प्रभो** = हे भगवान् (हजुर) | **भगवान्** = भगवान् हजुर नै |
| **ब्राह्मणाः** = = ब्राह्मणहरू | **देवदेवानां** = देवताहरू र | **आत्मदैवतं** = आराध्यदेव हुनुहुन्छ |
| **परं** = ठुला | | |
| **दैवतम्** = देवता हुन् | | |

**वाक्यार्थ–** ब्राह्मणको हित गर्ने हजुरका निम्ति ब्राह्मणहरू ठुला देवता हुन्, निश्चय नै यो लोकशिक्षाका निमित्त हो। हे भगवान् ! हजुर देवताहरू र ब्राह्मणहरूको आराध्यदेव हुनुहुन्छ।

**त्वत्तः सनातनो धर्मो रक्ष्यते तनुभिस्तव।**
**धर्मस्य परमो गुह्यो निर्विकारो भवान् मतः॥ १८॥**

पदार्थ–

**सनातनधर्मः** = सनातन धर्म
**त्वत्तः** = हजुरबाट नै सञ्चालित छ
**तव** = हजुरकै
**तनुभिः** = विभिन्न अवतारहरूद्वारा
**रक्ष्यते** = रक्षा गरिएको
**धर्मस्य** = सनातन धर्मको
**गुह्यः** = रहस्यमय
**निर्विकारः** = विकाररहित
**परमः** = सार पनि
**भवान्** = हजुर नै
**मतः** = मानिनुहुन्छ

**वाक्यार्थ–** सनातन धर्म हजुरबाट नै सञ्चालित छ। हजुरकै विभिन्न अवतारहरूद्वारा रक्षा गरिएको सनातन धर्मको रहस्यमय र विकाररहित सार पनि हजुर नै मानिनुहुन्छ।

**तरन्ति ह्यञ्जसा मृत्युं निवृत्ता यदनुग्रहात्।**
**योगिनः स भवान् किंस्विदनुगृह्येत यत् परैः॥ १९॥**

पदार्थ–

**निवृत्ताः** = निवृत्तिमार्गमा लागेका
**योगिनः** = योगीहरू
**यदनुग्रहात्** = हजुरको कृपाले
**अञ्जसा** = सजिलैसित
**मृत्युं** = जन्ममरण आदि दुःखलाई
**हि** = निश्चय नै
**तरन्ति** = पार गर्दछन्
**सः** = त्यस्ता
**भवान्** = हजुरलाई
**परैः** = ब्राह्मणादिद्वारा
**अनुगृह्येत** = अनुग्रह गरियोस्
**यत्** = यो कुरा
**किंस्वित्** = सम्भव हुन्छ

**वाक्यार्थ–** निवृत्तिमार्गमा लागेका योगीहरू हजुरको कृपाले सजिलैसित जन्ममरण आदि दुःखलाई निश्चय नै पार गर्दछन्। त्यस्ता हजुरलाई ब्राह्मणादिद्वारा अनुग्रह गरियोस्! यो कुरा सम्भव हुन्छ?

**यं वै विभूतिरुपयात्यनुवेलमन्यै-**
**रर्थार्थिभिः स्वशिरसा धृतपादरेणुः।**
**धन्यार्पिताङ्घ्रितुलसीनवदामधाम्नो**
**लोकं मधुव्रतपतेरिव कामयाना॥ २०॥**

पदार्थ–

**अन्यैः** = अन्य

**अर्थार्थिभिः** = ऐश्वर्यादि चार पुरुषार्थको इच्छा राख्नेहरूले
**स्वशिरसा** = आफ्नो मस्तकमा
**धृतपादरेणुः** = जसका पाउको धुलो धारण गर्दछन् (त्यस्ता)
**धन्यार्पिताङ्घ्रितुलसीनवदामधाम्नः** = भक्तले हजुरको पाउमा अर्पण गरेको सुन्दर तुलसीमालामा भुनभुनाएर घुम्ने
**मधुव्रतपतेः** = भ्रमरराजको
**लोकं** = स्थानलाई
**कामयाना** = प्राप्त गर्ने इच्छाले
**इव** = झैं
**विभूतिः** = लक्ष्मी
**अनुवेलम्** = नित्य-निरन्तर
**यं** = हजुरलाई
**वै** = निश्चय नै
**उपयाति** = सेवा गर्दछिन्

**वाक्यार्थ–** अन्य ऐश्वर्यादि चार पुरुषार्थको इच्छा राख्नेहरूले आफ्नो मस्तकमा जसका पाउको धुलो धारण गर्दछन् (त्यस्ता) भक्तले हजुरको पाउमा अर्पण गरेको सुन्दर तुलसीमालामा भुनभुनाएर घुम्ने भ्रमरराजको स्थानलाई प्राप्त गर्ने इच्छालेझैं लक्ष्मी नित्य-निरन्तर हजुरलाई निश्चय नै सेवा गर्दछिन्।

**यस्तां विविक्तचरितैरनुवर्तमानां**
**नात्याद्रियत् परमभागवतप्रसङ्गः।**
**स त्वं द्विजानुपथपुण्यरजःपुनीतः**
**श्रीवत्सलक्ष्म किमगा भगभाजनस्त्वम्॥ २१॥**

पदार्थ–

**परमभागवतप्रसङ्गः** = प्यारा भक्तहरूको सङ्गत पाएर
**यः** = जुन भगवान्ले
**विविक्तचरितैः** = पवित्र आचरणहरूद्वारा
**अनुवर्तमानां** = सेवामा लीन भएकी
**तां** = लक्ष्मीलाई
**न अत्याद्रियत्** = अति आदर गर्नुभएन
**सः** = त्यस्तो
**त्वं** = हजुर
**द्विजानुपथपुण्यरजःपुनीतः** = ब्राह्मण पादरेणुद्वारा पवित्र बनेको
**श्रीवत्सलक्ष्म** = श्रीवत्सचिह्न
**अगाः** = धारण गर्नुभएको छ (त्यसैले गर्दा)
**त्वम्** = हजुर
**भगभाजनः** = सौभाग्यका खानी
**किम्** = हुनुहुन्छ होइन त

**वाक्यार्थ–** प्यारा भक्तहरूको सङ्गत पाएको हुनाले न भगवान्ले पवित्र आचरणहरूद्वारा सेवामा लीन भएकी लक्ष्मीलाई समेत अति आदर गर्नुभएन। यस्ता हजुरले ब्राह्मण पादरेणुद्वारा पवित्र बनेको श्रीवत्सचिह्न धारण गर्नुभएको छ। त्यसैले गर्दा हजुर सौभाग्यका खानी हुनुहुन्छ होइन त ?

**धर्मस्य ते भगवतस्त्रियुग त्रिभिः स्वैः**
**पद्भिश्चराचरमिदं द्विजदेवतार्थम्।**

**नूनं भृतं तदभिघाति रजस्तमश्च**
**सत्त्वेन नो वरदया तनुवा निरस्य ॥ २२ ॥**

पदार्थ–

**त्रियुग** = हे सत्यत्रेताद्वापरादि तीनै युगका मालिक
**नः** = हामी भक्तहरूलाई
**वरदया** = अभीष्ट पूरा गर्ने
**भगवतः** = भगवान्
**ते** = हजुरको
**सत्त्वेन** = शुद्धसत्त्ववाला
**तनुवा** = स्वरूपले
**तदभिघाति** = सत्त्वगुणका विरोधी
**रजस्तमः** = रज र तम
**निरस्य** = नाश गरेर
**स्वैः** = आफ्ना
**धर्मस्य** = धर्मका
**त्रिभिः** = तप, दान, दयारूप तीन
**पद्भिः** = चरणहरूले
**द्विजदेवतार्थम्** = देवता र ब्राह्मणहरूको प्रयोजनको निम्ति
**इदं** = यो
**चराचरम्** = संसारलाई
**नूनं** = निश्चय नै
**भृतं** = पालन गरिरहनुभएको छ

**वाक्यार्थ–** हे सत्य, त्रेता, द्वापर आदि तीनै युगका मालिक ! हामी भक्तहरूलाई अभीष्ट पूरा गर्ने भगवान् हजुर शुद्धसत्त्वयुक्त स्वरूपले सत्त्वगुणका विरोधी रज र तम नाश गरेर आफ्ना धर्मका तप, दान, दयारूप तीन चरणहरूले देवता र ब्राह्मणहरूको प्रयोजनको निम्ति यस संसारलाई निश्चय नै पालन गरिरहनुभएको छ।

**न त्वं द्विजोत्तमकुलं यदि हात्मगोपं**
**गोप्ता वृषः स्वर्हणेन ससूनृतेन ।**
**तर्ह्येव नङ्क्ष्यति शिवस्तव देव पन्था**
**लोकोऽग्रहीष्यदृषभस्य हि तत्प्रमाणम् ॥ २३ ॥**

पदार्थ–

**देव** = हे देव
**आत्मगोपं** = स्वयं भगवान्द्वारा रक्षा गरिएको
**द्विजोत्तमकुलं** = उत्तम ब्राह्मण कुललाई
**ससूनृतेन** = प्रिय वचनले युक्त भएका
**स्वर्हणेन** = पूज्य
**वृषः** = श्रेष्ठ
**त्वं** = हजुर नै
**यदि** = यदि
**गोप्ता** = संरक्षक
**न** = हुनुभएन भने
**तर्हि एव** = त्यति वेला नै
**तव** = हजुरले चलाएको
**शिवः** = कल्याणकारी
**पन्थाः** = धर्ममार्ग
**नङ्क्ष्यति** = नष्ट हुन्छ
**हि** = किनभने
**ऋषभस्य** = श्रेष्ठ भक्तहरूको आचरणलाई
**लोकः** = संसारले
**तत्प्रमाणम्** = प्रमाणरूपमा
**अग्रहीष्यत्** = स्वीकार गरेको हुन्छ

**वाक्यार्थ–** हे देव ! स्वयं भगवान्द्वारा रक्षा गरिएको उत्तम ब्राह्मण कुललाई प्रिय वचनले युक्त भएका पूज्य श्रेष्ठ हजुर नै यदि संरक्षक हुनुभएन भने त्यति वेला नै हजुरले चलाएको कल्याणकारी धर्ममार्ग नष्ट हुन्छ। किनभने श्रेष्ठ भक्तहरूको आचरणलाई संसारले प्रमाणरूपमा स्वीकार गरेको हुन्छ।

**तत्तेऽनभीष्टमिव सत्त्वनिधेर्विधित्सोः**
**क्षेमं जनाय निजशक्तिभिरुद्धृतारेः।**
**नैतावता त्र्यधिपतेर्बत विश्वभर्तु-**
**स्तेजः क्षतं त्ववनतस्य स ते विनोदः॥ २४॥**

**पदार्थ–**

**सत्त्वनिधेः** = सत्त्वगुणका खानी भएका हे प्रभु
**जनाय** = लोकलाई
**क्षेमं** = कल्याण
**विधित्सोः** = गर्न चाहने
**निजशक्तिभिः** = आफ्ना विभिन्न अवतारहरूद्वारा
**उद्धृतारेः** = धर्मविरोधी शत्रुहरूलाई नाश गर्नुभएका
**विश्वभर्तुः** = विश्वका पालक
**ते** = हजुरका निम्ति
**तत्** = धर्मको विनाश
**अनभीष्टम् इव** = नचाहेको कुरा हो
**एतावता** = यही धर्मरक्षारूप कार्यले
**त्र्यधिपतेः** = संसारका मालिक भएर पनि
**अवनतस्य** = ब्राह्मणहरूप्रति नम्र हुनुभएका
**ते** = हजुरको
**तेजः** = प्रभाव
**न क्षतं** = नाश भएको छैन
**सः** = ब्राह्मणहरूप्रतिको हजुरको नम्रता
**ते** = हजुरको
**विनोदः** = लीलामात्र हो

**वाक्यार्थ–** सत्त्वगुणका खानीभएका हे प्रभु ! लोकलाई कल्याण गर्न चाहने आफ्ना विभिन्न अवतारहरूद्वारा धर्मविरोधी शत्रुहरूलाई नाश गर्नुभएका विश्वका पालक हजुरका निम्ति धर्मको विनाश नचाहेको कुरा हो। यही धर्मरक्षारूप कार्यले संसारका मालिक भएर पनि ब्राह्मणहरूप्रति नम्र हुनुभएका हजुरको प्रभाव नाश भएको छैन। ब्राह्मणहरूप्रतिको हजुरको नम्रता हजुरको लीलामात्र हो।

**यं वानयोर्दममधीश भवान् विधत्ते**
**वृत्तिं नु वा तदनुमन्महि निर्व्यलीकम्।**
**अस्मासु वा य उचितो ध्रियतां स दण्डो**
**येऽनागसौ वयमयुङ्क्ष्महि किल्बिषेण॥ २५॥**

पदार्थ–

**अधीश** = हे भगवान्
**अनयोः** = जय र विजय नामक यी दुई हजुरका सेवकहरूलाई
**यं** = जुन
**दमम्** = दण्डसजाय (हामीले दियौँ)
**वृत्तिं** = पहिला जस्तै यहीँ बसेर जीविका गर्ने
**वा** = अथवा (अन्य कुनै वृत्ति)
**भवान्** = हजुर
**विधत्ते** = जे चाहनुहुन्छ त्यही गर्नुहोस्
**वा** = अथवा
**अनागसौ** = निरपराध यी दुईलाई
**ये** = जुन हामीले
**किल्बिषेण** = अपराधसँग
**अयुङ्क्ष्महि** = जोड्यौँ त्यस्ता
**अस्मासु** = हामीहरूलाई
**यः** = जो
**उचितः** = उचित
**दण्डः** = दण्ड छ
**सः** = त्यो
**ध्रियतां** = दिनुहोस्
**तत्** = हजुरले गरेका यी सबै कुरा
**वयम्** = हामी
**निर्व्यलीकम्** = श्रद्धापूर्वक
**अनुमन्महि** = पालना गर्दछौँ

**वाक्यार्थ–** हे भगवान् ! जय र विजय नामक यी दुई हजुरका सेवकहरूलाई दण्डसजाय हामीले दियौँ। पहिला जस्तै यहीँ बसेर जीविका गर्ने अथवा अन्य कुनै वृत्ति यिनीहरूलाई दिनुपर्ने हो, यसमा हजुर जे चाहनुहुन्छ त्यही गर्नुहोस्। अथवा निरपराध यी दुईलाई जुन हामीले अपराधसँग जोड्यौँ त्यस्ता हामीहरूलाई जे उचित दण्ड छ त्यो दिनुहोस्। हजुरले गरेका यी सबै कुरा हामी श्रद्धापूर्वक पालना गर्दछौँ।

**श्रीभगवानुवाच** (भगवान्ले भन्नुभयो)

**एतौ सुरेतरगतिं प्रतिपद्य सद्यः**
**संरम्भसम्भृतसमाध्यनुबद्धयोगौ ।**
**भूयः सकाशमुपयास्यत आशु यो वः**
**शापो मयैव निमितस्तदवैत विप्राः ॥ २६ ॥**

पदार्थ–

**विप्राः** = हे ब्राह्मणदेवहरू हो
**एतौ** = यी दुई मेरा पार्षदहरू
**सुरेतरगतिं** = राक्षस योनिमा
**प्रतिपद्य** = जन्मेर
**सद्यः** = छिट्टै
**संरम्भसम्भृतसमाध्यनुबद्धयोगौ** = क्रोधले व्यग्र भएको चित्तलाई दृढतापूर्वक मेरो स्मरणरूप समाधिमा लगाएर
**आशु** = चाँडै नै
**भूयः** = फेरि
**सकाशम्** = मेरो समीपमा
**उपयास्यतः** = आउने छन्
**वः** = हजुरले
**यः** = जुन
**शापः** = शाप दिनुभयो (त्यो हजुरहरूको मुखबाट)
**मया एव** = मद्वारा
**एव** = नै
**निर्मितः** = दिइएको
**अवैत** = बुझ्नुहोस्

**वाक्यार्थ–** हे ब्राह्मणदेवहरू हो ! यी दुई मेरा पार्षदहरू राक्षस योनिमा जन्मेर छिट्टै क्रोधले व्यग्र भएको चित्तलाई दृढतापूर्वक मेरो स्मरणरूप समाधिमा लगाएर चाँडै नै फेरि मेरो समीपमा आउने छन्। हजुरले जुन श्राप दिनुभयो, त्यो हजुरहरूको मुखबाट मद्वारा नै दिइएको बुझ्नुहोस्।

**ब्रह्मोवाच** (ब्रह्माजीले भन्नुभयो)

**अथ ते मुनयो दृष्ट्वा नयनानन्दभाजनम्।**
**वैकुण्ठं तदधिष्ठानं विकुण्ठं च स्वयंप्रभम्॥ २७॥**
**भगवन्तं परिक्रम्य प्रणिपत्यानुमान्य च।**
**प्रतिजग्मुः प्रमुदिताः शंसन्तो वैष्णवीं श्रियम्॥ २८॥**

पदार्थ–

**अथ** = भगवान्को वचन सुनिसकेपछि
**ते** = ती
**मुनयः** = महर्षिहरू
**नयनानन्दभाजनम्** = नयनसुखका विषय भएका (सुन्दर रूप धारण गरेका)
**स्वयंप्रभम्** = स्वप्रकाशरूप
**विकुण्ठं** = विष्णु भगवान्लाई र
**तदधिष्ठानं** = उहाँको निवासस्थान
**वैकुण्ठं** = वैकुण्ठ धामलाई
**च** = पनि
**प्रमुदिताः** = अत्यन्त प्रसन्न भएका
**भगवन्तं** = भगवान् हरिलाई
**दृष्ट्वा** = देखेर
**प्रणिपत्य** = प्रणाम गरेर
**परिक्रम्य** = परिक्रमा गरेर
**अनुमान्य च** = भगवान्को आज्ञा समेत लिएर
**वैष्णवीं** = भगवान्को
**श्रियम्** = कीर्तिलाई
**शंसन्तः** = प्रशंसा गर्दै
**प्रतिजग्मुः** = आफ्नो धामतिर फर्किए

**वाक्यार्थ–** भगवान्को वचन सुनिसकेपछि ती महर्षिहरू नयनसुखका विषय भएका सुन्दर रूप धारण गरेका स्वप्रकाशरूप विष्णु भगवान्लाई र उहाँको निवासस्थान वैकुण्ठधामलाई अत्यन्त प्रसन्न भएका भगवान् हरिलाई देखेर प्रणाम र परिक्रमा गरी भगवान्को आज्ञा समेत लिएर भगवान्को कीर्तिको प्रशंसा गर्दै आफ्नो धामतिर फर्किए।

**भगवाननुगावाह यातं मा भैष्टमस्तु शम्।**
**ब्रह्मतेजः समर्थोऽपि हन्तुं नेच्छे मतं तु मे॥ २९॥**

पदार्थ–

**भगवान्** = भगवान्ले
**अनुगौ** = जयविजयलाई
**यातं** = जाओ
**मा भैष्टम्** = नडराओ
**शम्** = कल्याण सुख
**अस्तु** = होस्
**ब्रह्मतेजः** = ब्राह्मणहरूले दिएको श्राप
**हन्तुं** = नाश गर्न
**समर्थः** = सक्ने भएर
**अपि** = पनि (म त्यो गर्न)
**नेच्छे** = चाहन्नँ (किनभने)

**मे** = मेरा लागि (मलाई) त्यही नै
**मतं** = स्वीकार्य छ
**आह** = भन्नुभयो

**वाक्यार्थ–** सनकादि गइसकेपछि भगवान्ले जयविजयलाई जाओ नडराओ तिमीहरूको कल्याण सुख होस् ! ब्राह्मणहरूले दिएको श्राप नाश गर्न सक्ने भएर पनि म त्यो गर्न चाहन्नँ किनभने मेरा लागि त्यही नै स्वीकार्य छ भनी भन्नुभयो।

**एतत् पुरैव निर्दिष्टं रमया क्रुद्धया यदा।**
**पुरापवारिता द्वारि विशन्ती मय्युपारते॥ ३०॥**

पदार्थ–
**यदा** = जहिले
**मयि** = म
**उपारते** = योगनिद्रामा लीन भएँ
**द्वारि** = ढोकाबाट
**विशन्ती** = प्रवेश गर्न लागेकी (लक्ष्मी)
**अपवारिता** = रोकिइन् (त्यति वेला नै)
**क्रुद्धया** = रिसाएकी
**रमया** = लक्ष्मीले
**पुरा** = पहिले
**एव** = नै (ब्राह्मणहरूले श्राप दिनुभन्दा पहिले नै)
**एतत्** = तिमीहरूको यो श्राप
**निर्दिष्टं** = निश्चित भइसकेको थियो

**वाक्यार्थ–** जहिले म योगनिद्रामा लीन भएँ, ढोकाबाट प्रवेश गर्न लागेकी लक्ष्मी रोकिइन्। त्यतिबेलै रिसाएकी लक्ष्मीले पहिले नै अर्थात् ब्राह्मणहरूले श्राप दिनुभन्दा पहिले नै तिमीहरूको यो श्राप निश्चित भइसकेको थियो।

**मयि संरम्भयोगेन निस्तीर्य ब्रह्महेलनम्।**
**प्रत्येष्यतं निकाशं मे कालेनाल्पीयसा पुनः॥ ३१॥**

पदार्थ–
(राक्षसयोनिमा)
**मयि** = मसँग
**संरम्भयोगेन** = क्रोधसम्बन्ध राखेर
**ब्रह्महेलनम्** = ब्राह्मणहरूको तिरस्कार गर्नाले प्राप्त भएको दुःख
**निस्तीर्य** = समाप्त गरेर
**अल्पीयसा** = छोटो
**कालेन** = समयमा नै
**पुनः** = फेरि
**मे** = मेरो
**निकाशं** = समीपमा
**प्रत्येष्यतं** = आओ

**वाक्यार्थ–** राक्षसयोनिमा मसँग क्रोधसम्बन्ध राखेर ब्राह्मणहरूको तिरस्कार गर्नाले प्राप्त भएको दुःख समाप्त गरेर छोटो समयमा नै फेरि मेरो समीपमा आओ।

**द्वाःस्थावादिश्य भगवान् विमानश्रेणिभूषणम्।**
**सर्वातिशयया लक्ष्म्या जुष्टं स्वं धिष्ण्यमाविशत्॥ ३२॥**

पदार्थ–

**भगवान्** = भगवान् हरिले
**द्वाःस्थौ** = द्वारपाल
जयविजयलाई (यसप्रकार)
**आदिश्य** = आदेश दिएर
**विमानश्रेणिभूषणम्** = सुन्दर-सुन्दर विमानको शोभाले शोभित
**सर्वातिशयया** = सर्वश्रेष्ठ
**लक्ष्म्या** = शोभाले
**जुष्टं** = परिपूर्ण भएको
**स्वं** = आफ्नो
**धिष्ण्यम्** = निवासगृहमा
**आविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** भगवान् हरिले द्वारपाल जयविजयलाई यसप्रकार आदेश दिएर सुन्दर-सुन्दर विमानको शोभाले शोभित सर्वश्रेष्ठ शोभाले परिपूर्ण भएको आफ्नो निवासगृहमा प्रवेश गर्नुभयो।

**तौ तु गीर्वाणऋषभौ दुस्तराद्धरिलोकतः।**
**हतश्रियौ ब्रह्मशापादभूतां विगतस्मयौ॥ ३३॥**

पदार्थ–

**गीर्वाणे** = देवतामा
**ऋषभौ** = श्रेष्ठ
**तौ** = ती दुई जय र विजय
**दुस्तरात्** = बलवान्
**ब्रह्मशापात्** = ब्राह्मणहरूको श्रापले
**हरिलोकतः** = वैकुण्ठलोकबाट (खस्दै गर्दा)
**हतश्रियौ** = तेज हराएका
**विगतस्मयौ** = सम्पूर्ण अहङ्कार हराएका
**अभूतां** = बने

**वाक्यार्थ–** देवतामा श्रेष्ठ ती दुई जय र विजय बलवान् ब्राह्मणहरूको श्रापले वैकुण्ठलोकबाट खस्दै गर्दा तेज हराएका र सम्पूर्ण अहङ्कार हराएका बने।

**तदा विकुण्ठधिषणात् तयोर्निपतमानयोः।**
**हाहाकारो महानासीद् विमानाग्र्येषु पुत्रकाः॥ ३४॥**

पदार्थ–

**पुत्रकाः** = हे देवताहरू
**विकुण्ठधिषणात्** = जब वैकुण्ठबाट
**तयो ः** = ती दुई
**निपतमानयोः** = खस्दै थिए
**तदा** = त्यस वेला
**विमानाग्र्येषु** = विमानका माथि-माथि बसेकाहरूले
**महान्** = ठुलो-ठुलो स्वरमा
**हाहाकारः** = कोलाहल
**आसीत्** = गरेका थिए

**वाक्यार्थ–** हे देवताहरू ! जब वैकुण्ठबाट ती दुई खस्दै थिए त्यस वेला विमानका माथि-माथि बसेकाहरूले ठुलो-ठुलो स्वरमा कोलाहल गरे।

**तावेव ह्यधुना प्राप्तौ पार्षदप्रवरौ हरेः।**
**दितेर्जठरनिर्विष्टं काश्यपं तेज उल्बणम्॥ ३५॥**

पदार्थ–

| | | |
|---|---|---|
| **हरेः** = भगवान्का | **अधुना** = अहिले | **काश्यपं** = कश्यपसम्बन्धी |
| **पार्षदप्रवरौ** = उत्तम पार्षद | **दितेः** = दितिको | **तेजः** = वीर्यमा |
| **तौ** = ती दुई जय र विजय | **जठरनिर्विष्टं** = गर्भमा प्रवेश गरेर | **प्राप्तौ** = प्राप्त भए |
| **एव** = नै | **उल्बणम्** = खराब स्वभाववाला | |

**वाक्यार्थ—** भगवान्का उत्तम पार्षद ती दुई जय र विजय नै अहिले दितिको गर्भमा प्रवेश गरेर खराव स्वभाववाला कश्यपसम्बन्धी वीर्यमा प्राप्त भए।

**तयोरसुरयोरद्य तेजसा यमयोर्हि वः।**
**आक्षिप्तं तेज एतर्हि भगवांस्तद् विधित्सति॥ ३६॥**

पदार्थ—

| | | |
|---|---|---|
| **तयोः** = ती दुई | **अद्य** = आज | **एतर्हि** = अहिले |
| **यमयोः** = जुम्ल्याहा | **वः** = तिमीहरूको | **भगवान्** = भगवान् |
| **असुरयोः** = राक्षसहरूको | **तेजः** = कान्ति | **तत्** = त्यस्तै |
| **तेजसा** = प्रकाशले | **आक्षिप्तं** = तिरस्कृत भएको छ | **विधित्सति** = गर्न चाहनुहुन्छ |

**वाक्यार्थ—** ती दुई जुम्ल्याहा राक्षसहरूको प्रकाशले आज तिमीहरूको कान्ति तिरस्कृत भएको छ, भगवान् त्यस्तै गर्न चाहनुहुन्छ।

**विश्वस्य यः स्थितिलयोद्भवहेतुराद्यो**
**योगेश्वरैरपि दुरत्ययोगमायः।**
**क्षेमं विधास्यति स नो भगवांस्त्र्यधीश-**
**स्तत्रास्मदीयविमृशेन कियानिहार्थः॥ ३७॥**

पदार्थ—

| | | |
|---|---|---|
| **यः** = जुन भगवान् | (जुन भगवान्) | **नः** = हामीहरूको |
| **विश्वस्य** = संसारको | **योगेश्वरैः** = योगीद्वारा | **क्षेमं** = रक्षा |
| **स्थितिलयोद्भवहेतुः** = उत्पत्ति, स्थिति र विनाशको एकमात्र कारण हुनुहुन्छ | **दुरत्ययोगमायः** = पार पाउन नसकिने मायाशक्तिसम्पन्न | **विधास्यति** = गर्नुहुन्छ भने |
| **आद्यः** = सृष्टिभन्दा पहिले जुन भगवान् निर्विकाररूपमा हुनुहुन्थ्यो | **त्र्यधीशः** = तीनै लोकहरूको मालिक बन्नुभएको छ | **तत्र** = त्यस समयमा |
| | **सः** = त्यस्ता | **अस्मदीयविमृशेन** = हाम्रो तर्कवितर्कको |
| | **भगवान्** = भगवान्ले | **कियान्** = कति |
| | | **अर्थः** = प्रयोजन रहन्छ र |

**वाक्यार्थ—** जो भगवान् संसारको उत्पत्ति, स्थिति र विनाशको एकमात्र कारण हुनुहुन्छ सृष्टिभन्दा पहिले जो भगवान् निर्विकाररूपमा हुनुहुन्थ्यो, जो भगवान् योगीद्वारा पार पाउन

नसकिने मायाशक्तिसम्पन्न तीनै लोकहरूको मालिक बन्नुभएको छ। त्यस्ता भगवान्‌ले हामीहरूको रक्षा गर्नुहुन्छ भने त्यस समयमा हाम्रो तर्कवितर्कको कति प्रयोजन रहन्छ र ?

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां तृतीयस्कन्धे**

**षोडशोऽध्यायः ॥ १६ ॥**

# अथ सप्तदशोऽध्यायः

## हिरण्यकशिपु र हिरण्याक्षको जन्म तथा हिरण्याक्षको दिग्विजय

**मैत्रेय उवाच** (मैत्रेयजीले भन्नुभयो)

**निशम्यात्मभुवा गीतं कारणं शङ्कयोज्झिताः।**
**ततः सर्वे न्यवर्तन्त त्रिदिवाय दिवौकसः॥ १॥**

**पदार्थ–**

**आत्मभुवा** = ब्रह्माजीले
**गीतं** = भनेको
**कारणं** = समस्या र त्यसको समाधानको उपायलाई
**निशम्य** = सुनेर
**शङ्कया** = संशयले
**उज्झिताः** = रहित भएर
**सर्वे** = सम्पूर्ण
**दिवौकसः** = देवताहरू
**ततः** = ब्रह्मलोकबाट
**त्रिदिवाय** = स्वर्ग जानका लागि
**न्यवर्तन्त** = फर्किए

**वाक्यार्थ–** ब्रह्माजीले भनेको समस्या र त्यसको समाधानको उपायलाई सुनेर संशयले रहित भएर सम्पूर्ण देवताहरू ब्रह्मलोकबाट स्वर्ग जानका लागि फर्किए।

**दितिस्तु भर्तुरादेशादपत्यपरिशङ्किनी।**
**पूर्णे वर्षशते साध्वी पुत्रौ प्रसुषुवे यमौ॥ २॥**

**पदार्थ–**

**साध्वी** = पतिव्रता
**दितिः** = दितिले
**भर्तुः** = पति कश्यपको
**आदेशात्** = तिम्रा सन्तानले लोकलाई दुःख दिनेछन् भन्ने सुनेर
**अपत्यपरिशङ्किनी** = छोराहरूको विषयमा चिन्ता
**वर्षशते** = सय वर्ष
**पूर्णे** = पुगेपछि
**यमौ** = जुम्ल्याहा
**पुत्रौ** = छोरा हिरण्यकशिपु र हिरण्याक्षलाई
**प्रसुषुवे** = जन्माइन्

**वाक्यार्थ–** पतिव्रता दितिले पति कश्यपको तिम्रा सन्तानले लोकलाई दुःख दिनेछन् भन्ने वचन सुनेर छोराहरूको विषयमा चिन्ता गर्दै सय वर्ष पुगेपछि जुम्ल्याहा छोरा हिरण्यकशिपु र हिरण्याक्षलाई जन्माइन्।

**उत्पाता बहवस्तत्र निपेतुर्जायमानयोः।**
**दिवि भुव्यन्तरिक्षे च लोकस्योरुभयावहाः॥ ३॥**

**पदार्थ–**

(यी दुई)
**जायमानयोः** = जन्मदा
**तत्र** = त्यस वेला
**दिवि** = स्वर्गमा
**भुवि** = पृथ्वीलोकमा
**अन्तरिक्षे** = अन्तरिक्षमा
**च** = पनि
**लोकस्य** = लोकलाई
**उरुभयावहाः** = ज्यादै भय दिने
**बहवः** = धेरै
**उत्पाताः** = अनर्थहरू
**निपेतुः** = उत्पन्न भए

**वाक्यार्थ–** यी दुई जन्मदा स्वर्ग, पृथ्वीलोक र अन्तरिक्षमा पनि लोकलाई ज्यादै भय दिने धेरै अनर्थहरू उत्पन्न भए।

**सहाचला भुवश्चेलुर्दिशः सर्वाः प्रजज्वलुः।**
**सोल्काश्चाशनयः पेतुः केतवश्चार्तिहेतवः॥ ४॥**

**पदार्थ–**
**सहाचलाः** = पर्वतले सहित भएका
**भुवः** = भूखण्डहरू
**चेलुः** = काँप्न थाले
**सर्वाः** = सम्पूर्ण
**दिशः** = दिशाहरू
**प्रजज्वलुः** = ज्वालायुक्त बने
**सोल्काः** = उल्कापातले सहित भएका
**अशनयः** = वज्रहरू
**निपेतुः** = खस्न लागे
**अर्तिहेतवः** = अनिष्टसूचक
**केतवः** = धूमकेतु आदि ताराहरू देखिन थाले

**वाक्यार्थ–** पर्वतले सहित भूखण्डहरू काम्न थाले। सम्पूर्ण दिशाहरू ज्वालायुक्त बने। उल्कापातले सहित भएका वज्रहरू खस्न लागे। अनिष्टसूचक धूमकेतु आदि ताराहरू देखिन थाले।

**ववौ वायुः सुदुःस्पर्शः फूत्कारानीरयन् मुहुः।**
**उन्मूलयन् नगपतीन् वात्यानीको रजोध्वजः॥ ५॥**

**पदार्थ–**
**सुदुःस्पर्शः** = सहन गर्न नसकिने
**फूत्कारान्** = तीव्र वायुका झोक्काहरू
**मुहुः** = बारम्बार
**ईरयन्** = डरलाग्दो ध्वनि फिजाउँदै
**अगपतीन्** = ठुला-ठुला वृक्षहरूलाई (पनि)
**उन्मूलयन्** = उखेल्दै
**वात्यानीकः** = चक्रवायु (भुँवरी)रूपी सेनाले युक्त भएको
**रजोध्वजः** = आकाशमा उडेको धूलो नै झण्डा भएको
**वायुः** = भयङ्कर हावा
**ववौ** = चल्न थाल्यो

**वाक्यार्थ–** सहन गर्न नसकिने तीव्र वायुका झोक्काहरू बारम्बार डरलाग्दो ध्वनि फिजाउँदै ठुला-ठुला वृक्षहरूलाई पनि उखेल्दै चक्रवायु (भुँवरी)रूपी सेनाले युक्त भएको आकाशमा उडेको धुलो नै झण्डा भएको भयङ्कर हावा चल्न थाल्यो।

**उद्धसत्तडिदम्भोदघटया नष्टभागणे।**

**प्रत्येत्य विस्तीर्णमुरो विभूतिमत्।**
**प्रवृद्धरोषः स कठोरमुष्टिना**
**नदन् प्रहृत्यान्तरधीयतासुरः॥ १५॥**

पदार्थ–

**अरिणा** = भगवान्‌को धारिलो चक्रले
**स्वशूले** = आफ्नो त्रिशूल
**बहुधा** = धेरै
**वृक्णे** = टुक्रा-टुक्रा भएको देखेर
**प्रवृद्धरोषः** = अत्यन्त रिसाएको
**सः** = त्यो
**असुरः** = हिरण्याक्षले
**नदन्** = गर्जना गर्दै
**प्रहृत्य** = नजिक आएर
**कठोरमुष्टिना** = कडा मुठ्ठीले
**विभूतिमत्** = ऐश्वर्यशाली
**विस्तीर्णम्** = विशाल
**हरेः** = भगवान् हरिको
**उरः** = छातीमा
**प्रत्येत्य** = प्रहार गरेर
**अन्तरधीयत** = अन्तर्धान भयो

**वाक्यार्थ–** भगवान्‌को धारिलो चक्रले आफ्नो त्रिशूल धेरै टुक्राटुक्रा भएको देखेर अत्यन्त रिसाएको त्यो हिरण्याक्षले गर्जना गर्दै नजिक आएर कडा मुठ्ठीले ऐश्वर्यशाली विशाल भगवान् हरिको छातीमा प्रहार गरेर ऊ अन्तर्धान भयो।

**तेनेत्थमाहतः क्षत्तर्भगवानादिसूकरः।**
**नाकम्पत मनाक् क्वापि स्रजा हत इव द्विपः॥ १६॥**

पदार्थ–

**क्षत्तः** = हे विदुरजी
**तेन** = हिरण्याक्षद्वारा
**इत्थम्** = यसप्रकार
**आहतः** = प्रहार गरिएका
**भगवान्** = भगवान्
**आदिसूकरः** = वराह
**स्रजा** = पुष्पमालाले
**हतः** = प्रहार गरिएको
**द्विपः** हात्ती
**इव** = जस्तै
**मनाक्** = थोरै
**क्व अपि** = कतै पनि
**न अकम्पत** = विचलित हुनुभएन

**वाक्यार्थ–** हे विदुरजी ! हिरण्याक्षद्वारा यसप्रकार प्रहार गरिएका भगवान् वराह पुष्पमालाले प्रहार गरिएको हात्तीजस्तै कत्ति पनि विचलित हुनुभएन।

**अथोरुधासृजन्मायां योगमायेश्वरे हरौ।**
**यां विलोक्य प्रजास्त्रस्ता मेनिरेऽस्योपसंयमम्॥ १७॥**

पदार्थ–

**अथ** = यसपछि
**योगमायेश्वरे** = मायाका मालिक भएका
**हरौ** = भगवान् हरिमाथि
**उरुधा** = विभिन्न किसिमको

**मायां** = मायाशक्ति
**असृजत्** = प्रयोग गर्न थाल्यो
**यां** = त्यस मायालाई
**विलोक्य** = देखेर
**त्रस्ताः** = डराएका
**प्रजाः** = प्राणीहरूले
**अस्य** = संसारको
**उपसंयमम्** = प्रलय हुन लागे जस्तो
**मेनिरे** = अनुभव गरे

**वाक्यार्थ–** यसपछि मायाका मालिक भएका भगवान् हरिमाथि हिरण्याक्षले विभिन्न किसिमको मायाशक्ति प्रयोग गर्न थाल्यो। मायालाई देखेर डराएका प्राणीहरूले संसारको प्रलय हुनलागे जस्तो अनुभव गरे।

**प्रववुर्वायवश्चण्डास्तमः पांसवमैरयन्।**
**दिग्भ्यो निपेतुर्ग्रावाणः क्षेपणैः प्रहिता इव॥ १८॥**

पदार्थ–
**चण्डाः** = अत्यन्त वेगले युक्त भएको
**वायवः** = हावा
**प्रववुः** = वहन थाल्यो
**पांसवम्** = धूलो भरिएको
**तमः** = अन्धकारलाई
**ऐरयन्** = हावाले फैलाए
**ग्रावाणः** = ढुङ्गाहरू
**क्षेपणैः** = ढुङ्गा फाल्ने यन्त्रले
**प्रहिताः** = फाले
**इव** = झैँ
**दिग्भ्यः** = सबै दिशातिरबाट
**निपेतुः** = खस्न थाले

**वाक्यार्थ–** अत्यन्त वेगले युक्त भएको हावा वहन थाल्यो। धूलो भरिएको अन्धकारलाई हावाले फैलाए ढुङ्गाहरू ढुङ्गा फाल्ने यन्त्रले फालेझैँ सबै दिशातिरबाट खस्न थाले।

**द्यौर्नष्टभगणाभ्रौघैः सविद्युत्स्तनयित्नुभिः।**
**वर्षद्भिः पूयकेशासृग्विण्मूत्रास्थीनि चासकृत्॥ १९॥**

पदार्थ–
**पूयकेशासृग्विण्मूत्रास्थीनि** = दुर्गन्धित केश, रगत, विष्टा, मूत्र, हड्डी आदि
**असकृत्** = निरन्तर
**वर्षद्भिः** = वर्षिएकाले
**सविद्युत्स्तनयित्नुभिः** = बिजुली चम्केझैँ गर्जिएका
**अभ्रौघैः** = मेघको विस्तारले
**नष्टभगणा** = सम्पूर्ण ताराहरू छोपिएको
**द्यौः** = आकाश (देखियो)

**वाक्यार्थ–** दुर्गन्धित केश, रगत, विष्टा, मूत्र, हड्डी आदि निरन्तर वर्षिएकाले बिजुली चम्केझैँ गर्जिएका मेघको विस्तारले सम्पूर्ण ताराहरू छोपिएको आकाश देखियो।

**गिरयः प्रत्यदृश्यन्त नानायुधमुचोऽनघ।**
**दिग्वाससो यातुधान्यः शूलिन्यो मुक्तमूर्धजाः॥ २०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अनघ** = हे निर्दोषी विदुरजी<br>**गिरयः** = पहाडहरू<br>**नानायुधमुचः** = विभिन्न किसिमका शस्त्रास्त्रहरू फाल्न लागेझैं | **प्रत्यदृश्यन्त** = देखिन थाले<br>**दिग्वाससः** = नाङ्गा<br>**शूलिन्यः** = त्रिशूलधारी<br>**मुक्तमूर्धजाः** = जटा फिँजाएका<br>**यातुधान्यः** = राक्षसीहरू पनि | **प्रत्यदृश्यन्त** = देखिन थाले |

**वाक्यार्थ—** हे निर्दोषी विदुरजी ! पहाडहरू विभिन्न किसिमका शस्त्रास्त्रहरू फाल्न लागेझैं देखिन थाले। नाङ्गा त्रिशूलधारी जटा फिँजाएका राक्षसीहरू पनि देखिन थाले।

**बहुभिर्यक्षरक्षोभिः पत्त्यश्वरथकुञ्जरैः ।**

**आततायिभिरुत्सृष्टा हिंस्रा वाचोऽतिवैशसाः ॥ २१ ॥**

पदार्थ—

| | | |
|---|---|---|
| **पत्त्यश्वरथकुञ्जरैः** = पैदल हिँड्ने, घोडा, रथ, हात्तीमा चढेर हिँड्ने<br>**बहुभिः** = धेरै | **आततायिभिः** = अत्यन्त क्रूर स्वभाव भएका<br>**यक्षरक्षोभिः** = विभिन्न प्रकारका यक्ष र राक्षसहरूले<br>**उत्सृष्टाः** = उच्चारण गरेका | **अतिवैशसाः** = अत्यन्त क्रूर<br>**हिंस्राः** = हिँसामय<br>**वाचः** = वाणीहरू (फैलिन थाले) |

**वाक्यार्थ—** पैदल हिँड्ने र घोडा, रथ, हात्तीमा अढेर हिँड्ने अत्यन्त क्रूर स्वभाव भएका विभिन्न प्रकारका यक्ष र राक्षसहरूले उच्चारण गरेका अत्यन्त क्रूर हिँसामय वाणीहरू फैलिन थाले।

**प्रादुष्कृतानां मायानामासुरीणां विनाशयत् ।**

**सुदर्शनास्त्रं भगवान् प्रायुङ्क्त दयितं त्रिपात् ॥ २२ ॥**

पदार्थ—

| | | |
|---|---|---|
| **त्रिपात्** = ऐश्वर्यशाली वराह<br>**भगवान्** = भगवान्ले<br>**प्रादुष्कृतानां** = हिरण्याक्षले देखाइसकेको | **आसुरीणां** = आसुरी<br>**मायानाम्** = मायाजाललाई<br>**विनाशयत्** = नाश गर्नका लागि<br>**दयितं** = अत्यन्त प्रिय | **सुदर्शनास्त्रं** = सुदर्शन नाम गरेको आफ्नो चक्र<br>**प्रायुङ्क्त** = प्रहार गर्नुभयो |

**वाक्यार्थ—** ऐश्वर्यशाली वराह भगवान्ले हिरण्याक्षले देखाइसकेको आसुरी मायाजाललाई नाश गर्नका लागि अत्यन्त प्रिय सुदर्शन नाम गरेको आफ्नो चक्र प्रहार गर्नुभयो।

**तदा दितेः समभवत् सहसा हृदि वेपथुः ।**

**स्मरन्त्या भर्तुरादेशं स्तनाच्चासृक् प्रसुस्रुवे ॥ २३ ॥**

पदार्थ—

**तदा** = भगवान्ले सुदर्शनचक्र प्रहार गर्ने वेलामा
**भर्तुः** = आफ्ना पति कश्यपको
**आदेशं** = (तिम्रो छोरो भगवान्को हातबाट मारिने छ भन्ने) कथन
**स्मरन्त्याः** = सम्झिएकी
**दितेः** = दितिको
**हृदि** = हृदयमा
**सहसा** = अचानक
**वेपथुः** = कम्प
**समभवत्** = उत्पन्न भयो
**स्तनात्** = स्तनहरूबाट
**असृक्** = रगत (पनि)
**प्रसुस्रुवे** = बग्न थाल्यो

**वाक्यार्थ–** भगवान्ले सुदर्शनचक्र प्रहार गर्ने वेलामा आफ्ना पति कश्यपको तिम्रो छोरो भगवान्को हातबाट मारिनेछ भन्ने कथन सम्झिएकी दितिको हृदयमा अचानक कम्प उत्पन्न भयो र उनका स्तनहरूबाट रगत पनि बग्न थाल्यो।

**विनष्टासु स्वमायासु भूयश्चाव्रज्य केशवम्।**
**रुषोपगूहमानोऽमुं ददृशेऽवस्थितं बहिः॥ २४॥**

**पदार्थ–**

**स्वमायासु** = आफ्नो सम्पूर्ण मायाशक्ति
**विनष्टासु** = नाश भएपछि (हिरण्याक्षले)
**भूयः** = फेरि
**आव्रज्य** = दौडेर आएर
**रुषा** = रिसले
**केशवम्** = भगवान् केशवलाई
**उपगूहमानः** = दुई हातले अँगाल्न खोजे तापनि
**अमुं** = उहाँ भगवान्लाई
**बहिः** = आफ्ना हातभन्दा बाहिर नै
**अवस्थितं** = रहेको
**ददृशे** = देख्यो

**वाक्यार्थ–** आफ्नो सम्पूर्ण मायाशक्ति नाश भएपछि हिरण्याक्षले फेरि दौडेर आएर रिसले भगवान् केशवलाई दुई हातले अँगाल्न खोजे तापनि उहाँ भगवान्लाई आफ्ना हातभन्दा बाहिर नै रहेको देख्यो।

**तं मुष्टिभिर्विनिघ्नन्तं वज्रसारैरधोक्षजः।**
**करेण कर्णमूलेऽहन् यथा त्वाष्ट्रं मरुत्पतिः॥ २५॥**

**पदार्थ–**

**वज्रसारैः** = वज्रजस्तै कठोर
**मुष्टिभिः** = मुठ्ठीद्वारा
**विनिघ्नन्तं** = आफूलाई प्रहार गर्दै गरेको
**तं** = त्यस हिरण्याक्षलाई
**अधोक्षजः** = भगवान् वराहले
**करेण** = हातले
**कर्णमूले** = कञ्चटमा
**मरुत्पतिः** = इन्द्रले
**त्वाष्ट्रं** = वृत्रासुरलाई
**यथा** = हानेझैं
**अहन्** = प्रहार गर्नुभयो

**वाक्यार्थ–** वज्रजस्तै कठोर मुठ्ठीद्वारा आफूलाई प्रहार गर्दै गरेको हिरण्याक्षलाई भगवान् वराहले हातले कञ्चटमा इन्द्रले वृत्रासुरलाई हानेझैं प्रहार गर्नुभयो।

**स आहतो विश्वजिता ह्यवज्ञया**
**परिभ्रमद्गात्र उदस्तलोचनः ।**
**विशीर्णबाह्वङ्घ्रिशिरोरुहोऽपतद्**
**यथा नगेन्द्रो लुलितो नभस्वता ॥ २६ ॥**

**पदार्थ–**

**विश्वजिता** = भगवान्द्वारा
**अवज्ञया** = केवल उपेक्षापूर्वक
**आहतः** = हानिएको
**परिभ्रमद्गात्रः** = थर्थर कामेको
**उदस्तलोचनः** = दुबै आँखा बाहिर निस्केको
**विशीर्णबाह्वङ्घ्रिशिरोरुहः** = हातखुट्टा र टाउको क्षतविक्षत भएको
**सः** = त्यो हिरण्याक्ष
**यथा** = जसरी
**नभस्वता** = हावाले
**लुलितः** = उखेलिएको
**नगेन्द्रः** = ठुलो रुख ढल्दछ (त्यसै गरी)
**अपतत्** = भुँइमा ढल्यो

**वाक्यार्थ–** भगवान्द्वारा केवल उपेक्षापूर्वक प्रहार गरिएर थर्थर कामेको, दुबै आँखा बाहिर निस्केको र हातखुट्टा र टाउको क्षतविक्षत भएको हिरण्याक्ष जसरी हावाले उखेलिएको ठुलो रुख ढल्दछ त्यसै गरी भुँइमा ढल्यो।

**क्षितौ शयानं तमकुण्ठवर्चसं**
**करालदंष्ट्रं परिदष्टदच्छदम् ।**
**अजादयो वीक्ष्य शशंसुरागता**
**अहो इमं को नु लभेत संस्थितिम् ॥ २७ ॥**

**पदार्थ–**

**क्षितौ** = जमिनमा
**शयानं** = लडेको
**करालदंष्ट्रं** = डरलाग्दा दाह्राले युक्त भएको
**परिदष्टदच्छदम्** = ओठ टोक्दै गरेको
**अकुण्ठवर्चसं** = शक्ति क्षीण भई नसकेको
**तम्** = हिरण्याक्षलाई
**वीक्ष्य** = देखेर
**आगताः** = आउनुभएका
**अजादयः** = ब्रह्मालगायतका देवताहरूले
**अहो** = आश्चर्य
**इमं** = यसप्रकारको
**संस्थितिम्** = मृत्यु
**कः** = कसले
**लभेत** = प्राप्त गर्दछ (भन्दै)
**शशंसुः** = प्रशंसा गर्न लागे

**वाक्यार्थ–** जमिनमा लडेको, डरलाग्दा दाह्राले युक्त भएको, ओठ टोक्दै गरेको, शक्ति क्षीण भइनसकेको हिरण्याक्षलाई देखेर आउनुभएका ब्रह्मालगायतका देवताहरूले 'यसप्रकारको मृत्यु कस्ले प्राप्त गर्दछ र ?' भन्दै प्रशंसा गर्न लागे।

**यं योगिनो योगसमाधिना रहो**
**ध्यायन्ति लिङ्गादसतो मुमुक्षया ।**
**तस्यैष दैत्यऋषभः पदाहतो**
**मुखं प्रपश्यंस्तनुमुत्ससर्ज ह ॥ २८ ॥**

पदार्थ—

**असतः** = असत्य
**लिङ्गात्** = शरीरबाट
**मुमुक्षया** = मुक्त हुने इच्छाले भक्तहरू
**योगसमाधिना** = कठोर व्रत तपस्या आदिले
**रहः** = एकान्तमा बसेर
**योगिनः** = योगीहरू
**यं** = जुन भगवान्को
**ध्यायन्ति** = ध्यान गर्दछन्
**तस्य** = तिनै भगवान्को
**पदा** = पाउको प्रहारले
**दैत्यऋषभः** = यो दैत्यराज हिरयण्याक्ष
**मुखं** = भगवान्को त्यो दिव्य मुहारको
**प्रपश्यन्** = दर्शन गर्दै
**हतः** = मारिएर
**तनुम्** = शरीर
**उत्ससर्ज** = त्याग्यो
**ह** = निश्चय नै
**एषः** = यो (पुण्यशाली हुनेछ)

**वाक्यार्थ—** असत्य शरीरबाट मुक्त हुने इच्छाले भक्तहरू कठोर व्रत तपस्या आदि गरेर एकान्तमा बसेर योगीहरू जुन भगवान्को ध्यान गर्दछन्, तिनै भगवान्को पाउको प्रहारले यो दैत्यराज हिरयण्याक्षले भगवान्को त्यो दिव्य मुहारको दर्शन गर्दै मारिएर शरीर त्याग्यो। यसर्थ निश्चय नै यो पुण्यशाली हुनेछ।

**एतौ तौ पार्षदावस्य शापाद् यातावसद्गतिम् ।**
**पुनः कतिपयैः स्थानं प्रपत्स्येते ह जन्मभिः ॥ २९ ॥**

पदार्थ—

**एतौ** = दितिका यी दुई भाइ छोरा
**अस्य** = भगवान्का
**तौ** = जयविजय नाम गरेका
**पार्षदौ** = समीपवर्ती पार्षद थिए तर
**शापात्** = सनकादिको श्रापको कारणले
**असद्गतिम्** = राक्षसयोनिमा
**यातौ** = आएका छन्
**पुनः** = श्राप पूरा भएपछि
**कतिपयैः** = केही
**जन्मभिः** = जन्मपछि
**स्थानं** = आफ्नो पूर्वस्थान वैकुण्ठमा
**प्रपत्स्येते** = पुग्नेछन्

**वाक्यार्थ—** दितिका यी दुई भाइ छोरा भगवान्का जयविजय नाम गरेका समीपवर्ती पार्षद थिए तर सनकादिको श्रापको कारणले राक्षसयोनिमा आएका छन्। श्राप पूरा भएपछि केही जन्मपछि यिनीहरू आफ्नो पूर्वस्थान वैकुण्ठमा पुग्नेछन्।

**देवा ऊचुः** (देवताहरूले भन्नुभयो)

**नमो नमस्तेऽखिलयज्ञतन्तवे**
**स्थितौ गृहीतामलसत्त्वमूर्तये ।**
**दिष्ट्या हतोऽयं जगतामरुन्तुद-**
**स्त्वत्पादभक्त्या वयमीश निर्वृताः ॥ ३० ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **अखिलयज्ञतन्तवे** = सम्पूर्ण यज्ञका प्रवर्तक | **नमः नमः** = बारम्बार नमस्कार छ | **ईश** = हे भगवान् |
| **स्थितौ** = संसाररक्षाका निम्ति | **जगताम्** = संसारलाई | **त्वत्पादभक्त्या** = हजुरको चरणको सेवाले |
| **गृहीतामलसत्त्वमूर्तये** = रज, तम आदिरहित शान्तस्वरूप धारण गरेका | **अरुन्तुदः** = दुःखकष्ट दिने | **वयम्** = हामीहरू |
| **ते** = हजुरलाई | **अयं** = यो हिरण्याक्ष | **निर्वृताः** = सुखी भएका छौँ |
| | **दिष्ट्या** = भाग्यले | |
| | **हतः** = मारियो | |

**वाक्यार्थ–** सम्पूर्ण यज्ञका प्रवर्तक संसाररक्षाका निम्ति रज, तम आदिरहित शान्तस्वरूप धारण गरेका हजुरलाई बारम्बार नमस्कार छ। संसारलाई दुःख, कष्ट दिने यो हिरण्याक्ष भाग्यले मारियो। हे भगवान् ! हजुरको चरणको सेवाले हामीहरू सुखी भएका छौँ।

**मैत्रेय उवाच** (मैत्रेयले भन्नुभयो)

**एवं हिरण्याक्षमसह्यविक्रमं**
**स सादयित्वा हरिरादिसूकरः ।**
**जगाम लोकं स्वमखण्डितोत्सवं**
**समीडितः पुष्करविष्टरादिभिः ॥ ३१ ॥**

पदार्थ–

| | | |
|---|---|---|
| **असह्यविक्रमं** = अत्यन्त बलवान् | **एवं** = यसप्रकार | **स्वम्** = आफ्नो |
| **हिरण्याक्षम्** = हिरण्याक्षलाई | **सादयित्वा** = मारेर | **लोकं** = वैकुण्ठलोकमा |
| **आदिसूकरः** = वराहरूप | **पुष्करविष्टरादिभिः** = ब्रह्मादिले | **जगाम** = जानुभयो |
| **सः** = उहाँ | **समीडितः** = स्तुति गरिएर | |
| **हरिः** = हरि भगवान्ले | **अखण्डितोत्सवं** = रमणीय | |

**वाक्यार्थ–** अत्यन्त बलवान् हिरण्याक्षलाई वराहरूप हरि भगवान्‌ले यसप्रकार मारेर ब्रह्मादिद्वारा स्तुति गरिएर उहाँ रमणीय आफ्नो वैकुण्ठलोकमा जानुभयो।

**मया यथानूक्तमवादि ते हरेः**
**कृतावतारस्य सुमित्र चेष्टितम्।**
**यथा हिरण्याक्ष उदारविक्रमो**
**महामृधे क्रीडनवन्निराकृतः॥ ३२॥**

पदार्थ–

| | | |
|---|---|---|
| **सुमित्र** = हे उदार हृदय भएका विदुरजी | **क्रीडनवत्** = खेलौनाझैँ गरी | **चेष्टितम्** = कार्य हो |
| **यथा** = जसरी | **निराकृतः** = मारियो | **अनूक्तम्** = जसरी जानिएको थियो त्यो सबै |
| **उदारविक्रमः** = पराक्रमी | **तथा** = त्यो सबै | **मया** = मद्वारा |
| **हिरण्याक्षः** = हिरण्याक्षलाई | **कृतावतारस्य** = वराहरूप धारण गर्नुभएका | **ते** = तपाईं |
| **महामृधे** = युद्धमा | **हरेः** = नारायणको | **अवादि** = भनिनुभयो |

**वाक्यार्थ–** हे उदार हृदय भएका विदुरजी ! जसरी पराक्रमी हिरण्याक्षलाई युद्धमा खेलौनाझैँ गरी मारियो, त्यो सबै वराहरूप धारण गर्नुभएका नारायणको कार्य हो। यो कुरा मैले जानेको जति सबै तपाईंलाई भनेँ।

**सूत उवाच** (सुतजीले भन्नुभयो)

**इति कौषारवाख्यातामाश्रुत्य भगवत्कथाम्।**
**क्षत्तानन्दं परं लेभे महाभागवतो द्विज॥ ३३॥**

पदार्थ–

| | | |
|---|---|---|
| **द्विज** = हे शौनकजी | **भगवत्कथाम्** = वराहरूप भगवान् नारायणको कथा | **क्षत्ता** = विदुरजीले |
| **इति** = यसप्रकार | **आश्रुत्य** = सुनेर | **परं** = धेरै |
| **कौषारवाख्याताम्** = मैत्रेयजीले भनेको | **महाभागवतः** = परमवैष्णव | **आनन्दं** = आनन्द |
| | | **लेभे** = प्राप्त गर्नुभयो |

**वाक्यार्थ–** हे शौनकजी ! यसप्रकार मैत्रेयजीले भनेको वराहरूप भगवान् नारायणको कथा सुनेर परमवैष्णव विदुरजीले धेरै आनन्द प्राप्त गर्नुभयो।

**अन्येषां पुण्यश्लोकानामुद्दामयशसां सताम्।**

**उपश्रुत्य भवेन्मोदः श्रीवत्साङ्कस्य किं पुनः ॥ ३४ ॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **पुण्यश्लोकानाम्** = पवित्र कीर्ति भएका | **अन्येषां** = यीदेखि अन्य | **भवेत्** = हुन्छ भने |
| **उद्दामयशसां** = संसारभर यश फैलिएका र | **सताम्** = सज्जन भक्तहरूको | **श्रीवत्साङ्कस्य** = साक्षात् भगवान्को (कथा सुनेर त) |
| | **उपश्रुत्य** = कथा सुनेर | **पुनः किं** = फेरि के कुरा गर्नु |
| | **मोदः** = आनन्द | |

**वाक्यार्थ–** पवित्र कीर्ति भएका, संसारभर यश फैलिएका अन्य सज्जन भक्तहरूको कथा सुनेर त आनन्द हुन्छ भने साक्षात् भगवान्को कथा सुनेर आनन्द नहुने त कुरै छैन।

**यो गजेन्द्रं झषग्रस्तं ध्यायन्तं चरणाम्बुजम्।**
**क्रोशन्तीनां करेणूनां कृच्छ्रतोऽमोचयद् द्रुतम्॥ ३५॥**
**तं सुखाराध्यमृजुभिरनन्यशरणैर्नृभिः।**
**कृतज्ञः को न सेवेत दुराराध्यमसाधुभिः॥ ३६॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यः** = जो भगवान्ले | **कृच्छ्रतः** = ग्राहको प्रहारजन्य कष्टबाट | **सुखाराध्यम्** = सुखपूर्वक प्रसन्न गराउन सकिने |
| **करेणूनां** = हस्तिनीहरू | **द्रुतम्** = छिट्टै | **असाधुभिः** = दुष्टहरूद्वारा |
| **क्रोशन्तीनां** = रुन थालेपछि | **अमोचयत्** = छुट्कारा दिलाउनु भयो | **दुराराध्यम्** = प्राप्त गर्न नसकिने |
| **झषग्रस्तं** = गोहीद्वारा समातिएकाले | **अनन्यशरणैः** = अन्य कुनै शरण नभएका | **तं** = त्यस्ता |
| **चरणाम्बुजम्** = आफ्नो चरणको | **नृभिः** = मानिसहरूले | **कृतज्ञः** = शरणागतको परिपालन गर्ने भगवान्लाई |
| **ध्यायन्तं** = स्मरण गर्ने | **ऋजुभिः** = सरल उपायद्वारा | **कः** = कसले |
| **गजेन्द्रं** = हात्तीलाई | | **न सेवेत** = सेवा नगर्ला र ? |

**वाक्यार्थ–** जो भगवान्ले हस्तिनीहरू रुन थालेपछि गोहीद्वारा समातिएकाले आफ्नो चरणको स्मरण गर्ने हात्तीलाई ग्राहको प्रहारजन्य कष्टबाट छिट्टै छुट्कारा दिलाउनुभयो। अन्य कुनै शरण नभएका मानिसहरूले सरल उपायद्वारा सुखपूर्वक प्रसन्न गराउन सकिने दुष्टहरूद्वारा प्राप्त गर्न नसकिने त्यस्ता शरणागतको परिपालन गर्ने भगवान्लाई कसले सेवा नगर्ला र ?

**यो वै हिरण्याक्षवधं महाद्भुतं**

**विक्रीडितं कारणसूकरात्मनः ।**
**शृणोति गायत्यनुमोदतेऽञ्जसा**
**विमुच्यते ब्रह्मवधादपि द्विजाः ॥ ३७ ॥**

**पदार्थ–**

**द्विजाः** = हे ब्राह्मणहरू हो
**कारणसूकरात्मनः** = पृथ्वीको रक्षाका निम्ति वराहरूप धारण गर्नुभएका भगवान्को
**महाद्भुतं** = ज्यादै आश्चर्य लाग्दो
**हिरण्याक्षवधं** = हिरण्याक्षको नाशरूप
**विक्रीडितं** = लीला
**यः** = जसले
**शृणोति** = सुन्दछ
**गायति** = भन्दछ
**अनुमोदते** = स्वीकार पनि गर्दछ त्यो
**अञ्जसा** = सजिलै
**ब्रह्मवधात्** = ब्रह्महत्याजस्तो महापापबाट
**अपि** = पनि
**वै** = निश्चय नै
**विमुच्यते** = मुक्त हुन्छ

**वाक्यार्थ–** हे ब्राह्मणहरू हो ! पृथ्वीको रक्षाका निम्ति वराहरूप धारण गर्नुभएका भगवान्को आश्चर्य लाग्दो हिरण्याक्षको नाशरूप लीला जसले सुन्दछ, भन्दछ स्वीकार पनि गर्दछ त्यो सजिलै ब्रह्महत्याजस्तो महापापबाट पनि निश्चय नै मुक्त हुन्छ।

**एतन्महापुण्यमलं पवित्रं**
**धन्यं यशस्यं पदमायुराशिषाम् ।**
**प्राणेन्द्रियाणां युधि शौर्यवर्धनं**
**नारायणोऽन्ते गतिरङ्ग शृण्वताम् ॥ ३८ ॥**

**पदार्थ–**

**अङ्ग** = हे प्यारा विदुरजी
**अलं** = अत्यन्त
**पवित्रं** = पवित्र
**महापुण्यम्** = धेरै पुण्यदान गर्ने
**धन्यं** = प्रशस्त धन सम्पत्तिरूप फल दिने
**यशस्यं** = कीर्ति दिलाउने
**आयुराशिषाम्** = आयु र सम्पूर्ण मनोरथहरूको पनि
**पदम्** = प्राप्तिस्रोत भएको
**युधि** = युद्धमा
**प्राणेन्द्रियाणां** = प्राण र इन्द्रियहरूको
**शौर्यवर्धनं** = शक्ति बढाउने
**एतत्** = यो भगवान्को कथाचरित्र
**शृण्वताम्** = सुन्नेहरूका लागि
**अन्ते** = अन्तिम समयमा
**नारायणः** = भगवान् नारायण
**गतिः** = प्राप्तिरूप फल दिनेवाला छ

**वाक्यार्थ–** हे प्यारा विदुरजी ! अत्यन्त पवित्र धेरै पुण्यदान गर्ने, प्रशस्त धन सम्पत्तिरूप फल दिने, कीर्ति दिलाउने, आयु र सम्पूर्ण मनोरथहरूको पनि प्राप्तिस्रोत भएको, युद्धमा प्राण र इन्द्रियहरूको शक्ति बढाउने भगवान्‌को यो कथाचरित्र सुन्नेहरूका लागि अन्तिम समयमा भगवान् नारायण प्राप्तिरूप फल दिनेवाला छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां तृतीयस्कन्धे हिरण्याक्षवधो नामैकोनविंशोऽध्यायः ॥ १९ ॥**